यम उवाच

ब्रह्माण्डं चूर्णतां याति दण्डाघातेन यस्य मे ।
तस्य मे पुरतो युद्धं कथं बालो विधास्यति ।।२३।।

देव उवाच

त्वमात्मानं वर्णयसे रङ्कवद् भासि मे यम ! ।
मम वक्रभ्रुवा सर्वं ब्रह्माण्डञ्च विनश्यति ।।२४।।

एवमुक्त्वा मयूरेशो यमस्कन्धं रुरोह सः ।
पातयामास महिषात् पपातोपरि तत्क्षणात् ।।२५।।

पराक्रमं तस्य बुद्ध्वा बद्धाञ्जलिपुटो यमः ।
तुष्टाव परया भक्त्या मयूरेशं सुरेश्वरम् ।।२६।।

यम उवाच

न ते रूपं विदुर्देवा ब्रह्माद्याः सनकादयः ।
नेति नेति च वेदास्त्वां वदन्ते परमेश्वरम् ।।२७।।

स्त्रष्टारं पालकं सृष्टेः संहर्तारं निजेच्छया ।
दैत्यानां सर्वदुष्टानां नाशकं सर्वरूपिणम् ।।२८।।

अकस्मादपराधं नः कृतं क्षन्तुं त्वमर्हसि ।

क उवाच

एवमुक्त्वा पुपूजासौ वस्त्रै रत्नैः फलैरमुम् ।।२९।।

बालानानीय तद्धस्ते निवेद्य पुरतः स्थितः ।
आलिलिङ्गुर्मुदा सर्वे परस्परमथाऽब्रुवन् ।।३०।।

बाला ऊचुः

श्रान्तास्त्वद्दर्शनार्थाय बद्ध्वा नीता यमेन ह ।
त्वद्दर्शनाद् बन्धमुक्ता यास्यामो निजमन्दिरम् ।।३१।।

क उवाच

ततस्ते स्वाश्रमं प्राप्ता मयूरेशपुरस्कृताः ।
मयूरेशपुरं याता नानावादित्रसंकुलम् ।।३२।।

**यमराजले भने** – 'हे दूत हो ! त्यो जोसुकै भए पनि मैले आफ्नो यमदण्डको प्रयोग गर्दा ब्रह्माण्ड नै टुक्रा टुक्रा हुन्छ भने आएको त्यस प्राणीले पनि त्यही गति प्राप्त गर्नेछ ।यमका कुरा सुनेर भगवान् श्रीगणेशले तिनीसँग संवाद गर्नुभयो'।।२३।।

**श्रीगणेशले भन्नुभयो** - 'हे यमराज ! तिमीले आफ्नै मुखले आफ्नो प्रशंसा गरेका छौ तर मैले तिमीलाई हरिकंगाल देखिरहेको छु।मेरो आँखीभौं अलिकति कर्के हुनासाथ यो ब्रह्माण्ड नै नष्ट हुन्छ ।' यसरी यमलाई आफ्ना कुरा सुनाएर भगवान् श्रीगणेश यमराजको काँधमा चढ्नुभयो र तिनलाई राँगोबाट भुइँमा खसाउनुभयो । बिचरा यमराज भुइँमा लडे । श्रीगणेशको पराक्रम देखेर हात जोडिरहेका यमराजले भक्तिपूर्वक उहाँको स्तुति गरे ।।२४-२६।।

**यमराजले भने** - 'हे श्रीगणेश ! हजुरको स्वरूपलाई ब्रह्मा आदि देवता र सनक आदि मुनिहरूले पनि जान्नुहुन्न । वेदले पनि हजुरलाई नेति-नेति भनेर आफ्नो अज्ञान देखाउँछन्। हजुर संसारका स्रष्टा, पालक र संहारक हुनुहुन्छ । हजुर सबै दुष्ट दैत्यका नाशक हुनुहुन्छ । जति पनि संसारका देखिने दृश्यावली छ, त्यसका रूप-रङ्गमा हजुर व्याप्त भएर रहनुहुन्छ। म हजुरलाई प्रणाम गर्दछु।।२७-२८।। अकस्मात् अपराध गरें। अहङ्कारबाट जन्मेको मेरो अपराधलाई क्षमा गरिदिनुहोस्।'

**ब्रह्माजीले भन्नुभयो** – यमराजले यसरी प्रार्थना गरेर वस्त्र, अलङ्कार, फलफूल समर्पण गरी भगवान् श्रीगणेशको पूजा गरे ।।२९।। आफूले ल्याएका बालकहरूलाई त्यहाँ झिकाएर श्रीगणेशलाई टक्र्याए । ती बालकहरूले पनि भगवान् श्रीगणेशलाई देखी अत्यन्त आनन्द मानेर आलिङ्गन गरे ।।३०।। त्यसपछि ती बालकहरूले श्रीगणेशसँग निवेदन गरे – 'हे प्रभु ! हामी हजुरको खोजी गर्न धेरै ठाउँमा डुल्यौं, त्यस कारण हामी थाकेछौं र रूखको फेदमा एक छिन निदाएछौं । हामी निदाइरहेको समयमा यमराजले बाँधेर हामीलाई यहाँ ल्याइपुर्‍याए। अहिले हजुरको दर्शन पाएका कारण बन्धनबाट मुक्त भएका छौं । अब हामी घर जान चाहन्छौं ।।३१।।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि ती बालकहरू श्रीगणेशका साथ आ-आफ्ना आश्रमतर्फ फर्किए । आफ्ना घरबाट फेरि ती बालकहरू नानाथरि बाजा बजाउँदै श्रीगणेशको

नानाध्वजपताकाढ्यं पुष्पमालाविभूषितम् ।
यमोऽपि पृष्ठतो याति द्रष्टुं तत् कौतुकं महत् ।।३३।।

सम्मुखं तस्य ते सर्वे मुनयोऽपि ययुस्तदा ।
पुपूजुस्तुष्टुवुर्देवं लिलिङ्गुर्बालकानपि ।।३४।।

उवाच देवस्तान् सर्वान् मुनीन् पूर्वं प्रकुप्यतः ।
आनीता बालका लोकाद् यमस्य क्षणमात्रतः ।।३५।।

मुनय ऊचुः

सर्वत्र रक्षसे त्वं हि सर्वशक्तिः सदा च नः ।

क उवाच

इत्युक्त्वा तमनुज्ञाप्य स्वाश्रमान् मुनयो ययुः ।।३६।।

यमोऽपि तं नमस्कृत्य स्वालयं मुदितोऽगमत् ।
देवोऽपि स्वालयं प्राप्य हर्षयामास सादरम् ।।३७।।

नगरीमा गए । त्यस बेला भगवान् श्रीगणेशको नगरी अनेक थरि ध्वजा-पताकाले सजिएको थियो । पुष्पमालाहरू जहाँसुकै झुण्ड्याइएका थिए । भगवान् र भगवान्का साथी बालक त्यो नगरमा पुगेपछि त्यो रमाइलो हेर्न यमराज पनि आए । त्यस बेला श्रीगणेशका सामु अनेक ऋषिमुनि पनि आए । ती ऋषिमुनिले श्रीगणेशको पूजा, स्तुति गरी आफ्ना बालकहरूलाई आलिङ्गन गरे । त्यसपछि श्रीगणेशले पहिले आफूसँग रिसाएका बालकहरूका पिता मुनिहरूलाई भन्नुभयो- 'हे ऋषिगण ! मैले एकै क्षणमा यमलोकबाट तपाईंका बालकहरूलाई फर्काएर यहाँ ल्याएको छु' ।।३२-३५।।

**मुनिहरूले भने** - 'हे भगवन् श्रीगणेश ! हजुरले जुनसुकै अवस्थामा पनि हाम्रो रक्षा गर्नुहुन्छ । हजुर हाम्रा निमित्त सर्वशक्ति हुनुहुन्छ ।'

**ब्रह्माजीले भन्नुभयो** - मुनिहरू भगवान्सँग भाव निवेदन गरी उहाँको आज्ञा पाएर आ-आफ्ना आश्रमतर्फ लागे।।३६।। यमराज भगवान् श्रीगणेशलाई प्रणाम गरी यमलोकतर्फ लागे। भगवान् श्रीगणेशले पनि आफ्नो धाममा गएर आफ्नी माता पार्वतीलाई प्रसन्न गराउनुभयो ।।३७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे यमगर्वपरिहारो नामाष्टाधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा यमराजको गर्वहरण' शीर्षकान्वित एक सय आठौं अध्याय पूर्ण भयो ।।१०८।।

ॐ

## नवोत्तरशततमोऽध्यायः { १०९ अध्याय }

क उवाच

कदाचित् पार्वती प्राह सुखासीनं महेश्वरम् ।
गतानि तु महादेव ! वर्षाणि दश पञ्च च ।।१।।

विवाहश्चिन्त्यतामस्य मयूरेशस्य साम्प्रतम् ।
सुशीला सुमुखी बाला मृगाक्षी हंसगामिनी ।।२।।

पिकवाक् सुनसा तन्वी वधूः क्वापि विचार्यताम् ।
मन्मथातुलदेहस्य सर्वाङ्गसुन्दरस्य ह ।।३।।

**ब्रह्माजीले भन्नुभयो** – एक दिन पार्वतीले सुखपूर्वक विराजमान भगवान् शिवजीलाई निवेदन गर्नुभयो – हे महादेव! हाम्रो छोरा श्रीगणेश पन्ध्र वर्षका भइसके । अब विवाह गर्नुपर्छ। यस विषयमा हजुरले विचार गर्नुहोस् । कामदेवभन्दा सुदर्शन, सुरूप र सर्वाङ्गसुन्दर बालक श्रीगणेशका लागि अत्यन्त राम्री, उत्तम शीलस्वभाव भएकी, चिटिक्क परेकी, चौध–पन्ध्र वर्ष उमेर पुगेकी, मृगका जस्ता आँखा, राजहंसको जस्तो मन्द–मन्दगति र कोइलीको जस्तो मीठो स्वर भएकी, राम्रो नाक–नक्सा भएकी, न मोटी न दुब्ली ठिक्ककी कन्या चाहिएकी छिन् । त्यस्ती कन्यासँग उनको विवाह गरिदिने मन छ । यसमा हजुरले विचार पुऱ्याउनुहोस् । छोराको उमेर भएपछि विवाहका लागि बेर गर्नुहुँदैन ।।१–३।।

क उवाच

इति तद्वचनं श्रुत्वा साधु साध्वित्यभाषत ।
सोऽचिन्तयच्छुभां कन्यां मनसा नाप कुत्रचित् ।।४।।

ततश्चिन्तां परां प्राप तावन्नारद आगतः ।
सम्पूज्य चोपवेश्यैनमासने शम्भुरब्रवीत् ।।५।।

**ब्रह्माजीले भन्नुभयो**– पार्वतीका कुरा सुनेर भगवान् शिवजीले भन्नुभयो – 'हे पार्वती ! तिमीले राम्रो कुरा गऱ्यौ ।' त्यसपछि भगवान् शिवजी आफ्ना मनमा श्रीगणेशलाई सुहाउने कन्याको विषयमा चिन्तन गर्न थाल्नुभयो। जति सोचे पनि उपयुक्त कन्या भेटिएन ।।४।। उहाँलाई चिन्ता पऱ्यो । शिवजी चिन्तित मुद्रामा रहनुभएको बेला अकस्मात् नारदजी आइपुग्नुभयो । भगवान् शिवजीले नारदजीको पूजा गरी आसनमा बसाएर कुराकानी गर्नुभयो ।।५।।

शम्भुरुवाच

आह्लादं परमं प्राप्तस्तवागमनतो मुने! ।
चिरागतोऽसि च मुने ! दिनं स्थातुं त्वमर्हसि ।।६।।

अतिसुन्दरकायस्य तनयस्य ममानघ! ।
गवेषय वधूं विप्र ! यतस्त्रैलोक्यगो भवान् ।।७।।

**शिवजीले भन्नुभयो** – 'हे नारदजी ! तपाईँको आगमनबाट म अत्यन्त खुसी भएको छु । तपाईँ धेरै दिनमा आइपुग्नुभयो । आज यहीं बस्नुपर्छ ।।६।। हे नारदजी ! तपाईँ स्वर्ग, मर्त्य र पातालमा डुलिरहनुहुन्छ। मेरा अत्यन्त सुन्दर पुत्र श्रीगणेशका लागि एउटा कन्या खोज्नुहोस्' ।।७।।

क उवाच

तथैव पार्वती प्राह वधूं शीघ्रं विचारय ।

**ब्रह्माजीले भन्नुभयो** – नारदजीसँग शिवजीले छोराको विवाहको कुरा गर्दा नजिकै रहेकी पार्वतीले पनि भन्नुभयो – 'हे नारदजी ! मेरो छोराका लागि हजुरले उत्तम कन्याको बन्दोवस्त गर्नुपर्छ।'

नारद उवाच

न स्थातुं शक्यते स्वामिन् ! कर्मणा द्विमुहूर्तकम् ।।८।।

**नारदजीले भन्नुभयो** – 'हे जगत्का स्वामी ! मेरा कर्मले गर्दा म कहीं पनि दुई मुहूर्तभन्दा बढी बस्न मिल्दैन । मलाई पनि श्रीगणेशकै विवाहसम्बन्धी कामले ब्रह्माजीले

एतदर्थमहं प्राप्तो ब्रह्मणा प्रेषितः शिव ! ।
तव पुत्रप्रभावश्च लावण्यं वय एव च ।।९।।

ज्ञातं धात्रा सिद्धिबुद्धी तस्मै दातुमभीप्सता ।
अनुसूया शची चापि तयो रूपेण लज्जिते ।।१०।।

संज्ञाऽभूद् दण्डकारण्ये शिलाऽहल्यापि सा ह्यभूत्।
जालन्धरस्य या पत्नी वृन्दा माधवमोहिनी ।।११।।

सापि वृक्षत्वमापन्ना यद्रूपदर्शनाद् हर !
अन्ये नानावरा गौरि ! नागता ब्रह्मणो हृदि ।।१२।।

नैतादृशं क्वापि देवि ! सौन्दर्यं शौर्यमेव च ।
तयोर्योगेन च तवः सुतः शोभामवाप्नुयात् ।।१३।।

रत्नकाञ्चनयोर्यद्वद् यथा मुक्ताप्रवालयोः ।

क उवाच

एवं नारदवाक्येन स तुतोष हरः शिवा ।।१४।।

शिव उवाच

सम्यगुक्तं मुने ! वाक्यं वाञ्छितार्थकरं शुभम् ।

क उवाच

शिवोऽपि तत्क्षणादेव वृषारूढः समाह्वयत् ।।१५।।

इन्द्रादिदेवनिचयान् गौतमादीन् मुनीनपि ।
अर्धाङ्गे पार्वतीं गृह्य ययौ हर्षसमन्वितः ।।१६।।

शिखण्डिनं समारुह्य मयूरेशः पुरो ययौ ।
नारदस्तु तपोयोगादन्तरिक्षचरो ययौ ।।१७।।

पठाउनुभएको हुँदा हजुरहरूको दर्शन गर्न आएको हुँ । आफ्ना छोरी सिद्धि र बुद्धिको तपाईँका छोरा श्रीगणेशसँग विवाह गर्न चाहनुहुने ब्रह्माजीले श्रीगणेशको सुन्दरता, प्रभाव, पराक्रम, व्यक्तित्व र उमेर यी कुराहरू थाहा पाउनुभएको छ। सिद्धि र बुद्धिको रूप देखेर संसारमा अत्यन्त सुन्दर मानिएका अनुसूया र इन्द्राणीजस्ता दिव्य नारीहरू पनि आफूलाई लज्जित भएको महसुस गर्दछन्। लाजले गर्दा सूर्यकी पत्नी सन्ध्या दण्डकारण्यमा गई शिला भइन् । त्यसैगरी सिद्धि र बुद्धिको सौन्दर्यबाट तिरस्कृत भएकी अहल्या पनि त्यसै दण्डकारण्यमा शिला भइन् । कुनै समयमा जालन्धरकी पत्नी वृन्दाले आफ्नो रूपजालबाट भगवान् नारायणलाई पनि मोहित पारेकी थिइन् तर आज ती पनि सिद्धि र बुद्धिको सौन्दर्यका सामु लाजले भुतुक्क भएर तुलसीका रूपमा परिणत भइन् । ब्रह्माजीको मनमा सिद्धि र बुद्धिलाई सुहाउने श्रीगणेशबाहेक अरू कुनै वरले ठाउँ पाउन सकेको छैन ।।८-१२।। हे पार्वती ! सिद्धि र बुद्धिमा जस्तो सुन्दरता र शक्ति छ त्यस्तो सुन्दरता र शक्ति कुनै पनि कन्यामा देख्न सकिंदैन । सिद्धि र बुद्धिका साथ हजुरका पुत्र श्रीगणेशको विवाह भएमा निकै राम्रो जोडा मिल्नेछ।।१३।। ती दुइटी ब्रह्माजीका कन्यालाई पत्नीका रूपमा प्राप्त गरेर श्रीगणेश पनि अत्यन्त सुहाउनुहुनेछ। रत्न र सुनको संयोगमा जस्तो शोभा हुन्छ, मोती र मुगाको संयोगमा जस्तो शोभा हुन्छ, त्यस्तै शोभा सिद्धि र बुद्धिको संयोगमा श्रीगणेशको हुनेछ ।'

**ब्रह्माजीले भन्नुभयो** - नारदजीका कुरा सुनेर पार्वती र शङ्कर प्रसन्न हुनुभयो ।।१४।।

**शिवजीले भन्नुभयो** - 'हे नारदजी ! तपाईँले राम्रा कुरा सुनाउनुभयो । यसबाट हामीले चाहेको कुरा पूर्ण हुनेछ र हाम्रो मङ्गलकार्य पनि सम्पन्न हुनेछ ।'

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! यस्ता कुरा गरेर शिवजीले पनि तुरुन्तै साँढेमाथि सवार भई इन्द्र आदि देवता र गौतम आदि मुनिहरूलाई बोलाउनुभयो र आफ्नो बायाँ भागमा पार्वतीलाई राखेर प्रस्थान गर्नुभयो । श्रीगणेश पनि मयूरमा सवार भएर अगाडि लाग्नुभयो । तपस्याको शक्तिबाट नारदजीले पनि आकाशमार्गबाट प्रस्थान गरे । शिवजीका सात करोड गणहरू पनि अनेक थरि क्रीडा गर्दै शिवजीको यात्रामा सहभागी भए । ती सबै शिवगण हातमा शस्त्र-अस्त्र धारण

सप्तकोटिगणाः क्रीडां कुर्वन्तोऽभिययुस्तदा ।
नानायुधधरा हर्षाद् गर्जयन्तो दिशो दश ।।१८।।

वाद्यत्सु सर्ववाद्येषु रजसाच्छादिते रवौ ।
अष्टाशीतिसहस्राणि मुनयोऽपि ययुर्मुदा ।।१९।।

गण्डकीनगरं सर्वे गन्तुकामा व्यलोकयन् ।
गुल्मं मार्गे रक्षसां ते सप्तकोटिगणान्वितम् ।।२०।।

नभस्पर्शिमुखानाञ्च सर्वदा कालधिक्कृताम् ।
निशाचराः शुश्रुवुस्ते सेनायास्तु रवं दृढम् ।।२१।।

सुप्तोत्थिताश्च सन्नद्धा ययू रणविधित्सया ।

राक्षसा ऊचुः

कस्य यूयं कुतो याथ कुत आगमनञ्च वः ।।२२।।
न विज्ञाय पुरे गन्तुं दास्यामः स्वामिनश्च नः ।

मयूरेश उवाच

स्वतन्त्रा अन्तका दैत्यरक्षसां साधुपालकाः ।।२३।।
अतो गच्छन्तु नो मार्गं नो चेन्नाशं व्रजिष्यथ ।

क उवाच

एतस्मिन्नन्तरे प्राप्तो विकृतो हेमनामकः ।।२४।।

असुरोऽथाब्रवीद् देवमेकाकी प्रहितः पुरा ।
इदानीं राक्षसैः सार्द्धमादास्ये जीवितं तव ।।२५।।

उवाच राक्षसान् सोऽथ नानादैत्या हता बलात् ।
अहञ्च विकृतोऽनेन यतोऽयं हन्यते जवात् ।।२६।।

क उवाच

इति तद्वचनं श्रुत्वा चुक्रोध स मयूरराट् ।
मुनिपुत्रान् समाज्ञाप्य युध्यध्वं मे ह्यनुग्रहात् ।।२७।।

गरेर वीरभावले सुहाएका थिए । ती सबै आनन्दपूर्वक गर्जन गर्दै दसै दिशालाई शब्दायमान तुल्याउँदै थिए ।।१५-१८।। अनेक थरि वाद्यघोष घन्किरहेको त्यस बेला शिवजीका गणहरूको हिंडाइबाट उडेको धूलोले सूर्य पनि ढाकिए । त्यो देखेर अठासी हजार ऋषिहरू भगवान्को यात्रामा सहभागी हुन आए।।१९।। शिवजीको यो यात्रा कृष्णा गण्डकीतर्फ जानका लागि चलाइएको थियो । त्यस बेला शिवजीको यात्रामा सहभागी सबै नर-नारीले बाटामा राक्षसहरूको सात करोड गणले सम्पन्न गुल्म देखे । ती गुल्ममा रहेका दैत्यहरूले आफ्नो शिरको उचाइबाट आकाशलाई स्पर्श गरेका थिए । तिनीहरूले कालको पनि वास्ता गर्दैनथे । राक्षसका गणहरूलाई त्यहाँ देखी तिनको डरलाग्दो स्वर सुनेर भूत-प्रेतहरू पनि युद्ध गर्ने इच्छाले राक्षसकै सेनामा सामेल भए । राक्षसहरूले शिवगणलाई भने - 'तिमीहरू को हौ ? कहाँबाट आइरहेका छौ? कहाँ जान लागेका छौ ? तिमीहरूको राम्रो परिचय नपाएसम्म हामी तिमीहरू र तिम्रा स्वामीलाई पनि यहाँबाट अगाडि जान दिदैनौं ।' राक्षसका यस्ता कुरा सुनेर श्रीगणेशले जवाफ दिनुभयो।

**श्रीगणेशले भन्नुभयो** - 'हे राक्षसगण ! हामी दैत्य र राक्षसका नाशक, साधुका रक्षक देवगण हौं । हामी स्वतन्त्र छौं ।।२०-२३।। हामीलाई कहीं जानबाट कसैले रोक्न सक्दैन। तिमीहरूले बाटो नछेक । नपत्याएर बाटो छेकिरहन्छौ भने तिमीहरू तुरुन्तै खरानी हुनेछौ ।'

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! श्रीगणेशले कुरा गरिरहनुभएको समयमा अत्यन्त डरलाग्दो अनुहार भएको हेम नामक राक्षस श्रीगणेशका सामु आयो र त्यसले भन्यो - 'म पहिले तिमीसँग एक्लै लड्न गएको थिएँ, हार खाएँ अहिले म राक्षसको गणका साथमा आएको छु । अब तिम्रो प्राणहरण गर्नेछु ।।२४-२५।। हे राक्षसगण ! यसले तिमीहरूजस्ता करोडौं राक्षस मारिसकेको छ । हे साथी हो ! मेरा हात-खुट्टा काट्ने पनि यही हो । त्यस कारण म यसलाई अतिशीघ्र मारिदिन्छु।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसका कुरा सुनेर भगवान् श्रीगणेश क्रुद्ध हुनुभयो र मुनिबालकहरूलाई अह्राउँदै भन्नुभयो- 'तिमीहरू नडराओ, मेरो कृपा हुनेछ। यो दैत्यसँग युद्ध गर।' भगवान्को आज्ञा पाएर ती बालकहरू हातमा कुश लिएर

कुशानुद्यम्य ते हर्षाद् युद्धं कर्तुं समुद्यताः ।
उवाच पृष्ठतो देवो घ्नन्तु बालाः कुशैरिमान् ।।२८।।

मन्त्रितास्ते कुशास्तेषां मस्तकानच्छिनन् बहून् ।
तेषां शस्त्राणि कुण्ठानि जातानि तदनुग्रहात् ।।२९।।

जायन्ते तावदेते तान् कुशैर्जघ्नुस्तु राक्षसान् ।
खण्डशस्ते निपेतुर्वै छिन्नबाहूरुजानवः ।।३०।।

व्यस्मयन्त च रक्षांसि तृणैर्मृत्युं व्रजन्ति किम् ।
एवं सर्वे हता बालैरखिला राक्षसास्तदा ।।३१।।

जगर्जुस्ते मयूरेशं प्रापुर्नत्वाऽप्यपूजयन् ।

बाला ऊचुः

आज्ञया निहताः सर्वे राक्षसास्त्वत्प्रसादतः ।
पुनराज्ञां नः प्रयच्छ करिष्यामो गुणेश्वर ।।३२।।

आश्चर्यं परमं जग्मुर्मुनयो ये समागताः ।
दृष्ट्वा बालैर्हतान् सर्वान् राक्षसान् कुशसञ्चयैः ।।३३।।

पार्वती वृषभात् तस्मादवरुह्यालिलिङ्ग तम् ।
शिवोऽपि प्राब्रवीद् देवं दृष्टस्तेऽद्य पराक्रमः ।।३४।।

तव शस्त्रहताः पूर्वं निहता बालकैः कुशैः ।
ब्रह्मादीनामगम्यस्ते प्रभावो गिरिजासुत ।।३५।।

न ज्ञायते मया वापि किं किमग्रे करिष्यसि ।।३६।।

हर्षपूर्वक युद्ध गर्न थाले। ती बालकहरूका पछाडि भगवान् श्रीगणेश रहनुभएको थियो। पछाडिबाट उहाँले भन्नुभयो- 'हे बालकहरू ! तिमीहरूले आफ्नो हातमा लिएको कुश प्रहार गरेर यी राक्षसहरूलाई मार।।२६-२८।।' भगवान्को आज्ञा पाएपछि ऋषिबालकहरूले मन्त्र जपेर कुशले प्रहार गर्दा ती सबै राक्षसका टाउका काटिए । भगवान् श्रीगणेशको कृपा भयो । दैत्यहरूका शस्त्र कुण्ठित भए । मुनिबालकहरूले कुशले प्रहार गरिरहे । दैत्यहरू हात-घुँडा काटिएर भुइँमा लड्न थाले । त्यस बेला ती दैत्यहरूले चकित हुँदै भने - 'घाँसले प्रहार गर्दा पनि हाम्रा दैत्यवीर मरिरहेका छन्, कस्तो अचम्मको कुरा ?' यस किसिमबाट बालकहरूले कुशको प्रहार गरी सबै राक्षसलाई मारे ।।२९-३१।। राक्षसमाथि विजय गरेको खुसियालीमा बालकहरूले सिंहनाद गरे । त्यसपछि श्रीगणेशका सामु गएर प्रणाम गरी पूजा गरे ।

**बालकहरूले भने-** 'हे भगवन् गुणेश! हजुरको आज्ञा पाएर हजुरकै करुणाबाट हामीले ती सबै राक्षसको वध गरेका हौं । हे भगवन् ! अब अरू के गर्नुपर्छ ? आज्ञा गर्नुहोस् । हामी ती सबै काम सम्पन्न गर्नेछौं ।' यो सबै देखेर त्यहाँ युद्धको दर्शन गर्न आएका मुनिगण पनि अत्यन्त चकित भए । बालकहरूले कुशले प्रहार गर्दा राक्षस मरेको देखी अत्यन्त आनन्दित भएकी भगवती पार्वतीले पनि शङ्करको वाहन नन्दीबाट भुइँमा ओर्लेर आफ्नो छोरालाई आलिङ्गन गर्नुभयो । शिवजीले पनि श्रीगणेशलाई सम्बोधन गर्दै भन्नुभयो - 'प्यारा पुत्र! आज तिम्रो पराक्रम देखेर म खुसी भएको छु । पहिले तिमीले त्यतिका धेरै राक्षसहरूलाई मार्‍यौ । आज तिम्रा साथी बालकहरूले कुशको प्रहार गरेर राक्षसहरूलाई मारे । हे पार्वतीपुत्र ! तिम्रा पराक्रमको आदि र अन्त्य भगवान् ब्रह्माजी पनि जान्न सक्नु हुन्न । अब यसपछि के के लीला गर्नै छौ ? त्यो म पनि भन्न सक्दिनँ ।।३२-३६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे राक्षसवधो नाम नवाधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मुनिबालकहरूद्वारा दैत्यहरूको संहार' शीर्षकान्वित एक सय नवौं अध्याय पूर्ण भयो ।।१०९।।

ॐ

# दशोत्तरशततमोऽध्याय: { ११० अध्याय }

क उवाच

जयशाली मयूरेशो यात्यग्रे हर्षनिर्भरः ।
पृष्ठतो यान्ति बालास्ते ततो वृषगतः शिवः ।।१।।

गौतमाद्या मुनिगणा लग्नसिद्ध्यै ययुस्ततः ।
गर्जन्तो गर्जयन्तश्च दिशश्च विदिशोऽपि च ।।२।।

योजनावधि गण्डक्या अवरुह्य शिखण्डिनः ।
अतिष्ठत् स मयूरेशो महार्घासनमुत्तमम् ।।३।।

ततः सर्वानुपावेश्य शिवं गणमुनीश्वरान् ।
वाद्यत्सु सर्ववाद्येषु तानाह स मयूरराट् ।।४।।

सिन्धुना निहिताः कारागृहे शक्रादिदेवताः ।
विना तन्मोचनं लग्नसिद्धिर्नैव भविष्यति ।।५।।

अतस्तन्मोचनार्थाय प्रेष्यतां सिन्धवे महान् ।
बुद्धिमान् स गृहीत्वा चेदागच्छेत् तान् सुरानथ ।।६।।

तदा साम्नैव सर्वेषां कुशलं हि भविष्यति ।
नो चेद् युद्धेन जेष्यामो रणे सिन्धुं महावलम् ।।७।।

मोचयिष्यामस्तान् देवाँस्ततो लग्नं भविष्यति ।

क उवाच

एवं तद्वचनं श्रुत्वा प्राहुः सर्वे गुणेश्वरम् ।।८।।

सम्यगुक्तं मयूरेश ! सुधया सदृशं वचः ।
बालभावेऽपि ते बुद्धिर्बृहस्पतिसमा शुभा ।।९।।

पुष्पदन्तं महाबुद्धिं नीतिशास्त्रविशारदम् ।
प्रेष्यतां सिन्धुनिकटे देवमोचनहेतवे ।।१०।।

वक्तारं बलिनं श्रेष्ठं स्तोत्रसन्तोषितेश्वरम् ।

**ब्रह्माजीले भन्नुभयो** – हे वेदव्यास ! विजयी भगवान् श्रीगणेश राक्षसहरूको वधपछि त्यहाँबाट आनन्दपूर्वक बालक-हरूलाई अगाडि लगाएर प्रस्थान गर्दै हुनुहुन्थ्यो। पछाडि पछाडि मुनिकुमार हिँडिरहेका थिए। तीभन्दा पनि पछाडि नन्दीमा सवार हुनुभएका भगवान् शिवजी हुनुहुन्थ्यो।।१।। त्यसपछि गौतम आदि मुनिगण लग्नसिद्धिका लागि प्रस्थान गर्दै हुनुहुन्थ्यो। उहाँहरू प्रस्थान गर्नुहुँदा गण्डकी नदीको एक योजन भूभागसम्म उहाँहरूको यात्राको गम्भीर कोलाहल फैलियो। मयूरमा सवार भगवान् श्रीगणेश अत्यन्त उत्तम आसनमा विराजमान हुनुहुन्थ्यो। त्यसपछि उहाँले भगवान् शिवजी र मुनिगणलाई केही बेर बसौं भनी अनुरोध गर्नुभयो । शिवजी र मुनिहरू बसेपछि वाद्यघोष घन्किरहेकै स्थितिमा श्रीगणेशले भन्नुभयो- हे पिताजी र हे मुनिगण! राक्षस सिन्धुले इन्द्र आदि सबै देवताहरूलाई कारागारमा लगेर थुनेको छ । देवताहरूको कारागारबाट मुक्ति नभएसम्म मेरो विवाहको लग्नसिद्धि हुँदैन ।।२-५।। तसर्थ देवताहरूलाई कारागारबाट मुक्त गराउन दैत्यराज सिन्धुका समीपमा हामीले कुनै बुद्धिमान् दूत पठाउनुपर्छ । त्यसले कुरा मिलाएर देवताहरूलाई मुक्त गराई फर्काई ल्याएमा मीठो वचनबाट नै काम सिद्ध हुनेछ । सबैको भलो पनि हुनेछ । त्यसो हुन सकेन भने रणमा गई हामीले दैत्यराज सिन्धुलाई मार्नेछौं, त्यसपछि मात्र देवतालाई मुक्त गर्न सकिनेछ । देवताहरूको मुक्तिपछि मात्र लग्नसिद्धिका कुरा हुनेछन् ।

**ब्रह्माजीले भन्नुभयो** – मयूरेश भगवान्का यी कुरा सुनेर सबैले उहाँलाई भने – 'हे मयूरेश ! हजुरले अमृतसमान राम्रो कुरा भन्नुभएको छ । हजुर बालकै हुनुहुन्छ तापनि हजुरको बुद्धि बृहस्पति समान छ ।।६-९।। नीतिशास्त्रका विशेषज्ञ र तीखो बुद्धि भएका पुष्पदन्तलाई देवताहरूको मुक्तिका लागि दैत्यराज सिन्धुसमक्ष पठाउनुपर्दछ ।।१०।। किनकि उहाँ बलवान्, उत्तमवक्ता र उत्तम स्वभावका पनि हुनुहुन्छ । उहाँले महिम्नस्तोत्रद्वारा स्तुति गरी भगवान् शिवजीलाई पनि सन्तुष्ट तुल्याउनुभएको छ ।'

क उवाच

[illegible] ऊचे पुष्पदन्तो मयूरेशं सुरेश्वरम् ।।११।।

महिमा ते मयूरेश ! मनोवाचामगोचर: ।

जानन्ति न जना मायामोहितास्तव नित्यदृक् ।।१२।।

भूभारहरणार्थं त्वमवतीर्ण: शिवालये ।

न मां प्रेषय तत्र त्वमन्यं प्रेषय साम्प्रतम् ।।१३।।

[illegible]सेनया युक्तं सिन्धुदैत्यं महाबलम् ।

उद्धतं बलिनं द्रष्टुमहं शक्ष्यामि न क्वचित् ।।१४।।

युद्धमेव करिष्यामि ततो दोर्दण्डतेजसा ।

यदि साम्ना भवेत् कार्यं युद्धं तत्र वृथा मतम् ।।१५।।

दानं भेदो वृथा दण्डो नीतिरेषा सनातनी ।

तदाकर्ण्य तद्वाक्यमुवाच पार्वतीपति: ।।१६।।

सम्यगुक्त: पुष्पदन्त ! नीतिमार्ग: पुरातन: ।

[illegible]वात्र क्षम: साम्नि केवलं बलवान् पर: ।।१७।।

[illegible]ष्यति महादुष्टं प्रेषितश्चेत् षडानन: ।

[illegible] वीरभद्रश्चेत् क्रोधमेव करिष्यति ।।१८।।

[illegible] चेत् प्रेषितस्तत्र संहारं स विधास्यति ।

[illegible]: प्रेषितो मत्तो न जाने किं करिष्यति ।।१९।।

[illegible]श्चेद् भूतराजो भाययिष्यति तां सभाम् ।

[illegible]सम्भोगरत: स्यात् तु प्रेषितो रक्तलोचन: ।।२०।।

[illegible]ब्रवीन्मयूरेशो निरस्तेषु च तेषु च ।

[illegible] समुद्रगम्भीरो धैर्ये पर्वतसन्निभ: ।।२१।।

[illegible]द्ध्या बृहस्पतिसमो जम्भारिसदृशो बले ।

[illegible]: पराशयज्ञाता प्रेष्यतां सामहेतवे ।।२२।।

शिव उवाच

सम्यगुक्तं मयूरेश ! ज्ञातासि गुणदोषयो: ।

[illegible]न्दिने दीयतां वस्त्रं रत्नानि विविधानि च ।।२३।।

[illegible] ददौ मयूरेशस्तानि तस्य शिवाज्ञया ।

[illegible]ज्ञापयामास च तं गच्छ सिन्धुं महाबलम् ।।२४।।

**ब्रह्माजीले भन्नुभयो** - यो कुरा सुनेर पुष्पदन्तले मयूरेश भगवान्‌लाई भने - 'हे मयूरेश ! हजुरको महिमा मन र वाणीको विषय होइन । हजुरको मायाबाट मोहित मानिसहरूले हजुरको नित्यमाया र लीलालाई जान्न सक्दैनन् ।।११-१२।। भूभारहरणका लागि हजुर शिवधाममा प्रकट हुनुभएको छ । हजुरले मलाई दैत्यराज सिन्धुका समक्ष नपठाउनुहोस् । अरू कसैलाई पठाउँदा राम्रो हुनेछ ।।१३।। अपार-सेनासम्पन्न मूर्ख, बलवान्, घमण्डी त्यस महादैत्यलाई म हेर्न पनि सक्दिनँ ।।१४।। बरु युद्धकै मैदानमा गएर लड्नेछु । यदि वचनबाट कार्यसिद्ध हुन्छ भने युद्ध गर्न हुँदैन भनिएको छ । दान, भेद र दण्ड पनि सामका सामु व्यर्थ हुन्छन्, यो सनातन नीति हो ।' पुष्पदन्तका कुरा सुनेर भगवान् शिवजीले भन्नुभयो - 'हे श्रीगणेश ! पुष्पदन्तले भनेको नीतिमार्ग सर्वसम्मत प्राचीनमार्ग हो। क्रोधी मानिस मधुर वचन बोल्न सक्दैन । यदि बलवान् स्कन्दलाई हामीले पठायौं भने तिनले दैत्यराज सिन्धुमाथि आक्रमण गर्नेछन् । यदि वीरभद्रलाई पठायौं भने तिनले रीसमात्र देखाउनेछन्।।१५-१८।। यदि शृङ्गीलाई पठायौं भने तिनले संहार नै गर्नेछन् । प्रमथलाई पठायौं भने तिनले उन्मत्त भएर के के गर्छन् भन्न सकिँदैन । भूतराजलाई पठायौं भने तिनले सम्पूर्ण दैत्यसभालाई नै भयभीत तुल्याएर त्यहाँका दैत्यहरूलाई लाखा-पाखा गराउनेछन् । रक्तलोचनलाई पठाउँदा त्यहाँ गएर तिनले दैत्यसुन्दरीहरूसँग सम्भोग प्रारम्भ गर्नेछन्' ।।१९-२०।। ती सबैका गुणदोषको चर्चा सुनेर ती सबैलाई निरस्त गरिएको तथ्य आत्मसात् गरेपछि भगवान् श्रीगणेशले भन्नुभयो - 'नन्दी गम्भीरतामा समुद्रसमान, धैर्यमा पर्वतसमान, बुद्धिमा बृहस्पति-समान, बलमा इन्द्रसमान र अरूको आशय बुझ्न सिपालु छन् । तिनलाई नै मधुर वचनको सन्देशका साथ दैत्यराजको सभामा पठाउनुपर्दछ' ।।२१-२२।।

**शिवजीले भन्नुभयो** - 'हे श्रीगणेश ! तिमीले राम्रो कुरा गर्‍यौ । किनकि तिमी गुण र दोष केलाउन अत्यन्त कुशल छौ। नन्दीलाई वस्त्र, अलङ्कार र रत्न प्रदान गर' ।।२३।। शिवजीले त्यसो भनेपछि श्रीगणेशले नन्दीलाई ती सबै कुरा प्रदान गर्दै भन्नुभयो - 'हे नन्दी ! तिमी दैत्यराज सिन्धुको समीपमा जाऊ ।।२४।। जसरी देवताहरू त्यसको कारागारबाट मुक्त

यथा देवा विमुच्यन्ते तथा नीतिर्विधीयताम् ।
स तु नत्वा मयूरेशं सशिवं शिवमेव च ।।२५।।

गणान् सर्वान् महावाक्यैः स्तुत्वा तञ्च शिवं शिवाम्।
उवाच बुद्धिसम्पन्नो दिष्ट्योचितमिदं वचः ।।२६।।

हुनसक्छन् त्यस्तो नीति लिएर काम गर ।' भगवान् श्रीगणेशका यी कुरा सुनेर नन्दीले पनि शिव, पार्वती, श्रीगणेश र सबै शिवगणलाई प्रणाम गरी महावाक्यद्वारा भगवान् शिव, पार्वती र श्रीगणेशको स्तुति गरेर समयानुसार आफ्ना उत्तम वचन निवेदन गर्दै भने।।२५-२६।।

नन्द्युवाच

स महाञ्जायते लोके यस्य वः स्यादनुग्रहः ।
अतोऽहं श्रेष्ठतां नीतः साधयिष्ये प्रयोजनम् ।।२७।।

वः प्रसादेन भूगोलं विधास्ये न्युब्जमञ्जसा ।
शेषं सूर्यं वो निकट आनयिष्ये न संशयः ।।२८।।

**नन्दीले भने** - 'हे भगवन् ! त्यो मानिस महान् बन्दछ, जसमाथि हजुरको अनुग्रह हुन्छ । आज हजुरले ममाथि अनुग्रह गरेर मलाई महान् बनाइदिनुभएको छ । हजुरको आज्ञाअनुसार मैले प्रयोजन सिद्ध गर्नेछु ।।२७।। हजुरहरूको प्रतापबाट मैले सम्पूर्ण भूगोललाई निहुर्‍याउन सक्छु । शेषनाग र सूर्यलाई पनि हजुरका सामु ल्याउन सक्छु । यसमा सन्देह छैन' ।।२८।।

क उवाच

एवमुक्त्वा ययौ नन्दी सिन्धुदैत्यं बलान्वितः ।
गतः स नगरद्वारं मनोवेगेन धैर्यवान् ।।२९।।

ध्यायन् गणेशं शम्भुञ्च शिवां सर्वार्थसाधिकाम् ।
ऋतां कर्तुं प्रतिज्ञां तां प्रार्थयामास चेतसि ।।३०।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी भावनिवेदन गरेर नन्दी शिवगणसहित दैत्यराज सिन्धुको सभामा जान भगवान् श्रीगणेशको ध्यान गर्दै मनोवेगले प्रस्थान गरे । धैर्यशाली नन्दी दैत्यराजको नगरीमा पुगेर पनि श्रीगणेश, शिवजी र सर्वसिद्धि प्रदान गर्नुहुने पार्वतीको ध्यान गर्दै आफ्नो प्रतिज्ञा सफल तुल्याउन प्रार्थना गरिरहेका थिए ।।२९-३०।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे दूतप्रेषणं नाम दशाधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्धुको सभामा दूतका रूपमा नन्दीको प्रयाण' शीर्षकान्वित एक सय दसौं अध्याय पूर्ण भयो ।।११०।।

ॐ

# एकादशोत्तरशततमोऽध्यायः { १११ अध्याय }

क उवाच

प्रायात् सभां महारम्यां द्वारपालनिवेदितः ।
नन्दी ननन्द तं दृष्ट्वा दैत्यं सिन्धुं सभागतम् ।।१।।

महावीरैः परिवृतं नानाशस्त्रेषुपाणिभिः ।
वाराङ्गनानृत्यरतं वीज्यमानं नृभिर्मुदा ।।२।।

वाद्यत्सु सर्ववाद्येषु नादनादितदिक्षु च ।
दृष्ट्वा तं नन्दिनं केचिन्मेनिरे रविमागतम् ।।३।।

महाकायं महावीरं वीक्ष्य केचिच्चकम्पिरे ।
जगर्जुरपरे तत्र भीषयन्तो बलादमुम् ।।४।।

न बिभेति महाधैर्यान्नन्दी स्वबलगर्वितः ।
करसंज्ञार्पितं नन्दी भेज आसनमुत्तमम् ।।५।।

सर्वे तटस्थतां याताश्चित्रगा इव पुत्तलाः ।
बुद्ध्वा तदिङ्गितं प्राह नन्दी वाचस्पतिः परः ।।६।।

नानासभा दृष्टपूर्वा नेदृशास्तासु मूढकाः ।
यूयं सर्वेऽतिबलिनः श्रिया परमशोभिताः ।।७।।

सुन्दराः कामसदृशा बुद्ध्या हीना वृका इव ।
सभायामागतः साधुरसाधुर्दुर्बलो बली ।।८।।

प्रष्टव्यो माननीयश्च नीतिरेषा सनातनी ।
न सा दृष्टा सभामध्ये ह्यतो मे विस्मितं मनः ।।९।।

वृथा सभासदः सर्वे वृथाऽमात्याश्च नागराः ।
नायं धर्मो राज्ञ एव सभ्यानां कृत्यमेव तत् ।।१०।।

**ब्रह्माजीले भन्नुभयो**- नन्दी दैत्यराज सिन्धुको सभाद्वारमा पुगे र द्वारपालले दैत्यराज सिन्धुलाई नन्दी दूतका रूपमा आएको निवेदन गरे। निवेदन गरिएपछि भित्र जाने अनुमति पाएका नन्दीले राजसभामा बसेको दैत्यराज सिन्धुलाई देखेर आनन्दको अनुभव गरे ।।१।। हातमा शस्त्र-अस्त्र धारण गरी ठूला-ठूला वीरहरूलाई वरिपरि राखेर माझमा बसिरहेको सिन्धुले सभामा आएर आनन्दपूर्वक नाचिरहेका वेश्याहरूको नृत्य हेरिरहेको थियो । चारैतिर बाजा-गाजा घन्किरहेका थिए। त्यो वाद्यघोषबाट दिशाहरू प्रतिध्वनित भइरहेका थिए । त्यस बेला सभाभित्र नन्दीलाई देखेर केही दैत्यले साक्षात् सूर्य आएझैं माने ।।२-३।। महाकाय र महावीर नन्दीलाई देखेर दैत्यहरू थर-थर काप्न थाले । केही सभासद् दैत्यहरू त नन्दीलाई तर्साउने हिसाबले भयङ्कर गर्जन गरिरहेका थिए ।।४।। तर ती सबै कुरा हुँदा पनि आफ्नो बल र पराक्रममा विश्वास र स्वाभिमान राख्ने नन्दी भने धैर्यपूर्वक शान्त मुद्रामा उभिएका थिए। दैत्यराजले हातले बस्न संकेत गरेपछि नन्दी उत्तम आसनमा बसे ।।५।। तेजस्वी नन्दीलाई देखेर त्यहाँ रहेका दैत्यहरू भित्तामा चित्रित गरिएका पुतलीजस्ता देखिन्थे । दैत्यराज सिन्धुको सङ्केत पाएर नन्दीले दोस्रा बृहस्पतिले झैं भने ।।६।। 'हे दैत्यवर ! मैले धेरै सभा देखेको छु, तर यस्तो सभा देखेको थिइनँ । तपाईंहरू सबै बलवान् हुनुहुन्छ र ऐश्वर्यसम्पन्न पनि । यहाँ रहेका सबै दैत्य कामदेवझैं सुन्दर हुनुहुन्छ । यति सुन्दर हुँदाहुँदै पनि तपाईंहरू ब्वाँसोझैं बुद्धिहीन र मूर्ख पनि हुनुहुन्छ। सभामा आएका सज्जन-दुर्जन, दुर्बल र बलवान् जस्तोसुकै भए पनि त्योसँग सोधपुछ-भलाकुसारी गर्नुपर्छ र सम्मान पनि दिन जान्नुपर्छ। यो सनातन नीति हो र सनातन मर्यादा पनि। तपाईंहरूको सभामा यस्तो केही देखिएन । यो देखेर म अचम्म परेको छु ।।७-९।। यस्तो सभामा बस्ने सभासद्को कुनै अर्थ छैन। मन्त्रीहरू पनि व्यर्थ छन्। गण्यमान्य नागरिक पनि व्यर्थ देखिएका छन् । सभामा आएका मानिसको सम्मान र तिनीहरूसँग कुशल प्रश्न गर्नु राजाको मात्र कर्तव्य होइन, यो त खास गरेर सभासद्हरूको कर्तव्यभित्र पर्दछ' ।।१०।।

क उवाच

इति तद्वचनं श्रुत्वा सिन्धुः प्रोवाच नन्दिनम् ।
पद्मयोनेरिव तव मतिर्दृष्टा ! गुणाकर ।।११।।

कस्य त्वं कुत आयातः किमर्थं वा वृषेश्वर । !
तेजसा वह्निसदृशः पञ्चास्य इव विक्रमे ।।१२।।

नन्द्युवाच

सुरभेः कामरूपाया अपत्यं नन्दिनामकम् ।
विद्धि मां गिरिजानाथवाहं ब्रह्माण्डभेदिनम् ।।१३।।

मयूरेशो धराभारहरो दुष्टनिर्वहणः ।
अवतीर्णः शिवगेहे बाल्यात् प्रभृति दैत्यहा ।।१४।।

शेषो मूकोऽभवत् तस्य प्रतापवर्णनेऽब्जजः ।
समुद्रमथनाद् यद्वद् रत्नजातं बहिर्ययौ ।।१५।।

तद्वन्नीतिं विमथ्याऽद्य कार्यसिद्धिं विचारय ।
आज्ञां शृणु मयूरेशप्रेषितां बलवत्तराम् ।।१६।।

आज्ञाभङ्गे तस्य भवेद् विनाशो यस्य कस्यचित् ।
यतः स सृजते विश्वं पाति हन्ति चराचरम् ।।१७।।

त्वया विनिहिताः कारागृहे देवगणा बलात् ।
पदानि तेषां लब्धानि भाग्यं स्यात् किमतः परम् ।।१८।।

इदानीं वैरनिर्मोकं विचार्य कर्तुमर्हसि ।
मोचयाशु सुरान् सर्वानाज्ञया स्वामिनो मम ।।१९।।

त्रिपुरेण कृतं वैरं शिवेन सह तत्क्षणात् ।
हिरण्यकशिपुं स्तम्भेऽवतीर्य हतवान् हरिः ।।२०।।

**ब्रह्माजीले भन्नुभयो** – नन्दीका कुरा सुनेर दैत्यराज सिन्धुले नन्दीलाई भन्यो – 'हे गुणाकर ! वृषेश्वर ! तिम्रो बुद्धि ब्रह्माजीकै समान रहेछ ।।११।। कसका दूत हौ ? कहाँबाट आएका छौ ? के उद्देश्यले आएका छौ ? तिमी तेजद्वारा अग्निसमान र पराक्रममा सिंहसमान देखिन्छौ ?' ।।१२।।

**नन्दीले भने**– 'हे दैत्यराज ! आफ्नो इच्छाअनुसार रूपधारण गर्न सक्ने कामधेनुको पुत्र, पार्वतीपतिको वाहन र ब्रह्माण्ड भेदन गर्ने शक्तिले सम्पन्न मलाई नन्दी भनेर जान्नुहोस् ।।१३।। हे दैत्यराज ! पृथिवीको भार हरण गर्न र दुष्टहरूको संहार गर्न मयूरेश श्रीगणेश शिवजीको घरमा पुत्र बनेर उत्पन्न हुनुभएको छ । सानै उमेरदेखि नै उहाँ दैत्यहरूको वध गर्दै आउनुभएकाले दैत्यसंहारकका नामबाट पनि विख्यात हुनुहुन्छ ।।१४।। मयूरेश भगवान्का गुणहरूको आदि-अन्त्य पत्तो नपाएर शेषनाग पनि वर्णन गर्न असमर्थ भई लाटाजस्ता देखिएका छन् । नारायणको नाभिकमलबाट पैदा हुनुभएका ब्रह्माजी पनि मयूरेश श्रीगणेशको प्रशंसा गर्न असमर्थ भएर मौन हुनुभएको थियो। जसरी समुद्रमन्थन गर्दा उत्तम रत्नहरू पैदा हुँदै गए त्यसरी तपाईंहरूले पनि नीतिशास्त्रको मन्थन गरेर कार्यसिद्धिको उपाय पत्ता लगाउने विषयमा विचार गर्नुहोस् । अहिले तपाईंलाई भगवान् मयूरेशले सन्देशमूलक आज्ञा गर्नुभएको छ । म त्यो सुनाउँछु र तपाईंहरूले सावधान भएर सुन्नुहोस् ।।१५-१६।। जसले श्रीगणेशको आज्ञाभङ्ग गर्छ त्यसको विनाश निश्चित छ । तपाईंहरूले उहाँको पराक्रम बुझ्नुभएको छ कि छैन ? नबुझेको भए म भन्छु सुन्नुहोस् – भगवान् मयूरेश चराचरसहित विश्वको निर्माण, पालन र संहार गर्नुहुन्छ ।।१७।। तपाईंहरूले धेरै देवताहरूलाई हठपूर्वक कारागृहमा थुन्नुभएको छ। त्यस्ता पवित्र देवताहरूको चरणकमलको दर्शन गर्न पाउनुभयो, यो ठूलो भाग्य हो तर अब विचार गर्नुहोस् र वैरभाव हटाउने काम गर्नुहोस् । मेरा स्वामी श्रीगणेशको आज्ञाअनुसार तपाईंहरूले ती देवताहरूलाई कारागारबाट मुक्त गर्नुहोस् ।।१८-१९।। त्रिपुरासुरले भगवान् शिवजीसँग वैर गर्‍यो, भगवान् शिवजीले त्यसलाई मारिदिनुभयो । भगवान् नारायणले आफ्नो शत्रु हिरण्यकश्यपुलाई स्तम्भमा अवतार लिएर वध गर्नुभयो ।।२०।।

तारकेण जिता देवा अतिष्ठत् तत्पदे स्वयम् ।
स्कन्देन निहतो युद्धे क्षणेन तारको बलात् ।।२१।।

अतो दत्त्वा सुरान् मह्यं तिष्ठ स्थाने सुखं चिरम्।

क उवाच

एवं नन्दिवचः श्रुत्वा चुक्रोध सिन्धुदैत्यराट् ।।२२।।
उवाच रक्तनयनो वमन्निव हुताशनम् ।

सिन्धुरुवाच

चातुर्यं बहुधा दृष्टं त्वदीयं वृषनन्दन ।।२३।।

प्रसङ्गं नैव जानासि यतो वाचस्पतेरपि ।
अज्ञानात् प्रकृतार्थस्य वचो याति वृथार्थताम् ।।२४।।

बालस्य तव वाक्येन स्वामिनस्तेऽपि वाक्यतः ।
मोचयेयं कथं देवान् यावत् सोऽपि न निर्जितः ।।२५।।

प्रमाणं किन्नु ते वाक्यं तृणादवनचारिणः ।
क्व ते गिरीशस्तत्पुत्रो वृथा भीतिः प्रदर्श्यते ।।२६।।

लाङ्गले योजयाम्यद्य दौत्येन नागतो यदि ।
यदि मे वक्रतां यायाद् भ्रुकुटी क्रोधतो वृष ।।२७।।

तदा त्रिभुवनं नश्येत् का तत्र गणना तयोः ।
रुष्टः शृगालः किं कुर्यादप्रियं सिंहनागयोः ।।२८।।

क उवाच

एवं शब्दशरैर्विद्धो नन्दी क्रोधादथाऽब्रवीत् ।

नन्द्युवाच

विपरीतां मतिं तेऽद्य लक्षयाम्यसुराधम ।।२९।।

सन्निपातीव विकलं वल्गसे मरणोन्मुखः ।
पूर्वं साम प्रयोक्तव्यमिति तेनाहमीरितः ।।३०।।

तारकासुरले देवताहरूलाई जितेर इन्द्रपदमा अधिकार जमायो तर भगवान् स्कन्दले केही समयमा नै त्यसलाई बलपूर्वक मारिदिनुभयो ।।२१।। त्यस कारण तपाईँहरूले पनि आफूले बन्दी बनाएका देवताहरूलाई सुम्पेर सुखपूर्वक जीवनयापन गर्नुहोस् । तपाईँलाई कुनै भय हुनेछैन ।

**ब्रह्माजीले भन्नुभयो** - नन्दीका यी वचन सुनेर दैत्यराज सिन्धु क्रुद्ध भयो ।।२२।। रीसले राता भएका आँखाबाट आगाका ज्वाला निकाल्दै त्यसले उत्तर दियो ।

**सिन्धुले भन्यो**- 'हे वृषनन्दन ! मैले तिम्रो अनेक किसिमको कुशलता अनुभव गरें ।।२३।। तिमीले प्रसङ्ग नै बुझेका छैनौ । प्रसङ्ग नबुझी बहकिएर कुरा गर्दा बृहस्पतिले बोलेको वचन पनि खेर जान्छ । तिमीजस्ता केटाकेटीले भनेका कुरा र तिम्रा स्वामीको सन्देश सुनेर मैले कसरी बन्दी देवताहरूलाई मुक्त गर्न सक्छु ? जबसम्म तिम्रो स्वामी श्रीगणेशलाई युद्धको मैदानमा परास्त गर्न सक्दिनँ तबसम्म बन्दीहरूलाई मुक्त गर्ने प्रश्न नै उठ्दैन ।।२४-२५।। वन अथवा चौरमा घाँस चरेर पेट पाल्ने तिमीजस्ता गोरुले भनेको वचन के प्रमाण हुनसक्छ ? तिम्रा शिव के नै हुन् र ? अझ तिमीले त्यस्ता शिवका छोराको कुरा सुनाएर दैत्यसमाजलाई व्यर्थमा तर्साउने काम गरिरहेका छौ ।।२६।। तिमी दूत भएर नआएको भए भर्खर हलोमा नार्ने थिएँ । हे गोरु! अझ पनि मेरा विपरीत कुरा गर्दछौ भने मैले आँखीभौं बाङ्गो गराएर हेर्नासाथ तिम्रा अन्नदाताको त के कुरा स्वर्ग, मर्त्य र पाताललाई पनि खरानी भएको देख्नेछौ । गणेश र शिवको त कुरै नगर । रिसाएको स्यालले हात्ती र सिंहको के बिगार्न सक्छ ?' ।।२७-२८।।

**ब्रह्माजीले भन्नुभयो** - सिन्धु दैत्यका वचनको बाणबाट घाइते भएका नन्दीले क्रोधपूर्वक उत्तर दिए ।

**नन्दीले भने** - 'हे अधम दैत्य ! तेरो बुद्धि विपरीत भएको रहस्य मैले थाहा पाएँ । कालले कुत्कुत्याएको हुँदा तँ सन्निपात रोगको रोगीझैं बक्बक गरिरहेको छस् । मैले भगवान् श्रीगणेशबाट दैत्यराज सिन्धुको सभामा पुगेपछि सर्वप्रथम मीठो वचन बोलेर कुराकानी गर्नू भन्ने आदेश पाएका कारण त्यसरी व्यवहार गरेको थिएँ । तर दुर्जनलाई दिएको उपदेश असफल भएझैं मेरो मधुर वचनको नीति पनि असफल भएको

त्वयि नीतिर्वृथा जाता ह्युपदेशो यथा खले ।
यदि निन्दा प्रयुक्ता ते मयूरेशे शिवेऽपि च ।।३१।।

क्षीणमायुस्तया तेऽद्य न युद्धे जयमेष्यसि ।
इदानीं हन्मि त्वां मूढ ! नाज्ञाऽस्ति स्वामिनो मम ।।३२।।

नायकेन न हन्तव्यो दूतस्तेनापि नायकः ।
इत्युक्त्वा पातयन् दैत्यान् नन्दी निश्वासवायुना ।।३३।।

क्रोधेन तमपृष्ट्वैव प्रतस्थे हर्षनिर्भरः ।
सान्निध्यं प्राप्य देवस्य मयूरेशस्य तत्क्षणात् ।।३४।।

दूराद् ददर्श देवोऽपि प्राह नन्दी समागतः ।
प्रणिपत्याब्रवीद् देवं वृत्तान्तं सर्वमादितः ।।३५।।

बहुधा बोधितो दैत्यो न स्वीचक्रे वचो मम ।
निर्भर्त्सितो बहुविधं तेनाहञ्च मया च सः ।।३६।।

न्युब्जे घटे यथा बिन्दुस्तस्मिन्सर्वं वृथा भवेत् ।

क उवाच

इति तद्वचनं श्रुत्वा प्रयातस्य यथागतम् ।।३७।।

जहर्ष स मयूरेशो दैत्यमर्दनलालसः ।
आज्ञापयत् स युद्धाय प्रमथादीन् गणाँस्तथा ।।३८।।

इदानीं सिन्धुनगरे युद्धं कर्तुं समुत्सुकाः ।
गर्जन्तु वीरशब्दैश्च मोचितुं बन्धनात् सुरान् ।।३९।।

हत्वा सिन्धुञ्च सबलं मोचितुं चाखिलान् सुरान् ।
मुनीनां त्वरमाणानां गन्तुं स्वाश्रममण्डलम् ।।४०।।

छ । यदि तैंले श्रीगणेश र शिवजीलाई लक्षित गरी निन्दावचनको प्रयोग गर्दछस् भने त्यसबाट तेरो आयु क्षीण हुनेछ र तैंले युद्धमा कुनै हालतमा पनि विजय प्राप्त गर्ने छैनस् । हे मूर्ख ! मैले अहिले नै तलाईं मार्ने थिएँ तर मलाई त्यसो गर्न मेरा ईश्वर श्रीगणेशबाट आज्ञा प्राप्त भएको छैन ।।२९-३२।। राजाले राजदूतलाई मार्न हुँदैन र राजदूतले पनि विरोधी राजालाई मार्नु हुँदैन ।' यसो भनेर नन्दीले आफ्ना श्वास-प्रश्वासबाट अनेक दैत्यहरूलाई उडाएर भुइँमा पछारे । त्यसपछि रीसले चूर भएका नन्दी सिन्धु दैत्यसँग जान्छु भन्ने कुरा नै नगरी त्यहाँबाट हिंडे । तत्काल नै ती भगवान् मयूरेशको नजिकमा पुगे ।।३३-३४।। उहाँले पनि नन्दीलाई टाढैबाट देखेर 'ल नन्दी आइपुगे' भन्नुभयो। नन्दीले भगवान् श्रीगणेशलाई प्रणाम गरेर शुरूदेखि अन्त्यसम्मको सबै वृत्तान्त सुनाउने काम गरे।।३५।। नन्दीले भने - 'हे भगवन् श्रीगणेश ! मैले अनेक प्रकारबाट त्यस दैत्यलाई संझाएँ, तर त्यसले मेरा वचनको उपेक्षा गर्‍यो । मलाई क्रोधपूर्वक अपशब्द प्रयोग गरी गाली गर्‍यो। मैले पनि त्यसैगरी जवाफ दिएँ ।।३६।। घोप्टिएको गाग्रोमा राखिएको पानी खेर गएझैं त्यसलाई दिएको ज्ञान-गुनको उपदेश व्यर्थ भयो ।'

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि नन्दीका मुखबाट सम्पूर्ण वृत्तान्त सुन्नुभएका भगवान् मयूरेश अत्यन्त खुसी हुनुभयो । दैत्यहरूको संहार गर्ने लालसा लिनुभएका प्रभुले सिन्धु दैत्यसँग युद्ध गर्न प्रमथगणलाई आदेश दिंदै भन्नुभयो- 'हे प्रमथगण ! अहिले तिमीहरू दैत्यराज सिन्धुको नगरमा युद्ध गर्ने उत्कण्ठा लिएर प्रस्थान गर । देवताहरूलाई बन्धनबाट मुक्त गर्न सैनिकसहित दैत्यराज सिन्धुलाई मार्न र मुनिहरूलाई शान्तिपूर्वक आफ्ना साधना-उपासना निर्विघ्न सम्पन्न गर्ने व्यवस्था मिलाउन तिमीहरूले युद्ध गर्नुपर्छ। अब युद्धका लागि सिंहनाद गर' ।।३७-४१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे विचारवर्णनं नामैकादशाधिकशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको सिन्धुसँग स्वयं युद्ध गर्ने विषयमा मन्त्रणा' शीर्षकान्वित एक सय एघारौं अध्याय पूर्ण भयो ।।१११।।

ॐ

## द्वादशोत्तरशततमोऽध्याय: { ११२ अध्याय }

क उवाच

शिखण्डिनं समारुह्य मयूरेश: परे दिने ।
आयुधानि च चत्वारि प्रगृह्य करपङ्कजे ।।१।।

जगर्ज घनवद् घोरं ययौ रणचिकीर्षया ।
शिवोऽपि गर्जन् सहसा वृषारूढो ययौ तदा ।।२।।

सप्तकोटिगणा: पश्चात् सन्नद्धा ययुरोजसा ।
नन्दी प्राह ततस्तत्र न गन्तुं सहसाऽर्हथ ।।३।।

गणानां नायके वीरभद्रे च मयि तिष्ठति ।
प्रमथे वा विद्यमाने शक्ते हन्तुं सुरद्विषाम् ।।४।।

पश्यन्तु सेवकमहस्ततो यान्तु सुसंयुगम् ।

क उवाच

भारतीमेवमाकर्ण्य देवो नन्दीरितां तदा ।।५।।

उवाच परमप्रीत: साधु साधु त्वयोदितम् ।
पराक्रमवत: सिन्धोर्द्रष्टव्यस्तु पराक्रम: ।।६।।

इति यामि पुरो नन्दिन् ! यूयं यान्तु सहैव न: ।
ततस्तु भूतराजोऽथ पुष्पदन्तोऽपि वीर्यवान् ।।७।।

ईयतु: पुरतस्तस्य कोटिसंख्यायुता गणा: ।
वीर्यश्रिया दीप्यमाना: सर्वे वीरा मदान्विता: ।।८।।

आक्रमन्तो दिगन्तान् वै गर्जन्तो घनवद् भृशम् ।
भारेण शेषशीर्षाणि नामयन्तो धरामपि ।।९।।

क्रोधानलं वमन्तस्ते प्रापुस्तां गण्डकीं पुरीम् ।
दैत्यगुल्मे निपेतुस्ते दशकोट्यसुरैर्युते ।।१०।।

ततस्तत्राभवद् युद्धं तुमुलं रोमहर्षणम् ।
शस्त्रास्त्रैर्बाणनिचयैर्भिन्दीपालपरश्वधै: ।।११।।

केषाञ्चिन्मस्तका भिन्ना: पादा हस्तास्तथोरव: ।
जानुजङ्घाश्च गुल्फाश्च भग्ना: केऽपि गतासव: ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - नन्दी दैत्यराज सिन्धुको समाचार लिएर फर्केपछि दोस्रो दिन मयूरेश भगवान् श्रीगणेशले मयूरमा सवार भएर आफ्ना करकमलमा चार किसिमका आयुध धारण गरी युद्ध गर्ने इच्छाले घनगर्जन गर्नुभयो । भगवान् शिवजी पनि गर्जनपूर्वक साँढेमा सवार भई प्रस्थान गर्नुभयो ।।१-२।। त्यसपछि शस्त्र-अस्त्रले सुहाएका र सात कोटि सङ्ख्यामा रहेका शिवगण पनि ओजपूर्वक शिवजीका पछि लागे । त्यस समयमा नन्दीले आएर भने - 'हे प्रमथगण! तिमीहरू सहसा अगाडि बढ्नु हुँदैन ।।३।। श्रीगणेश भगवान्, वीरभद्र, प्रमथगण र म छँदाछँदै शत्रुहरूको हत्याका लागि अरू वीरहरू अगाडि बढ्नु हुँदैन ।।४।। हामीजस्ता सेवकहरूको तेज हेर्नुस् र अनिमात्र युद्धमा जानुहुनेछ ।'

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशले नन्दीको वचन सुनेर अत्यन्त प्रसन्न हुँदै तिनलाई भन्नुभयो - 'तिमीले उत्तम कुरा गरेका छौ, आफूलाई पराक्रमी ठान्ने दैत्यराज सिन्धुको पराक्रम हेर्नुपर्छ ।।५-६।। म अगाडि जान्छु, तिमीहरू मेरा साथ हिंड ।' भगवान् श्रीगणेशको आज्ञा पाएपछि भूतराज र भूतराजका पछि पराक्रमी पुष्पदन्त गए ।।७।। तिनका अगाडि कोटि सङ्ख्यामा रहेका वीरहरू पनि गए । वीर्यलक्ष्मीले दीप्त एवं मदमत्त सबै वीर दिग्दिगन्तमा आक्रमण गर्दै र मेघसमान गर्जन गर्दै अगाडि बढे । ती आफ्नो भारले शेषनागका हजारौं शिर निहुर्‍याउँदै र पृथिवीलाई झुकाउँदै अगाडि बढेका थिए ।।८-९।। यसरी क्रोधको अग्निज्वाला ओकल्दै ती सबै वीर गण्डकीको किनारमा रहेको गण्डकी नगरीमा पुगे । ती देवसेनाका जवानहरू दश करोड असुरवीरहरूले सम्पन्न दैत्यसेनामा जाइलागे । त्यहाँ भयङ्कर र रोमाञ्चक युद्ध आरम्भ भयो । त्यो युद्ध शस्त्र-अस्त्र, बन्दुक, तोप र परशु आदिबाट शुरु गरिएको थियो । देवसेनाले प्रबल पराक्रम देखाउँदा दैत्यहरूमध्ये कतिका टाउका काटिए, कतिका हात भाँचिए, कसैका जँघा टुक्रिए, कसैका घुँडा र गोलिगाँठाहरू फुक्लिए र केही मरे ।।१०-१२।। ती सैनिकहरू भुइँमा लडिबुडी खेल्दै

निपत्य पुनरुत्थाय प्रायुध्यन् स्वपरैः सह ।
एवं निपतिता दैत्या असङ्ख्याता गतासवः ।।१३।।

पलाय्य निर्गताः केचिदाचख्युः सिन्धवेऽखिलम् ।
सभामध्ये वीरगणैरुपविष्टाय केचन ।।१४।।

शस्त्राघातैः स्त्रवद्रक्ताः पुष्पिता इव किंशुकाः ।
तत्रागत्य मृताः केचित् केचिद् धैर्यात् तमब्रुवन् ।।१५।।

नगरद्वारगुल्मे तु दशकोटिनिशाचराः ।
निवृत्ताः शस्त्रसंघातैर्युद्धं कृत्वा परस्परम् ।।१६।।

यदा शैलभिदो युद्धमभूत्तत्र जयोऽभवत् ।
उपविष्टोऽसि किं तूष्णीं सिन्धो ! स्वहितमाचर ।।१७।।

आरामा रिपुभिर्दग्धा गृहाणि च प्रतोलिकाः ।
अन्धकारे धूलिकृते प्रापलन् वह्नितेजसा ।।१८।।

भुञ्जन्तो निद्रिताः केचिन्निर्ययुर्नगराद् बहिः।
बालानादाय पपलुस्त्यक्त्वा भोगञ्च केचन ।।१९।।

विस्त्रस्तवसनाः केचिद् ध्यानस्था वह्निना हुताः ।
तत्रापि निधनं जग्मुर्नानाशस्त्रप्रहारतः ।।२०।।

धनञ्जयं सर्वदिक्षु वीक्ष्य पौरा भयातुराः ।
मेनिरे प्रलयं प्राप्तं दह्यते सकला पुरी ।।२१।।

क उवाच

एवं दूतमुखाच्छ्रुत्वा सिन्धुर्जृम्भामथाकरोत् ।
खादन्निव मृगान् सिंहः पर्वतेन्द्रविनिर्गतः ।।२२।।

उवाच दुर्धरा सेना दृश्यते किं भविष्यति ।
दिदीपे क्रोधानलतो ग्रसन्निव त्रिविष्टपम् ।।२३।।

युद्ध गरिरहेका थिए । केही दैत्यसेनाका जवानहरू भागेर सभामा आसीन दैत्यराज सिन्धुलाई सबै वृत्तान्त बताइरहेका थिए । केही दैत्यवीर शस्त्रद्वारा लागेको घाउबाट रगत बगाइरहेका थिए । ती सबै फुलेका पलाशवृक्षझैं राता देखिन्थे। केही दैत्यवीर सिन्धु दैत्यका सामु आएर पछारिएर मरे। केही दैत्यले धैर्यपूर्वक सिन्धुलाई वृत्तान्त बताए - 'हे महाराज! नगरको ढोकामा रहेको गुल्ममा दश करोड निशाचर छन्, ती निशाचरहरू शस्त्रयुद्ध गरेर परास्त भई भागेर यहाँ आएका छन्। जुन बेला हाम्रो इन्द्रसँग युद्ध भएको थियो त्यस बेला हामीले विजय प्राप्त गरेका थियौं । अहिले हामीले पराजय भोगिरहेका छौं । हे दैत्यराज ! तपाईं किन चुप लागेर बस्नुभएको छ ? तपाईंले युद्धमा गई नेतृत्व लिएर आफ्नो हित गर्नुहोस् । आज हाम्रा बगैंचा, घर र किल्लाका मूल ढोकाहरूमा शत्रुहरूले आगो लगाई सखाप पारिसकेका छन् । तिनले आगो लगाउँदा धूलो उडेर उत्पन्न भएको अन्धकार फैलिएपछि धेरैजसो दैत्य सैनिकहरू रणभूमिबाट भागे ।।१३-१८।। नगरमा गई भोजन गर्न लागेका केही दैत्य र आफ्नै घरमा निदाइरहेका कतिपय दैत्य डरले बालबच्चासहित भागेर शहर बाहिर गइसकेका छन् । केही गृहस्थ दैत्यले आफ्ना घरका काम-कर्तव्य र सुखभोग छाडेर बच्चा र नारीहरू लिई पलायन गरिसकेका छन् । केही दैत्य बेहोश भई शरीरबाट लुगा खसेको पनि थाहा नपाएर ज्यान जोगाउने किसिमले भागेका छन् । केही ध्यानमा लागेका दैत्यहरू आगोमा परेर मरे । त्यसैमाथि फेरि शत्रुको आक्रमण हुँदा शस्त्रको प्रहारबाट धेरै दैत्यहरू मरे ।।१९-२०।। केही दैत्यहरू पटक पटक शत्रुको आक्रमण भइरहँदा शस्त्रको आघात र आगाको दाहबाट मरे । नगरको चारैतिर आगो देखेर डराएका नगरवासी दैत्यहरूले प्रलयकाल आएजस्तो मानेका छन् । आज सम्पूर्ण शहरमा आगो लागेको छ र त्यो डढेर खरानी बन्दैछ' ।।२१।।

**ब्रह्माजीले भन्नुभयो** - दूतका मुखबाट युद्धको सम्पूर्ण वर्णन सुनेपछि गुफाबाट बाहिर आएको सिंहले मृगलाई खान मुख बाएझैं दैत्यराज सिन्धुलाई हाई आयो । त्यसपछि त्यसले भन्यो- 'हाम्रो सेना अविजेय छ, अब अगाडि हेर के-के हुन्छ ?' तीन लोकलाई एकै गासमा निल्न खोजेझैं दैत्यराज सिन्धुको क्रोधको आगो दन्कियो । त्यसपछि त्यसले फेरि

सिंहस्याग्रे किं शशकः करिष्यति पराक्रमम् ।
मेरोः किं शलभः कुर्याच्चलनं जम्बुकोऽपि वा ।।२४।।

कालस्य मम किं कुर्याद् बालोऽयं तु मयूरराट् ।
इत्युक्त्वा क्ष्वेडितेनाऽसौ नादयन् विदिशो दिशः ।।२५।।

चिन्तातुरः क्षणं तस्थौ मुनिर्मौनमिवास्थितः ।
ततो वीराः सिन्धुदैत्यं प्राब्रुवन् क्रोधमूर्च्छिताः ।।२६।।

आज्ञां देहि मयूरेशं जेष्यामः क्षणमात्रतः ।
तव प्रतापात् त्रैलोक्यं वशं नेष्यामः साम्प्रतम् ।।२७।।

सिन्धुरुवाच

सम्यगुक्तं महावीरा ममापि रिपुदर्शने ।
मन उत्कण्ठितं यस्मात् सैन्येन युद्ध्यतामिह ।।२८।।

ततः सर्वे पुरो याता गर्जन्तो वीरसत्तमाः ।
असङ्ख्याताः शस्त्रधराश्चतुरङ्गबलान्विताः ।।२९।।

हयारूढः सिन्धुदैत्यः क्रोधहर्षसमन्वितः ।
वमन् क्रोधानलं वक्त्रान्नेत्राभ्यां रणदुर्मदः ।।३०।।

ययावश्वं पुरोधाय मनोवेगं महाधनम् ।।३१।।

भन्यो - 'खरायोले सिंहका सामु के पराक्रम गर्न सक्छ ? सलहले अथवा स्यालले के सुमेरु पर्वत उचाल्न र हल्लाउन सक्छ ? ।।२२-२४।। त्यसैगरी त्यो श्रीगणेश बच्चाले महाकाल-स्वरूप म सिन्धु दैत्यलाई के लछारपाटो लगाउन सक्छ ?' यसरी क्रोधपूर्ण भनाइ राखेर त्यसले सिंहनाद गरी दसै दिशा थर्कायो । त्यसपछि केही चिन्ता परेझैं त्यो मुनिसमान मौनधारण गरेर बस्यो । यत्तिकैमा केही दैत्यवीर रीसले चूर हुँदै आएर दैत्यराज सिन्धुलाई भन्न लागे - 'हे दैत्यराज ! हजुर आज्ञामात्र दिनुहोस्, हामी एकछिनमा मयूरेशमाथि विजय गर्दछौं । हजुरको प्रतापबाट तीन लोकलाई नै हामीले वशमा ल्याउनेछौं।।२५-२७।।

**सिन्धुले भन्यो** - 'हे वीर हो ! राम्रो कुरा गऱ्यौ । मेरो पनि शत्रु मरेको देख्ने इच्छा बढेर आएको छ । त्यस कारण तिमीहरू आफ्ना सेनाका साथमा गई श्रीगणेशसँग युद्ध गर।' यसरी सिन्धु दैत्यले आज्ञा दिएपछि असङ्ख्य शस्त्रधारी चतुरङ्गिणीसेनाले सम्पन्न ती दैत्यवीरहरू गर्जन गर्दै लडाइँको मैदानतर्फ गए । घोडामा सवार दैत्यराज सिन्धु पनि युद्धका लागि लालायित भएर क्रोध र हर्षले सम्पन्न भई मुख र आँखाबाट क्रोधको ज्वाला निकाल्दै मनझैं द्रुत गति भएको बहुमूल्य घोडामा सवार भई युद्धभूमितर्फ गयो ।।२८-३१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे युद्धवर्णनं नाम द्वादशाधिकशततमोऽध्यायः

प्रा.डा. बेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'गण्डकी नगरीमा गणेशसेना र सिन्धुसेनाको युद्धवर्णन' शीर्षकान्वित एक सय बाह्रौं अध्याय पूर्ण भयो ।।११२।।

ॐ

## त्रयोदशोत्तरशततमोऽध्यायः { ११३ अध्याय }

क उवाच

पदातयः पुरो यान्ति कम्पयन्तो वसुन्धराम् ।
विकरालमुखा वीराः सिन्दूरारुणमस्तकाः ।।१।।

केचिन्निबद्धकवचा मुक्तकेशाः सुदारुणाः ।
केचिन्निबद्धकटयः केचिच्चन्दनचर्चिताः ।।२।।

नानाशस्त्रप्रहरणा नानायुद्धविशारदाः ।
पुरो यान्ति गजा मत्ता धातुचित्रा इवाद्रयः ।।३।।

दीर्घदन्ता विभान्ति स्म भूषणैर्विविधैरपि ।
घण्टानादैर्जनं सर्वं बधिरं चक्रुरञ्जसा ।।४।।

चूर्णयन्तो गिरीन् वृक्षान् ययुः शुण्डाप्रहारतः ।
लसत्कुम्भाः पताकाढ्याश्चित्रध्वजविराजिताः ।।५।।

ततोऽश्वाश्च खुराघातैश्चूर्णयन्तो वसुन्धराम् ।
हेषितैर्नादयन्तो वै गगनञ्च दिशो दश ।।६।।

सुवर्णरत्नमुक्ताभिर्भूषिता व्योमचारिणः ।
अधिष्ठिता महायोधैस्तनुत्राणप्रशोभिभिः ।।७।।

नानाशस्त्रधरैर्वीरैः परसेनाविमर्दिभिः ।
ततस्तु रथिनो जग्मुः शस्त्रास्त्रै रिपुघातिनः ।।८।।

सहिता युद्धमार्गज्ञैर्वीरैः सारथिभिर्मृधे ।
मुक्तामणिमया माला वहन्तो गन्धमालिनः ।।९।।

धनुस्कन्धास्तूणभृतो भल्लहस्ताः सखड्गकाः ।
शस्त्रप्रभाभिर्नेत्राणि छादयन्तो जनस्य हि ।।१०।।

**ब्रह्माजीले भन्नुभयो-** दैत्यराज सिन्धुका पैदलसेनाका वीरहरू धर्ती कँपाउँदै अगाडि बढिरहेका थिए। ती वीर डरलाग्दो अनुहार भएका, सिन्दूरजस्तो रातो टाउको भएका थिए र तीमध्ये कसैले कवच धारण गरेका थिए । खुला केश भएका कारण पनि ती सबै दैत्य डरलाग्दा थिए । कसैले कम्मरपेटी बाँधेका थिए र कसैले शरीरमा चन्दनको लेप गरेका थिए ।।१-२।। ती सबै वीर अनेक शस्त्र-अस्त्रको प्रहारका लागि उपयोगी सामग्रीले सम्पन्न र युद्धमा कुशल थिए । तिनका अगाडि विभिन्न धातुले चित्र-विचित्र देखिने, पर्वतझैं आकार भएका र विविध शृङ्गार सामग्रीले सजिएका हात्तीहरू हिंडिरहेका थिए । लामा-लामा दाँत भएका ती हात्तीले धारण गरेका घुँघुरुको नादबाट सबै मानिसलाई बहिरा बनाएका थिए । आफ्नो सूँढको प्रहारबाट पर्वत र रूखलाई पनि धूलो पीठो बनाउने, विशाल गण्डस्थल र ध्वजापताकाले सिंगारिएका र शोभासम्पन्न ती हात्तीको लश्कर युद्धमैदानतर्फ बढिरहेको थियो ।।३-५।। त्यसपछि खुरको आघातबाट पृथिवीलाई चूर्ण-चूर्ण बनाउँदै चीत्कार गरी आकाश र सबै दिशाहरूलाई शब्दायमान गराउँदै घोडाहरू हिंडिरहेका थिए । ती घोडा सुवर्ण, रत्न र मोतीले अलङ्कृत एवं आकाशगामी र द्रुतगामी थिए । तिनमा कवचधारी वीर योद्धाहरू सवार थिए । त्यस्तै अनेक शस्त्र धारण गर्ने शत्रुको संहार गर्न सिपालु वीरहरूले सुहाएका अरू घोडाहरू पनि त्यसरी नै अगाडि बढिरहेका थिए । घोडाहरूपछि रथहरूको लश्कर चलिरहेको थियो । रथमा आरोहण गर्ने योद्धाहरू शस्त्र-अस्त्रको तीक्ष्ण प्रहारबाट ठूला-ठूला शत्रुहरूलाई संहार गर्न सक्षम थिए ।।६-८।। युद्धको मैदानमा बाटो जान्ने र व्यूह भेदन गर्न समर्थ सारथिहरूले युक्त महारथीहरू मोती र मणिको मालाद्वारा अलङ्कृत र सुगन्धित पुष्पमालाद्वारा सुसज्जित थिए। काँधमा धनुबाण भिरेका, हातमा भाला र तलवार धारण गर्ने, शस्त्रको चमकद्वारा दर्शकहरूको आँखा तिर्मिराउन सक्ने ती दैत्यसेनाका वीरहरू आफ्नो गर्जनद्वारा दसै दिशा थर्काउँदै अगाडि बढिरहेका थिए।

एवं सेना समायाता गर्जयन्ती दिशो दश ।
भूतराजेन सा दृष्टा पुष्पदन्तेन वाहिनी ।।११।।

मयूरेशमुभौ यातौ ततौ भीत्या पलायितौ ।

तावूचतु:

नवाज्ञया पुरो यातावावाभ्यां निहता चमू: ।।१२।।

गुल्मस्था नगरद्वारि दग्धश्च नगरं बहु ।
प्रतापं नौ समाकर्ण्य सिन्धु: स्वयमुपागत: ।।१३।।

चतुरङ्गां चमूं गृह्य नानाशस्त्रास्त्रधारिणीम् ।
ततो भीत्या भवन्तश्च समायातौ महाबल ।।१४।।

क उवाच

सिन्धुसैन्यसमुद्रोऽथ वदतोरेवमेतयो: ।
ददृशे पूर्वदिग्भागे दुस्तर: शस्त्रयोधिभि: ।।१५।।

ततो हर्षयुतो ज्ञात्वा दैत्यवृत्तं समासत: ।
नीलकण्ठं समारुह्य मयूरेशो ययौ पुर: ।।१६।।

आयुधानि च चत्वारि चतुर्दोष्षु प्रगृह्य स: ।
सन्नद्धा गणकोट्यस्ता धनुर्बाणासिपाणय: ।।१७।।

परिवार्य स्थिता देवं नीलकण्ठं वृषस्थितम् ।
मुनीश्वरा: स्तुवन्ति स्म ददुराशीर्वचोऽपि तम् ।।१८।।

उभयो: सेनयोर्वाद्यघोषकोलाहलो महान् ।
परस्परं सम्पदं तां वीक्ष्य सेने सुविस्मिते ।।१९।।

असङ्ख्यातं बलं वीक्ष्य तुतोष स मयूरराट् ।
यदुक्तं नन्दिना पूर्वं तद् दृष्टं सर्वमेव हि ।।२०।।

ततो नन्दी मयूरेशं नत्वा गर्जन् मुहुर्ययौ ।
नभोमार्गेण सैन्येषु चिच्छेद वीरमस्तकान् ।।२१।।

मैदानमा पुग्दा श्रीगणेशका सेनाप्रमुख भूतराज र पुष्पदन्त गर्जन गर्दै आइरहेको दैत्यराज सिन्धुको विशाल सेना देखेर भयले पलायन गर्दै भगवान् श्रीगणेशका सामु आइपुगे ।

**भूतराज र पुष्पदन्तले भने** – 'हे प्रभो ! हजुरको आज्ञा पाएर हामी युद्धको मैदानमा गयौं । हामीले धेरै दैत्यहरूको वध पनि गऱ्यौं ।।९-१२।। गुल्ममा रहेर हामीले दैत्यनगरको मूल ढोकामा पुगी त्यसको चारैतिर आगो पनि लगायौं। हाम्रो प्रताप सुनेर त्यो सिन्धु दैत्य अनेक थरि शस्त्र-अस्त्रले सजिएको चतुरङ्गिणीसेना लिएर मैदानमा आयो । हे प्रभु ! त्यसको विशाल सेना देखेर डराई हामी अहिले हजुरको समीपमा आएका छौं' ।।१३-१४।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी भूतराज र पुष्पदन्तले निवेदन गरिरहेको समयमा शस्त्रयोद्धाहरूका लागि दुस्तर सिन्धुको महासेनाको सागर पूर्व दिशामा देखियो ।।१५।। आफ्ना वीरहरूबाट दैत्यको खबर सुनेर खुसी हुनुभएका भगवान् श्रीगणेश युद्धका लागि तयार भई मयूरमा सवार भएर अगाडि बढ्नुभयो ।।१६।। भगवान् श्रीगणेश त्यस बेला चतुर्बाहु हुनुहुन्थ्यो। उहाँ आफ्ना चार हातमा चारथरि आयुध धारण गरी मयूरमा सवार भएर युद्धका लागि तयार हुनुभयो। हातमा धनुबाण र तरवार धारण गर्ने कोटि संख्यामा रहेका युद्धका लागि तम्तयार भगवान्का गणहरूले साँढेमा सवार हुनुभएका नीलकण्ठ शिवजीलाई चारैतिरबाट घेरेका थिए । युद्धमा जान लाग्नुभएका भगवान् शिवजीलाई देखी मुनिहरू स्तुति गरिरहेका थिए र आशीर्वादका वचन प्रदान गरिरहेका थिए ।।१७-१८।। युद्धको आरम्भमा बाजागाजा बज्दा दुबै सेनामा ठूलो कोलाहल मच्चिएको थियो । दुबैतर्फका सैनिकहरू सामुन्ने हुँदा एकले अर्काको शस्त्र-अस्त्रको वैभव देखेर चकित भए । आफ्नो असंख्य सेना नजर गरी मयूरेश श्रीगणेश सन्तुष्ट हुनुहुन्थ्यो । दूतको रूपमा सिन्धु दैत्यको सभामा गई फर्केर आएका नन्दीले जस्तो वर्णन गरेका थिए श्रीगणेशले पनि सिन्धुसेनाको त्यस्तै दृश्य देख्नुभयो।।१९-२०।। त्यसपछि नन्दी पनि भगवान् श्रीगणेशलाई प्रणाम गरी भयङ्कर गर्जन गर्दै आकाशमार्गबाट उडेर गई शत्रुसेनामा जाइलागे । तिनले शत्रुसेनाका असंख्य वीरहरूका टाउका काट्न थाले । आफ्ना सिङ्को प्रबल प्रहारबाट

शृङ्गाघातेन महता हयमस्याहनद् दृढम् ।
शीघ्रमुड्डीय च ययौ मयूरेशं यथाऽक्षतः ।।२२।।

आश्चर्यं चक्रिरे सर्वे गणाः साध्विति शंसिरे ।
छत्रञ्च पातयामास नन्दी शृङ्गप्रहारतः ।।२३।।

पतितेऽश्वे च छत्रे च सिन्धुरश्वान्तरं गतः ।
धारयामास च तदा छत्रमन्यन्महाधनम् ।।२४।।

आश्चर्यं परमं मेने नन्दिनः कर्मणाऽसुरः ।
चुक्रोध स महावीरान् क्व गतो वः पराक्रमः ।।२५।।

एवमाकर्ण्य तद्वाक्यं कौस्तुभो मैत्र एव च ।
अमात्यौ तं नमस्कृत्य सेनया चतुरङ्गया ।।२६।।

मा चिन्तां कुरु सिन्धो ! त्वं विधास्यावो रिपुक्षयम् ।
अन्यथा न मुखं नाथ ! दर्शयावः कथञ्चन ।।२७।।

एवमुक्त्वा प्रचलितौ परसैन्यनिबर्हणौ ।
पदातीनां गणा याता ब्रह्माण्डस्फोटतत्पराः ।।२८।।

न्युब्जतामिच्छवो नेतुं भूगोलं रणदुर्मदाः ।
कौस्तुभोऽथ मयूरेशं यातौ मैत्रश्च पातितुम् ।।२९।।

शरवर्षैः परिच्छाद्य यातावस्यान्तिकं यदा ।
वीरभद्रस्तदा यातो योद्धुं स च षडाननः ।।३०।।

असङ्ख्यसेनया युक्तौ गर्जयन्तौ दिशो दश ।
निजघ्नतुरुभौ रोषात् सिन्धुं नानाप्रहारतः ।।३१।।

कौस्तुभोऽप्यथ मैत्रश्च जघ्नतुस्तौ परस्परम् ।
सहस्व मारयस्वेति व्याहरन्तः परस्परम् ।।३२।।

शस्त्रैरस्त्रैरनेकैश्च ताभ्यां युद्धमकुर्वताम् ।
शरव्रातैर्भिन्दीपालैः परिघैर्मुसलैरपि ।।३३।।

सिन्धु दैत्यको घोडालाई घाइते बनाए । आफू कुनै चोट नखाईकन तुरुन्तै उडेर भगवान् श्रीगणेशका सामु आइपुगे ।।२१-२२।। त्यसरी फर्केर आएका नन्दीलाई शिवगणले आश्चर्यपूर्वक हेर्दै धन्यवाद दिए । फेरि उडेर गएर नन्दीले आफ्ना सिङ्को प्रहारबाट दैत्यराज सिन्धुको राजछत्र भुइँमा खसाइदिए ।।२३।। आफ्नो घोडाको पतन र छत्रभङ्ग भएपछि दैत्यराज सिन्धु भित्र गयो र त्यसले अर्को मूल्यवान् छाता लिएर आयो । त्यस स्थितिमा त्यसले नन्दीको प्रबल पराक्रम देखेर आश्चर्यको अनुभव गरिरहेको थियो । एकछिन विचार गरेर आफ्ना सेनाप्रति क्रोध देखाउँदै सिन्धुले भन्यो - 'हे योद्धाहरू ! खै तिमीहरूको पराक्रम ?' दैत्यराजको क्रोधपूर्ण वचन सुनेर त्यसका वीर मन्त्रीहरू कौस्तुभ र मैत्रले चतुरङ्गिणीसेनाका साथ आई दैत्यलाई प्रणाम गर्दै भने - 'दैत्यराज तपाईँले चिन्ता नगर्नुहोस् हामीले शत्रुसंहार गर्नेछौँ । त्यसो गर्न सकेनौँ भने हामीले फेरि हजुरलाई मुख देखाउने छैनौँ' ।।२४-२७।। आफ्नो यस्तो अठोट बताएर ती मन्त्रीहरूले शत्रुसेनाको नाश गर्न पैदलसेना साथमा लिई युद्धका लागि प्रस्थान गरे। तिनका साथमा ब्रह्माण्ड निहुऱ्याउन सक्ने वीरहरूले सम्पन्न पैदलसेना अगाडि बढ्यो ।।२८।। रणका लागि तम्तयार ती वीरहरू सम्पूर्ण भूगोललाई उल्ट्याउन खोजिरहेजस्ता देखिन्थे । कौस्तुभ र मैत्रले श्रीगणेश भगवान्को नजिकमा गई उहाँलाई प्रहार गर्न चाहिरहेका थिए । त्यसैले ती असंख्य बाणहरूको वर्षा गर्दै श्रीगणेशका सामु पुगे । दैत्यका मन्त्रीहरूलाई भगवान् श्रीगणेशका सामु आइरहेको देखेर स्कन्द र वीरभद्र युद्ध गर्न अगाडि बढे । असंख्य-सेनासम्पन्न वीरभद्र र स्कन्दले आफ्नो गर्जनबाट दसै दिशा थर्काइरहेका थिए । ती दुबैले क्रोधपूर्वक असंख्य शस्त्रको वर्षा गर्दै दैत्यराज सिन्धुमाथि आक्रमण गरे ।।२९-३१।। कौस्तुभ र मैत्र अगाडि आए । तिनलाई अगाडि आएको देखेर स्कन्द र वीरभद्रले ती दुबैका साथ घोर सङ्ग्राम गरे । सहन गर, मार, काट र प्रहार गरजस्ता शब्द उच्चारण गर्दै कौस्तुभ, मैत्र, स्कन्द र वीरभद्रले शस्त्र र अस्त्रद्वारा घमासान युद्ध गरे । बाणवर्षा गरेर, धुयँत्रो हिर्काएर, मुसल प्रहार गरेर तथा मुग्रो प्रहार गरेर लडिरहेका दुबै पक्षका सैनिक वीरहरूले परस्पर वधको इच्छा गर्दै एकले अर्कालाई घाइते तुल्याइरहेका

नानासेनाचरा जघ्नु: परस्परवधेप्सव: ।
नष्टेषु सर्वशस्त्रेषु शरेषु च परस्परम् ।।३४।।

मल्लयुद्धं प्रचक्रुस्ते जीवग्राहममारयन् ।
व्यसव: पतिता: केचित् केचिद् रक्तं मुखाद् बहु ।।३५।।

पादं पादेन जघ्नुस्ते स्कन्धं स्कन्धेन चापरे ।
पृष्ठं पृष्ठेन केचिच्च हस्तं हस्तेन चापरे ।।३६।।

मस्तकं मस्तकेनैव कूर्परं कूर्परेण च ।
पतिता: पात्यमानाश्च मृता भग्नाश्च चूर्णिता: ।।३७।।

छिन्नकण्ठा भिन्नभुजा भग्नजङ्घोरुबाहव: ।
एवं नष्टेषु सैन्येषु सिन्धुसेना जयं ययौ ।।३८।।

जयशब्दै: स्तूयमानैर्बन्दिभिर्वाद्यनिस्वनै: ।
सिन्धुदैत्येश्वरं यातावमात्यौ मैत्रकौस्तुभौ ।।३९।।

मयूरेशं समायातौ वीरभद्रषडाननौ ।
ततोऽस्तमगमत् सूर्यस्ततो युद्धमुपारमत् ।।४०।।

अपरेऽह्नि न्ययुध्यन्त देवसैन्येन दानवा: ।
पलायमानां तां सेनां निजघ्नु: शरसञ्चयै: ।।४१।।

पुनरावेशमापन्नौ वीरभद्रषडाननौ ।
गर्जन्तौ गर्जयन्तौ च गगनञ्च दिशो दश ।।४२।।

निघ्नन्तौ रिपुसेनां तां निदर्हन्तौ कृतान्तवत् ।
अन्धकारे महाघोरे न प्राज्ञायत किञ्चन ।।४३।।

थिए । सबै शस्त्र र बाण समाप्त भएपछि त्यहाँ मल्लयुद्ध प्रारम्भ भयो । जसले जसलाई समात्छ त्यसले त्यसलाई ठाडै मार्ने कोशिश गरिरहेका ती वीरहरू भयङ्कर युद्ध गरिरहेका थिए। त्यस युद्धमा केही वीरहरू निष्प्राण भएर लडे र केहीले मुखबाट रगत बान्ता गर्न थाले ।।३२-३५।। दुबै पक्षका वीरहरू एकले अर्कालाई खुट्टाद्वारा खुट्टामा, काँधद्वारा काँधमा, पिठ्यूँद्वारा पिठ्यूँमा, हातद्वारा हातमा, निधारद्वारा निधारमा र कुहिनाद्वारा कुहिनामा हिर्काइरहेका थिए । यसरी परस्परमा प्रहार गर्दा कोही आफै ढले र कसैले शत्रुलाई ढालेका थिए । कोही आफै मरे भने केहीले शत्रुलाई मारेका थिए । केही भुईंमा लडे भने कुनैले शत्रुलाई भुईंमा लडाइरहेका थिए। कुनै घाइते भएका थिए र कसैले शत्रुलाई घाइते बनाए । दुबै पक्षका घाइते वीरहरूका शरीरका उछिट्टिएका टुक्राहरू युद्धको मैदानमा छरिएका थिए । घाँटी छेडिएका, हात काटिएका, जाँघ र भुजा टुक्रिएका धेरै वीरहरू देखिन्थे । यसरी अनेक देववीरहरूको विनाशपछि सिन्धुको सेना विजयी भयो ।।३६-३८।। सिन्धुका मन्त्री, मैत्र र कौस्तुभ पनि बाजागाजाका साथ जय-जयकार र स्तुति गरिरहेका बन्दी गणहरूलाई लिएर सिन्धुका समीपमा गए । उता वीरभद्र र स्कन्द पनि भगवान् श्रीगणेशको दर्शन गर्न गए । त्यसपछि सूर्य अस्ताए र युद्ध पनि थामियो ।।३९-४०।। अर्को दिन त्यसैगरी दानव र देवताका सैनिकहरू जम्मा भएर लड्न थाले । त्यो दिन दैत्यसेनाको बल र पराक्रम अपूर्व रूपमा चम्कियो। तिनले देवसेनालाई भगाउन थाले । भागिरहेको देवसेनामाथि पछाडिबाट दैत्यसेनाले शस्त्रप्रहार गर्‍यो । यस्तो देखेर आवेशमा आएका वीरभद्र र स्कन्द गर्जन गर्दै त्यहाँ आए । ती दुबै वीरले यमराजले झैं दैत्यसैनिकहरूलाई मार्दै आफ्नो शस्त्रप्रहार र गर्जनबाट दसै दिशा र आकाशलाई शब्दायमान गराएका थिए। शस्त्रप्रहारको आगोबाट सबैलाई डढाउँदै तिनले युद्ध गरे । त्यस घनघोर युद्धमा चारैतिर उडेको धूलाले धर्ती, आकाश र सूर्यलाई पनि ढाकिदियो । सूर्य पनि ढाकिदा चारैतिर घोर अन्धकार छायो, त्यहाँ कसैले केही देख्ने स्थिति रहेन । यस्तो घोर अन्धकारमा पनि दुबै पक्षका वीरहरू जोशमा आई शस्त्र प्रहार गर्न लागे । त्यस बेला तिनले कुन आफ्नो सेनाका वीर हुन् र कुन शत्रुसेनाका वीर भन्ने कुरा पनि ठम्याउन सकेनन् । अन्धकारमय युद्धमा

स्वान् परानपि जघ्नुस्ते युध्यमाना महाबलाः ।
भग्नायां सिन्धुसेनायां चक्रतुर्जयनिस्वनम् ।।४४।।

दैत्यामात्यौ पुनर्यातौ मरणे कृतनिश्चयौ ।
प्रेरयामासतुरुभौ निजाश्वौ परवाहिनीम् ।।४५।।

किरन्तौ शरजालानि जघ्नतुः करवालतः ।
ततः षडाननो दृष्ट्वा तयोरतिपराक्रमम् ।
मुष्टिघातेन तौ हत्वा निजसेनामगाज्जवात् ।।४६।।

मैत्रस्तु भूमिमगमद् वमन् रक्तं मुखाद् बहु ।
तथाविधञ्च तं दृष्ट्वा कौस्तुभो योद्धुमागतः ।।४७।।

षडाननमथो रोषान्निजघ्ने करवालतः ।
तस्मिन् मूर्च्छामवाप्ते तु वीरभद्रोऽप्ययुध्यत ।।४८।।

कौस्तुभः प्राहनद् रोषाच्छराघातैरनेकशः ।
सोऽपि तं प्राहनन्मुष्ट्या भूमौ चैनमघातयत् ।।४९।।

हते तस्मिन्ननन्दाऽसौ वीरभद्रो महाबलः ।
पपाल दैत्यसेना सा हते मैत्रे च कौस्तुभे ।।५०।।

तमुदन्तं शस्त्रहताः स्रवन्तो रुधिरं बहु ।
न्यवेदयन् दैत्यराजसिन्धवे देवशत्रवे ।।५१।।

वाचा विस्पष्टया दुःखाच्छस्त्राघातकृताद् भृशम्।
जयमाकाङ्क्षते नित्यं मैत्रकौस्तुभयोर्भृशम् ।।५२।।

श्रीगणेशको सेनाका सामु दैत्यको सेना परास्त हुँदै गयो र भाग्न थाल्यो । सिन्धुसेनाको पलायन देखेपछि स्कन्द र वीरभद्रले जयजयकार गरे ।।४१-४४।। त्यसपछि आफ्नो ज्यान होम्न समेत तयार रहेका दैत्यराज सिन्धुका मन्त्री मैत्र र कौस्तुभ फेरि लड्न आए । ती दुबै आफ्नो घोडा र सेनालाई युद्ध गर्न प्रेरित गरेर बाणवर्षा गर्दै र तरबार नचाउँदै लडिरहेका थिए । त्यसपछि स्कन्द ती दुबै मन्त्रीहरूको डरलाग्दो पराक्रम देखेर तीमाथि भयङ्कर मुड्की प्रहार गरी आफ्नो सेना भएको ठाउँमा फर्के । सिन्धुको मन्त्री मैत्र मुखबाट रगत बान्ता गर्दै भुइँमा ढलेर मर्‍यो । मैत्रको यो हालत देखेर जोशका साथ कौस्तुभ लड्न आयो ।।४५-४७।। स्कन्दले रिसाएर त्यसमाथि तरबारको प्रहार गरे । त्यो बेहोश भयो । त्यो होशमा आएपछि फेरि वीरभद्र त्यसमाथि जाइलागे । कौस्तुभले क्रोधपूर्वक बाणको वर्षा गर्‍यो । वीरभद्रले मुड्कीले हिर्काउँदै त्यसलाई भुइँमा ढलाइदिए र त्यो पनि निष्प्राण भयो । त्यसको मृत्युपछि वीरभद्रले श्रीगणेशको जयजयकार र सिंहनाद गर्दै खुसी मनाए। दुबै मन्त्रीहरूले युद्धमा वीरगति प्राप्त गरेपछि दैत्यसैनिकहरू भागे ।।४८-५०।। घाइते सैनिकहरूले दुबै मन्त्रीहरूको मृत्यु भएको खबर पाएर शरीरबाट रगतका धारा बगाउँदै सिन्धुदैत्यका सामु पुगेर त्यसलाई त्यहाँ भएको घटना सुनाए ।।५१।। ती शस्त्रद्वारा आहत सैनिकहरूले दुःखपूर्वक स्पष्ट स्वरमा मैत्र र कौस्तुभको विजय कामना गर्ने सिन्धुलाई ती दुबैले वीरगति प्राप्त गरेको घटना सुनाए ।।५२।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे मैत्रकौस्तुभवधो नाम त्रयोदशाधिकशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'वीरभद्र एवं स्कन्दद्वारा मैत्र र कौस्तुभको वध' शीर्षकान्वित एक सय तेह्रौं अध्याय पूर्ण भयो ।।११३।।

ॐ

## चतुर्दशोत्तरशततमोऽध्याय: { ११४ अध्याय }

वीरा ऊचु:

नानाशस्त्रप्रहरणौ मृतौ तौ मैत्रकौस्तुभौ ।
असङ्ख्याता हता सेना ताभ्यां निशि दिवाऽपि च ।।१।।

ततो रिपुबलाद् दृष्टौ वीरौ द्वौ समुपस्थितौ ।
ताभ्यां बलिभ्यां निहता निजसेना विमर्दिता ।।२।।

ययो: करप्रहाराभ्यां गतोऽसौ यमसादनम् ।
दृष्टा नानाविधा सेना न दृष्टौ तादृशौ सुरौ ।।३।।

सिन्धुरुवाच

यौ दृष्ट्वा स बिभेति स्म कृतान्तो भूतहारक: ।
तौ कथं शरघातेन मृतौ शंसथ सैनिका: ।।४।।

पराक्रममिदानीं मे पश्यन्तु सर्वसैनिका: ।
रणभूमौ नर्तयिष्ये शिर: शत्रोर्न संशय: ।।५।।

चक्रयुद्धं करिष्यामि चक्रपाणेर्यत: सुत: ।
इत्युक्त्वा हयमारुह्य मयूरेशं ययौ खल: ।।६।।

असङ्ख्यकोट्यो दैत्यानां पुरो याता महाबला: ।
योद्धुकामा: सुरेन्द्रेण शिवपुत्रेण दुर्धरा: ।।७।।

ततो नन्दिपुष्पदन्तौ योद्धुं यातौ महाबलौ ।
भूतराजश्च विकटो दशलक्षैश्च योद्धृभि: ।।८।।

चपलोऽप्यर्धलक्षेण योद्धुकामोऽभिनिर्ययौ ।
षडाननो वीरभद्रोऽसङ्ख्यसेनासमायुतौ ।।९।।

ईयतुर्युद्धबलिनौ नानाशस्त्रधरावुभौ ।
सप्त व्यूहान् समालोक्य प्राव्यूहन् दैत्यसैनिकान् ।।१०।।

गन्धासुरोऽथ मदन: कान्तो वीरो ध्वजस्तथा ।
महाकायश्च शार्दूलो धूर्तनामाथ सप्तम: ।।११।।

**वीरहरूले भने** - 'अनेक शस्त्रहरूबाट शत्रुमाथि प्रहार गर्न समर्थ वीरहरू मैत्र र कौस्तुभले वीरगति प्राप्त गरे । तिनले रात र दिनमा पनि आक्रमण गरेर शत्रुका अनेक वीरहरूको संहार गरेका थिए ।।१।। शत्रुसेनातर्फबाट दुष्ट दुई जना वीरहरू आए। ती बलवान् शत्रुवीरले हाम्रो सेना खल्बल्याए । त्यसै बेला ती शत्रुवीरहरूको मुड्की प्रहारबाट हाम्रा मैत्र र कौस्तुभले वीरगति प्राप्त गरेका हुन् । हामीले अनेक शत्रुसँग लड्दा अनेक थरि सैनिक देखेका थियौं तर मैत्र र कौस्तुभसँग युद्ध गर्ने अजेय दुई जना वीरजस्ता वीर कहिले पनि देखेका थिएनौं' ।।२-३।।

**सिन्धुले भन्यो** - 'प्राणीहरूलाई मृत्युमा पुऱ्याउने यमराज पनि मेरा मन्त्री मैत्र र कौस्तुभलाई देखेर थर्कमान हुन्थे । आज मेरा ती वीर मन्त्रीहरू देवसेनाका वीरहरूको मुड्की-प्रहारबाट मरेका कुरा कसरी गऱ्यौ ? म अचम्म परेको छु ।।४।। हे सैनिकगण! अब तिमीहरूले मेरो पराक्रम देख्नेछौ। मैले युद्धको मैदानमा शत्रुहरूको टाउको नचाउनेछु। यसमा तिमीहरूले कत्ति पनि शङ्का नमान ।।५।। म चक्रपाणिको पुत्र हुँ । तसर्थ मैले चक्रयुद्ध गर्नेछु।' (यसरी गर्जन गर्दै त्यो दैत्य घोडामा सवार भई भगवान् श्रीगणेशका समीपमा गयो।।६।। देवताका पति, शिवपुत्र श्रीगणेशसँग युद्ध गर्न चाहने दुर्धर्ष दैत्यहरूको असङ्ख्य कोटि सेना अगाडि लाग्यो ।।७।। त्यसपछि महाबली नन्दी र पुष्पदन्त पनि ती दैत्यसेनासँग युद्ध गर्न अगाडि सरे । भूतराज र विकट नामक देववीरहरू दश लाख सैनिक लिएर युद्ध मैदानतर्फ गए ।।८।। दैत्यसेनाको नायक चपल पनि पचास हजार सैनिक लिएर मैदानमा पुगिसकेको थियो । असङ्ख्य सैनिकले सम्पन्न महाबली स्वामी कार्तिक र वीरभद्र अनेक थरि शस्त्र धारण गरी युद्ध गर्न त्यहाँ पुगे । स्कन्द र वीरभद्रले दैत्यहरूले तयार गरेका सातवटा व्यूह नजर गरेपछि तिनीहरूले दैत्यसैन्यलाई चारैतिरबाट घेरे ।।९-१०।। गन्धासुर, मदनासुर, वीरासुर, ध्वजासुर, महाकायासुर, शार्दूलासुर, र धृतासुर गरी

सप्त व्यूहान् पुरस्कृत्य युयुधुस्तान् समागतान् ।
बाणवृष्ट्या समाच्छाद्य भल्लाग्रैस्तान् निजघ्निरे ।।१२।।

भिन्दीपालहताः केचिन्निपेतुर्धरणीतले ।
षडाननेन युयुधे बलाद् गन्धासुरो बली ।।१३।।

वीरभद्रेण मदनकान्तोऽपि युयुधे रणे ।
नन्दी च वीरराजश्च युयुधाते परस्परम् ।।१४।।

ध्वजासुरपुष्पदन्तौ शस्त्रास्त्रैर्बाणसञ्चयैः ।
भूतराजो महाकायो युयुधाते परस्परम् ।।१५।।

धूर्तश्च विकटश्चैव द्वन्द्वयुद्धमकुर्वताम् ।
चपलेन हतो रोषाच्छार्दूलो न्यपतद् भुवि ।।१६।।

पुनः संज्ञामवाप्यैनं सोऽपि खड्गेन चाहनत् ।
मूर्च्छामवाप महतीं चपलश्चपलो युधि ।।१७।।

प्रवृत्ते द्वन्द्वयुद्धे तु युयुधाते बले ह्युभे ।
जघ्नतुः शस्त्रसङ्घातैर्बाणजालैः परस्परम् ।।१८।।

सहस्व जहि मा भैस्त्वं हतः स्वर्गं समेष्यसि ।
क्षीणेषु शस्त्रबाणेषु लत्ताभिर्मुष्टिभिः पुनः ।।१९।।

युयुधुः सर्वसैन्यानि नाशयन्तः परस्परम् ।
कश्चिच्च चरणौ धृत्वा पोथयामास वैरिणम् ।।२०।।

कश्चिदुड्डीय न्यपतच्चूर्णयामास वै परम् ।
कश्चिच्चिच्छेद च शिरः कश्चिद् बाहुं रिपो रणे ।।२१।।

कश्चित् पादौ जानुनी च गुल्फौ चिच्छेद चापरः ।
शरवृष्टिं परे केचित् परस्परमवासृजन् ।।२२।।

स्त्रवद्रक्तः शस्त्रहतो मरणावध्ययुध्यत ।
कबन्धा युयुधुस्तत्र जघ्नुः स्वांश्च परानपि ।।२३।।

अपरे सहसा पेतुर्विदीर्णवक्षसो नराः ।
परस्पराघातहतौ मृतौ कौचिद् रणाजिरे ।।२४।।

सात जना वीरहरूको व्यूह बनाएर ती दैत्यहरू युद्धको मैदानमा देवसेनासँग युद्ध गर्न तम्तयार भएका थिए । ती दैत्यले पहिले बाण बर्साएपछि भाला बर्साउन थाले ।।११-१२।। त्यसपछि घुयेँत्रोले प्रहार गर्न थाले । त्यसबाट धेरै देववीर भुइँमा लडेका थिए । बलवान् गन्धासुर स्कन्दका साथ, मदनासुर वीरभद्रका साथ र वीरासुर नन्दीका साथ युद्ध गरिरहेका थिए ।।१३-१४।। ध्वजासुर र पुष्पदन्त अनेक थरि शस्त्र-अस्त्रद्वारा एक-आपसलाई घाइते बनाउँदै युद्ध गरिरहेका थिए । भूतराज र महाकायासुरको पनि त्यस्तै प्रचण्ड संग्राम चलिरहेको थियो ।।१५।। धूर्तासुर र विकटको पनि मल्लयुद्ध चलेको थियो । शार्दूलासुर र चपलको बीचमा युद्ध हुँदा चपलद्वारा क्रोधपूर्वक घाइते बनेको शार्दूलासुर भुइँमा लड्यो ।।१६।। केही समयपछि होशमा आएर शार्दूलासुरले चपललाई तरबारले हान्यो । युद्धमा चपलता देखाउने देववीर चपल पनि मूर्च्छित भयो ।।१७।। त्यसपछि दुबै पक्षका वीर मल्लयुद्ध गरिरहे । फेरि शस्त्रयुद्ध शुरू भयो। देववीर र दैत्यवीर दुबैले शस्त्र र बाणहरूको प्रहार गरी घमासान युद्ध गरे ।।१८।। सहन गर, नडराऊ, काट, मार र मर्‍यौ भने स्वर्गमा जानेछौ जस्ता शब्दहरू युद्धको मैदानमा घन्किरहेका थिए । शस्त्र र बाण समाप्त भएपछि दुबै पक्षका वीरहरू मुड्की र लात्तीको प्रहार गरेर युद्ध गर्न थाले ।।१९।। ती सैनिकहरू लडिरहेका थिए र दुबै पक्षका सैनिकहरू विनाशतिर अग्रसर हुँदैथिए । कसैले खुट्टा तानेर घुमाई घुमाई आफ्नो शत्रुलाई भुइँमा पछारिरहेको थियो ।।२०।। केही वीरहरू शत्रुमाथि हाम्फालेर जाइलागेका थिए र त्यसबाट शत्रुलाई थिलोथिलो बनाएका थिए । कुनै वीरले शत्रुको शिर टुक्र्याए भने कसैले शत्रुका हात काटिदिए ।।२१।। कसैले शत्रुका खुट्टा र घुँडा काटिरहेका थिए भने कसैले गोलिगाँठा फुकालिरहेका थिए । कुनै वीर बाणवर्षा गरिरहेका थिए भने अरू धेरै वीरहरू शस्त्रद्वारा आहत भएर रगतको खोलो बगाउँदै मृत्युपर्यन्त जोशपूर्वक लडिरहेका थिए । टाउको काटिएका शरीरहरूले पनि आफन्त र पराइ दुबैतर्फका वीरहरूलाई मार्दै थिए ।।२२-२३।। केही वीरहरू छाती छेँडिएका कारण भुइँमा लडे । परस्परको प्रहारबाट केही वीर रणभूमिमा नै थला परेर मरे । युद्धमा विजयी भएपछि स्वर्गमा भोग्न पाइने एउटी

एकाप्सरःप्राप्तिकृते स्वर्गे युद्धमकुर्वताम् ।
असृङ्नद्योऽभवन् तत्र केशशैवलसंयुताः ।।२५।।

खड्गमत्स्यवती खेटमहाकूर्मा दुरत्यया ।
प्रेतकाष्ठवहा घोरा चामरतृणसंयुता ।।२६।।

कञ्चुकग्राहशोभाढ्या महाकटकभेकिका ।
शूरामोदकरा भीरुमहाभयविवर्धिनी ।।२७।।

मेदोजला दुःखतरा मांसकर्दमशालिनी ।
ततोऽस्तमित आदित्ये न प्राज्ञायत किञ्चन ।।२८।।

न हन्तव्या वयं दैत्यवाहिनीचारिणः सुराः ।
न हन्तव्या वयं देववाहिनीचारिणोऽसुराः ।।२९।।

एवं कोलाहलैस्तत्र प्रायुध्यन्त परस्परम् ।
आशिषोऽथ ददुस्तत्र श्वापदा भूतराक्षसाः ।।३०।।

शृगालाः पतगाः श्येनास्तृप्ताः पार्वतीनन्दनम् ।
दिनत्रयमभूदेवं दिवारात्रौ महारणः ।।३१।।

वाद्यशब्दैर्जयं रात्रौ घोषवन्तः परस्परम् ।
एवं गन्धासुरोऽयुध्यत् सेनान्या बहुविस्तरम् ।।३२।।

मद्यपानेन मत्तोऽसौ त्यक्त्वा शस्त्राणि वेगवान् ।
अहनद् मुष्टिघातेन सहसा तं षडाननम् ।।३३।।

न्यपतत् स तदा भूमौ वज्राहत इवाचलः ।
अधावत् सोऽपि लब्ध्वाशु सपक्ष इव पर्वतः ।।३४।।

संज्ञां द्वादशभिर्हस्तैरविध्यत् तं महासुरम् ।
शरजालान्यनेकानि विसृजन् षड्धनुर्वरैः ।।३५।।

निवार्य शरजालानि छादयामास तं शरैः ।
गन्धासुरो महावेगात् षडाननमनामयम् ।।३६।।

तन्निवार्य दधारैनं चरणे स षडाननः ।
अकस्माद् भ्रामयित्वैनं पातयामास भूतले ।।३७।।

अप्सराका लागि ती वीरहरू ज्यान दिएर लडिरहेका थिए । असङ्ख्य रगतका नदी बगे, ती नदीमा टाउकाका केश शैवालको रूपमा बगिरहेका थिए ।।२४-२५।। तरबारहरू माछाझैं तैरिरहेका थिए । ढालहरू कछुवा बनेर बगिरहेका थिए । त्यो रगतको नदी डरलाग्दो र दुस्तर थियो । लाशहरू काठझैं बगेका थिए । चमरहरू तृणजस्तै देखिन्थे । वीरहरूले धारण गरेका वस्त्र गोहीझैं देखिन्थे । वीरहरूका अलङ्कार भ्यागुताको रूपमा रहेका थिए । त्यस्तो विकराल रगतको नदी देखेर युद्धमा खेल्न मन पराउने वीरहरू मजा मानिरहेका थिए भने कातरहरू डरले काँपिरहेका थिए ।।२६-२७।। वीरहरूको शरीरको बोसो पानीका रूपमा बगेको थियो । दुःखलाई व्यक्त गर्ने त्यो रगतको नदी मासुको हिलोले भरिएको थियो। यसरी युद्ध हुँदाहुँदै सूर्य पनि अस्ताए । युद्धको दृश्य नजर गर्न अब कठिन भयो ।।२८।। हामी देवसेनाका सिपाहीहरू हौं, हामीलाई नमार, हामी दैत्यसेनाका सिपाहीहरू हौं, हामीलाई नमारजस्ता स्वरहरूमात्र युद्धको मैदानमा सुनिन्थे ।।२९।। यसरी कोलाहल गर्दै दुबैतर्फका वीरहरू लडिरहेका थिए । त्यहाँ हिंस्रक जनावर, भूत, राक्षस, स्याल, चरा र बाजले समेत युद्ध अझ चलोस् भन्ने कामना गर्दै तृप्त भई श्रीगणेशलाई आशीर्वाद दिए । तीन दिनसम्म यसैगरी अखण्डरूपमा अहोरात्र महायुद्ध चल्यो ।।३०-३१।। युद्धका बाजा बजाएर रातमा पनि विजयको घोषणा गर्दै वीरहरू लडिरहेका थिए । त्यस युद्धमा गन्धासुर स्कन्दका साथ दीर्घकालसम्म लडिरहेको थियो ।।३२।। रक्सी खाएर उन्मत्त भएको गन्धासुरले शस्त्र भुइँमा फ्याँकेर मुड्कीले स्वामी कार्तिकेयमाथि अचानक प्रहार गऱ्यो ।।३३।। स्कन्द पनि वज्रद्वारा आहत पर्वतझैं भुइँमा लडे । केही बेरपछि उनको होश आयो । स्कन्दले फेरि आफ्ना हातमा रहेका छ वटा धनुबाट प्वाँखले सुहाएका बाणहरू गन्धासुरमाथि प्रहार गरे ।।३४-३५।। त्यसले पनि वेगपूर्वक आफ्ना बाणहरूद्वारा स्कन्दका बाणहरू काट्दै बाणवर्षा गरी स्कन्दलाई ढाकिदियो ।।३६।। स्कन्दले गन्धासुरको प्रहारलाई रोकेर त्यसका खुट्टा समाए, घिसारे अनि त्यसलाई उचालेर रिंगाउँदै भुइँमा पछारे ।।३७।। पछारिएपछि

तस्याङ्गं शतधा जातं गतासोर्दृढघाततः ।
तस्मिन् हते तस्य सेना ययौ व्यग्रा दिशो दश ।।३८।।

पृष्ठलग्नो निन्दति स्म सेनां तां स षडाननः ।
सेनश्च क्रोधनश्चैव शतघ्नो योद्धुमाययुः ।।३९।।

येषां शब्दो महानासीद् घनानामिव गर्जताम् ।
ऊचुः षडाननं दुष्ट ! सेना नो निहता बहुः ।।४०।।

इदानीं याहि भवनं हतो रविसुतस्य ह ।
तत आच्छादयामासुर्युगपत् ते षडाननम् ।।४१।।

ग्रामसिंहा यथा सिंहं बहवो बलवत्तराः ।
षड्धनुर्मोचितैर्बाणैर्न्यहनत् तान् षडाननः ।।४२।।

ततस्ते मूर्च्छिताः पेतुर्मुहूर्तादुत्थिताः पुनः ।
पाशं क्षिप्त्वा स्कन्दगले निन्युस्तं पशुवत् त्रयः ।।४३।।

ज्ञात्वा नीतं षण्मुखं तमाधावँस्ते त्रयो जवात् ।
हिरण्यगर्भो बलवान् श्यामलो रक्तलोचनः ।।४४।।

त्रिभिस्ते मुष्टिघातेन हताः पेतुर्धरातले ।
ततो मदनकान्तोऽपि वीरभद्रो महाबलम् ।।४५।।

न्यहनच्छस्त्रघातेन स मूर्च्छां महतीं ययौ ।
त्यक्त्वा मूर्च्छां वीरभद्रो दण्डघातान्न्यपातयत् ।।४६।।

मृतं मदनकान्तं तं वीरराजो महाबलः ।
ज्ञात्वा प्रायान्निहन्तुं ताँस्त्रीन् सुरान् बलवत्तरान् ।।४७।।

ततस्तान् न्यहनद् रोषाच्छृङ्गाभ्यां नन्दिकेश्वरः ।
अस्रवद् रुधिरं वक्त्राच्छतधा भूतलेऽपतत् ।।४८।।

तं हतं तु विलोक्याशु चत्वारोऽसुरसत्तमाः ।
आययुर्नन्दिनं हन्तुं शार्दूलोऽथ ध्वजासुरः ।।४९।।

महाकायो धृतश्चैव सर्वदेवजितो रणे ।
नानाशस्त्रैर्निजघ्नुस्ते नन्दिनं बलवत्तरम् ।।५०।।

गन्धासुर मऱ्यो र त्यसका अङ्ग-प्रत्यङ्गहरू सयौँ टुक्रा भएर भुईँमा खसे । गन्धासुर मरेपछि त्यसको सेना व्याकुल भएर चारैतिर भाग्न थाल्यो ।।३८।। भागिरहेको दैत्यसेनालाई स्वामी कार्तिकेयले निन्दा गर्दै गिज्याइरहेका थिए । त्यसपछि सेन, क्रोधन र शतघ्ननामक तीनजना दैत्यवीर स्वामी कार्तिकेयसँग युद्ध गर्न आए ।।३९।। ती दैत्यहरूको गर्जन वर्षाकालका काला बादलको गर्जनझैँ भयङ्कर थियो । तिनले स्वामी कार्तिकेयलाई हे दुष्ट ! तैँले हाम्रा धेरै सैनिक मारिसकिस्, अब तेरो मर्ने पालो आएको छ, मरेपछि तँ सूर्यका छोरा यमराजको लोकमा जानेछस्' भने । त्यसपछि ती दैत्यवीरले बाणवर्षा गरी स्वामी कार्तिकेयलाई बाणैबाणले पुरिदिए ।।४०-४१।। अनेक गाउँका सिंहले मिलेर बनको एउटा सिंहलाई घेरेझैँ ती बलवान् दैत्यहरूले स्वामी कार्तिकेयलाई घेरेका थिए । त्यसपछि छ वटा धनुबाट एकसाथ बाण प्रहार गरी स्वामी कार्तिकेयले दैत्यसमूहमा बाणवर्षा गरे ।।४२।। स्वामी कार्तिकेयको बाणप्रहारबाट मूर्च्छित भएर ती सबै वीरहरू भुईँमा ढले र केही बेरपछि उठे । तिनले स्वामी कार्तिकेयको घाँटीमा पाश फ्याँकिपछि पशुलाई झैं डोऱ्याएर तान्न थाले ।।४३।। ती दैत्यवीरले पाशले बाँधी स्कन्दलाई डोऱ्याएको थाहा पाएर हिरण्यगर्भ, श्यामल र रक्तलोचन नामक देवपक्षका तीनजना वीरहरूले बलपूर्वक मुड्की प्रहार गरे र तीनवटै दैत्यहरूलाई भुईँमा लडाए । त्यसपछि मदनकान्तनामक दैत्यले बलवान् वीरभद्रमाथि शस्त्रप्रहार गऱ्यो । वीरभद्र मूर्च्छा परे । केही बेरपछि जागेर तिनले दण्डप्रहार गरी मदनकान्तलाई भुईँमा लडाई मारिदिए ।।४४-४६।। महाबली वीरराजासुरले मदनकान्त-नामक असुरलाई मरेको थाहा पाएर ती तीनजना देववीरहरूलाई मार्ने हिसाबले शस्त्रप्रहार गर्न थाल्यो । त्यो देखेर रिसाएका नन्दीले सिङले हानी त्यसलाई भुईँमा पछारे। त्यो रगताम्मे भयो । त्यसको मुखबाट रगत बान्ता भयो र त्यसको शरीर टुक्रा-टुक्रा भएर भुईँमा छरियो । वीरराजासुर मरेपछि ध्वजासुर, महाकायासुर, शार्दूलासुर र धृतासुर चार दैत्यवीरहरू बलवान् नन्दीमाथि आक्रमण गर्न आए।।४७-५०।।

पतिते नन्दिनि ततश्चत्वारो युद्धदुर्मदाः ।
पुष्पदन्तो भूतराजो विकटश्चपलोऽपि च ।।५१।।

ते तु शैलान् समादाय तोलयित्वा निचिक्षिपुः ।
सर्वेषां मस्तका भिन्नाश्चूर्णीभूताश्च केचन ।।५२।।

शराघातेन ते सर्वे धरायां पतिता रणे ।
केचिच्च सिन्धुमगमन् शस्त्रघातप्रपीडिताः ।।५३।।

पराजयं स्वसैन्यानां प्राहुर्देवजयं तथा ।
जयं प्राप्ता देवसेना बहुवाद्यान्यवादयत् ।।५४।।

मयूरेश ! मयूरेश ! जय त्वं जय सर्वदा ।
इत्यब्रवीद् हर्षयुता स्वानन्देन ननर्त च ।।५५।।

ती वीरहरूले पहिले–पहिलेका युद्धहरूमा देवताहरूलाई परास्त गरेका थिए र देवताहरूसँग कहिले पनि हारेका थिएनन् । तिनले अनेक शस्त्रहरूको प्रहारबाट नन्दीलाई घाइते बनाए। ती घाइते भएर भुईंमा लडेपछि पुष्पदन्त, भूतराज, विकट र चपल–नामक देववीरहरूले ठूला–ठूला पर्वत उचालेर ती दैत्यवीरमाथि प्रहार गरे । त्यसबाट ती दैत्यवीरहरूका टाउका टुक्रिए र तिनीहरू पृथिवीमा ढलेर मरे ।।५१–५२।। बाणहरूको प्रहारबाट घाइते भएका केही दैत्यवीरहरू डराई दैत्यराज सिन्धुका सामु गए । तिनले त्यहाँ गएर दैत्यसेनाको पराजय र देवसेनाको विजयको समाचार सुनाए । विजयी देवसेनाले विजयको बाजा बजायो ।।५३–५४।। हे मयूरेश ! हजुरको जयहोस् भन्ने जयकार गर्दै देवताहरूको सेना पनि आनन्दपूर्वक नृत्य गर्न थाल्यो ।।५५।।

ॐ

॥ इति श्रीगणेशपुराणे क्रीडाखण्डे श्रीगणेशसेनाविजयवर्णनं नाम चतुर्दशोत्तरशततमोऽध्यायः ॥

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशसेनाको विजय वर्णन' शीर्षकान्वित एक सय चौधौं अध्याय पूर्ण भयो ।।११४।।

ॐ

## पञ्चदशोत्तरशततमोऽध्यायः　{ ११५ अध्याय }

क उवाच

श्रुत्वा सेनाजयं दैत्यो ययौ चिन्तां महत्तराम् ।
अत्यन्तम्लानवदनो निमग्नो दुःखसागरे ।।१।।

मनसा परितप्तेन चिन्तयामास दैत्यराट् ।

सिन्धुरुवाच

विपरीतमिदं कस्माज्जातं न ज्ञायते मया ।।२।।

पिपीलिका ग्रसेत् किं नु ब्रह्माण्डं लोकसङ्कुलम्।
यस्याग्रे मशका देवा आसन्निन्द्रादयो मम ।।३।।

शिवार्भकेन तस्याद्य कथं सेना विनिर्जिता ।

क उवाच

इत्युक्त्वा हयमारुह्य धनुर्बाणासिचर्मभृत् ।।४।।

अहत्वा तं मयूरेशं दर्शयिष्ये मुखं न च ।
इत्युक्त्वाऽभिययौ सिन्धू रणभूमौ पतङ्गवत् ।।५।।

सज्जं चकार च धनुर्नादयन् गगनं दिशः ।
व्यसृजद् बाणजालानि तीक्ष्णान्यग्निमुखानि सः ।।६।।

चकम्पे पृथिवी सर्वा मूर्च्छिता जन्तवोऽखिलाः ।
प्राक्षिपद् देवसेनायामसङ्ख्यातांश्च पत्रिणः ।।७।।

छिन्ना भिन्नाः सुराः पेतुस्तच्छस्त्राघातपीडिताः ।
पलायन्तः सुराः पेतुस्तेऽपि पृष्ठे शरैर्हताः ।।८।।

ततः सर्वा मयूरेशवाहिनी व्यग्रतामियात् ।
द्विधाभूता जानुपादाः केषाञ्छिन्नमस्तका अपि ।।९।।

शरवृष्ट्या सिन्धुहस्तमुक्तया रणमूर्धनि ।
अभवत् तुमुलं युद्धमनिवार्यं भयावहम् ।।१०।।

सिन्धोश्चैव गणेशस्य सेनयोरुभयोरपि ।
कोलाहले महाघोरे ध्वान्ते गाढे रजःकृते ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नो सेनामाथि देवसेनाको विजयको समाचार सुनेर दैत्यराज सिन्धु अत्यन्त चिन्तित भयो। त्यसको मुखमण्डल मलिन र कान्तिहीन थियो ।।१।। दुःखको सागरमा डुबुल्की मारिरहेको सिन्धु सन्तप्त मनले एकान्तमा विचार गर्न लाग्यो ।

**सिन्धुले भन्यो** - 'आज सबै कुरा विपरीत किन भइरहेको छ ? मैले केही थाहा पाउन सकिनँ ।।२।। एउटा सानो कमिलाले अनेक लोकले भरिभराउ ब्रह्माण्डलाई खाइरहेको छ। मेरा अगाडि इन्द्र आदि देवताहरू कुनै समयमा लामखुट्टे कीराजस्ता देखिन्थे ।।३।। आज मेरो सेनालाई शिवजीको सानो बच्चाले कसरी लखेटिरहेको छ ?'

**ब्रह्माजीले भन्नुभयो** - यस्तो तर्क गर्ने दैत्यराज सिन्धु धनु, बाण, तलबार र कवच धारण गरी घोडामा सवार भयो ।।४।। जबसम्म श्रीगणेशलाई समाप्त गर्दिनँ, तबसम्म मैले मुख देखाउने छैन भनी त्यो युद्ध मैदानमा गई गर्जन गर्न थाल्यो । धनु, बाण तयार गर्‍यो, धनुष्टङ्कारले दसै दिशालाई गुञ्जायमान बनाउँदै त्यसले टुप्पोबाट आगो उत्पन्न गर्ने तीखा बाणहरूको वर्षा गर्‍यो ।।५-६।। त्यसको युद्धशैलीबाट पृथिवी काँप्न थालिन्, प्राणीहरू मूर्च्छित हुन थाले । त्यसले देवसेनामा असङ्ख्य बाण बर्सायो । त्यसको शस्त्रप्रहारबाट घाइते भएका देवता भुइँमा लड्न थाले । केही देवताहरू उपाय नपाएर भाग्न थाले। भाग्दा पनि त्यसले पछाडिबाट आएर बाणप्रहार गर्‍यो । त्यहाँ पनि ती देवता भुइँमा लडे ।।७-८।। त्यसपछि श्रीगणेशको सम्पूर्ण सेना अत्यन्त व्याकुल भयो । सिन्धुले प्रहार गरेका बाणहरूको वर्षाबाट युद्धको मैदानमा कुनै देवताका घुँडा र कसैका खुट्टा टुक्रिएका थिए भने केही देवताका काटिएका टाउका पनि देखिन्थे ।।९।। यस्तो कसैले छेकेर नछेकिने, विचित्र र भयङ्कर युद्ध भयो । सिन्धु र श्रीगणेश एकातिर लडिरहेका थिए भने अर्कोतर्फ दुबै तर्फका वीरसेनाहरू भयङ्कर संग्राम गर्दै थिए। चारैतिर घोर कोलाहल मच्चिएको थियो। पृथिवीको बाक्लो धूलो चारैतिर फैलिंदा गाढा अन्धकार छायो ।।१०-११।। आँखाले

पुरोगाञ्जघ्निरे सर्वे परान् स्वानपि ते तदा ।
शस्त्राघातैर्हता सेना देवसेनाचरैः परा ।।१२।।
ततः सिन्धुर्हयात् तस्मादवरुह्य पदेऽग्रहीत् ।
पातयामास सहसा वीरभद्रं च वेगतः ।।१३।।
अहनन्मस्तके सोऽथ नन्दिनं बलवत्तरम् ।
भूतराजञ्च खड्गेन मारयन् सहसा कटौ ।।१४।।
पुष्पदन्तस्योदरञ्च बिभेद बलवत्तरम् ।
शिखामाक्रम्य प्राकर्षद्धिरण्यगर्भमोजसा ।।१५।।
श्यामलस्य ललाटं स विभेद शरघाततः ।
चपलस्य हनुं रोषाज्जघान विकटं रणे ।।१६।।
लम्बकर्णस्य कण्ठं स बिभेद बाणसञ्चयैः ।
धृत्वा तु चरणौ रक्तलोचनञ्च न्यपातयत् ।।१७।।
हस्तान्निस्तीर्य सहसा सुमुखः प्रापलज्जवात् ।
सोमं लत्ताप्रहारेण रणभूमावपातयत् ।।१८।।
जठरं दारयामास भृङ्गिणोऽसिप्रहारतः ।
दावानलस्य च शिरो भेदयामास सायकैः ।।१९।।
पञ्चाननस्य पृष्ठे सोऽवधीच्च चपलो युधि ।
एवं सर्वे महावीरा निहता रणमूर्धनि ।।२०।।
द्रुतं पलायिताश्चान्ये ततः सिन्धुः पुरो ययौ ।
जगर्ज घनवद्घोरं नादयन् भुवनत्रयम् ।।२१।।
स विव्याध मयूरेशं शरजालैरनेकधा ।
तस्य देहं समालोक्य विकरालं भयानकम् ।।२२।।
विरूपाक्षादयः सर्वे पलायनमकुर्वत ।
मुनियुक्तो गणेशश्च युयुधे संयुगे तदा ।।२३।।
न चकम्पे करिशिशुः सिंहस्येवास्यदर्शनात् ।
ततोऽब्रवीद् रोषवशात् सिन्धुस्तं तु गुणेश्वरम् ।।२४।।

सिन्धुरुवाच

दूरात् तेऽश्रावि बहुशः पुरुषार्थः शिवार्भक ! ।
प्रत्यक्षं दृश्यसे रे त्वं जम्बूक इव दुर्बलः ।।२५।।
कथं मे सहसे मूढ ! तलाघातं शिलाभिदम् ।
त्वया मातुः स्तनं पीत्वा नर्तव्यं हि गृहाङ्गणे ।।२६।।

दृश्यको भेउ नपाएका संग्राम गर्ने वीरहरू आफ्ना अगाडि रहेका पराई र आफन्त वीरलाई पनि मारिरहेका थिए । यस युद्धमा देवपक्षका वीरहरूको शस्त्रप्रहारबाट दैत्यपक्षका धेरै सैनिक मरे ।।१२।। यस्तो दृश्य देखेर क्रोधले परिपूर्ण दैत्यराज सिन्धुले वीरभद्रका खुट्टा तानेर तिनमाथि प्रचण्ड प्रहार गऱ्यो, त्यसपछि त्यसले नन्दीका टाउकामा प्रहार गऱ्यो, भूतराजको कम्मरमा तरबारले हिर्कायो, पुष्पदन्तको पेटलाई बाणले छेडिदियो र हिरण्यगर्भलाई बलपूर्वक टुप्पीमा समातेर लतान्यो ।।१३-१५।। बाणको प्रहारबाट श्यामलको निधार फुटायो, चपलको चिउँडोमा हान्यो, विकटको टाउकामा प्रहार गऱ्यो, बाणहरूको वर्षाबाट लम्बकर्णको घाँटी छिनाल्यो र रक्तलोचनका खुट्टा तानेर भुइँमा घिसान्यो ।।१६-१७।। यसरी आक्रमणको क्रममा सिन्धुको हातबाट फुत्किएर सुमुखले वेगपूर्वक पलायन गरे। फेरि दैत्यले चन्द्रमालाई लात्तीले हानेर भुइँमा खसायो ।।१८।। त्यसले भृङ्गीको पेटमा तरबारले हानेर तिनलाई घाइते बनायो, बाणहरूको प्रहारबाट दावानलनामक देववीरको शिर फुटायो, त्यसले युद्धमा चपल त्यसले पञ्चाननको पिठ्यूँमा प्रहार गऱ्यो र सबै देववीरहरूलाई युद्धमा घाइते बनायो।।१९-२०।। बाँकी रहेका देववीरहरू पनि भाग्न थाले। देवताहरूको पलायनबाट उत्साहित बनेको सिन्धु दैत्य अगाडि बढ्यो र त्यसले मेघगर्जन गर्दै त्रिलोकीलाई थर्कमान बनायो।।२१।। त्यसले अनेक बाणहरूको प्रहार गरेर श्रीगणेशको शरीरमा वेधन गऱ्यो । सिन्धु दैत्यको घोर शरीर देखेर विरूपाक्ष आदि देवता भाग्न थाले । मुनिहरूले घेरिनुभएका भगवान् श्रीगणेश मैदानमा डटेर युद्ध गर्न लाग्नुभयो।।२२-२३।। सिन्धुलाई त्यस रूपमा देखेर श्रीगणेश सिंहलाई देख्दा हात्तीको बच्चा काँपिझैं काँप्नुभयो। त्यसपछि सिन्धु दैत्यले क्रोधपूर्वक श्रीगणेशलाई भन्यो – 'हे शिवको बच्चा ! तेरो पुरुषार्थ मैले टाढाबाट सुनिरहेको थिएँ। तर प्रत्यक्षमा आई युद्ध गर्दा त तँ स्यालझैं निर्बल रहेछस् । चट्टान फोर्न सक्ने मेरो थप्पड तैंले कसरी सहन्छस् ? तैंले त आमाको दूध चुस्दै आफ्नो घरको आँगनमा नाच्ने र खेल्ने काम गर्नुपर्छ । किन यहाँ लड्न आएको छस् ? मैले इन्द्र आदि देवतालाई कैयौं पटक परास्त गरेको छु, तेरो के गणना

शक्रादयो जिता येन तस्य ते गणनाऽत्र का ।
निवारयति मां मूढ ! कृपा त्वां हन्तुमुत्सुकम् ।।२७।।
कथन्ते कोमलाङ्गेषु विध्ये तीक्ष्णतरान् शरान् ।

देव उवाच

किमर्थं वल्गसे मूढभावेनाधम ! पामर ।।२८।।
नावतारं ग्रहीष्येऽहं यदि जानेऽल्पकं वपुः ।
तवेदानीं हनिष्यामि क्षणेन देहमल्पकम् ।।२९।।
सूर्यदत्ताद् वराद् दुष्ट ! दुष्कर्मनिरतो भवान् ।
इदानीं स गतः कालो मृत्युकाल उपस्थिते ।।३०।।
वल्गनाकुशलस्त्वं किं युद्धमद्य करिष्यसि ।
त्वां हन्तुं मोचितुं देवान् धृतं रूपमिदं मया ।।३१।।
अन्तकाले सन्निहिते पुरुषार्थो वृथा भवेत् ।
मया हते महास्थानं मम प्राप्स्यसि दुर्लभम् ।।३२।।

सिन्धुरुवाच

यावन्न च्छेद्मि ते मूढ! कोमलं देहमुत्तमम् ।
तावद् वल्गसि यो यस्य भक्तः स्यात् स मृतो व्रजेत्।।३३।।
तस्य लोकं वृथा हि त्वं न प्रशंसां वदात्मनः ।

क उवाच

एवमुक्त्वा महादैत्यः सायकं परभेदिनम् ।।३४।।
न कदाचित् प्रकटितमतितीक्ष्णं जयावहम् ।
स्मृत्वा सूर्यं धनुर्गृह्य सज्जं कृत्वा न्ययोजयत् ।।३५।।
टणत्कारेण धनुषो नादितं भुवनत्रयम् ।
मुमोच बाणं तं देवे मयूरेशे बलात् खलः ।।३६।।
स जज्वाल दिशः सर्वा गगनं विदिशोऽपि च ।
तं दृष्ट्वा स मयूरेशस्तत्याज परशुं निजम् ।।३७।।
वज्रात् सारतरं सर्ववैरिदर्पहरं परम् ।
अदहत् सोऽपि त्रीन् लोकान् प्रलयानलसन्निभः।।३८।।
परशुः खण्डयामास नभस्येव च तं शरम् ।
धरायां पात्य शतधा दैत्यहस्तमथाच्छिनत् ।।३९।।

धनुर्भारसहं घोरं नभस्येव गतं करात् ।
ततः क्रोधेन दैत्यः स चक्रं तत्याज शत्रवे ।।४०।।

गरूँ ? मेरो हृदयमा रहेको दयाले गर्दा तँलाई मार्न सकिरहेको छैन ।।२४-२७।। मैले तँजस्ता बच्चाको कोमल अङ्गमा कसरी तीखा बाण प्रहार गरूँ ?'

**श्रीगणेशले भन्नुभयो** - 'हे अधम मूर्ख ! तँ किन प्रलाप गरिरहेको छस् ? म सानो छु र मेरो उमेर पनि थोरै छ भनेर डराउने भए मैले अवतार किन लिन्थेँ ? तेरो सानो शरीरमा अब म प्रहार गर्दैछु । सूर्यबाट वरदान पाएर तँ दुष्कर्मी र घमण्डी भएको छस् । तेरो त्यो कुकर्म गर्ने समय अब सकियो । तेरा सामु मृत्यु उभिएको छ ।।२८-३०।। अब बकबाद नगर् । तँ मसँग के युद्ध गर्न सक्छस् ? मैले तेरो वध गर्न र देवताहरूलाई कारागारबाट मुक्त गर्न यो रूप धारण गरेको छु। अन्तिम समय आएपछि पुरुषार्थ व्यर्थ हुन्छ । मैले तँलाई मारेपछि तँ मेरो धाममा जानेछस्' ।।३१-३२।।

**सिन्धुले भन्यो** - 'हे मूर्ख बच्चा ! जबसम्म मैले तेरो कोमल र राम्रो शरीरलाई छिया-छिया बनाउँदिनँ, तबसम्म तँ बकबक गरिरहनेछस् । जो जसको भक्त हो त्यो युद्धमा मर्नेछ।।३३।। म तेरो भक्त भए म मर्नेछु, तँ मेरो भक्त भए तँ मर्नेछस् । तँले आफ्नो प्रशंसा नगर् ।'

**ब्रह्माजीले भन्नुभयो** - यस्ता कुरा गरेपछि त्यस दैत्यले मर्मभेदी, अहिलेसम्म गुप्त राखिएको, अत्यन्त तीखो र विजयदायक बाणलाई सूर्यको ध्यान गर्दै धनुमा राम्ररी सजाएर प्रहार गर्‍यो ।।३४-३५।। त्यसको धनुष्टङ्कारले स्वर्ग, मर्त्य, पाताल नै शब्दायमान भए । त्यस दुष्ट र बलवान् दैत्यले बलपूर्वक मयूरेश भगवान्माथि अभिमन्त्रित बाण प्रहार गर्‍यो । बाणबाट अग्निका ज्वाला पैदा भए । ती ज्वालाहरू चारै दिशा र आकाशमा फैलिए । त्यसपछि भगवान् श्रीगणेशले वज्रभन्दा पनि कठोर सम्पूर्ण वैरीहरूको नाश गर्ने आफ्नो परशुनामक अस्त्र प्रहार गर्नुभयो ।।३६-३७।। प्रलयकालको आगोसमान चम्किरहेको त्यस परशु (बञ्चरो) ले त्रिलोकीलाई नै अग्निको ज्वालामा डुबायो । त्यस बञ्चरोले सिन्धुद्वारा प्रहार गरिएको बाणलाई आकाशमा नै काटिदियो । त्यसपछि भगवान् श्रीगणेशद्वारा गरिएको बञ्चराको प्रहारबाट दैत्यराज सिन्धु भुइँमा लड्यो र भगवान्ले त्यसका हात काटिदिनुभयो ।।३८-३९।। त्यो बञ्चरो अत्यन्त गह्रौं थियो र हातबाट छुटेर एक्कासि आकाशमा पुगी त्यो सिन्धु दैत्यको शरीरमा खसेको थियो ।

शतधारञ्च तच्छव्दं चकार गर्जयन् दिश: ।
दृष्ट्वा तत्र मयूरेश: शूलमुग्रं मुमोच ह ।।४१।।

ददाह भुवनं तच्च पपात दैत्यमस्तके ।
मुकुटं कुण्डले कर्णौ खण्डयित्वा ययौ पुन: ।।४२।।

मयूरेशकरं शीघ्रं यथा न त्याजितं तथा ।
तत: क्रोधादुवाचैनं छिन्नकर्णो महासुर: ।।४३।।

पौरुषं दर्शितं तेऽद्य दर्शयिष्ये तवापि च ।
इदानीं शरघातेन छिनद्मि नासिकां तव ।।४४।।

इत्युक्त्वा खड्गहस्तोऽसौ तं जगाम गुणेश्वरम् ।
मयूरेशस्तदा चक्रे नानारूपाणि सर्वत: ।।४५।।

आयुधानि च चत्वारि बिभ्रत् करचतुष्टये ।
तत: स विस्मयाविष्टो दशदिक्षु व्यलोकयत् ।।४६।।

ददर्श तत्र तं देवं चतुरायुधभूषितम् ।
तत: स लज्जितो गेहं निजं गन्तुं मनो दधे ।।४७।।

तथाऽपि पुरतोऽपश्यन्मयूरेशं तथाविधम् ।
आच्छाद्य नेत्रे स ययौ हृद्येनं समलोकयन् ।।४८।।

उन्मील्य नेत्रे सोऽपश्यत् पुर एनं शिखण्डिनि ।
ततो दैत्यो बुबोधैनं स्वान्ते रविप्रसादत: ।।४९।।

रणस्थलात् पुरीं यात आच्छाद्य वदनाम्बुजम् ।
हतशेषैश्च वीरैश्च तादृशै: परिवारित: ।।५०।।

पर्यङ्के न्यपतच्चिन्तापर्याकुलितमानस: ।
वीरास्ते स्वगृहं याताश्चिन्ताव्याकुलचेतस: ।।५१।।

त्यसपछि सिन्धुले रिसाएर श्रीगणेशमाथि चक्र प्रहार गर्‍यो । सय धार भएको त्यस चक्रको प्रहारबाट भयङ्कर गर्जन भयो । भगवान् श्रीगणेशले त्यसलाई काट्न शूलप्रहार गर्नुभयो । संसार डढाउँदै त्यो शूल दैत्यको टाउकामा खस्यो । त्यसका मुकुट, कुण्डल र कानसमेत टुक्रा टुक्रा बनाई त्यो शूल श्रीगणेशकै हातमा फर्केर आयो । यति तीव्र गतिमा त्यो आयो कि त्यसलाई भगवान् श्रीगणेशले प्रहार नै नगर्नुभएको आभास हुन्थ्यो । कान काटिएको त्यस दैत्यले रिसाउँदै श्रीगणेशलाई भन्यो - 'आज मैले तेरो पुरुषार्थ देखें र तँलाई पनि देखें । अब म आफ्नो पुरुषार्थ देखाउनेछु र बाणप्रहार गरी भर्खरै तेरो नाक टुक्र्याउने छु' ।।४०-४४।। यसरी गर्जन गरेर त्यो हातमा तरबार लिएर श्रीगणेशका नजिकमा गयो । भगवान् श्रीगणेशले पनि त्यस बेला असङ्ख्य रूप धारण गर्नुभयो । यसका साथै उहाँले चार हातमा चार आयुध धारण गर्नुभयो । उहाँको यस्तो रूप देखेर त्यो दैत्य चकित भई दसै दिशातिर हेर्न लाग्यो ।।४५-४६।। जहाँसुकै त्यसले चतुर्बाहु र चार प्रकारका आयुध धारण गर्नुहुने श्रीगणेशलाई देख्यो । त्यसपछि लाज मानेर घर फर्किने विचार गर्‍यो ।।४७।। प्रस्थान गर्न लाग्दा त्यसले आफ्ना अगाडि चतुर्बाहु श्रीगणेशको दर्शन पायो । यसको दर्शन गर्दिनँ भनी आँखा चिम्लेर हिंड्न खोज्दा आफ्नो हृदयमा त्यसले चतुर्बाहु श्रीगणेशको दर्शन पायो ।।४८।। त्यसले तुरुन्तै आँखा खोली बाहिर हेर्दा पनि मयूरमा सवार हुनुभएका मयूरेश श्रीगणेशको दर्शन पायो । त्यसपछि भगवान् सूर्यका कृपाले हृदयमा केही चेतना र केही बोध प्राप्त गर्‍यो ।।४९।। अनि आफ्नो मुख ढाकेर रणस्थलबाट आफ्नो दरबारतर्फ गयो। त्यस बेला त्यसका वरिपरि युद्धमा बाँची फर्केका केही दैत्यवीर थिए । चिन्ताले व्याकुल भएको त्यो घरमा गई पलङ्गमा पल्टियो र त्यसका साथ आएका वीरहरू पनि अत्यन्त मलिन अनुहार लिएर आ-आफ्ना घरतर्फ लागे ।।५०-५१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिन्धुवैरूप्यकरणं नाम पञ्चदशाधिकशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा सिन्धुको अङ्गभङ्ग गराई कुरूपता निष्पादन' शीर्षकान्वित एक सय पन्ध्रौं अध्याय पूर्ण भयो ।।११५।।

ॐ

## षोडशोत्तरशततमोऽध्यायः  { ११६ अध्याय }

क उवाच

जयं प्राप्ते मयूरेशे ययुस्तत्र मुनीश्वराः ।
शिवोऽपि गिरिजायुक्तो ययौ तञ्च निरीक्षितुम् ।।१।।
औत्सुक्यात् पार्वती चैनं समालिङ्ग्याऽब्रवीत् तदा।

पार्वत्युवाच

अतिश्रान्तोऽसि दैत्यस्य कठिनस्य रणे सुत ।।२।।
कोमलानि तवाङ्गानि कथं शस्त्राणि सेहिरे ।
कृतान्तसदृशो दैत्यो मायावी बलवत्तरः ।।३।।
स कथं कोमलाङ्गेन त्वया युधि विनिर्जितः ।
प्रारुदत् करुणं देवी धृत्वाऽङ्के निजबालकम् ।।४।।
ततो मुनिगणाः शम्भुर्वारयामास तां शिवाम् ।

शिव उवाच

न जानीषे मयूरेशं सर्वकारणकारणम् ।।५।।
अनादिनिधनं देवं वेदान्तागोचरं विभुम् ।
त्रयस्त्रिंशत्कोटिदेवैर्नुतं देवारिदारणम् ।।६।।
सृष्टिस्थितिज्ञानहेतुं लयहेतुमनामयम् ।
भूभारोत्तारणार्थाय नानारूपधरं परम् ।।७।।
ब्रह्माण्डव्याप्तरोमाङ्कमेकानेकस्वरूपिणम् ।
तपोबलसमायुक्तं योगशास्त्रसमन्वितम् ।।८।।
मायाविभेदकं देवं मायिनामपि मायिनम् ।
बालभावेऽपि दैत्यानां हन्तारं किं न वेत्सि तम् ।।९।।

क उवाच

एवं स्तुतिं समाकर्ण्य हृष्टा सा पार्वती तदा ।
ततो हृष्टो मयूरेशो मुनीन् प्राह शिवं शिवाम् ।।१०।।

मयूरेश उवाच

न भयं वज्रहस्तान्मे ह्यन्यस्मात् तत् कथं भवेत् ।
सर्वेषां नमनान्मातर्मुनीनामाशिषोऽपि च ।।११।।
शिवस्य वरदानेन सिन्धुदैत्यो जितो मया ।
स्कन्दादयो जिता येन युध्यन्ते न हि तेन ते ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** – मयूरेश भगवान्ले विजय प्राप्त गर्नुभएपछि मुनिहरू उहाँको दर्शन गर्न गए। पार्वतीसहित सदाशिव पनि आफ्ना प्रिय पुत्रलाई हेर्न जानुभयो।।१।। भगवती पार्वतीले उत्कण्ठापूर्वक श्रीगणेशलाई अङ्कमाल गरी कुरा गर्नुभयो।

**पार्वतीले भन्नुभयो** – बाबु ! तिमी साह्रै थाक्यौ, रणमा कठोर शरीर भएका दैत्यका ती शस्त्रहरूलाई तिम्रा कोमल अङ्गले कसरी सहन गरे होलान् ? त्यो मायावी दैत्य हेर्दैमा यमराजझैं डरलाग्दो छ, बलियो छ र जाली पनि छ ।।२-३।। त्यस्तो दैत्यलाई आफ्नो कोमल शरीरद्वारा कसरी तिमीले युद्धमा परास्त गर्‍यौ ? यसरी भावपूर्वक कुरा गर्दै पार्वतीले आफ्ना पुत्र श्रीगणेशलाई काखमा राखी दयापूर्वक आँसुका धाराले नुहाइदिनुभयो ।।४।। रोइरहेकी पार्वतीलाई मुनिगण र शिवगणले नरुन अनुरोध गरे ।

**शिवजीले भन्नुभयो** – हे पार्वती ! तिमीले श्रीगणेशलाई राम्ररी चिनेकी नै छैनौ । सबै कारणका पनि कारण, उपाधिविहीन, वेदान्तागोचर, शाश्वत, कोटि-कोटि देवताहरूद्वारा पूजित, दानवसंहारक, सृष्टि र स्थितिका हेतु, संहारका कारण, निरामय, निर्दोष, पृथिवीको भारहरण गर्न अनेक रूप धारण गर्नुहुने, रोम-रोममा ब्रह्माण्ड धारण गर्नुहुने, एकरूप अनेकरूप, तपोबल-सम्पन्न, योगशास्त्रका ज्ञाता, मायाभेदक, मायावीहरूका पनि परम मायावी र बालभाव भए तापनि दैत्यहरूको संहार गर्न समर्थ श्रीगणेशलाई तिमी त्यस रूपमा किन बुझ्दिनौ ?।।५-९।।

**ब्रह्माजीले भन्नुभयो** – शिवजीबाट यसरी गरिएको श्रीगणेशको प्रशंसा सुनेर पार्वती प्रसन्न हुनुभयो । श्रीगणेश पनि मुसुक्क हाँस्नुभयो । त्यसपछि श्रीगणेशले माता-पिताप्रति लक्षित गर्दै कुरा गर्नुभयो ।।१०।।

**श्रीगणेशले भन्नुभयो** – हे माता-पिता ! मलाई वज्रधारी इन्द्रसँग कुनै डर लाग्दैन भने अरूसँग डराउनुपर्ने कुनै कारण नै छैन। सबै मुनिहरूको वन्दना गर्नाले र उत्तम पुरुष हजुरहरूको आशीर्वादले गर्दा मैले सिन्धु दैत्यमाथि विजय प्राप्त गरें । त्यस दैत्यले स्कन्द आदि ठूला देवतालाई जितेको थियो । त्यस कारण ती देवतालाई पनि त्योसँग युद्ध गर्ने इच्छा थिएन ।।११-१२।। सिन्धु दैत्यका सिपाही बनेर

असङ्ख्याता हता देवा दैत्यसेनाचरैर्नरैः ।
असृङ्नद्यः सम्प्रवृत्ता वीरहर्षकरा खलु ।।१३।।

रणे निपतितान् देवान् विचिन्वामो मुनीश्वराः ।

क उवाच

एवं मयूरेशवचो निशम्य प्राह धर्मवित् ।।१४।।

वसिष्ठो मुनिवर्यस्तं यामः सर्वे चलन्तु वै ।
ततो ययौ रणे द्रष्टुं मुनिभिस्तैर्मयूरराट् ।।१५।।

मज्जारक्तवसागन्धो घ्रातुं यत्र न शक्यते ।
अतिभीषणकायाँस्ताँश्छिन्नभिन्नाननेकशः ।।१६।।

दृष्ट्वा बीभत्सरूपाँस्तान् प्रफुल्लान् किंशुकानिव ।
विकृतिं परियातानि मनांसि दानवद्विषाम् ।।१७।।

पश्यतां वीरराशींस्तान् वीरोपरि प्रतिष्ठितान् ।
काँश्चिच्च जीवतः काँश्चिन् मूर्च्छितान् शस्त्रघाततः।।१८।।

काँश्चिच्च प्रविशीर्णाङ्गान् देवान् देवा व्यकर्षयन् ।
सहसा न विदुर्देवा देवान् वा दानवानपि ।।१९।।

अब्रुवँस्तत्र केचिच्च त्वदर्थं मृत्युमागताः ।
अन्ते ते दर्शनं प्राप्तमित्युक्त्वा व्यसृजन्नसून्।।२०।।

क उवाच

एवं श्रुत्वा तु तद्वाक्यं साश्रुकण्ठो मयूरराट् ।
भ्रमन् भ्रमन् ददर्शाग्रे मूर्च्छितं तु षडाननम् ।।२१।।

पतदश्रुर्मयूरेशः स्नेहात् तञ्चाब्रवीदिति ।
उत्तिष्ठोत्तिष्ठ भद्रं ते किं शेषे प्राकृतो यथा ।।२२।।

श्रान्तोऽसि दैत्यहननाद् यच्छालिङ्गनमद्य मे ।
प्रमार्जितस्तु हस्तेन ततः स प्रोदतिष्ठत ।।२३।।

अपश्यन्निकटे देवपादपद्मं भयापहम् ।
उवाच च मयूरेशं दर्शनात् ते गतं मम ।।२४।।

काम गर्ने मानिसहरूले असङ्ख्य देवताहरूको हत्या गरे । युद्धको मैदानमा वीरहरूलाई जोश दिलाउने रगतका नदी बगे ।।१३।। श्रीगणेशले ऋषिहरूलाई भन्नुभयो- 'हे मुनिहरू! रणभूमिमा लडिरहेका असङ्ख्य देवताहरूको तपाईँहरूले खोजी गर्नुहोस् ।'

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका यी कुरा सुनेर धर्मवेत्ता वशिष्ठ मुनिले श्रीगणेशलाई भन्नुभयो - हे श्रीगणेश! हामी युद्धभूमिमा जाऔँ, अरू पनि त्यसतर्फ प्रस्थान गरून् । यो कुरा सुनेर भगवान् श्रीगणेश देवताहरूको दर्शन गर्न मुनिहरूका साथ जानुभयो ।।१४-१५।। त्यो रणभूमिमा चर्बी र बोसोको सहिनसक्नु गन्ध प्रवाहित थियो । देवताहरूका घाइते शरीर डरलाग्दा थिए । ती अनेक रूपमा छिन्न-भिन्न र फुलेका पलाशका वृक्षझैं रगताम्ये देखिन्थे । यो दृश्य देखेर ऋषिहरूका मन दारुण कष्टले विकृत भए । वीरहरूमाथि वीरहरूको चाङ लागेको र छटपटाइरहेका वीरहरूलाई देखेर ती खिन्न थिए । केही देवता घाइते थिए भने केही मूर्च्छित थिए । केही देवताका अङ्ग-प्रत्यङ्ग टुक्रिएर छरिएका थिए । ती घाइते देवताहरूको दर्शन गर्न आएका अरू देवताहरूले उद्धार गरिरहेका थिए । ती घाइते देवताले उद्धार गर्न आएका देवता र प्रहार गर्न आएका दानवहरूलाई चिन्न सकेनन् । केही घाइते देवताहरूले हे श्रीगणेश ! तपाईँकै कारण तपाईँकै लागि मृत्युको मुखमा परिसकेका छौं । अन्त्यमा दर्शन गर्ने अवसर पनि पायौं भनेर प्राणत्याग गरे ।।१६-२०।।

**ब्रह्माजीले भन्नुभयो** - ती मरणासन्न देवताहरूका विभ्रमपूर्ण वचन सुनेर रोइरहनुभएका श्रीगणेश घुमी-घुमी अगाडि बढ्नुभयो । त्यहाँनिर उहाँले मूर्च्छित भएका स्कन्दको दर्शन गर्नुभयो ।।२१।। स्कन्दको त्यो हालत देखेर आँखाबाट आँसु बगाइरहनुभएका श्रीगणेशले शरीरस्पर्श गर्दै स्नेहपूर्वक स्कन्दलाई भन्नुभयो - दाजु ! उठ्नुहोस् । सामान्य अज्ञानी प्राणीझैं किन सुतिरहनुभएको छ ? तपाईं दैत्यको वध गर्ने कार्यबाट थाक्नु भएको छ । आउनुहोस् मलाई आलिङ्गन गर्ने अवसर दिनुहोस् । यसरी मीठा वचनद्वारा दाजुलाई सान्त्वना दिँदै श्रीगणेशले उहाँका सर्वाङ्गमा स्नेहपूर्वक फेरि पनि स्पर्श गर्नुभयो । त्यसपछि ती स्कन्द उठे ।।२२-२३।। तिनले आफ्नो समीपमा पापनाशक र भयनाशक प्रभु श्रीगणेशका पाउको दर्शन पाए । दर्शनपछि उनले श्रीगणेशलाई भने - हे श्रीगणेश!

सर्वदुःखं श्रमश्चैव विश्रान्तश्चास्मि साम्प्रतम् ।
आलिलिङ्ग मयूरेशं दोर्भिर्द्वादशभिस्तदा ।।२५।।

उभौ यातौ रणं द्रष्टुं गृहीत्वा च परस्परम् ।
अपश्यतां पुरः सुप्तं वीरभद्रमिषुक्षतम् ।।२६।।

नन्दिनञ्च शराघातैः पीडितं बलवत्तरम् ।
भूतराजञ्च पुरतो विभिन्नमस्तकं तदा ।।२७।।

क्रन्दन्तं विकटञ्चैव पुष्पदन्तं भृशार्दितम् ।
ललाटे दृढविद्धञ्च हिरण्यगर्भमेव च ।।२८।।

मृतप्रायञ्च चपलं मृतं श्यामलमेव च ।
लम्बकर्णो न चाज्ञासीद् भ्रान्त्या कञ्चन सङ्गरे ।।२९।।

उदानवायुनाक्रान्तः सुमुखस्तत्र चाभवत् ।
परमं खेदमापन्नः सोमश्च रक्तलोचनः ।।३०।।

शेते स्म मूर्च्छया भृङ्गी पञ्चास्यश्च मुमूर्षया ।
शङ्खुः प्रेतत्वमापन्नो भयकृत् सर्वयोधिनाम् ।।३१।।

एवं दृष्ट्वा सर्ववीरान् हतप्रायान् हतानपि ।
चिन्तया परयाविष्टः प्रपच्छ तं षडाननः ।।३२।।

स्कन्द उवाच

असुराश्च स्वकीयाश्च महावीरा हता मृधे ।
निजधामगताः सर्वे जीवतामत्र का गतिः ।।३३।।
अनन्तकोटिब्रह्माण्डनायकस्त्वं गणेश्वर ।!
चतुर्दशानां विद्यानां सर्वासाञ्च स्वयं निधिः ।।३४।।

कलानां तत्र किं प्रश्नं करोषि त्वं ममान्तिके ।
नाहं मन्त्रं विजानामि वेत्थ त्वं हि न वै सुराः ।।३५।।

विवर्धयसि क्रीडां त्वं नानादैत्यविभञ्जनात् ।
यथामति ब्रवीमि त्वामाज्ञया च स्मृतेर्बलात् ।।३६।।

पूर्वं तु त्रिपुरवधे शिवेन युद्धमद्भुतम् ।
कृतं तत्र मृतान् देवान् द्रोणाद्रिवल्लिजं रसम् ।।३७।।

देवः क्षतेषु संयोज्य जीवयामास तत्क्षणात् ।

तपाईंको दर्शन पाएर मेरा सबै दुःख शान्त भए र मेरो थकाइ पनि मेटियो । त्यसपछि उनले आफ्ना बाह्र हातले भाइ श्रीगणेशलाई आलिङ्गन गरे ।।२४-२५।। आलिङ्गनपछि एकले अर्कालाई समातेर रणभूमिको दर्शन गर्न लागे । ती दुबैले रणभूमिमा सुतिरहेका र बाणको प्रहारबाट क्षत-विक्षत वीरभद्रलाई देखे । त्यसैगरी बाणप्रहारबाट घाइते भएका महाबली नन्दीलाई देखे । त्यहीं तिनले टाउको फुटेर रगताम्य भएका भूतराजलाई देखे ।।२६-२७।। ती दुबै दाजुभाइले करुणक्रन्दन गरिरहेका विकट र अत्यन्त पीडाले छट्पटाइरहेका पुष्पदन्तलाई देखे । निधारमा गहिरो चोट लागेर आत्तिएका हिरण्यगर्भ र मरेसरि देखिएका चपलका साथै मरिसकेका श्यामललाई पनि देखे । त्यस बेला देखापरेका लम्बकर्णले युद्धको भ्रान्तिका कारण कसैलाई चिन्न सकेनन् भने उदान वायुद्वारा पीडित सुमुख अत्यन्त खिन्न देखिए । रीसले राता आँखा गराई सोमले हेरिरहेका थिए भने भृङ्गी मूर्च्छा परेर लडिरहेका थिए । पञ्चास्य मरणासन्न अवस्थामा देखिन्थे । शङ्खु प्रेतयोनिमा प्राप्त भई सबै योद्धाहरूका निमित्त त्रासका कारण बनेका थिए । यसरी आफ्नो पक्षका प्रायः सबै वीरहरूलाई मरेका र मरेसरि अवस्थामा पुगेका देखेर परम चिन्तित हुनुभएका स्कन्दले श्रीगणेशलाई सोध्नुभयो ।।२८-३२।।

**स्कन्दले भन्नुभयो** - 'हे श्रीगणेश ! तपाईं अनन्तकोटि ब्रह्माण्डका नायक हुनुहुन्छ । चौध विद्या र चौंसठ्ठी कलाका निधि पनि हुनुहुन्छ । यतिविधि शक्ति र ज्ञानले सम्पन्न तपाईंले किन मसँग प्रश्न गर्नुहुन्छ ? हजुरका सामु म केही जान्दिनँ, ममात्र किन, देवताहरू पनि जान्दैनन् । सम्पूर्ण रहस्यका ज्ञाता तपाईं नै हुनुहुन्छ । तपाईंले अनेकौं दैत्यहरूको वध गरी आफ्नो कीर्ति संसारमा फैलाइरहनुभएको छ ।।३३-३५।। तपाईंले प्रश्नरूप आज्ञा गर्नुभएका कारण स्मृतिको सहायताले म केही कुरा आफ्नो बुद्धिअनुसार निवेदन गर्न चाहन्छु । हे श्रीगणेश ! पुरानो समयमा भगवान् शङ्करले त्रिपुरासुरको वधका प्रसङ्गमा अद्भुत युद्ध गर्नुभएको थियो । उहाँले त्यस युद्धमा द्रोणाचलमा उत्पन्न लताको रस मरेका देवताका घाउमा लेपन गराई ती सबै देवताहरूलाई तत्काल जीवित तुल्याउनुभएको थियो।

क उवाच

श्रुत्वेत्थं वचनं देवो जगाद तं षडाननम् ।।३८।।

इदानीं दैत्यकोट्यस्तु युद्धार्थं बलवत्तराः ।
आयास्यन्ति तदा कोऽत्र युद्ध्येत् ताभिः षडानन।।३९।।

कश्चानेतुं व्रजेदद्रिं वल्लीरसमनुत्तमम् ।
एवं ब्रुवन्मयूरेशो मायामाविश्चकार ह ।।४०।।

उज्जीवयामास तदा निजाङ्गवायुस्पर्शतः ।
ततस्ते हर्षसम्पन्नाः प्रणेमुस्तं गुणेश्वरम् ।।४१।।

आलिलिङ्गुः पुनर्युद्धं कर्तुं तञ्च विजिज्ञपुः ।
त्वद्दृष्टिविनिपातेन तेजो नो द्विगुणीकृतम् ।।४२।।

गुणेश्वर उवाच

ब्रह्मादयो देवगणाः स्तुवन्ति वः पराक्रमम् ।
तारकासुरमुख्याश्च निहता दैत्यदानवाः ।।४३।।

क उवाच

ततस्तैः सहितो देवैर्मयूरेशः शिवं ययौ ।
नमस्कृत्य शिवं गौरीं युद्धाय गन्तुमुद्यतः ।।४४।।

आलिलिङ्ग मुदा गौरी शिवस्तञ्च गुणेश्वरम् ।
ततः षडाननाद्यास्ते शिवमालिङ्गिरे मुदा ।।४५।।

वयं रणे निपतिताः पुनः सञ्जीविता हर !
मयूरेशाङ्गसम्भूतवायुनाऽद्भुतकारिणा ।।४६।।

पुनर्युद्धाय यास्यामोऽनेन सार्द्धं शिवाधुना ।
प्रसादात् तव जेष्यामः सर्वानिवासुरान् युधि ।।४७।।

**ब्रह्माजीले भन्नुभयो-** स्कन्दका यी कुरा सुनेर श्रीगणेशले भन्नुभयो - हे स्कन्द ! वर्तमान समयमा करोडौं बलवान् दैत्यहरू युद्ध गर्न आउनेछन्, ती दैत्यसँग कसले युद्ध गर्ने ? कुन वीर लताको रस लिन द्रोणाचलतर्फ जाने ? किनकि धेरै वीर मरणासन्न छन् र केहीले वीरगति पनि प्राप्त गरेका छन्। यसो भनेर श्रीगणेशले आफ्नो माया प्रकट गर्नुभयो ।।३८-४०।। तत्कालै उहाँले आफ्नो शरीरको वायु स्पर्श गराएर मरेका वीरहरूलाई ब्युँताउनुभयो र मरणासन्नहरूलाई स्वस्थ तुल्याउनुभयो । जीवन प्राप्त गरेका र स्वास्थ्य प्राप्त गरेका ती सबै वीरले प्रसन्न हुँदै श्रीगणेशलाई प्रणाम गरे, आलिङ्गन पनि गरे । आलिङ्गनपछि फेरि पनि युद्ध गर्न जान्छौँ भनी आफ्नो इच्छा व्यक्त गर्दै भने - हे श्रीगणेश ! हजुरको दृष्टिपातले हाम्रो तेज दुईगुना बढेको छ ।।४१-४२।।

**श्रीगणेशले भन्नुभयो -** 'हे वीर देवगण ! ब्रह्माजी आदि विशिष्ट देवताहरूले तपाईँहरूका पराक्रमको प्रशंसा गरिरहनु-भएको छ । भगवान् शङ्करको प्रेरणाबाट तपाईँहरूले नै तारकासुर आदि दानवहरूको वध गर्नुभएको थियो' ।।४३।।

**ब्रह्माजीले भन्नुभयो -** त्यसपछि ती देवताहरूलाई साथ लिएर भगवान् श्रीगणेश शिवजीका सामु जानुभयो। त्यहाँ पुगेर पार्वती र शिवजीलाई प्रणाम गरी युद्धभूमिमा जान तयार हुनुभयो ।।४४।। त्यस बेला भगवती पार्वती र शिवजीले भगवान् श्रीगणेशलाई आलिङ्गन गर्नुभयो । स्कन्द आदि देवताहरूले पनि शिवजीलाई श्रद्धापूर्वक आलिङ्गन गरे । त्यसपछि देवताहरूले भने- 'हे भगवन् शङ्कर ! हामी रणभूमिमा मरिसकेका थियौं तर भगवान् श्रीगणेशका अद्भुत अङ्गवायुद्वारा पुनर्जीवन पाई हजुरका सामु आउने सौभाग्य पाएका छौं । हे शिवजी ! भगवान् श्रीगणेशका साथ हामी फेरि युद्ध गर्न जानेछौं । हजुरको कृपाबाट हामीले युद्धमा सबै दैत्यहरूमाथि विजय प्राप्त गर्नेछौं' ।।४५-४७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे रणशोधनं नाम षोडशाधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवताहरूको दैत्यहरूमाथि विजय र श्रीमयूरेश्वरको अभिनन्दन' शीर्षकान्वित एक सय सोह्रौं अध्याय पूर्ण भयो ।।११६।।

ॐ

## सप्तदशोत्तरशततमोऽध्यायः { ११७ अध्याय }

क उवाच

सिन्धुस्तल्पगतश्चिन्तामवाप महतीं तदा ।
अग्निसन्तप्तहृदयो विचारान् नान्वपद्यत ।।१।।
निर्हर्षो म्लानवदनो निस्तेजः निष्कलोऽपि सः ।
तत उग्रात्मजा दुर्गा लावण्यलहरी शुभा ।।२।।
चिन्ताशाविषदग्धं तं श्रुत्वाऽगान् मञ्चकस्थितम् ।
असङ्ख्यभूषणैर्यस्याः कबरी भाति मस्तके ।।३।।
कस्तूरीतिलकं यस्या ललाटे भाति सुन्दरम् ।
कण्ठे हारं कटौ काञ्चीं बिभ्रतीं रत्नसंयुताम् ।।४।।
सर्वालङ्कारसंयुक्तां सर्वावयवसुन्दराम् ।
आगतान्तु निरीक्ष्यैव मञ्चकाभ्याशमुत्सुकाम् ।।५।।
बहिस्तत्सेवका यातास्ततः सा पतिमब्रवीत् ।

दुर्गोवाच

किं चिन्तां कुरुषे स्वामिन्! यद् भाव्यं तद् भविष्यति।।६।।
ईश्वरस्य वशे लोको न स्वतन्त्रः कदाचन ।
सर्वेषां मानसं त्वं किमुद्वेजयसि मेऽपि च ।।७।।
को हेतुस्ते वद विभो ! ततो युक्तिं वदामि ते ।

क उवाच

प्रियावाक्यं समाकर्ण्य गण्डकीनायकस्तदा ।।८।।
सावधानमना भूत्वा वृत्तान्तं तामथाब्रवीत् ।

सिन्धुरुवाच

किं वदामि प्रिये ! श्लाघ्ये ! मनःखेदकरं परम्।।९।।
युध्यतो मे रणे कर्णौ मयूरेशेन सादितौ ।
सप्तकोटिमिता सेना निहता पौरुषेण ह ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशबाट अङ्ग-भङ्ग भई परास्त गरिएको दैत्यराज सिन्धु साँझ घर फर्केपछि पलङमा पल्टियो र ठूलो चिन्तामा मग्न भयो । हृदयमा घोर सन्ताप परेका कारण त्यसले राम्ररी विचार गर्न सकेन ।।१।। अप्रसन्न र ओइलाएको अनुहार लिएको त्यो कान्तिहीन र निस्तेज थियो । त्यसपछि सौन्दर्यकी खानी उग्रनामक दैत्यकी छोरी र सिन्धुकी धर्मपत्नी दुर्गाले पलङमा पल्टिएका र चिन्ताको सर्पले डसेजस्ता आफ्ना पतिलाई भेटिन् । दुर्गाका केशपाशमा अत्यन्त मूल्यवान् अलङ्कार सजिएका थिए । ललाटमा कस्तूरीको टीका लगाएकी थिइन् र घाँटीमा हार झुण्डिएको थियो । तिनले कम्मरमा रत्नैरत्नले भरिभराउ कन्धनी धारण गरेकी थिइन् ।।२-४।। सबै प्रकारका अलङ्कारले सम्पन्न सर्वाङ्गसुन्दरी दुर्गालाई आफ्नो कोठामा पसेकी देखेर दैत्यराज सिन्धुका सेवकहरू कोठाबाट बाहिर आए । कोठाभित्र गएकी दुर्गाले आफ्ना पतिसँग कुरा गरिन् ।)
३।। (**दुर्गाले भनिन्**- प्राणनाथ ! हजुर किन चिन्ता गरिरहनुभएको छ ? विधाताले निधारमा जे लेखेको छ, त्यो नभई छोड्दैन ।।५-६।। प्राणीहरू ईश्वरको अधीनमा हुन्छन् । ती कहिले पनि स्वतन्त्र हुन सक्दैनन् । तपाईंले आकुलता र चिन्ता देखाएर आफ्ना बन्धु-बान्धव र मेरो मनमा पनि ठूलो उद्वेग उत्पन्न गराउनुभएको छ । तपाईं चिन्ता किन गर्नुहुन्छ? मलाई भन्नुहोस् । त्यसपछि म चिन्तालाई निवारण गर्ने युक्ति बताउनेछु।

**ब्रह्माजीले भन्नुभयो** - आफ्नी प्रिया पत्नीका वचन सुनेर गण्डकीक्षेत्रको नायक दैत्यराज सिन्धुले सावधान भई आफ्ना मनका कुरा प्रकट गर्‍यो ।

**सिन्धुले भन्यो** - प्रशंसनीय गुणले सम्पन्न मेरी प्रिया! म कसरी भनूँ ? अहिले मुटु छेड्ने पीडा बेहोर्न बाध्य भएको छु ।।७-९।। युद्धको अवसरमा मयूरेश श्रीगणेशले मेरा दुबै कान काटिदिए । मैले पुरुषार्थ देखाएर सात करोड श्रीगणेशका सैनिकहरूलाई धराशायी बनाएको थिएँ । स्कन्द आदि

स्कन्दादयो महावीराः पातिताः शरवृष्टिभिः ।
अकस्मान्मे हृतौ कर्णौ त्रिशूलं प्रेष्य शत्रुणा ।।११।।

आच्छाद्य मुखमायातो वाससा निजमन्दिरम् ।
येनोपायेन मे शत्रुवधः स्यात् तं वदस्व मे ।।१२।।

दुर्गोवाच

वीरधर्मः कृतः सम्यङ् निहताः सर्वसैनिकाः ।
न यशः प्राप्यते स्वामिन् ! गोब्राह्मणसुरद्विषाम् ।।१३।।

तद्द्वेषाच्चैव कल्याणं कस्यापि हि न जायते ।
सेवनाद् वन्दनाद् ध्यानात् स्मरणात् पूजनादपि।।१४।।

देवैरिन्द्रादिभिः स्थानान्याप्तानि च स्थिराणि च ।
यः समः सर्वभूतेषु शुभाशुभफलप्रदः ।।१५।।

तत्सेवयाऽभीष्टसिद्धिः कामधेनोरिवाभवत् ।
अङ्कुरो जायते तादृग्यादृग्बीजं हि उप्यते ।।१६।।

अशुभात् कर्मणो दुःखं सुखं स्याच्छुभकर्मणः ।
अतः सन्तः प्रकुर्वन्ति शुभं कर्म सदादरात् ।।१७।।

हितञ्च सर्वजन्तूनां कायेन मनसा गिरा ।
भवता पुरुषार्थेन पीडितास्ते सुरर्षयः ।।१८।।

पुरुषार्थः स विज्ञेयो यश्चतुर्णां हि साधकः ।
यन्मनो नार्थलुब्धं स्यात् परदारेषु न क्वचित् ।।१९।।

स एव पुरुषार्थः स्याद् यश्चानिन्द्यं न निन्दति ।
शरणागतरक्षायां दृढो धर्मपरायणः ।।२०।।

समः सर्वेषु भूतेषु पुरुषार्थः स गम्यते ।
स्वामिन् ! मे परमं वाक्यं शृणु ते हितकारकम् ।।२१।।

अदुष्टवाक् सत्यशीलः स्वगुणानामकीर्तकः ।
परोपकरणे सक्तः परपैशुन्यवर्जितः ।।२२।।

वीरहरूलाई बाण प्रहार गरी भुइँमा लडाएको थिएँ । त्यस बेला अचानक मेरा शत्रु श्रीगणेशले ममाथि त्रिशूल प्रहार गरी मेरा दुबै कान काटिदिए ।।१०-११।। कान काटिएपछि अत्यन्त लज्जित भएँ र कपडाले मुख ढाकेर लुकी लुकी बल्ल बल्ल घर फर्कें । मेरा कान काट्ने शत्रु श्रीगणेशको वध कसरी गर्न सकिन्छ ? मेरो चिन्ता यही हो। तिमीले जानेकी छ्यौ भने श्रीगणेशको वध गर्ने उपाय बताऊ ।।१२।।

**दुर्गाले भनिन् -** हे प्राणनाथ ! हजुरले वीरधर्मको पालन गर्नुभयो । शत्रुसेनाका वीरहरूलाई मार्नुभयो । तर गाई, ब्राह्मण र देवतासँग द्वेष गर्नाले कसैको पनि कल्याण हुँदैन र कीर्तिलाभ पनि हुँदैन । गाई, ब्राह्मण र देवताको सेवा, वन्दना, ध्यान, स्मरण र पूजन गर्नाले इन्द्र आदि देवताहरूले स्थिर धाम प्राप्त गरेका हुन् । ईश्वरले सबै प्राणीमा समभाव राख्दछन् र कर्मअनुसार शुभ र अशुभ फल प्रदान गर्दछन् तिनले कामधेनु गाईले झैं भक्तका कामना पूरा गराउँछन् । जस्तो बीउ छरिन्छ त्यस्तै अङ्कुर लाग्दछ ।।१३-१६।। अशुभ कर्मबाट दुःख प्राप्त हुन्छ भने शुभ कर्मबाट शुभ फल प्राप्त हुन्छ । यसै तथ्यलाई मनन गरेर सज्जनहरूले सर्वदा आदरपूर्वक शुभ कर्म गर्दछन् ।।१७।। तिनले मन, वचन र शरीरबाट अरूको हितमात्र हुने काम गर्दछन् तर हजुरको कुरा भने यसको विपरीत छ । हजुरले आफ्नो पुरुषार्थबाट देवता र ऋषिहरूलाई ज्यादै सताउनुभएको छ र धेरै दुःख दिनुभएको छ ।।१८।। हुन त त्यसो गर्दा हजुरले ठूलो पुरुषार्थ गरें भन्नुभएको होला तर त्यो पुरुषार्थ होइन । जुन कर्मबाट धर्म, अर्थ, काम र मोक्ष सिद्ध हुन्छन् त्यो कर्म नै पुरुषार्थ हो। परस्त्रीमा कुनै पनि बेला मन नलगाउनु र अर्थलुब्ध नहुनुलाई पुरुषार्थ मानी जसले उत्तम पुरुषको निन्दा गर्दैन, त्यो वास्तवमा पुरुषार्थी हो। जसले आफ्नो शरणमा आएका शरणार्थीहरूको रक्षा गर्दछ, जो धर्मपरायण छ र जसले सबै प्राणीमा समभाव राख्दछ, त्यो पुरुषार्थी हो र त्यसले गरेका काम पुरुषार्थ हुन्। म हजुरको हित चिताएर एउटा कुरा भन्छु राम्ररी सुन्नुहोस् ।।१९-२१।। हजुर मीठो बोली बोल्नुहोस्, सत्यनिष्ठ हुनुहोस्, आफ्ना गुणको आफै प्रशंसा नगर्नुहोस्, परोपकारमा लाग्नुहोस्, अरूको चियो-चर्चो र छिद्रान्वेषण नगर्नुहोस् । हे प्राणनाथ ! हजुरले मबाट

तत्कुरुष्व महाभाग ! मम प्रीतिं यदीच्छसि ।
मोचयस्व सुरान् सर्वान् प्रबद्धान् शक्रसंयुतान् ।।२३।।

प्रयास्यति मयूरेशोऽखिललोकप्रपालकः ।
वत्स्यावः ससुखं स्वामिन्! नान्यथा तु सुखं भवेत् ।।२४।।

क उवाच

एवं वाक्यामृतं तस्यास्तदभूद् विषसन्निभम् ।
मुमूर्षोरौषधं यद्वद् ग्रहरोगाप्लुतस्य ह ।।२५।।

क्रोधसंरक्तनयनो दुर्गां तां सिन्धुरब्रवीत् ।
न दध्रे हृदि तस्याः स उपदेशं हितावहम् ।।२६।।

सिन्धुरुवाच

सम्यगुक्तं त्वया भद्रे ! लोकनिन्दाकरं वचः ।
चातुर्यं तव विज्ञातं कार्याकार्यविदा मया ।।२७।।

न शत्रुं भजते कोऽपि रिपुर्मानपरायणः ।
नारभेत् कृत्यमन्याय्यमारब्धं चेन्न तत् त्यजेत् ।।२८।।

ततो दुःखं सुखं वा स्यादयशो यश एव च ।
लाभो वाप्यथवाऽलाभो जीवनं मृत्युरेव वा ।।२९।।

पूर्वं भद्रे ! मया सन्धिः साम्ना तेन न वै कृतः ।
इदानीं भविता यद् यत् तद् भवत्येव सर्वथा ।।३०।।

पूर्वमेव हि यज्जन्तोर्लिखितं साध्वसाधु वा ।
कश्चिन्न पुरुषार्थेन कर्तुं शक्तोऽन्यथा सति ।।३१।।

रणे मृतस्य स्वर्गोऽथ ख्यातिः स्याद् विष्टपत्रये ।
यातस्य शरणं शत्रोरयशो नरकेऽपि च ।।३२।।

पूर्वजैः सहितस्याशु जायते नात्र संशयः ।
जानामि तं मयूरेशं देवदेवं जगद्गुरुम् ।।३३।।

स्नेह र सद्भाव चाहनुहुन्छ भने मैले भनेका कुरा स्वीकार गर्नुहोस् । अर्को कुरा हजुरले आफ्नो कारागारमा बन्दी बनाएर राखिएका इन्द्र आदि देवताहरूलाई मुक्त गर्नुहोस् ।।२२-२३।। हजुरले देवताहरूलाई मुक्त गरेपछि संसारका पालक भगवान् श्रीगणेश युद्धभूमिबाट घरतर्फ फर्किनुहुनेछ । हजुरको जीवन सुरक्षित रहनेछ । हामी हजुरका पारिवारिक जनहरू पनि सुखपूर्वक बाँच्न पाउनेछौं। हजुरले मैले भनेअनुसार गर्नुभएन भने हामीले कहिले पनि सुख पाउनेछैनौं ।।२४।।

**ब्रह्माजीले भन्नुभयो** - दुर्गाको मुखबाट उच्चारण गरिएको वचन दैत्यराज सिन्धुका लागि सह्य भएन । दीर्घरोगले आक्रान्त मर्न चाहने रोगीका निमित्त औषधि विषसमान भएझैं भयो । त्यसले दुर्गाका ती हितकारी उपदेश सुनेर पनि मनमा लिन सकेन । क्रोधले राता भएका आँखाले दुर्गालाई हेर्दै कुरा गर्‍यो ।।२५-२६।।

**सिन्धुले भन्यो** - हे कल्याणी ! तिमीले लोकमा मेरो नाक कटाउने कुरा गर्‍यौ । कर्तव्य के हो र अकर्तव्य के हो ? त्यो मैले जानेको छु । तिम्रा कुराबाट तिमी कति बाठी रहेछौ भन्ने कुरा पनि थाहा पाएँ । तिमीलाई थाहा हुनुपर्छ कि कुनै पनि स्वाभिमानी वीरले शत्रुको सेवा गर्दैन र शत्रुका सामु घुँडा टेक्दैन । अन्यायपूर्ण कार्य शुरु गर्दैन र गरेको छ भने त्यसको परित्याग पनि गर्दैन ।।२७-२८।। त्यसपछि सुख-दुःख, सुकीर्ति-दुष्कीर्ति, लाभ-हानि र जीवन-मृत्यु जे भोग्न पनि तयार हुन्छ।।२९।। हे कल्याणी ! मैले पहिले श्रीगणेशसँग साम नीतिको प्रयोग गरी सन्धि गरिनँ । अहिले जे हुन लेखेको छ त्यो हुनेछ। प्राणीको निधारमा राम्रो नराम्रो जे हुने हो, त्यो पहिल्यै लेखिएको हुन्छ । त्यसलाई कसैले पुरुषार्थ गरेर उल्ट्याउन सक्दैन ।।३०-३१।। युद्धको मैदानमा वीरता देखाउँदै ज्यानको आहुति दिने योद्धाले संसारमा ठूलो नाम कमाउँछ र स्वर्गमा बस्ने सौभाग्य पनि पाउँछ । शत्रुको शरणमा जाने योद्धाले अपकीर्ति र नरकबाहेक केही पनि फेला पार्दैन ।।३२।। त्यसले आफ्नो मात्र होइन, आफ्ना पुर्खाहरूको पनि पतन गराउँछ । तिमीले गुणगान गरी प्रशंसा गरिएका मयूरेश श्रीगणेश देवदेव र जगद्गुरु पनि हुन् भन्ने कुरा मैले जानेको छु ।।३३।।

सम्भूतं मम नाशाय रावणस्येव राघवम् ।
पातयिष्ये शिरोऽस्याहमिति मे निश्चिता मति: ।।३४।।

त्यजन्ति जीवितं शूरा नाभिमानं कदाचन ।
न मेऽस्ति गणना सुभ्रु! कृतान्तस्यापि कर्हिचित् ।।३५।।

नत्र का गणनाऽन्येषां लज्जा मे कर्णत: कृता ।

**क उवाच**

एवमुक्त्वा भूषणानि वस्त्राणि च दधार स: ।।३६।।

केयूरं मुकुटं रत्नयुक्तं हारञ्च कुण्डले ।
तूणौ खड्गञ्च खेटञ्च चापं सज्जञ्च शस्त्रिकाम् ।।३७।।

आच्छाद्य कर्णौ रौक्मीयवस्त्रमुष्णीषमेव च ।
आययावुपविष्ट: स भद्रासनमनुत्तमम् ।।३८।।

रामले रावणको वध गर्न अवतार लिनुभएझैं मयूरेश श्रीगणेश पनि मेरो वध गर्न आएका हुन् भन्ने कुरा मैले राम्ररी बुझेको छु । बुझ्दाबुझ्दै पनि मैले वीरधर्म अँगालेर युद्धभूमिमा तिनको शिर टुक्र्याउने निधो पनि गरेको छु ।।३४।। वीरहरू जीवन त्याग गर्दछन् तर स्वाभिमान त्याग गर्दैनन् । हे कल्याणी ! मैले यमराजलाई पनि गन्दिनँ भने अरूलाई गन्ने कुरा पनि भएन । आज म श्रीगणेशद्वारा कान काटिएको हुँदा क्रोधले मुर्मुरिएको छु र लाजले भुतुक्क भएको छु ।

**ब्रह्माजीले भन्नुभयो** - दैत्यराज सिन्धुले आफ्नी पत्नी दुर्गालाई यी कुरा सुनाएपछि वीरले धारण गर्ने वस्त्र-अलङ्कार र आयुध धारण गर्‍यो ।।३५-३६।। केयूर, कुण्डल, रत्नमय कण्ठहार, तरबार, ढाल, ताँदो चढाएको धनु र छुरीद्वारा सजिएर रेशमी कपडाको पगरी बाँधी त्यसको एउटा छेउले दुबै कान ढाकेर त्यो दैत्य सभामा आयो र सिंहासनमा आरूढ भयो ।।३७-३८।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे दुर्गासिन्धुसंवादो नाम सप्तदशोत्तरशततमोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'चिन्ताग्रस्त दैत्यराज सिन्धुका समक्ष रानी दुर्गाको सुधारमूलक अभ्यर्थना' शीर्षकान्वित एक सय सत्रौं अध्याय पूर्ण भयो ।।११७।।

ॐ

## अष्टादशोत्तरशततमोऽध्यायः  { ११८ अध्याय }

क उवाच

युद्धावेशदुराधर्ष उपविष्टो महासने ।
स तदा वीरमुख्यांस्तानुपविष्टानथाऽब्रवीत् ।।१।।

सिन्धुरुवाच

गतौ मम प्रधानौ तौ त्रैलोक्याकर्षणक्षमौ ।
न तादृशोऽस्ति वीरोऽत्र यो मे हन्याद् रिपुं बलात्।।२।।

नैतादृशौ बुद्धिमन्तौ पराक्रमजयैषिणौ ।
वीरा ऊचुस्ततः सिन्धुं मा चिन्तां कुरु सर्वथा ।।३।।

यावद् वयं प्राणवन्तो लघुकृत्य उपस्थिते ।
किमर्थं चिन्ताकुलतां तावद् व्रजसि दैत्यराट् ।।४।।

स्वापं कुरु महाभाग ! पर्यङ्के पुष्पसंस्तरे ।
कृतान्तस्ताडितो याभ्यां तयोः कस्माद् भयं भवेत्।।५।।

एवमुक्त्वा कलः सिन्धुं विकलश्च महाबलौ ।
श्यालकौ तस्य दैत्यस्य निर्यातौ युद्धदुर्मदौ ।।६।।

नानायुद्धेषु कुशलौ नानायुधधरावुभौ ।
नानाभूषणवस्त्राढ्यौ नानासेनासमन्वितौ ।।७।।

नानागर्जनतो व्योम चक्रतुर्नादसंयुतम् ।
देवकोटिनिहन्तारावसङ्ख्यवाहिनीयुतौ ।।८।।

ययुस्तत्परतो वीराः सिन्दूरारुणमस्तकाः ।
अग्निशस्त्रधरा मुक्तकेशपाशाः सचन्दनाः ।।९।।

लसच्छस्त्रधराः सर्वे यममत्तुमिवोद्यताः ।
ततः करिघटा याता नानाधातुविचित्रिताः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - युद्धको आवेशका कारण कठोर मुद्रा प्रदर्शित गर्दै सिंहासनमा बसिरहेको दैत्यराज सिन्धुले आफ्ना सामु बसेका मुख्य-मुख्य वीरहरूलाई लक्षित गर्दै कुरा गऱ्यो ।।१।।

**सिन्धुले भन्यो** - तीनै लोकलाई आफूतर्फ तान्न सक्ने मेरा दुई जना मुख्य वीरले भर्खरै वीरगति प्राप्त गरे । अहिले ती वीरहरूसमान शूरता र वीरता भएको अर्को कुनै वीरलाई म देखिरहेको छैन । जसले मेरा शत्रुहरूको संहार गर्न सकोस्, त्यस वीरको खोजीमा छु । मेरा ती दिवङ्गत वीर मन्त्रीहरू बुद्धिमान् थिए । तिनको तुलना कसैसँग गर्न सकिँदैन। दैत्यराज सिन्धुका ती कुरा सुनेर कल र विकल नामक वीरहरूले आएर भने - हे राजन् ! हजुरले चिन्ता गर्नुपर्दैन । एउटा सानो समस्या देखिएको छ । त्यो सानो समस्यालाई लिएर हजुरले ठूलो चिन्ता नगर्नुहोस् । हामी शक्तिशाली वीर हजुरका सामु उपस्थित छौं । अब हजुरले किन पीर गर्नुहुन्छ, निश्चिन्त हुनुहोस् ।।२-४।। हजुर फूलैफूलको शय्यामा आराम गर्नुहोस् । हामी दुई जना वीरले युद्धभूमिमा यमराजसमेतलाई परास्त गरेका छौं भने अब हामी कोसँग डराउने ? यसरी आफ्ना भाव बताएर सम्बन्धका हिसाबबाट दैत्यराज सिन्धुका साला पर्ने ती दुई वीर कल र विकल युद्धको उन्माद देखाउँदै त्यहाँबाट बाहिर निस्किए ।।५-६।। युद्ध गर्न सिपालु, तीखा आयुध धारण गर्ने, मूल्यवान् वस्त्र र अलङ्कारले सजिएका ती दुवैले वीरहरूलाई साथमा लिएर युद्ध मैदानमा जान लाग्दा घोर गर्जन गरी आकाशलाई पनि प्रतिध्वनित तुल्याए । कोटि-कोटि देवताहरूको संहार गर्न सक्ने सामर्थ्य भएका असङ्ख्य-सेनासम्पन्न कल र विकललाई युद्धका लागि गर्जन गरिरहेको देखेर सिन्दूरले शिर रातै बनाएका आग्नेय अस्त्र धारण गर्ने, खुला केश राखेका, चन्दनको टीका लगाएका, शस्त्रास्त्र सम्पन्न, यमराजलाई पनि भयभीत तुल्याउने दैत्य सेनाका अनेकौं वीर अगाडि लागे । ती वीरहरूपछि अनेक थरि धातुका शोभामा सुशोभित अनेक वीरहरूका सवारी साधन बनेका हात्तीहरूको लश्कर चल्न थाल्यो ।।७-१०।। ती हात्तीहरू

अधिष्ठाता महामात्रैर्नानाभूषाविराजिताः ।
तीक्ष्णदन्ताः सिन्दूरिता घण्टानादनिनादिताः ।।११।।

ततोऽश्वसादिनो यातास्तनुत्राणविराजिताः ।
धनुर्बाणधराः सर्वे लसच्छस्त्रविभूषिताः ।।१२।।

अनेकयुद्धसम्भाररथा यातास्ततः परम् ।
अनेकवीरसंयुक्ता नानासूतविराजिताः ।।१३।।

एवं तौ श्यालकौ यातौ रणस्थानं रुषान्वितौ ।
ददृशाते मयूरेशमाशीविषभुजि स्थितम् ।।१४।।

षडाननादिभिर्वीरैरन्यैश्च परिवारितम् ।
दृष्टा तैस्तु तयोः सेना घोरा सा चतुरङ्गिणी ।।१५।।

असङ्ख्यातं बलं तस्य समायातं विचित्रितम् ।
प्रेषितो देवप्रवरैर्दूतो नीतिविशारदः ।।१६।।

ज्ञात्वा वृत्तान्तमायातः स जगाद सुरान् प्रति ।

दूत उवाच

कलश्च विकलश्चैव नानासेनासमायुतौ ।।१७।।

जेतुं सुरान् समायातौ नानायुद्धविशारदौ ।
ताभ्यां युद्धाय सम्प्राप्तौ पुष्पदन्तवृषावुभौ ।।१८।।

धनुर्षी सज्जतां नीत्वा षष्ट्या बाणैरविध्यताम् ।
दैत्यौ बाणान् निवार्यैव तावुभौ बाणवृष्टिभिः।।१९।।

छादितौ शरघातेन घ्नतः स्म देवसैनिकान् ।
कलस्य खड्गं खड्गेन विभेद स महावृषः ।।२०।।

अन्यमादाय तस्याशु खड्गं छित्त्वा न्यपातयत् ।
विकलस्य पुष्पदन्तो धनुश्चिच्छेद सायकैः ।।२१।।

ततस्तौ मल्लयुद्धेन परस्परमयुध्यताम् ।
ते सेनेऽयुध्यतां तत्र नानाशस्त्रास्त्रपत्रिभिः ।।२२।।

तीखो दाँतले सुहाएका थिए । तिनका टाउकामा सिन्दूर छरिएको थियो, घाँटीमा मालाको आकारका घण्टी धारण गरेका थिए। हात्तीसेनापछि कवचले सुहाएका र धनु-बाणले सज्जित, चम्किला शस्त्र-अस्त्रले विभूषित घोडसवार सेनाका जवानहरू हिंडिरहेका थिए। त्यसपछि युद्धका सामग्री एवं खाद्यसामग्री वहन गर्ने वीरहरू र सारथिहरूले सुसम्पन्न हजारौं रथहरूको ताँती चलेको थियो ।।११-१३।। अनेक थरि सेना र शस्त्र-अस्त्रले सुसज्जित सिन्धु दैत्यका साला कल र विकल क्रोधको ज्वाला दन्काउँदै युद्धभूमिमा पुगे । त्यसपछि तिनले मयूरमा सवार हुनुभएका भगवान् श्रीगणेशको दर्शन गरे ।।१४।। त्यस बेला भगवान् श्रीगणेश स्कन्द आदि वीरहरूले घेरिएर विराजमान हुनुहुन्थ्यो । श्रीगणेश र उहाँका वीरहरूले दैत्यहरूको चतुरङ्गिणीसेना देख्नुभयो ।।१५।। दैत्यहरूको असङ्ख्य र विचित्र सेना देखेर चकित हुनुभयो । दैत्यसेनाको समाचार बुझ्न देवताहरूले नीतिज्ञ दूतलाई त्यहाँ पठाएका थिए ।।१६।। त्यहाँको वृत्तान्त बुझेर फर्केको दूतले तिनलाई सबै कुरा बतायो ।

**दूतले भन्यो** - हे देवगण ! अनेक सेनासम्पन्न, युद्धमा कुशल दैत्य योद्धा कल र विकल मैदानमा पुगिसकेका छन्। तिनीहरूसँग युद्ध गर्न हाम्रो सेनाका पुष्पदन्त र नन्दीश्वर पनि त्यहाँ पुग्नुभएको छ ।।१७-१८।। युद्ध प्रारम्भ भएपछि पुष्पदन्त र नन्दीले आफ्नो धनु सजाएर साठी बाणहरू प्रहार गरी कल र विकललाई घाइते तुल्याए । ती दुवै दैत्यले पनि बाण वर्षाद्वारा पुष्पदन्त र नन्दीबाट प्रहार गरिएका बाणहरूलाई निरस्त गरे । बाणको वर्षाले ढाकिएका ती दुवै दैत्य वीरले देवसेनाका जवानहरूलाई घाइते तुल्याए । त्यस अवस्थामा नन्दीश्वरले दैत्यवीर कलको तरबारलाई आफ्नो तरबारले टुक्र्याइदिनुभयो। अर्को पटक तरबार प्रहार गरी त्यसका सैनिकहरूलाई भुइँमा सोत्तर बनाउनुभयो । यस्तै किसिमबाट पुष्पदन्तले पनि विकलको धनुलाई आफ्ना बाणले टुक्र्याउनुभयो ।।१९-२१।। त्यसपछि दुबै सेनाका असङ्ख्य वीरहरू आपसमा मल्ल युद्ध गर्न थाले। दुबैतर्फका अरू सेनाहरू पनि शस्त्र, अस्त्र र बाणले प्रहार गर्दै युद्ध गर्न लागे । ती सबै आपसमा विजयको इच्छाले विचित्र इन्द्रजाल र मायाको प्रयोग गरी युद्ध गरिरहेका थिए । त्यस

मायाभिर्विविधाभिश्च परस्परजयेच्छया ।
ततः पपाल दैत्यानां सेना शस्त्रार्दिता भृशम् ।।२३।।

केऽपि देवाः पृष्ठलग्ना मारयन्त्यसुरांश्च तान् ।
पादाघातेन निहता दैत्यसेनाचरा नराः ।।२४।।

मृतासृक्प्रवहा तत्र वाहिनी भीरुभीतिदा ।
सम्प्रवृत्ता महाघोरा भूतपक्षिप्रमोदिनी ।।२५।।

ततो वेगात् समुड्डीय कलश्च विकलश्च ह ।
शस्त्रवृष्टिं महोग्रां तौ चक्रतुर्युद्धदुर्मदौ ।।२६।।

तया हता देवसेना स्रवद्रक्ता पपाल ह ।
ततो वृषोऽहनत् सेनां शृङ्गाभ्याञ्च तयोर्भृशम् ।।२७।।

लत्ताभिश्च जघानाशु फूत्कारेण न्यपातयत् ।
पुच्छाघातेन कांश्चिच्च चूर्णयामास दैत्यपान् ।।२८।।

एवं तेन हता सेना नानादैत्यसमाकुला ।
हाहाकारो महानासीद् दैत्यानां तत्र नश्यताम् ।।२९।।

ततोऽतिबलिनौ वीरौ कलश्च विकलश्च ह ।
जगर्जतुरुभौ रोषाद् गर्जयन्तौ दिशो दश ।।३०।।

निनिन्दतुस्तौ वृषभं किं त्वं युध्यसि नौ पुरः ।
तृणादनेषु शक्तस्त्वं तृणरूपोऽसि साम्प्रतम् ।।३१।।

दधाते एवमुक्त्वा तौ तस्य शृङ्गे महाबलौ ।
विकृष्य प्रापतुरुभौ स्वसेनां चतुरङ्गिणीम्।।३२।।

तं मोचितुं पुष्पदन्तोऽभिययौ सहसा जवात् ।
ततस्तं विकलो लत्ताप्रहारैः पातयन् भुवि ।।३३।।

ननर्त वाद्यघोषेण हर्षनिर्भरमानसः ।
स मूर्च्छितो मुहूर्तात् तु संज्ञां प्रापदनातुरः ।।३४।।

युद्धमा देवताहरूद्वारा प्रहार गरिएका शस्त्रहरूबाट घाइते भएको दैत्यसेनाका जवानहरू पीडा खप्न नसकी भागिरहेका देखिए ।।२२-२३।। केही देवसेनाका वीरहरूले पलायन गरिरहेका दैत्यसेनाका पछि लागेर तिनलाई मारिरहेका थिए। देवसेनाको भयङ्कर भीडले किचिएर पनि दैत्यसेनाका धेरै जवानहरू मरे। देवसेनाको उग्र प्रहारबाट मरेका दैत्यहरूको शरीरबाट निस्केका रगतको भयङ्कर खोला कातर प्राणीहरूलाई तर्साउँदै बग्न थाल्यो । रगतको खोला देखेर स्याल आदि प्राणी र गिद्ध आदि चरा प्रसन्न देखिए । दैत्यसेनाको दुर्गति देखेर दैत्यसेनानायक कल र विकल जागे । ती दुवैले वेगपूर्वक उफ्रिँदै विक्रान्त बनेर घनघोर शस्त्रप्रहार गर्न लागे ।।२४-२६।। ती वीरहरूको शौर्यपूर्ण आक्रमणबाट आक्रान्त देवसेनाका वीरहरू पनि रगतका धारा बगाउँदै भाग्न विवश भए । त्यसपछि नन्दीश्वर कल र विकलका सैनिकहरूलाई सिङले प्रहार गर्दै मार्न लागे।।२७।। तिनले कसैलाई लात्तीले हानेर मारे भने कसैलाई हुङ्कार गरी बेहोश बनाएर भुइँमा लडाए । फेरि तिनले कुनै दैत्यलाई पुच्छरले प्रहार गरी धूलोपीठो बनाए ।।२८।। यसरी नन्दीले अनेक दैत्यवीरहरूले भरिएको कल र विकलको सेनालाई तहसनहस पारे । त्यहाँ मरिरहेका, घाइते भएका र भागिरहेका दैत्यहरूको ठूलो क्रन्दनपूर्ण कोलाहल सुनियो । त्यसपछि ती पराक्रमी र शक्तिशाली दैत्यवीर कल र विकल रीसले दश-दिशा थर्काउँदै गर्जन गर्न लागे ।।२९-३०।। ती दुवैले बसाहाको रूपमा रहेका नन्दीश्वरको निन्दा गर्दै भने - 'हे नन्दी ! तिमी हाम्रा सामु किन युद्धको नाटक गरिरहेका छौ ? तिमी घाँस खाने जातका प्राणी हौ, घाँस खान सिपालु छौ र हाम्रा निमित्त तिमी घाँस समान छौ' ।।३१।। यसरी नन्दीलाई निन्दाको बोली बोलेर अपमान गरेपछि महाबली कल र विकलले नन्दीका दुवै सिङ समाए । सिङमा समातेर तानेर तिनलाई आफ्नो चतुरङ्गिणीसेनाको माझमा पुऱ्याए । कल र विकलले नन्दीलाई त्यो अवस्थामा पुऱ्याएको देखेर तिनलाई छुटाउन पुष्पदन्त वेगपूर्वक जाइलागे। विकलले पुष्पदन्तलाई खुट्टाले हानेर भुइँमा लडायो । पुष्पदन्त मूर्च्छित भए । त्यो देखेर प्रसन्न भएको त्यो दानव वाद्यघोषका साथ नाच्न थाल्यो । मूर्च्छित भएका पुष्पदन्त एक मुहूर्तपछि होशमा

ततो योध्दुं समायातौ वीरभद्रषडाननौ ।
कल: पर्वतघातेन शतधा न्यपतद् भुवि ।।३५।।

वीरभद्रस्तु विकलं तलघातादपातयत् ।
दृष्ट्वा स्कन्देन निहतं कलं दैत्यं महाद्रिणा ।।३६।।

ततो ययु: स्वशिविरं गणास्ते जयशालिन: ।
तत: शस्त्रहता: केचिज्जीवन्तो गण्डकीं ययु: ।।३७।।

शशंसुर्दैत्यराजाय नानासेनायुत: कल: ।
विकलश्च हतो रोषाद् वीरभद्रादिभिर्गणै:।।३८।।

गतास्ते शिविरं देवगणास्तु जयशालिन: ।।३९।।

आए ।।३२-३४।। यो घटना घटेपछि वीरभद्र र स्वामी कार्तिकिय ती दैत्यनायकहरूसँग युद्ध गर्न अगाडि बढे । स्वामी कार्तिकियले पर्वत उठाएर प्रहार गरेपछि कलनामक दैत्यनायक टुक्रा टुक्रा भएर भुइँमा लड्यो । वीरभद्रले पनि दैत्यनायक विकललाई थप्पड हानेर भुइँमा लडाई मारिदिए । यता विकलको मृत्यु र उता स्कन्दले पर्वतप्रहार गरी कलको वध गरेको देखेर आफू विजयी हुने सपना देखिरहेका दैत्यराज सिन्धुका घाइते वीरहरू भाग्दै आफ्नो शिविरतर्फ फर्के । देवसेनाद्वारा शस्त्रप्रहार गरिंदा घाइते भएका केही दैत्यवीर येनकेन प्रकारेण जिउ जोगाउन सफल भई गण्डकीक्षेत्रमा सिन्धुको दरबारमा पुग्न सफल भए। तिनले दैत्यराज सिन्धुसमक्ष असङ्ख्य सेनासहित कल र विकलले युद्धमा वीरभद्र आदि शिवगणबाट मारिएर वीरगति प्राप्त गरेको तथ्य निवेदन गरे । उता विजयी देवसेनाका योद्धाहरू हर्षोल्लासपूर्वक शिविरतर्फ फर्किए ।।३५-३९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कलविकलवधो नामाष्टादशोत्तरशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवसेनाद्वारा कल र विकलको वध' शीर्षकान्वित एक सय अठारौं अध्याय पूर्ण भयो ।।११८।।

ॐ

## एकोनविंशत्युत्तरशततमोऽध्याय:　　{ ११९ अध्याय }

क उवाच

कलङ्क विकलं श्यालं देवसेनाविघातिनम् ।
निहतं वीरभद्रेण पर्वतेन महासुरम् ।।१।।

षडाननेन विकलं हतं तलप्रहारत: ।
श्रुत्वा भद्रासनगतो नानावीरसमन्वित: ।।२।।

प्राप सिन्धुर्महाचिन्तां स्मरन् शिवसुतं तदा ।
किं करिष्यति देवोऽसौ नाशमित्थं सुरद्विषाम् ।।३।।

इत्येवं चिन्तयाविष्टो मूर्च्छामाप महत्तराम् ।
तावदाजग्मतुरुभौ पुत्रावस्य महाबलौ ।।४।।

धर्माधर्मौ भद्रपीठे जनकं वाक्यमाहतु: ।
कथं बिभेषि जनक ! शिवाया अर्भकाल्लघो: ।।५।।

नावाज्ञां देहि दैत्येन्द्र ! हनिष्याव: क्षणादमुम् ।
सम्मुखे तौ हतौ वीरौ मातुलौ नौ दिवं गतौ ।।६।।

उत्तीर्णौ तौ स्वामिकार्ये कीर्तिं कृत्वा महत्तराम् ।
हत्वाऽनेकविधां सेनां नानावीरै: प्रपालिताम् ।।७।।

आवामपि प्रयुध्यावो यावो हत्वा रिपुं बलात् ।
अथवा मोक्षमायावो निहते तेन चेद् रणे ।।८।।

यावदावां हि जीवावश्चिन्तां तावच्च मा कुरु ।
इन्द्रादय: सुरगणा: कारागारेऽधुना तव ।।९।।

यदा त्वं जितवान् पूर्वं पितरस्तत्र केऽभवन् ।
आनयाव: शिरस्तस्य रिपोस्तव न संशय: ।।१०।।

अन्यथा दर्शयिष्यावो मुखं लोकेषु न क्वचित् ।

क उवाच

एवं तयो: समाकर्ण्य वचनं हर्षमाप्तवान् ।।११।।

तावूचे परमं युद्धं प्राप्नुतं यश उत्तमम् ।
नाशयित्वा रिपुं घोरं यातं शीघ्रं ममान्तिकम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो -** देवसेनाको विनाश गर्न चाहनेतर युद्धको मैदानमा वीरभद्रसँग युद्ध गर्दा तेजोहीन बन्न पुगेको सिन्धु दैत्यको सालो कलनामक दैत्यलाई वीरभद्रले पर्वत प्रहार गरी मारेको समाचार र अर्को सालो विकललाई स्वामी कार्तिकेयले थप्पड हानी मारेको समाचारसमेत सुनेर अनेक वीरहरूद्वारा घेरिई सिंहासनमा बसेको दैत्यराज सिन्धु ठूलो शोकमा पर्‍यो । त्यस बेला शिवपुत्र श्रीगणेशलाई याद गरी मनमनै भन्यो- 'के श्रीगणेशले यसैगरी सबै दैत्यवीरहरूलाई सखाप बनाउने छन्?' ।।१-३।। यस्तै यस्तै अनेक चिन्ता मनमा खेलाउँदै त्यो दैत्यराज दीर्घकालिक मूर्च्छामा पर्‍यो । त्यस बेला त्यसका दुई छोरा धर्म र अधर्म त्यहाँ आइपुगे । मूर्च्छित पितालाई जगाउँदै तिनले भने - हे पिताजी ! पार्वतीका बालक छोरा श्रीगणेशसँग तपाईं किन भयभीत हुनुहुन्छ ? तपाईंले हामीलाई आज्ञा दिनुहोस् । त्यसलाई युद्धमा गई तत्काल मारिदिनेछौं । त्यस्ता बालकका सामु रहेर वीरतापूर्वक युद्ध गर्ने मेरा मामाहरू कल र विकल दुबैले वीरगति प्राप्त गर्नुभएको छ र स्वर्गमा पुग्नुभएको छ ।।४-६।। आफ्ना स्वामीको महान् कार्यसिद्धिमा सफल ती हाम्रा मामाहरू वीरहरूद्वारा सुरक्षित शत्रुसेनाको नाश गरेका कारण संसारमा प्रख्यात हुनुभएको छ । अब हामी पनि युद्ध गर्दछौं र शत्रुसेनामाथि विजयी भएर आउने छौं अथवा शत्रुबाट मारियौं भने पनि दुर्लभ मोक्षपद प्राप्त गर्नेछौं । जबसम्म हामी जीवित रहने छौं तबसम्म हजुरले कुनै चिन्ता गर्नुपर्दैन । इन्द्र आदि देवगण आज तपाईंको कारागारमा थुनिएका छन् ।।७-९।। तपाईंले ती सेनालाई जितिसक्नु भएको छ भने अहिले तिनबाट डर मान्नुपर्ने कुनै कारण छैन । हामीले आफ्ना शत्रुको टाउको गिंडेर तपाईंका सामु ल्याउने छौं । शत्रुमाथि विजय गर्न सकेनौं भने हामीले यो लोकमा आफ्नो मुख देखाउने छैनौं ।

**ब्रह्माजीले भन्नुभयो -** दैत्यराज सिन्धुले आफ्ना छोराहरूका ती वीरतापूर्ण कुरा सुनेर अत्यन्त हर्षित भई भन्यो- 'हे पुत्रहरू! युद्धमा तिमीहरूले उत्तम कीर्ति प्राप्त गर । भयङ्कर शत्रुसेनाको नाश गरेर तिमी दुबै छिटो मेरा सामु आउने काम

एवमाकर्ण्य तद्वाक्यमीयतुर्युद्धलालसौ ।
नमस्कृत्य पितुः पादौ मातुर्गृह्य तदाशिषः ।।१३।।
दशकोटिमितां सेनां प्रत्येकं गृह्य सत्वरौ ।
रथाश्वहस्तिपादातैर्नानाशस्त्रधरैर्युताम् ।।१४।।
पत्तयोऽपि ययुर्हृष्टाः सिन्दूरारुणमस्तकाः ।
गजा नानागिरिनिभा नानाधातुध्वजान्विताः ।।१५।।
अश्वाः सादिभिरारूढा नानाशस्त्रासिपाणिभिः ।
गर्जद्भिर्मेघसदृशं गर्जयद्भिर्दिशो दश ।।१६।।
ततः सेनामध्यगतौ रेजतुर्भ्रातरावुभौ ।
नानालङ्कारसंयुक्तौ नानायुधधरावुभौ ।।१७।।
रत्नकाञ्चनसंयुक्तकुण्डलाभ्यां विराजितौ ।
किरीटाभ्यां सुतेजोभ्यां भ्राजमानौ महाबलौ ।।१८।।
मुक्तामणिमयौ हारौ बिभ्रतौ युद्धदुर्मदौ ।
प्रापतू रणभूमिं तौ नानावादित्रनिस्वनैः ।।१९।।
ददृशुर्वीरभद्राद्यास्तौ च तां वाहिनीमपि ।
निकटे तौ समालोक्य मयूरेशप्रचोदिताः ।।२०।।
आज्ञयाऽभिययुर्वीरभद्रोऽसौ च षडाननः ।
हिरण्यगर्भः संक्रुद्धो भूतराजो विशालदृक् ।।२१।।
असङ्ख्यसेनया सार्द्धं ततो युद्धमवर्तत ।
परस्परमयुध्यन्त ततः सेनाचरा भृशम् ।।२२।।
घ्नन्तः शिरांसि पादाँश्च बाहूरूदरकन्धराः ।
निहताश्च निहन्यन्ते तमसाच्छादिते रवौ ।।२३।।
केचिच्चक्राणि मुमुचुर्भिन्दीपालाँस्तथाऽपरे ।
बाणवृष्टिं परे चापि नानाशस्त्राणि केचन ।।२४।।
मल्लयुद्धञ्च तत्रासीत् सैनिकानां परस्परम् ।
एवं सा संहृता सेना मयूरेशप्रपालिता ।।२५।।
पपाल तत्र शेषा या विह्वला तु दिशो दश ।
ततः षडाननः क्रुद्धो द्वादशायुधभूषितः ।।२६।।
नैरायुधैर्जघानाशु सेनां तां दैत्यपालिताम् ।
केषाञ्चिद् बाहवो भिन्नाः केऽपि मध्ये द्विधाकृताः ।।२७।।

गर।'।।१०-१२।। आफ्ना पिताका ती कुरा सुनेर युद्ध गर्न लालायित ती वीरहरू पिताको चरणमा प्रणाम गरी माताको आशीर्वाद लिएर युद्धभूमितर्फ लागे । तीमध्ये प्रत्येक वीरसँग दश कोटि चतुरङ्गिणीसेना थियो । सिन्धु दैत्यका छोराहरूको नेतृत्व पाएर प्रसन्न र उत्साहित दैत्यसेना सिन्दूरले शिर रंगाएर युद्ध गर्न सहर्ष अगाडि बढिरहेको थियो । अनेक प्रकारका धातुका शृङ्गारद्वारा सुहाएका, पर्वताकार हात्तीहरूको लश्कर र शस्त्रसज्जित घोडसवारसहितका घोडाहरू पनि युद्धमैदानतर्फ लम्किरहेका थिए । त्यसपछि सेनाका माझमा वीरोचित वेषभूषा र अलङ्कारले सजिएका, रत्न र सुवर्णमय कुण्डल धारण गर्ने, तेजोमय किरीटले सुहाएका र शस्त्र-अस्त्रद्वारा सुसज्जित मोतीको हार घाँटीमा लगाएका धर्म र अधर्म सेनानायकको रूपमा युद्धको उन्माद देखाउँदै वाद्य-घोषका साथ रणभूमिमा पुगे ।।१३-१९।। वीरभद्र आदि देवसेनाका वीरहरूले सिन्धुका छोरा धर्म र अधर्मको चतुरङ्गिणीसेना देखे । तिनलाई आफ्नो समीपमा देखेर श्रीगणेशद्वारा प्रेरणा प्राप्त गरी स्कन्द, वीरभद्र, हिरण्यगर्भ, भूतराज आदि वीरहरू असङ्ख्य सेनाका साथ रणभूमितर्फ अगाडि बढे । त्यहाँ युद्ध प्रारम्भ भयो। दुबैतर्फका सेना आपसमा भयङ्कर युद्ध गर्न प्रवृत्त भए ।।२०-२२।। दुबैतर्फका योद्धाहरू विरोधीहरूका शिर, खुट्टा, पेट, हात, तिघ्रा, घाँटीजस्ता अङ्गहरूमा प्रहार गर्दै मनोयोगले युद्ध गरिरहेका थिए)।(केही वीर मरेका थिए, केही मर्न लागेका थिए, केही वीरले अरूलाई मारिरहेका थिए। सूर्य अन्धकारले ढाकिएको थियो । कसैले चक्रप्रहार गरे भने कसैले घुँयत्राले प्रहार गरे । कुनै वीरले बाणवर्षा गरे भने केही वीर अत्यन्त चम्किला शस्त्र प्रहार गरिरहेका थिए ।।२३-२४।। मैदानको एउटा भागमा दुबैतर्फका वीरहरूको मल्लयुद्ध चलिरहेको देखिन्थ्यो । त्यहाँ दैत्यसेनाद्वारा आक्रमण गरिएको देवसेनाको संहार भइरहेको थियो । बाँकी रहेका देवसैनिकहरू चारैतिर दौडिरहेका देखिन्थे। त्यो देखेर क्रोधको आवेशमा आएका र बाह्र हातले सुहाएका स्कन्दले आफ्ना अस्त्रहरूबाट दैत्यसेनाको संहार आरम्भ गरे । तिनको प्रहारबाट धेरै वीरहरूका हात काटिए । कसैका शरीर नै गिँडिएर दुई टुक्रा

केषाञ्चिन्मस्तका भिन्नाः केषाञ्चिच्च रणाङ्गणे ।
एवं सा नाशिता सेना हस्त्यश्वरथसङ्कुला ।।२८।।

केऽपि स्वर्गं गताः केचिद् रूपं प्रापुः षडाननम् ।
निरीक्ष्य ये मयूरेशं जहुः प्राणान् प्रहारिताः ।।२९।।

जग्मुस्ते तत्प्रसादेन निजधाम महाबलाः ।
तद्दृष्टिपातात् तदघं नष्टं सर्वजनुःकृतम् ।।३०।।

दृष्ट्वा विशाखविशिखैः सशिखैर्निहतां स्वकाम् ।
सेनां तस्य सुतौ वीरावधर्मो धर्म एव च ।।३१।।

युयुधाते बहुविधं शस्त्रैरस्त्रैः शरव्रजैः ।
चक्रतुर्मल्लयुद्धं तौ महासेनेन तत्क्षणात् ।।३२।।

तयोर्बलं निरीक्ष्यैव कार्तिकेयो महाबलः ।
शिखयोस्तौ दधाराशु षड्बाहुः षट्करैर्बलात् ।।३३।।

भ्रामयामास बहुधा पोथयामास भूतले ।
शतखण्डानि जातानि तयोस्तु पततोर्भुवि ।।३४।।

जयं प्राप्ते शिवसुते नेदुर्वाद्यानि सर्वशः ।
जय त्वं हि मयूरेश ! जगुः सर्वेऽपि सैनिकाः ।।३५।।

चत्वारस्ते ययुर्देवं मयूरेशं निजं प्रभुम् ।
आलिलिङ्गुर्मुदा ते तु परस्परमथाऽब्रुवन् ।।३६।।

प्राप्ता इव पुनर्जन्म मुमुदुस्ते परस्परम् ।
शशंसुः सर्ववृत्तान्तं शिवायै च शिवाय च ।।३७।।

सेनाञ्च निहतां सिन्धोः पुत्रौ च बलिनौ हतौ ।।३८।।

भए ।।२५-२७।। कसैका टाउका फुटे । कसैका खुट्टा भाँचिए। यसरी श्रीगणेशसेनाका वीरहरूले हात्ती, घोडा र रथसहित दैत्यसेनाको संहार गरे ।।२८।। युद्धको मैदानमा प्राणत्याग गर्ने केही दैत्यवीरहरू स्वर्ग गए । केही स्कन्दलाई हेरी हेरी मरेकाले स्कन्दकै रूपमा परिणत भए । जसले श्रीगणेशको स्वरूप दर्शन पाई प्राणत्याग गरे । ती महाबली दैत्यवीरहरू भगवान् श्रीगणेशको कृपाबाट श्रीगणेशधाममा प्राप्त भए । श्रीगणेशको दृष्टिपातका कारण तिनले सबै जन्ममा गरेका पाप पनि नष्ट भए ।।२९-३०।। स्कन्दका बाणहरूबाट आफ्नो सेनाको संहार भएको थाहा पाएका सिन्धुका छोरा धर्म र अधर्म फेरि जोशिएर देवसेनासँग अनेकौं शस्त्र-अस्त्रको वर्षा गर्दै युद्ध गर्न थाले । शस्त्रयुद्धपछि ती वीर कार्तिकेयसँग मल्लयुद्ध गर्न तत्पर भए । ती दुबै वीरहरूको बल विचार गरेर महाबली स्कन्दले आफ्ना छ वटा हातको प्रयोग गरी तिनलाई टाउकामा समातेर घुमाउँदै जमिनमा पछारे। यसरी जमिनमा पछारिंदा तिनका शरीरका सयभन्दा धेरै टुक्रा भए ।।३१-३४।। शिवपुत्र स्कन्दले ती दैत्यमाथि विजय गरेको महान् अवसरमा विजयका बाजा बज्न थाले । सबै देवताले हे मयूरेश श्रीगणेश! हजुरको जय होस् भन्दै जय-जयकार गरे।।३५।। स्कन्द, वीरभद्र, हिरण्यगर्भ र भूतराज यी चारै वीरहरूले भगवान् श्रीगणेशका समीपमा गई हर्षले परस्पर आलिङ्गन गर्दै भने - हामीले पुनर्जन्म पायौं । त्यसपछि तिनीहरूले शिव र पार्वतीलाई पनि आफूहरूले दैत्यराज सिन्धुका सैनिक र छोराहरूको नाश गरेको वृत्तान्त बताए ।।३६-३८।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे धर्माधर्मवधो नामैकोनविंशत्युत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'देवसेनाद्वारा धर्मासुर र अधर्मासुरको वध' शीर्षकान्वित एक सय उन्नाइस अध्याय पूर्ण भयो ।।११९।।

ॐ

# विंशत्युत्तरशततमोऽध्यायः { १२० अध्याय }

क उवाच

हतशिष्टाः केऽपि वीराः स्रवद्रक्ताः सुदुःखिताः ।
सिन्धुं सभागतं चेत्थं भीतभीता अथाब्रुवन् ।।१।।

वीरा ऊचुः

धनुर्धर ! निबोधेदमतिदुःखकरं वचः।
धर्माधर्मौ तव सुतौ कृत्वा युद्धं महत्तरम् ।।२।।

निन्यतुर्देवसेनां तौ हत्वा हत्वा यमक्षयम् ।
ततः कोऽपि महावीरो मुखैः षड्भिर्विराजितः ।।३।।

सोऽपि ताभ्यां रणे घोरे पातितो धरणीतले।
पुनस्तेन धृतौ वीरौ शिखायां तावुभावपि ।।४।।

भ्रामयित्वा बहुतरं पातितौ तौ धरातले।
शतधा शीर्णदेहौ तौ गतौ तौ स्वर्गमुत्तमम् ।।५।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं न्यपतद् दैत्यपुङ्गवः।
शोकसागरमग्नोऽभूद् वज्राहत इवाचलः ।।६।।

धावमानैः सुहृद्वर्गैः स आशूत्थापितो बलात् ।
मुहूर्तात् प्रकृतिं यातः शुशोच बहुदुःखितः ।।७।।

सिन्धुरुवाच

शक्रादयो लोकपाला जिता याभ्यां रणे पुरा ।
तौ हतौ नु कथं वीरौ षडास्येन महाबलौ ।।८।।

विहाय मृत्युलोके मां कथं स्वर्गं गतावुभौ ।
सुरसेनानिहन्तारौ कृतान्तस्यान्तकावुभौ ।।९।।

नानेष्ये शत्रुमूर्द्धानं तदाऽऽस्यं दर्शये न च।
गमनावसरे प्रोक्तं तत्सत्यं किं कृतं त्वया ।।१०।।

अथ दुर्गासखीभिस्तु वृत्तान्तोऽन्तःपुरे तदा ।
कथितो विस्तरेणैव रुदतीभिः सुदुःखतः ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - युद्धमा बाँचेर शरीरबाट रगतका धारा बगाउँदै फर्किएका र अत्यन्त पीडित केही दैत्यवीरहरूले सभामा विराजमान दैत्यराज सिन्धुलाई डराउँदै निवेदन गरे ।।१।।

**वीरहरूले भने** - 'हे धनुर्धर महाराज ! दुःखका कुरा बताइरहेका छौं, हजुरले सुन्नुहोस् । हजुरका पुत्र धर्म र अधर्मले मैदानमा भयङ्कर युद्ध गर्नुभयो । देवसेनाका असङ्ख्य वीरहरूलाई मारेर यमलोक पुर्‍याउनुभयो । त्यसै बेला देवतापक्षको ६ वटा मुख भएको कुनै वीर आइपुग्यो । त्यससँग उहाँहरूले घोर युद्ध गरी त्यसलाई भुइँमा लडाउनुभयो । भुइँमा लडेको त्यो षडानन वीर उठ्यो र त्यसले धर्म र अधर्मका टाउकामा समाती घुमाएर भुइँमा पछार्‍यो । पछारिँदा ती दुवै वीरका शरीर छिन्नभिन्न भई भुइँमा छरिए । त्यसपछि उहाँहरू दिवङ्गत हुनुभयो' ।।२-५।।

**ब्रह्माजीले भन्नुभयो** - सैनिकहरूका यी कुरा सुनेर इन्द्रको वज्रप्रहारबाट ढलेका पर्वतझैं दैत्यराज सिन्धु भुइँमा लड्यो र चिन्तामग्न भयो । सिन्धुलाई त्यो अवस्थामा देखेर दौडिँदै आएका मित्र र सेवकहरूले उठाए । एक मुहूर्तपछि सामान्य अवस्थामा आइपुगेको त्यस दैत्यराजले अत्यन्त दुःखित भई विलाप गर्‍यो ।।६-७।।

**सिन्धुले भन्यो** - मेरा पराक्रमी पुत्र धर्म र अधर्मले कुनै समयमा इन्द्र आदि लोकपालहरूलाई पनि युद्धमा परास्त गरेका थिए । त्यस्ता महाबली मेरा पुत्रहरूलाई आज साधारण वीर स्कन्दले कसरी मार्न सक्यो,? आज मलाई मृत्युलोकमा एक्लै छाडी मेरा ती वीरपुत्र किन र कसरी स्वर्ग गए ? ती मेरा पुत्रहरूले कति पटक देवसेनाको संहार गरेका थिए । यमराजलाई पनि अन्त गर्ने आँट राख्दथे । मसँग बिदा हुँदा तिनीहरूले जबसम्म स्कन्दको टाउको काट्न सक्दैनौं तबसम्म मुख पनि देखाउने छैनौं भनेका थिए । त्यो कुरा साँचो भयो । त्यसपछि दैत्यराज सिन्धुकी गृहिणीलाई तिनका सँगिनीहरूले अन्तःपुरमा गई धर्म र अधर्मको मृत्यु भएको दुःखदायक समाचार सुनाए।।८-११।।

सख्युवाच

भर्ता रोदिति ते सुभ्रु ! धर्माधर्मौ मृताविति ।
साथ पर्यङ्कसुगता न्यपतत् पृथिवीतले ।।१२।।

रम्भेव वातनिहता कोमलारुणपल्लवा ।
सखीदुष्टवचोभिः सा बाणैरिव हृदि क्षता ।
विस्रस्तकेशाभरणा साप्यरोदीत् तदा भृशम् ।।१३।।

विस्रस्तवस्त्रा विकसद्विल्वचारुपयोधरा।
अश्रुश्यामलगण्डा सा शोकानलहतप्रभा ।।१४।।

जघ्ने मुखं सा पाणिभ्यां दन्तासृक्सिक्तभूतला ।
निरस्तदेहभावा सा विकला विगतत्रपा ।।१५।।

सभाङ्गणगताऽलुण्ठद्धठकृद् बालको यथा ।
सर्वे ततः सभ्यवरा रुरुदुर्दुःखकर्षिताः ।।१६।।

प्रस्रवन्नेत्रसलिलाः प्राब्रवीत् तान् सभासदः ।

राज्ञी उवाच

कथं सर्वेषु वीरेषु जीवत्सु तौ सुतौ मम ।।१७।।

प्रेषितौ रणभूमिं तौ मामपृष्ट्वा तु कोमलौ ।
मयाशीश्चेन्नियुक्ता स्यान्न तयोर्मरणं भवेत् ।।१८।।

न हि मे वचनं धाता मिथ्या कर्तुं समीहते ।
याभ्यां जिता देवगणास्तौ कथं निधनं गतौ ।।१९।।

क्व द्रक्ष्याम्यहमेतौ यौ जिग्यतुर्मदनं रुचा ।
बुद्धीनौ यौ सरस्वन्तौ तौ मां त्यक्त्वा कथं गतौ २०।।

तयोः शोकाग्निना दग्धा मरिष्याम्यहमद्य वै ।
इत्युक्त्वा न्यपतद् भूमौ निघ्नती हृदये मुहुः ।।२१।।

ततः सख्यो नागराश्च बोधयामासुरञ्जसा ।
न मातः ! कोपि शोकेन यो मृतः पुनरागतः ।।२२।।

मृत्युलोके चिरं स्थाता नेक्षितो न श्रुतोऽपि च।
विहाय हनुमन्तञ्च कृपं शारद्वतं बलिम् ।।२३।।

**सँगिनीले भनिन् –** हे महारानी ! धर्म र अधर्म स्वर्गीय भएको खबर सुनेर महाराजा सिन्धु विलाप गर्दै हुनुहुन्छ। आफ्ना सँगिनीको मुखबाट यो कुरा सुनेर पलङमा बसिरहेकी ती रानी कोमल र हरिया पात भएको केराको स्तम्भ लडेझैं हावाको वेगले भुइँमा लडिन् ।।१२।। आफ्नी सँगिनीको मुखबाट अप्रिय समाचार सुनेर हृदयाघात अनुभव गरिरहेकी ती रानीले अलङ्कार फ्याँकिन् र केश फैलाएर रोइरहिन् । वस्त्र फ्याँकिर व्याकुलता देखाइरहेकी बेलझैं सुन्दर र गोल स्तनहरूले सुहाएकी, आँसुले गाला भिजाएकी, शोकको आगोमा डढेकी र दाह्रा किट्दा खसेको रगतले भुइँलाई रगताम्य तुल्याएकी ती रानीले आफ्नै हातले आफ्नै अनुहार पिटिरहेकी थिइन् । आफ्नो शरीरको बेवास्ता गरी भुइँमा लडिबुडी गरेकी ती रानी लुगाको पनि वास्ता नगरी निर्लज्ज बनेकी थिइन् ।।१३-१५।। राजसभाको आँगनमा भुइँमा लडेकी ती रानी हठी बालकझैं शोकको आवेगमा कसैले सान्त्वना दिंदा पनि सुन्ने मनस्थितिमा थिइनन् । रानीको यस्तो शोकसन्तप्त अवस्था देखेर दैत्यराज सिन्धुको राजसभाका सभासद्हरू पनि दुःखित भएर रोइरहेका थिए ।।१६।। आँखाबाट आँसुका धारा बगाइरहेकी ती रानीले सभासद्हरूलाई सम्बोधन गरिन् ।

**रानीले भनिन् –** हे सभासद्हरू ! कसरी तपाईंहरू सबै जीवित हुँदा मेरा छोरा दिवङ्गत भए ? म कसरी हेरूँ ? कोमल शरीर भएका ती मेरा बालकहरू मसँग एक अक्षर नसोधी युद्धको मैदानमा गए । मैले दिएको आशीर्वाद लागेको भए तिनीहरूको यसरी अकाल मृत्यु हुने थिएन । ब्रह्माजीले मलाई दिनुभएको वचन मिथ्या हुने थिएन । जुन मेरा छोराहरूले देवतालाई पनि परास्त गरेका थिए, ती आज कसरी मृत्युको मुखमा परे ? कामदेवभन्दा पनि राम्रा ती मेरा छोराहरूको अनुहार अब मैले कहिले देख्न पाउने छैन । बुद्धिका सागर ती मेरा ज्ञानी छोरा म आमालाई पनि बेवास्ता गरेर किन गए ? ।।१७-२०।। ती छोराहरूको शोकको आगोमा पिल्सिएकी म अब बाँच्न चाहन्नँ, आजै मर्छु। यसरी विलाप गरेर ती रानी मुड्कीले छातीमा प्रहार गर्दै भुइँमा लडिन् ।।२१।। त्यो देखेर तिनका सैनिक र नागरिकहरूले सम्झाउँदै भने – हे रानी ! शोक नगर्नुहोस्, शोक गरेर मरेको कुनै पनि प्राणी फर्केर आएको छैन।।२२।। हनुमान्, कृपाचार्य, मार्कण्डेय, बलि, व्यास, परशुराम, विभीषण

व्यासं परशुरामञ्च विभीषणमथापि च ।
द्रौणिं नान्यश्चिरं स्थायी न भूतो न भविष्यति ।।२४।।

ब्रह्मादीनां भवेन्मृत्युः का तत्र गणनात्मनः।
रोदनं तेन कर्तव्यं न स्यान्मृत्युः कदाऽस्य चेत् ।।२५।।

क्षीणे ऋणानुबन्धे च स्त्री पुनः पशुरेव च।
न तिष्ठति ध्रुवं तत्र कृतः शोको वृथा भवेत् ।।२६।।

यथा काष्ठं काष्ठगतं पूरेणैव वियुज्यते।
तद्वज्जन्तुर्वियोगञ्च योगञ्च प्राप्नुतेऽवशः ।।२७।।

नानापक्षिगणा रात्रावेकवृक्षगता यथा ।
प्रातर्दश दिशो यान्ति तत्र किं परिदेवनम्।

क उवाच

एवं प्रबोधिता दुर्गा सिन्धुश्च जन एव च ।।२८।।

हठाच्छोकं निगृह्यासावासने संविवेश ह ।
उपहासं करिष्यन्ति सपत्ना रुदतीमिति ।।२९।।

दुर्गा धृत्वा बलाल्लोका निन्युरन्तःपुरं हि ताम् ।
निश्वसन्ती पपातासौ पर्यङ्के शोककर्शिता ।।३०।।

स सिन्धुः क्रोधसंयुक्तो जग्राह शस्त्रसञ्चयम् ।
पुत्रयोर्निष्कृतिं कर्तुं हयारूढो ययौ रणम् ।।३१।।

याते तस्मिन्महासैन्यं चतुरङ्गं रणोत्सुकम्।
उड्डीयोड्डीय धावन्तो ययुः पूर्वं पदातयः ।।३२।।

नानावर्णा एकरूपा नानाशस्त्रास्त्रपाणयः ।
ततो वारणसङ्घाता नानाधातुविचित्रिताः।।३३।।

घण्टाभरणशोभाढ्या दानोदकप्रवर्षिणः।
चीत्कारभीषितपरा महारावभयङ्कराः ।।३४।।

ततोऽश्वाः प्रागमन् सादियुक्ता वायुजवा रणम् ।
खुराघाताद् विस्फुलिङ्गान् पातयन्तो धरातले ।।३५।।

र अश्वत्थामाजस्ता चिरञ्जीवीलाई छाडेर पृथिवीमा जन्मेर सधैं बाचिरहने प्राणी कुनै छैन र हुने पनि छैन ।।२३-२४।। ब्रह्मा आदि ठूला देवताहरूको त मृत्यु हुन्छ भने अरूको के कुरा गरौं? त्यस कारण तपाइँले विलाप गर्नु उचित छैन । मृत्यु नहुने मानिस मरेमा मात्र रुनु उचित हुन्छ । मृत्यु अपरिहार्य भएकाले त्यसलाई सहजरूपमा स्वीकार गर्नु नै राम्रो हुन्छ ।।२५।। आफ्नो ऋण तिरेपछि अर्थात् आफ्नो भोग सकेपछि स्त्री, छोरा र पशु कुनै पनि रहँदैनन्, त्यस कारण ती सबैका लागि गरिने शोक व्यर्थ हुन्छ ।।२६।। नदीप्रवाहमा बगिरहेको काठ अर्को काठसँग जोडिन पुग्छ । ठूलो भेल आएपछि त्यो छुट्टिन्छ । त्यसरी नै प्राणीले पनि संसारमा संयोग र वियोग व्यहोर्नु पर्छ । जसरी रातको समयमा अनेक चराचुरुङ्गी एउटै रूखमा बास बस्न आउँछन्, प्रातःकालमा ती सबै दश दिशातर्फ लाग्छन् । यस्तो स्वाभाविक विषयमा विलाप गर्नुको कुनै औचित्य हुँदैन ।

**ब्रह्माजीले भन्नुभयो–** यसरी महारानी दुर्गा, दैत्यराज सिन्धु र राजपरिवारका मानिसहरूलाई सभासद्हरूले सान्त्वना दिए र सम्झाए पनि ।।२७-२८।। त्यसपछि रानी पनि शोकलाई सम्हालेर आसनमा बसिन् । तिनलाई शोकापन्न अवस्थामा देखेर शत्रु हाँस्ने छन् भनी सेवकले रानीलाई अन्तःपुरमा पुऱ्याए । त्यहाँ ती शोकदुर्बल रानी लामो सास फेर्दै पलंगमा लडिन् ।।२९-३०।। दैत्यराज सिन्धुले क्रोधले बल्दै हातमा शस्त्र-अस्त्र धारण गऱ्यो र आफ्ना मरेका छोराहरूको प्रतिशोध लिने मनसायले घोडामा सवार भई रणभूमितर्फ लाग्यो ।।३१।। सिन्धु दैत्यले प्रस्थान गरेपछि त्यसको चार प्रकारको सेना युद्धका लागि लालायित भयो । सर्वप्रथम आकाशमा उडेसरि पैदल सैनिकहरूले तीव्र गतिमा प्रस्थान गरे ।।३२।। ती वीरहरू पछि अनेक रूप-रङ्गका, अनेक शस्त्र-अस्त्रद्वारा सजिएका, अनेक धातुका अलङ्कारहरू धारण गरेर सुन्दर देखिएका, घुँघुरु धारण गर्नाले शब्दायमान, गालाबाट मदको धारा चुहाइरहेका, आफ्नो चीत्कारबाट शत्रुसेनाको मुटु थर्काउने भयङ्कर गर्जनका कारण डरलाग्दा हात्तीहरूको ताँती अगाडि बढ्यो )।३३-३४।(हात्तीको लश्करपछि घोडसवार सेनाद्वारा सुहाएका, खुरको प्रहारबाट आगाको झिल्का पैदा गर्ने, आधा आकाशमा र आधा धर्तीमा टेक्ने घोडाहरूको लश्कर अगाडि

शुशुभुः सादिनस्तत्र खेटकुन्तासिपाणयः ।
चन्दनागरुलिप्ताङ्गा नानामालाविभूषिताः।। ३६।।

तनुत्राणभृतः सर्वे कण्टकभ्राजिमस्तकाः ।
ग्रसन्त इव चाकाशं नादयन्तो दिशो दश ।।३७।।

रथास्ततोऽगमन्नानामहावीरैरधिष्ठिताः।
नानाशस्त्रास्त्रसम्पूर्णा धनुस्तूणीरसंयुताः।।३८।।

तन्मध्ये शुशुभे सिन्धुर्महामुकुटकुण्डलः।
नानाशस्त्रधनुःपाणिस्तूणीरकृतभूषणः।।३९।।

वीरकङ्कणशोभाढ्यः कटिसूत्राङ्गदप्रभः।
क्रोधसंरक्तनयनो लोकत्रयबुभुक्षया ।।४०।।

वाद्यत्सु सर्ववाद्येषु बन्दिषु च स्तुवत्सु च।
यावद् याति महावेगात् तावद् दूतस्तमब्रवीत् ।।४१।।

पिता ते याति दैत्येश ! तं प्रतीक्षस्व सुव्रत !
परावृत्येक्षते यावत् तावदश्वगतं सुतम् ।।४२।।

अपश्यदभ्याशगतं नमश्चक्रे स चापि तम् ।
ददौ पिता तत्र सुतं दुर्गं कृत्वा चमूचरैः ।।४३।।

उपदेशञ्च कृतवान् सुखायामुत्र चेह च ।

**चक्रपाणिरुवाच**

गर्वेण वर्तसे पुत्र ! श्रिया मत्तो न बुध्यसे ।।४४।।

अर्थज्ञाने महावृद्धाः प्रष्टव्या भूतिमिच्छता ।
अग्रे शुभेच्छया पूर्वमशुभं न समाचरेत् ।।४५।।

अल्पेन कर्मणा नाशं पुण्यमेत्य शुभेन ह ।
अणुरग्निर्दहेत् सर्वं पुण्यं दोषस्तथा सुत ।।४६।।

न लाभो दृश्यते पुत्र ! बद्धेषु तेषु ते क्वचित् ।
स एव पुत्रो यो मातृपितृवाक्यकरोऽनिशम् ।।४७।।

बढ्यो । ती घोडाहरूमा चन्दन र अगरुको लेप लगाएर राम्रा देखिएका, अनेक थरि मालाधारण गर्ने, शरीरमा र शिरमा सुरक्षाका लागि कवच धारण गर्ने, हातमा भाला, ढाल र तरबार लिएका, गर्जनद्वारा दसै दिशालाई थर्काउने घोडसवार वीरहरू अगाडि बढिरहेका थिए ।।३५-३७।। त्यसपछि अनेकौं शस्त्र-अस्त्रले सम्पन्न ठूला वीरहरूको समूहद्वारा शोभायमान धनु र ठोक्राले भरिभराउ भएका रथहरूका पङ्क्ति पनि अगाडि बढे । ती सबै प्रकारका सेनाहरूको माझमा महामुकुट र कुण्डल धारण गर्ने, शस्त्र र धनु हातमा लिएको, तूणीरलाई गहनाझैं धारण गरिरहेको, हातमा बलय धारण गरी सुहाएको, काञ्ची र केयूरको शोभाले देदीप्यमान, क्रोधका कारण राता भएका आँखाले हेरी तीनलोकलाई नै एक गास बनाउने आँट देखाइरहेको दैत्यराज सिन्धु युद्धका बाजा-गाजाका साथ वीरहरूको प्रशंसा र प्रशस्ति श्रवण गर्दै वेगपूर्वक रणभूमितर्फ प्रस्थान गऱ्यो । त्यस बेला एउटा दूतले आई बिन्ती गर्दै भन्यो ।।३८-४०।। हे दैत्यराज ! हजुरका पिताजी हजुरलाई भेट्न आउँदै हुनुहुन्छ। केही बेर उहाँको प्रतीक्षा गर्न उहाँले खबर पठाउनुभएको छ । हजुरले प्रतीक्षा गरिदिनुपऱ्यो। म त्यही निवेदन गर्न आएको छु । दूतको कुरा सुनेर सिन्धुले फर्केर हेर्नासाथ त्यसका पिता पनि तीव्र गतिले त्यहाँ आइपुगे र तिनले प्रतीक्षारत आफ्नो छोरालाई देखे । सिन्धुले पितालाई प्रणाम गऱ्यो । त्यसपछि सेनाको बीचमा छोरालाई उभ्याएर सिन्धुका पिताले छोराको यस लोकमा र परलोकमा कल्याणका लागि उपदेश दिए ।

**चक्रपाणिले भने –** हे छोरा सिन्धु ! तिमी साह्रै अहङ्कारी भएका छौ, ऐश्वर्यले मत्त भएका छौ र केही विचारै नगरी काम गरिरहेका छौ ।।४१-४४।। राजाले आफ्नो कल्याणका लागि र कर्तव्य बुझ्नका लागि वृद्ध र विद्वान्हरूसँग पनि सुझाव लिनुपर्दछ। भोलिको उज्ज्वल भविष्यको कामना गर्ने हो भने आज नराम्रो काम गर्नु हुँदैन ।।४५।। थोरैमात्र पनि अशुभ कर्मले पुण्यनाश गर्दछ। सानो आगाको फिलिङ्गाले सर्वनाश गरेझैं सानो पापले पनि पुण्यनाश गर्दछ । ती अभिमान र ऐश्वर्यबाट उत्पन्न हुने दोषहरू रहे भने कसैले पनि मानवजीवनको सदुपयोग गरी उत्तम लाभ लिन सक्दैन। जसले निरन्तर आफ्ना माता-पिताको आज्ञापालन गर्दछ, त्यो छोरा नै उत्तम छोरा कहलाउँछ।।४६-४७।। माता-

तस्य चोल्लङ्घने पुण्यं नाशमेति च जायते।
दोषजालं मोहजालं नानानिरयदं सुत ।।४८।।

अतः शृणु हितं वाक्यं मोचयाशु सुरान् सुत।
मुक्तेषु तु भवेन्मित्रं मयूरेशोऽखिलार्थदः ।।४९।।

न चेह द्वेषतः कश्चित् सुखं प्राप्तो धरातले ।
विनाशं प्रापिता देवैर्हिरण्याक्षादयोऽसुराः।।५०।।

क उवाच

इति पितृवचः श्रुत्वा चुकोपातितरां सुतः।
धिक्कृत्य पितरं प्राह मम भ्रान्तिरभूत् पुरा ।।५१।।

चतुरस्त्वं पिता मे वै ज्ञानं सम्यक् प्रकाशितम् ।
भाषसे मूढवत् तात ! कृत्वा श्यामं मुखं व्रज ।।५२।।

येन मे निहताः सेनाः परार्धगणिताः पितः।
तेनेदानीं कथं साम कर्तव्यमयशस्करम् ।।५३।।

कुशाक्षमालाधरणं राजधर्मे हि नेष्यते ।
तस्माद् दया नरेन्द्रेण न कार्या शत्रुसञ्चये ।।५४।।

निर्दयत्वमरावेव स्मृतं नीत्याऽऽमये यथा ।
एवमुक्त्वा नमस्कृत्य पितरं सिन्धुदैत्यराट् ।।५५।।

परावृत्य बलात् तं स ययौ योद्धुं रणोत्सुकः ।।५६।।

पिताको आज्ञाभङ्ग गर्दा पुण्यको नाश हुन्छ, दोषको पुञ्ज आइलाग्छ र नरकदायक अज्ञानले आक्रमण गर्दछ । त्यस कारण हे छोरा ! तिमीले मेरो हितकारी वचन सुनेर कारागारमा बन्दी बनाइएका देवताहरूलाई तुरुन्त मुक्त गर । ती देवताहरू कारागारबाट मुक्त भएमा सम्पूर्ण कामनाहरू परिपूर्ण गराउनुहुने भगवान् मयूरेश श्रीगणेश प्रसन्न हुनुहुनेछ ।।४८-४९।। यस पृथिवीमा कसैसँग द्वेष गरेर कसैले पनि सुख र शान्ति पाएको छैन । द्वेष गर्ने स्वभाव भएका हिरण्याक्ष, हिरण्यकशिपु आदि दानवहरूको देवताहरूले नाश गरेका छन् ।।५०।।

**ब्रह्माजीले भन्नुभयो** – पिताका यी कुरा सुनेर दैत्यराज सिन्धु आफ्ना पिता चक्रपाणिप्रति ज्यादै क्रुद्ध भयो । पितालाई धिक्कार गर्दै सिन्धुले भन्यो – हे पिता! पहिले मलाई मेरा पिता यस्ता हुनुहुन्छ भन्ने थाहा भएन, ठूलो भ्रान्ति भयो । तपाइँ अत्यन्त चतुर पिता हुनुहुँदोरहेछ । निकै राम्रो ज्ञान दिनुभयो ? किन आज मेरा सामु आएर उन्मत्त मूर्खका जस्ता कुरा गर्नुहुन्छ? तपाईंले मेरो सामु आफ्नो त्यो कालो अनुहार नदेखाउनुहोस् । त्यो कालो अनुहार हेर्न म चाहन्नँ। तपाइँ फर्कनुहोस् ।।५१-५२।। जुन शत्रुले मेरा अरबौं र खरबौं सेनाहरूको संहार गरिसकेको छ, आज त्यसका सामु गएर दुर्नाम हुने गरी मैले नम्र भएर व्यवहार गरूँ ? वीरलाई यस्तो अकीर्तिकर काम गर्न सुहाउँछ ? कुश र रुद्राक्ष धारण गर्नु राजधर्ममा प्रशंसनीय र सम्मानयोग्य हुँदैन । उत्तम राजाले कहिले पनि शत्रुमाथि दया गर्दैन र गर्न पनि हुँदैन । रोगमा जसरी निर्दयी भएर व्यवहार गरिन्छ त्यसैगरी शत्रुमाथि पनि निर्दयी भई व्यवहार गर्नुपर्छ भन्ने नीतिशास्त्रको सिद्धान्त छ । यसरी आफ्ना पितालाई जवाफ दिएर दैत्यराज सिन्धु तिनलाई प्रणाम गरी युद्ध गर्न उत्कण्ठित भएर युद्धको मैदानतर्फ अग्रसर भयो ।।५३-५६।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे पितृसिन्धुसंवादो नाम विंशत्यधिकशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'दैत्यराज सिन्धु र सिन्धुपिता चक्रपाणिको संवाद' शीर्षकान्वित एक सय बीसौं अध्याय पूर्ण भयो ।।१२०।।

ॐ

# एकविंशत्युत्तरशततमोऽध्यायः { १२१ अध्याय }

क उवाच

वीरभद्रादिभिर्वीरैः सुखासीनं गणेश्वरम् ।
आययुर्वेगतो देवा भीताः श्वाससमाकुलाः ।।१।।

न्यवेदयन्त वृत्तान्तं स्वयं सिन्धुः समागतः।
मेनिरे ते पुनः प्राप्तं कालं संहर्तुमात्मनः ।।२।।

ततो हर्षान्मयूरेशो रुरोह शिखिनं तदा ।
आयुधानि च चत्वारि प्रगृह्य च जगर्ज च ।।३।।

नमस्कृत्य शिवं वेगाद् ययौ स द्योतयन् दिशः ।
तदाशीःकवचो वीरसहितो वाहिनीयुतः ।।४।।

यावत् स पुरतो याति सिन्धुं हन्तुं समुद्यतः।
तावत् षडाननः प्राह यामि युद्धाय विघ्नराट् ।।५।।

तिष्ठत्सु बहुवीरेषु कथं युद्धाय यास्यसि ।
पौरुषं पश्य सर्वेषां तस्मिन् क्षीणे रणं कुरु ।।६।।

एवमुक्त्वा नमस्कृत्य ययौ युद्धाय षण्मुखः।
चतुरङ्गबलं गृह्य सिन्धुसेनामथाऽवधीत् ।।७।।

सोऽपि तां न्यहनत् सेनां नानाशस्त्रैः शरव्रजैः ।
सहस्व प्रहरस्वाद्य हन्मि सम्मुखतां व्रज ।।८।।

एवं कोलाहलोऽप्यासीद् वीराणां तत्र युद्ध्यताम् ।
पेतुर्वीराः शस्त्रहताः शरजालगतासवः ।।९।।

छिन्नाङ्गा भिन्नपादाश्च छिन्नबाहूरुमस्तकाः।
असिभिर्भिन्दीपालैश्च कुन्तैर्मुद्गरसञ्चयैः ।।१०।।

**ब्रह्माजीले भन्नुभयो-** एक दिन वीरभद्र आदि वीरगणका साथ सुखपूर्वक विराजमान हुनुभएका भगवान् श्रीगणेशका सामु भयभीत भई तीव्रगतिमा लामो सास फेर्दै देवताहरू आइपुगे । तिनले सिन्धु दैत्य स्वयं युद्ध गर्न मैदानमा आएको तथ्य श्रीगणेशलाई निवेदन गरे। तिनीहरूले सिन्धुलाई आफ्नो मृत्यु गराउन आएको यमराज नै हो भन्ने भावले डराएर यो वृत्तान्त बताइरहेका थिए ।।१-२।। त्यो कुरा थाहा पाएपछि भगवान् श्रीगणेश हर्षित हुनुभयो। आफ्नो वाहन मयूरमा सवार भई चार प्रकारका आयुध धारण गरेर वीरभावले गर्जन गर्नुभयो। भगवान् शिवजीलाई प्रणाम गरी उहाँको आशीर्वादलाई नै कवच मानेर विशिष्ट वीर र अन्य सेनासहित आफ्नो कान्तिद्वारा दिशा र विदिशालाई प्रकाशित गर्दै वेगपूर्वक युद्ध गर्न प्रस्थान गर्नुभयो ।।३-४।। श्रीगणेश सिन्धु दैत्यमाथि आक्रमण गर्न अगाडि बढ्दै हुनुहुन्थ्यो त्यस बेला स्कन्दले आएर भन्नुभयो- हे श्रीगणेश ! म युद्ध गर्न जान्छु, हजुर नजानुहोस् । हामीजस्ता अनेक वीरहरू हुँदाहुँदै हजुर आफैं किन जानुहुन्छ ? हजुरले वीरहरूको पुरुषार्थ हेर्नुहोस् । हामी वीरहरूको पुरुषार्थ क्षीण भएपछि मात्र हजुरले युद्ध गर्नु उचित हुनेछ ।।५-६।। यो कुरा भनेर स्कन्दले श्रीगणेशलाई प्रणाम गरी चतुरङ्गिणीसेना साथ लिई युद्ध गर्न प्रस्थान गरे । रणभूमिमा गई तिनले सिन्धु दैत्यका सैनिकहरूको वध गर्न थाले ।।७।। सिन्धु दैत्यले पनि अनेक अस्त्र र बाणहरूद्वारा स्कन्दको सेनामाथि प्रहार गर्न आरम्भ गर्‍यो । त्यस बेला युद्धभूमिमा लडिरहेका वीरहरूका प्रहार गर, सहन गर, मेरा सामु आइज, म तँलाई सिध्याउँछुजस्ता वाक्यहरूको कोलाहल सुनिन्थ्यो । शस्त्रद्वारा घाइते भएका र बाण लागेर प्राणत्याग गर्ने वीरहरू भुइँमा लडिरहेका थिए ।।८-९।। कसैका अङ्ग-प्रत्यङ्ग टुक्रिएका थिए, कसैका खुट्टा छुट्टिएका थिए भने कसैका हात र टाउका काटिएका थिए। युद्धभूमिमा छुट्टाछुट्टै लड्दालड्दै एकै ठाउँमा मिसिन पुगेका दुबैपक्षका वीरहरूले तरबार, घुँयत्रो, भाला र मुङ्ग्रोद्वारा युद्धोन्मत्त शत्रुसेनामाथि प्रहार गरिरहेका थिए ।

मारयन्तः स्थिरा वीरास्तान् परान् युद्धदुर्मदान् ।
कोलाहलो महानासीत् क्ष्वेडितैर्हेषितैरपि ।।११।।

वाद्यध्वनिप्रतिध्वानैर्बृंहितै रथनेमिभिः।
असम्बद्धमभूद् युद्धं सेनयोरुभयोरपि ।।१२।।

यथाप्रतिज्ञं वीरास्ते निजघ्नुर्मस्तकं मुखम् ।
नेत्रबाहूदरं नाभिं पादौ गुल्फौ च जानुनी ।।१३।।

कोऽपि हस्तेन पादेन कोऽपि खड्गेन नाशयन् ।
असिना केऽप्यरिगणानन्धकारे महत्यपि ।।१४।।

अस्तं याते दिनकरे दृष्ट्वा पृष्ट्वा निजघ्निरे।
देवान् ज्ञात्वाऽसुरा जघ्नुरितरानितरेऽपि च ।।१५।।

असृक्प्रवाहस्तत्रासीत् प्रधने तुमुले तदा ।
वहन् प्रेतानीषज्जीवान् हुङ्कारेण च तान् परे ।।१६।।

बलान्निष्कासयामासुर्विशल्याँश्चक्रिरे यथा ।
इतो न सेने पञ्चाहविरामयुद्धलम्पटे ।
एवं पदाताः सिन्धोस्ते कोटिशोऽथ हताः सुरैः ।।१७।।

ततोऽगात् तद्गजानीकमसङ्ख्यं शस्त्रसंयुतम् ।
धिष्ठितं सादिभिर्वीरैर्नानायुद्धविशारदैः ।।१८।।

वीरभद्रादयो जघ्नुर्गजसेनां दुरत्ययाम् ।
केषाञ्चिन्मस्तका भिन्नाः केषाञ्चिच्च करा द्विजाः।।१९।।

अग्निशस्त्रधरैः केचित् पातिता वीरसंयुताः ।
वीरभद्रोऽतिवीर्येण गजेनैवाहनद् गजम् ।।२०।।

पेततुरष्टधा भिन्नावुभावपि तदा गजौ ।
ततः षडाननो निघ्नन् गजानीके व्यरोचत ।।२१।।

त्यहाँ वीरहरूको सिंहनाद, घोडा र हात्तीको चित्कार, युद्धको वाद्यघोष र त्यसको प्रतिध्वनि र रथका पाङ्ग्राको आवाजको महान् कोलाहल भइरहेको थियो । त्यसको बेवास्ता गरी दुबै पक्षका वीरहरू मनोयोगले युद्धमा लागिरहेका थिए।।१०-१२।। युद्धको घोर अन्धकारमा पनि वीरहरू आफ्नो प्रतिज्ञाअनुसार शत्रुको टाउका काटिरहेका थिए, आँखा फुटाइरहेका थिए, हात-खुट्टा-छाती-नाभि-गोलिगाँठामा प्रहार गरी शत्रुलाई घाइते बनाइरहेका थिए । कुनै वीर आफ्ना हातले शत्रुको हात समाएर लडिरहेको थियो, कुनै वीर आफ्ना खुट्टाले शत्रुको खुट्टामा प्रहार गरिरहेको थियो र केही वीरहरू तरबारको प्रहार गरेर शत्रुलाई मूला काटेझैं काटिरहेका थिए । युद्ध गर्दागर्दै सूर्य अस्ताचलमा गए, पृथिवीमा अन्धकार फैलियो । त्यस बेला वीरहरू आफ्नो शत्रुलाई खोजी-खोजी लड्दै थिए । नदेखेको स्थितिमा तँ को होस् भनेर प्रहार गर्दै थिए । यसरी दैत्यहरूले देवताहरूलाई र देवताहरूले दैत्यहरूलाई मारे ।।१३-१५।। त्यो घोर युद्धमा वीरहरूका लाशलाई वहन गर्ने रगतको प्रवाह उम्लिएको थियो । रगतको प्रवाहमा बगिरहेका केही वीरहरूलाई तिनीहरूले गरेको हुङ्कारबाट प्राण बाँकी रहेका वीरहरू हुन् भनी जानेर त्यहाँबाट तिनलाई झिकी निको पार्ने काम पनि भइरहेको थियो । पाँच दिनसम्म दुबै पक्षका सेना एक-आपसमा भिडिरहेका थिए । त्यस बेला देवसेनाले सिन्धु दैत्यको करोडौं पैदलसेनाका वीरहरूको वध गऱ्यो ।।१६-१७।। त्यसपछि शस्त्रले सजिएका युद्धकुशल वीरहरूलाई साथमा लिएर सिन्धु दैत्यको हात्तीसेनाले देवसेनामाथि आक्रमण गऱ्यो । वीरभद्र आदि वीरहरूले सिन्धु दैत्यको पराक्रमी गजसेनामाथि प्रहार गरे । कसैका टाउका र कसैका हात छिन्नभिन्न भए । आग्नेय शस्त्र धारण गर्ने वीरहरूले शोभायमान भएका हात्तीहरूलाई पनि भुइँमा लडाए । वीरभद्रले आफ्नो बलवान् हात्तीद्वारा सिन्धु दैत्यको हात्तीमाथि प्रहार गराए। समान बल भएका दुबैतर्फका हात्तीहरू लड्दा-लड्दा अन्तमा शरीरका आठ ठाउँमा चोट खाएर सँगसँगै भुइँमा लडे । त्यसपछि स्कन्द शस्त्रप्रहार गरी सिन्धुको हात्तीसेनालाई तहस-नहस पार्दै शोभायमान भएर रहे।(स्कन्दले आफ्ना ६ वटा धनुबाट प्रहार गरिएका अनेक बाणहरूद्वारा शक्तिपूर्वक सिन्धुसेनाका ठूला हात्तीहरूको

वीरैस्तु सहितान् मत्ताननन्तान् करिसञ्चयान् ।
शक्त्या शरैरनेकैः सोऽनाशयत् षड्धनुश्च्युतैः ।।२२।।

हिरण्यगर्भोऽनेकवीरयुताँस्तानप्यपातयत् ।
भूतराजोऽपि शस्त्रैस्तान् गजान् नानाविधान् रणे।।२३।।

न्यपातयद् वीरयुक्तान् नाराचक्षतजीवितान् ।
सिंहो भूत्वा पुष्पदन्तो दारयामास तान् गजान् ।।२४।।

नन्दी तु गजरूपेण बभञ्ज तान् गजान् बहून् ।
अन्यैश्च शरसङ्घातैः सर्वे ते विनिपातिताः ।।२५।।

कश्चित् पुच्छे गृहीत्वेभं भ्रामयित्वा परोऽक्षिपत् ।
उभावपि लयं यातौ दृढाघातेन चूर्णितौ ।।२६।।

ततोऽश्वचारा युयुधुर्गजानीके निवारिते ।
असङ्ख्यातान् निजघ्नुस्तान् सुरान् नानायुधै रणे।।२७।।

पतिता मूर्च्छिता देवाः पुनः संज्ञाञ्च लेभिरे ।
ततो विव्यधुरश्वस्थान् वीरानश्वानथो रुषा ।।२८।।

क्रोधेन देवान् घ्नन्ति स्म हयारूढा महासुराः ।
सुराँस्तान् निन्युरन्तं ते शस्त्रास्त्रशरवृष्टिभिः ।।२९।।

षड् वीराः पुनरायाताः श्रुत्वा देवान् हतान् युधि ।
ततस्ते पुनराजघ्नुर्दैतेयानश्वसादिनः ।।३०।।

चत्वारस्ते चतुर्दिक्षु प्रायुध्यन् बलवत्तरम् ।
ररक्षतुरुभौ सैन्यं स्वीयं देवगणैर्युतम् ।।३१।।

मारयामासुरश्वाँस्तानश्वस्थान् वीरसंयुतान् ।
अयुध्यन् पादचारेण निघ्नन्तोऽरिगणान् बहून् ।।३२।।

कोटिकोटिमितास्तत्र पेतुस्ते तु शरार्दिताः ।
नन्दी भृङ्गी हतानश्वान् पतितान् वीक्ष्य सादिनः ।।३३।।

पादाघातेन तेनाशु पातयन् नन्दिकेश्वरः ।
वीरभद्रोऽप्यसङ्ख्यातानश्वयोधान् न्यपातयत् ।।३४।।

हतेषु मुख्यवीरेषु चतुर्भिः सर्वतोदिशम् ।
कल्पान्त इव तत्रासीद् दैत्यानां रणकर्मणाम् ।।३५।।

विनाश गरे । हिरण्यगर्भले वीरहरूसहित युद्धका मैदानमा आक्रमण गर्न आउने शत्रुसेनाका ठूला-ठूला हात्तीहरूलाई ढलाए । भूतराजले पनि आफ्नो तीखो प्रहारबाट शस्त्रप्रहारमा कुशल वीरहरूले सहित रहेका सिन्धुसेनाका असङ्ख्य हात्तीको विनाश गरे ।।१८-२३।। पुष्पदन्त आफै सिंह बनेर शत्रुको हात्तीसेनामाथि जाइलागे र अनेकौं मत्त हात्तीको वध गरे । नन्दीले हात्तीको रूप धारण गरी सिन्धुसेनाका हजारौं हात्तीमाथि आक्रमण गरे । अरू वीरहरूले पनि बाणप्रहारबाट बाँकी रहेका हात्तीहरूको विनाश गरे ।।२४-२५।। कुनै हात्तीले अर्को हात्तीलाई पुच्छर तानेर घुमायो । पछि शक्तिको समानताका कारण दारुण आघात गर्दागर्दै ती दुवै हात्तीले एक-अर्कालाई मारेको पनि देखियो ।।२६।। हात्तीसेनाको विनाशपछि सिन्धुसेनाका घोडसवार वीरहरू युद्ध गर्न लागे । तिनले युद्धमा असङ्ख्य देवसेनालाई ढलाए । मूर्च्छित भई भुइँमा लडेका देववीरहरू होशमा आएपछि युद्ध गर्न फेरि तयार भए। घोडामा सवार दैत्यवीरहरूले घोडामा सवार देवसेनाका असङ्ख्य योद्धाहरूलाई शस्त्रअस्त्र एवं बाणप्रहार गरी मारिरहेका थिए। तिनले क्रोधपूर्वक तीखो बाणप्रहार गर्दै शस्त्रहरूबाट आघात गरेर देवसेनाको ठूलो क्षति पुऱ्याए । देवतापक्षको दुर्दशा थाहा पाएर फेरि ६ जना देववीरहरू युद्ध गर्न आइपुगे । तिनले दैत्यको अश्वसेनाका वीरहरूमाथि कठोर प्रहार गरे ।।२७-३०।। देवसेनाका ६ जना वीरहरूमध्ये ४ जना वीर चार दिशामा युद्ध गरिरहेका थिए भने बाँकी २ जना वीरहरू देवसेनाको रक्षा गर्न कटिबद्ध थिए ।।३१।। तिनले घोडसवार दैत्यवीरहरूका साथै तिनका घोडाहरू पनि मारे । त्यसपछि ती देववीरहरूले भुइँमा रहेर नै दैत्यहरूको वध गर्न लागे ।।३२।। देववीरहरूको बाणप्रहारबाट करोडौं सङ्ख्यामा रहेका दैत्यसेनाका जवानहरू भुइँमा ढलेर मरे। नन्दी र भृङ्गीले घोडाहरू मारिएको देखे। त्यसपछि पैदल लड्न आएका केही दैत्यलाई नन्दिकेश्वरले खुट्टाले हानी-हानी यमलोक पुऱ्याए । वीरभद्रले पनि असङ्ख्य घोडसवार वीरहरूको संहार गरे । चार दिशामा रहेका चारजना देववीरहरूले दैत्यसेनाका मुख्य-मुख्य वीरहरूको हत्या गरेपछि दैत्यहरूका लागि चारै दिशामा महाप्रलयको दृश्य उपस्थित भयो ।।३३-३५।। त्यसपछि केही दैत्यसेनाका जवानहरू

ततः केचित् सुरगणान् पेदिरे शरणं तदा ।
हाहाकारो महानासीद् दैत्यसैन्याश्वसादिषु ।।३६।।

एवं हत्वाऽखिलां सेनां षड् वीरास्ते मुदं ययुः ।
वाद्यत्सु सर्ववाद्येषु जगर्जुस्तुष्टुवुर्विभुम् ।।३७।।

जयः प्राप्तो मयूरेशप्रभावात् स्मरणान्नतेः ।
ततः सिन्धुः समाकर्ण्य शरणागतवाक्यतः ।।३८।।

वृत्तान्तं हतसेनाया हस्त्यश्वरथसंयुतः ।
अमात्यान् सर्ववीरांश्च प्रोवाच युद्धलालसः ।।३९।।

सिन्धुरुवाच

ये ये गच्छन्ति योद्धारस्तान् शृणोमि हतान् परैः ।
इदानीं यामि तं हन्तुं गणेशञ्च स्वयं बलात् ।।४०।।

क उवाच

इत्युक्त्वा क्ष्वेडितेनासौ गगनञ्च दिशो दश ।
नादयामास त्रींल्लोकान् ग्रसन् भूस्वर्गमण्डलम्।।४१।।

योजयित्वाऽक्षिपद् बाणमाकर्णकर्षणाज्जवात् ।
सेनायां वीरभद्रादिपालितायां महाबलैः ।।४२।।

निरीक्ष्य सर्ववीरान् स बाणं धनुषि सन्दधे ।
अस्त्रमन्त्रेण सहसा शतजप्तेन दैत्यराट् ।।४३।।

कृपीटयोनिः सहसा तस्माज्जातो ददाह ताम् ।
देवसेनाञ्च पृथिवीं सवनाञ्च सपर्वताम् ।।४४।।

ततोऽपश्यन् सैनिकास्ते दह्यमानान् कृशानुना ।
पुरुषं वह्निसम्भूतं जटिलं दीप्ततेजसम् ।।४५।।

विद्युज्जिह्वं करालास्यं गिलन्तं देवसैनिकान् ।
षडाननादयो भीता दुद्रुवुस्ते दिशो दश ।।४६।।

यं यं स भक्षति स्माजौ स स प्राप स्मरन् मुदा ।
निजधाम मयूरेशमेव मत्ताऽखिला चमूः ।।४७।।

देवसेनाको शरण लिन गए । दैत्यहरूका पैदलसेना र घोडसवार सेनामा भयङ्कर हाहाकार भयो । यसरी दैत्यसेनाको नाश गरेपछि देवपक्षका ६ जना वीरहरू अत्यन्त प्रसन्न भए । त्यहाँ विजयका बाजा बज्न लागे र ती वीरहरूले गर्जन गर्न लागे । गर्जनपछि तिनले श्रद्धापूर्वक भगवान् श्रीगणेशको स्तुति गरे । देववीरहरूले भगवान् मयूरेशको प्रभाव, स्मरण र वन्दनाबाट विजयलाभ गरे भन्ने कुरा शरणमा आएका सैनिकहरूबाट थाहा पाएर दैत्यराज सिन्धुले हात्ती, घोडा र वीरहरूलाई साथमा लिई युद्धको प्रबल कामनाका साथ आफ्ना मन्त्री र सेनानायकहरूलाई जम्मा गरी आदेश गऱ्यो ।।३६-३९।।

**सिन्धुले भन्यो** - 'हे वीरहरू ! जुन-जुन वीर यहाँबाट लड्न गए, ती सबैलाई देवता पक्षका वीरहरूले मारेको खबरमात्र सुन्नुपरेको छ । अहिले म आफ्नै पराक्रमबाट श्रीगणेशको वध गर्न जान चाहन्छु ।' ।।४०।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी आफ्ना विचार व्यक्त गरेर दैत्यराज सिन्धुले भयङ्कर सिंहनादद्वारा आकाश र दिशालाई थर्कमान बनाउँदै स्वर्ग, मर्त्य, पाताल र बीस थरिका अरू स्वर्गलाई समेत एकैचोटि निल्न खोजेझैं धनुमा बाण चढायो । वेगपूर्वक कानसम्म ताँदो खिंचेर बाणवर्षा गर्न लाग्यो । दैत्यराज सिन्धुले सबै वीरहरूलाई नियालेर हेऱ्यो अनि सय पटकसम्म अस्त्रको मन्त्र जपेर बाणलाई धनुमा सन्धान गऱ्यो ।।४१-४३।। त्यसपछि रिसाएर गरिएको बाणप्रहारबाट अग्निज्वालामय एउटा भयङ्कर पुरुष पैदा भयो । त्यस पुरुषले देवसेना र वन-पर्वतसहित पृथिवीलाई डढाउन थाल्यो । त्यसपछि स्कन्द आदि वीरहरू पनि भयङ्कर अग्निज्वालाबाट डढिरहेका आफ्ना सैनिकहरूलाई देख्नुका साथै अग्निज्वालाबाट पैदा भएको तेजस्वी, जिब्रो निकालिरहेको, बाङ्गो मुख भएको र देवसेनालाई निल्दै गरेको कालपुरुषलाई देखेर चारैतिर भाग्न थाले ।।४४-४६।। त्यस कालपुरुषले युद्धमा जुन वीरलाई खान्थ्यो त्यो वीर भगवान् श्रीगणेशको स्मरण गर्दै उहाँको धाममा प्राप्त हुन्थ्यो । युद्धोन्मादले उन्मत्त दैत्यको सेना जताजता गइरहेको थियो त्यता त्यता अग्नि-ज्वालाको प्रकाश र कालपुरुषको मुखबाट उत्पन्न प्रलयकालको

यतो यतो याति सेना ततस्तद्वक्त्रसम्भवः ।
तनूनपाद् दहत्येनां प्रलयाग्निरिव ज्वलन् ।।४८।।

एवं सा वह्निसंदग्धा मयूरेशस्य वाहिनी ।
धूमान्धकारे महति न प्राज्ञायत किञ्चन ।।४९।।

ततः सर्वे मयूरेशपृष्ठभागं समाश्रिताः ।
त्राहि त्राहीति जल्पन्तो दग्धास्ते जातवेदसा ।।५०।।

अनिवार्यमहास्त्रं तद् दृष्ट्वा देवो मयूरराट् ।
निस्तेजाश्चिन्तयामास भीतो लोके लघुत्वतः ।।५१।।

शिवः प्रसादं चेत् कुर्यात् तदैवात्र जयो भवेत् ।
इत्युक्त्वा परशुं गृह्य मन्त्रयित्वाऽक्षिपद् बलात् ।।५२।।

महसा जितसूर्यः स गर्जयन् गगनं दिशः ।
यातो दहन् वैरिसेनां जगत् कल्पानलो यथा ।।५३।।

तस्मादपि महानेकः पुरुषः समजायत ।
यस्यास्ये सर्वभूगोलः किन्नु मास्यति साम्बरः ।।५४।।

पुरुषः पुरुषेणासावस्त्रमस्त्रेण वै तदा ।
अयुध्यतां ततो जग्मुर्द्रष्टुं देवर्षयस्तदा ।।५५।।

दैत्यास्त्रं भक्षितं तेन कृतान्तास्त्रेण सत्वरम् ।
ययौ सेनाञ्च निर्दग्धुं ज्वालामालीव हव्यभुक् ।।५६।।

दैत्यराजोऽपि तं दृष्ट्वा बाणवृष्टिमवासृजत् ।
एकस्मान्मन्त्रिताद् बाणादनन्ता निःसृताः शराः ।।५७।।

देवसेनाचरास्तेषु निमग्ना वेगशालिनः ।
मयूरेशः क्रोधवशान्नानाऽस्त्राणि तदाऽसृजत् ।।५८।।

तैरस्त्रैर्दैत्यराजस्य निरस्यास्त्राणि सर्वशः ।
अभक्षयद् दैत्यसेनां स कालपुरुषः पुनः ।।५९।।

अग्निसमान अग्निज्वालाले पनि पछ्याइरहेको थियो। यसरी त्यस दैत्यले देवसेनालाई अग्निको प्रयोगबाट सोत्तर बनाइरहेको थियो । त्यसका मुखबाट पैदा भएको आगोले श्रीगणेशको विशाल सेनालाई डढायो । धूँवाको बाक्लो अन्धकार फैलिनाले त्यहाँ केही पनि देख्न सकिने परिस्थिति थिएन ।।४७-४९।। त्यसपछि अग्निज्वालाबाट डढिरहेका सबै वीरहरू भगवान् श्रीगणेशको पछाडि गएर त्राहि-त्राहि भन्दै रहे । भगवान् श्रीगणेशले पनि निस्तेज भई सिन्धुको अस्त्रबाट उत्पन्न त्यो कालपुरुष र त्यसको अग्निज्वालालाई विनाश गर्न नसकिने अत्यन्त प्रभावसम्पन्न जानेर लोकमा श्रीगणेशको पनि केही शक्ति रहेनछ भन्लान् र अपकीर्ति फैलिएला भन्ने डरले आत्तिएर चिन्ता गर्न लाग्नुभयो ।।५०-५१।। उहाँले भगवान् शिवजीले कृपा गर्नुभएमा मात्र हामीले विजय प्राप्त गर्न सक्छौं भन्ने निधो गर्नुभयो। यसरी मनमनै कुरा गरेर श्रीगणेशले परशु समाउनुभयो र मन्त्र जपेर वेगपूर्वक सिन्धु दैत्यमाथि प्रहार गर्नुभयो ।।५२।। श्रीगणेशद्वारा प्रहार गरिएको त्यो परशु आफ्नो तेजबाट सूर्यलाई पनि मन्द बनाएर आकाशलाई प्रतिध्वनित गराउँदै र कल्पान्तको अग्निले संसार डढाएझैं दैत्यसेनालाई भयभीत गराउँदै वैरिसेनामा जाइलाग्यो । त्यसबाट पनि एउटा भयङ्कर पुरुष पैदा भयो । दर्शकहरूलाई त्यसको मुखभित्र आकाशसहित सम्पूर्ण भूगोल नै अटाउँछ कि भन्ने भान हुन्थ्यो। त्यस बेला सिन्धुदैत्यले पैदा गरेको पुरुष र श्रीगणेशले पैदा गर्नुभएको पुरुषको बीचमा भयङ्कर युद्ध आरम्भ भयो । ती दुवै पुरुष शस्त्र र अस्त्रले परस्पर प्रहार गरिरहेका थिए । त्यो युद्ध हेर्न त्यस बेला देवर्षिहरू पनि त्यहाँ भेला भए।।५३-५५।। श्रीगणेशद्वारा उत्पन्न भएको वीरले यमास्त्रको प्रयोग गरेर दैत्यको अस्त्रलाई खाइदियो । त्यसपछि श्रीगणेशबाट उत्पन्न त्यो पुरुष दैत्यसेनालाई डढाउन ज्वालामय पर्वताकार भई अगाडि बढ्यो। दैत्यराज सिन्धुले ज्वालामय पुरुषलाई देखेर बाण बर्साउन थाल्यो। एउटा बाण जपेर प्रहार गर्दा करोडौं बाण पैदा हुनथाले। ती बाणहरूले वेगवान् देवसेनाका वीरहरू पुरिन थाले । त्यस बेला श्रीगणेशले पनि रीसले अनेक थरि बाणहरूको सृष्टि गरी तिनबाट दैत्यराजका सम्पूर्ण बाण काट्नुभएपछि श्रीगणेशनिर्मित कालपुरुषले दैत्यसेनाको संहार गर्‍यो ।।५६-५९।। दैत्यहरू

यतो यतः पलायन्तेऽसुरास्तत्र च याति सः ।
चिन्ताक्रान्तस्ततो दैत्यः कर्तव्यं नाभ्यपद्यत ।।६०।।

जता भागिरहेका थिए त्यतै गएर तिनको सर्वनाश गर्ने कालपुरुषको प्रभावबाट सिन्धु दैत्य चिन्तामग्न र किंकर्तव्यविमूढ भयो ।।६०।।

किं कर्तव्यं क्व गन्तव्यं क्व च स्थेयमचिन्तयत् ।
अस्तं याते दिनकरे स्वधाम प्रत्यपद्यत ।।६१।।

गच्छन् स्खलन् पतन् भूमौ नष्टकुण्डलभूषणः ।
नगरं प्राविशदसौ ततः शम्भुरिवापरः ।।६२।।

के गर्नु ? कहाँ जानु ? कहाँ बस्नु ? भन्ने विषयमा निधो गर्न सकेन । साँझ पर्न लाग्यो, सूर्य अस्ताएपछि त्यो पनि आफ्नो दरबारतर्फ गयो । दरबार फर्किंदा त्यो पीर र भयका कारण चिप्लिँदै लड्दै हिँडिरहेको थियो । घरि भुइँमा लड्थ्यो र घरि उभिन खोज्दथ्यो । भुइँमा लडिबुडी गर्दा शरीरका कुण्डल र अलङ्कार हराए र अङ्ग-अङ्गमा धूलो लाग्यो । नगरमा पुग्दा सिन्धुदैत्य खरानी घस्ने शिवजीजस्तो देखिन्थ्यो ।।६१-६२।।

गुप्त एवावसत् क्वापि स्त्रीणां चैवानुजीविनाम् ।
जगर्ज सगणो देवो ज्ञात्वा तद्वृत्तमाशु सः ।।६३।।

तेन नादेन सहसा नादितं भुवनत्रयम् ।
सञ्जहार कृतान्तास्त्रं मन्त्रविद् भुजगं यथा ।।६४।।

स्वनिवेशं जगामाशु मयूरेशो गणैर्वृतः ।।६५।।

दरबारमा पुगेर त्यो लाजले गर्दा आफ्ना सेवक र रानीहरूसँग टाढा रही लुकेर बस्यो । सिन्धुको त्यो अवस्था थाहा पाउनुभएका भगवान् श्रीगणेश आफ्ना गणहरूसहित गर्जन गर्न लाग्नुभयो । उहाँको महानादबाट स्वर्ग, मर्त्य र पाताल घन्किए । मन्त्र जान्ने पुरुषले सर्पलाई लठ्याएझैं भगवान् श्रीगणेशले आफूले आविष्कार गर्नुभएको यमास्त्रलाई अन्तर्धान गराउनुभयो । त्यसपछि भगवान् श्रीगणेश आफ्ना गणका साथ धाममा जानुभयो ।।६३-६५।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे युद्धवर्णनं नाम एकविंशत्युत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'युद्धमा सिन्धुसेनाको पराजय र सिन्धुको शोकसन्तप्त अवस्था' शीर्षकान्वित एक सय एक्काइसौं अध्याय पूर्ण भयो ।।१२१।।

ॐ

## द्वाविंशत्युत्तरशततमोऽध्यायः　　　　{ १२२ अध्याय }

क उवाच

सिंहासनस्थे देवेशे मयूरेशे गणैर्वृते ।
गौतमाद्या मुनिगणाः प्रशशंसुर्गुणेश्वरम् ।।१।।

ऋषय ऊचुः

येन शक्रो जितः सङ्ख्ये नागैः शेषो धरातले ।
तस्य का गणनाऽन्येषां सोऽपि युद्धे जितस्त्वया ।।२।।

रक्षिता बहवस्तस्मात् सिन्धोर्दुष्टात् सुरेश्वर ! ।
गणानां सर्वलोकानामन्यथा जीवनं कथम् ।।३।।

क उवाच

इत्थं तेषु वदत्स्वेव तत्कीर्तिं गिरिजाऽऽययौ ।
आलिङ्ग्य प्राह पुत्रं सा श्रान्तोऽसि युद्धलालसः ।।४।।

ततः शीघ्रं समायातो भर्गो देवं स सष्वजे ।
उवाचेन्द्रादिभिर्देवैरसाध्यं कृतवानसि ।।५।।

परब्रह्मस्वरूपस्य चराचरगुरोरपि ।
सर्वज्ञस्य धराभारोद्धरणे निरतस्य ते ।।६।।

महिमानं स्वरूपाणि ब्रह्माद्या न विदुः सुराः ।
गौतमाद्याश्च मुनयः शक्तिः का तत्र नो भवेत् ।।७।।

क उवाच

इत्थं वदति देवेशे शिवेऽथ पार्वतीं जगौ ।
नारदो मुनिवर्योऽसौ मातः! शृणु वचो मम ।।८।।

बहवो वासरा जाता चात्र स्थाने कदा शिवे ! ।
मोक्षमेष्यति दैत्योऽसौ सिन्धुर्नष्टतमोऽनघे ।।९।।

कदा विवाहो भविता मयूरेशस्य सुव्रते ।
वासवाद्या जिता येन नाशं स कथमेष्यति ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेश गणहरूद्वारा घेरिएर सिंहासनमा विराजमान हुनुभएपछि दर्शनार्थ त्यहाँ आएका गौतम आदि ऋषिहरूले श्रीगणेश भगवान्को अलौकिक पराक्रमको प्रशंसा गरे।१।।

**ऋषिहरूले भने** – हे श्रीगणेशप्रभु ! जुन दैत्यराज सिन्धुले युद्धमा आफ्ना बलशाली हात्तीहरूद्वारा स्वर्गका राजा इन्द्रलाई परास्त गरेको थियो । जसले आफ्नो मायाद्वारा पैदा गरिएका सर्पहरूबाट पातालका अधिपति शेषनागलाई पनि परास्त गरेको थियो । त्यस बलशाली वीरको पृथिवीमा रहेका अरू वीरहरूसँग तुलना नै हुन सक्दैन । त्यस्तो महावीरलाई पनि हजुरले युद्धमा पराजित गर्नुभयो )।२।( हे देवेश ! हजुरले त्यस दुष्ट सिन्धुको आतंकबाट धेरै प्राणीहरूको रक्षा गर्नुभयो । हजुरबाट समय-समयमा त्राण नभएको भए प्राणीहरूको जीवन रहने थिएन।।३।। मुनिहरूले यसरी श्रीगणेशको महिमा बताइरहँदा त्यहाँ भगवती पार्वती आइपुग्नुभयो । उहाँले आफ्ना पुत्र श्रीगणेशलाई अङ्कमाल गर्दै भन्नुभयो – 'युद्धको कामना गर्ने हे पुत्र ! तिमी थाकेका छौ' ।।४।। त्यसै बेला तीव्र गतिमा आउनुभएका शङ्करले पनि श्रीगणेशलाई आलिङ्गन गर्दै भन्नुभयो– हे श्रीगणेश ! इन्द्र आदि देवताहरूले गर्न नसक्ने काम तिमीले गरेका छौ ।।५।। तिमी चर एवं अचरका अधिपति, परब्रह्मस्वरूप, सर्वज्ञ र पृथिवीको भार हटाउन तत्पर भई अवतार धारण गर्ने परमात्मा हौ । तिम्रो महिमा र स्वरूपलाई ब्रह्मा आदि देवताहरूले पनि यस्तै हो भनेर ठम्याउन सक्दैनन् र गौतमादि ऋषिहरूले पनि तिम्रो महिमा र स्वरूपको पत्तो पाउन सक्दैनन् । हामी पनि कसरी जानौं र ?'।।६-७।।

**ब्रह्माजीले भन्नुभयो** – शिवजीले उक्त भाव व्यक्त गर्नुभएपछि उत्तम मुनि नारदजीले पार्वतीलाई भने – हे जगदम्बा! तपाईंले मेरो कुरा सुन्नुहोस् । यो ठाउँमा बसोबास गर्न लागेको धेरै समय भइसक्यो । हे निष्पाप भगवती ! दुष्ट सिन्धु दैत्य कहिले मर्नेछ ? उत्तम व्रतमा लागिरहने हे देवी पार्वती ! तपाईंका सुपुत्र श्रीगणेशको विवाह कहिले हुन्छ ? जुन सिन्धु दैत्यले इन्द्र

आज्ञां देहि गमिष्यामः पुनरेष्यामः सत्वरम् ।
कदा स्युः सिन्धुदैत्यात् ते देवाश्च मुक्तबन्धनाः ।।११।।
दैत्यस्य मरणं मातरसाध्यं दृश्यते मया ।

क उवाच

सुरर्षेर्वाक्यमाकर्ण्य प्रोचुस्तं ते गणास्तदा ।।१२।।
षडाननादयो वीरा नारदं देवदर्शनम् ।
उद्दीपयन्तं तं देवं मयूरेशं सुरेश्वरम् ।।१३।।
आश्चर्यं नारदमुने ! सर्वज्ञस्यापि तेऽनघ ! ।
एतदर्थं समायातो निजधाम्नो भुवं विभुः ।।१४।।
अवाप्तसकलार्थोऽसौ मयूरेशोऽखिलार्थकृत् ।
अगुणस्य गुणेशस्य गुणक्षोभविधायिनः ।।१५।।
स्वरूपं किं न जानासि ब्रह्माद्यैरनिरूपितम् ।
मयूरेशस्य वीर्यञ्च भूभारोत्तारणैषिणः ।।१६।।
इन्द्राद्यवध्यानसुरान्निघ्नतो बलशालिनः ।
अनन्तकोटिब्रह्माण्डनायकस्याखिलात्मनः ।।१७।।
उत्पत्तिस्थितिसंहारकारिणो जगतामपि ।

क उवाच

इति तद्भारतीं श्रुत्वा पुनः प्रोवाच नारदः ।।१८।।
यदा द्रक्ष्यामि तं दैत्यं निहतं मुक्तिमागतम् ।
तदा सर्वं वचः सत्यं मन्येऽहं नान्यथा क्वचित् ।।१९।।
निशम्येत्थं वचस्तस्य चुक्रोध स मयूरराट् ।
जगर्ज क्रोधदीप्तोऽसौ नादयन् भुवनत्रयम् ।।२०।।
दहन्निव त्रिलोकीं स शीर्णयन् पृथिवीमपि ।
मेघगम्भीरया वाचा बभाण तं मुनिं तदा ।।२१।।

मयूरेश उवाच

मान्योऽसि ब्रह्मपुत्रत्वात् सर्वज्ञत्वान्मुनीश्वर ।
अतस्त्वां प्रब्रवीम्यद्य मर्यादां परिपालयन् ।।२२।।

आदि देवताहरूलाई पनि जितेको छ, के त्यसको नाश सम्भव छ ? कहिले सिन्धुको कारागारबाट देवताहरू बन्धनमुक्त हुनेछन् भन्ने मलाई चिन्ता लागिरहन्छ ।।८-११।। सिन्धु दैत्यको वध गर्न सकिंदैन भन्ने कुरा पनि मेरो विश्वास छ । हे आमा ! मलाई घर जान आज्ञा दिनुहोस्, फेरि दर्शन गर्न आउनेछु ।

**ब्रह्माजीले भन्नुभयो** - देवर्षि नारदजीका यी कुरा सुनेर स्कन्द आदि वीरहरूले देवाधिपति श्रीगणेशलाई उत्तेजित गराउन लागिरहेका देवर्षि नारदजीलाई भने - 'हे निष्पाप नारद मुनि ! तपाइँजस्ता सर्वज्ञका रूपमा संसारमा विख्यात हुनुभएका ऋषिले यस्ता कुरा गरेको सुनेर हामी आश्चर्यमा परेका छौं । तपाइँले असम्भव ठानेको कुरा सम्भव गराउन भगवान्को श्रीगणेशका रूपमा अवतार भएको छ ।।१२-१४।। भगवान् श्रीगणेश सर्वार्थसम्पन्न हुनुहुन्छ । सम्पूर्ण कार्यका साधक हुनुहुन्छ । गुणका स्वामी तर निर्गुण हुनुहुन्छ । गुणमा क्षोभ उत्पन्न गर्ने र संसारका अद्भुत सृष्टिकर्ता हुनुहुन्छ । उहाँको स्वरूपलाई ब्रह्मा आदि देवताले पनि राम्ररी बताउन सक्दैनन् भन्ने कुरा के तपाइँलाई थाहा छैन ? पृथिवीको भार हरण गर्न चाहने, इन्द्र आदि देवताहरूद्वारा पनि मार्न नसकिने बलवान् दैत्यहरूलाई मार्ने, अनेककोटि ब्रह्माण्डका नायक, जगत्को उत्पत्ति, स्थिति र संहारका कारण भगवान् श्रीगणेशका पराक्रमको विषयमा ब्रह्मा आदि देवता पनि अनभिज्ञ छन् भन्ने कुरा तपाइँलाई पनि थाहा छ।'

**ब्रह्माजीले भन्नुभयो** - षडानन आदि वीरहरूका वचन सुनेर फेरि नारदले भने - 'हे स्कन्द आदि शिवगण ! जुन बेला मैले सिन्धु दैत्य मरेको र त्यसले मोक्षपद प्राप्त गरेको देखेछु त्यस बेलामात्र तपाइँहरूका वचन पत्याउने छु। अन्यथा मलाई यस्ता कुरामा विश्वास लाग्दैन ।।१५-१९।। नारदजीका यी कुरा सुनेर भगवान् मयूरेश श्रीगणेश साह्रै रिसाउनुभयो । त्यसपछि उहाँले तीन भुवनलाई नै शब्दायमान गराउँदै प्रचण्ड गर्जन गर्नुभयो। त्रिलोकीलाई क्रोधको ज्वालाले डढाएझैं र पृथिवीलाई चिरा-चिरा पारेझैं मेघगम्भीर वाणीद्वारा श्रीगणेशले नारदजीलाई सम्बोधन गर्नुभयो ।।२०-२१।।

**श्रीगणेशले भन्नुभयो** - हे मुनीश्वर ! तपाइँ ब्रह्माजीका छोरा र सर्वज्ञ ज्ञानी मुनि हुनुभएका कारण मान्य हुनुहुन्छ,

तव प्रसादाद् ब्रह्माण्डं प्राशयिष्येऽन्तकं क्षणात् ।
भूगोलं न्युब्जतां नेष्ये शोषयिष्येऽम्बुधीनपि ।।२३।।

चालयिष्ये तथा मेरुं मुने ! निश्वासवायुना ।
शृणु नारद ! सत्यां मे प्रतिज्ञामद्य सर्वग २४।।

हनिष्ये सिन्धुं दैत्यं तं नात्र कार्या विचारणा ।

क उवाच

इत्युक्त्वा प्रययौ योद्धुं बर्ह्यारूढो विनायकः ।।२५।।

आहतुस्तं तदा नन्दी भृङ्गी चोभौ विनायकम् ।
आवां युद्धं करिष्यावो पश्य नौ रणकौशलम् ।।२६।।

इत्युक्त्वा वायुवेगेन गतौ तौ गण्डकीं पुरीम् ।
वीरभद्रो भूतराजो ययौ श्रुत्वा तयोर्गतिम् ।।२७।।

तदा चकम्पे धरणी शेषो विह्वलतां ययौ ।
ददृशुस्ते च चत्वारो दुर्गं दुर्गं सुरेश्वरैः ।।२८।।

पर्यङ्के सुखमासीनं सिन्धुं चारा न्यवेदयन् ।
चत्वारः पर्वताकारा गर्जयन्तो दिशो नभः ।।२९।।

वीरास्तव पुरीं याताः किं स्थितोऽसि महासुर ! ।
श्रुत्वेत्थं वचनं सिन्धुर्मग्नश्चिन्तार्णवे क्षणात् ।
दुर्गापि चिन्तयाविष्टा दैत्योऽपि श्यामतामयात्।।३०।।

अधोमुखतया चोभौ दुःखं प्रापतुरञ्जसा ।
दुर्गा प्रोचे महाराज ! मयोक्तं न कृतं त्वया ।।३१।।

तस्येदं हि फलं प्राप्तमिदानीं किं नु चिन्तया ।
एवं वदति सा वाक्यं तावत् ते वीरसत्तमाः ।।३२।।

नानाश्चर्ययुतं नानारत्नकाञ्चननिर्मितम् ।
अनेकशिखरं तस्य सभामण्डपमाययुः ।।३३।।

तसर्थ तपाईंको मर्यादा राख्दै म भन्न चाहन्छु- हे नारदजी! तपाईंको कृपा पाएर निःश्वास वायुद्वारा मैले एक छिनमा ब्रह्माण्डलाई यमको गास बनाउन सक्छु, भूगोललाई उल्ट्याउन सक्छु, महासागरहरूलाई सुकाउन सक्छु र सुमेरुलाई कँपाउन सक्छु । सर्वत्र विचरण गर्ने शक्ति भएका हे नारद मुनि ! तपाईँले मेरो यो प्रतिज्ञा सुन्नुहोस् ।।२२-२४।। मैले दैत्यराज सिन्धुलाई मारिदिनेछु। यस विषयमा तपाईँले तर्क र विचार गर्नुपर्ने कुनै आवश्यकता छैन ।

**ब्रह्माजीले भन्नुभयो** - नारदजीसँग यी कुरा गरेपछि मयूरमा सवार हुनुभएका भगवान् श्रीगणेश दैत्यराज सिन्धुसँग युद्ध गर्न प्रस्थान गर्नुभयो ।।२५।। त्यस बेला उहाँका सामु आई नन्दी र भृङ्गीले भने - हे श्रीगणेश ! हजुर नजानुहोस् । हामी दुई जना वीर गएर त्यससँग युद्ध गर्दछौं । हजुरले हाम्रो युद्धकौशल हेर्नुहोस् ।।२६।। यसरी श्रीगणेशसँग निवेदन गरी ती दुई वीर नन्दी र भृङ्गी सिन्धुसँग संग्राम गर्न गण्डकीपुरी तर्फ गए । ती गएको थाहा पाएर भूतराज र वीरभद्र पनि तिनकै सहयोगका लागि त्यसतर्फ लागे ।।२७।। ती चार जना वीर त्यहाँ पुगेपछि पृथिवी काँपिन् र शेषनाग व्याकुल भए। ती चारजनाले देवताहरूका लागि दुर्गम मानिएको सिन्धुको किला देखे ।।२८।। त्यस बेला आफ्नो शय्यामा सुखपूर्वक बसिरहेको सिन्धुलाई त्यसका दूतहरूले विनयपूर्वक निवेदन गरे - हे महाराज! चार जना पर्वताकार वीरहरू दिशा र आकाशलाई शब्दायमान गराउँदै हजुरको नगरीमा आइपुगेका छन् । हजुर किन चुप लागेर बसिरहनुभएको छ ? आफ्ना दूतहरूको मुखबाट ती कुरा सुनेर दैत्यराज सिन्धु तत्काल चिन्ताको सागरमा डुब्यो । त्यसकी महारानी दुर्गाले पनि चिन्ता गरिन् । सिन्धुको अनुहार पीरले कालो हुँदै गयो । दुबै दम्पतीले चिन्ताका कारण टाउको निहुर्‍याएर दुःखको अनुभव गरे । दुर्गाले भनिन् - हे महाराज! हजुरले मैले भनेको मान्नुभएन। त्यसको फल अहिले यसरूपमा प्राप्त भयो । अब चिन्ता गरेर के हुन्छ ? यसरी दुर्गाले आफ्ना पतिसँग कुरा गरिरहँदा श्रीगणेशका ती चार जना महावीर अनेक आश्चर्यले सम्पन्न रत्न र सुवर्णद्वारा निर्मित र अनेक बुर्जाहरू भएको सिन्धु दैत्यको सभामण्डपमा आइपुगे ।।२९-३३।। त्यस बेला रीसको

उड्डीय सहसा भृङ्गी तस्थौ क्रुद्धस्तु मण्डपे ।
बभञ्ज मण्डपं सद्यः स बलेन महाबलः ।।३४।।

अङ्गणे तस्य खण्डानि पतितानि समन्ततः ।
ततस्त्रयोऽपि ते वीरा भृङ्गिणं समुपागताः ।।३५।।

युद्धावेशारुणमुखाः ससैन्यं तं ग्रसिष्णवः ।
दृष्ट्वा तत्कर्म तेषां तु सिन्धुसेना ययौ पुरः ।।३६।।

खड्गचर्मधनुर्बाणकुन्तमुद्गरधारिणी ।
घ्नन्तु घ्नन्तु महावेगाँश्चतुरो वीरपुङ्गवान् ।।३७।।

इत्युक्त्वा चतुरो हन्तुमागता दैत्यसैनिकाः ।
असङ्ख्याताश्चतुर्भिस्तैर्युयुधुर्जातसम्भ्रमाः ।।३८।।

हन्मि त्वां जहि मह्यं चेत्यत्र कोलाहलोऽभवत् ।
ततोऽभूत् तुमुलं युद्धं चतुर्भिर्दैत्यसेनया ।।३९।।

रजोऽन्धकारे शस्त्राणां प्रकाशेनावलोकयन् ।
शतकोटिः हता दैत्याश्चतुर्भिः संयुगे तदा ।।४०।।

असङ्ख्यातान् महावीरान् पोथयामासुरोजसा ।
गृहीत्वा पादयोस्ते तान् भ्रामयित्वा पुनः पुनः ।।४१।।

नभोऽक्षिपन्महावीरास्ते भूमौ शतधाऽपतन् ।
शरैरस्त्रैश्च शस्त्रैश्च पादेन करघाततः ।।४२।।

नाशिता सर्वसेना सा दैतेयी रणमण्डले ।
ततस्ते तद्गृहं गत्वा सिन्धुं पर्यङ्कसंस्थितम् ।।४३।।

रणस्तम्भं समानिन्युर्धृत्वा केशेषु वेगतः ।
ततः सिन्धुर्महास्त्रैः स चक्रे युद्धं तु तैः सह ।।४४।।

व्यसृजत् पन्नगास्त्रं स भुजगैर्वेष्टितास्त्रयः ।
गरुडास्त्रञ्च सहसा भृङ्गिणाऽमोचि तत्क्षणात् ।।४५।।

आग्न्यस्त्रे मोचिते तेन पर्जन्यास्त्रञ्च सोऽसृजत् ।
वाय्वस्त्रे मोचिते तेन पर्वतास्त्रञ्च तेऽसृजन् ।।४६।।

मुद्रामा देखिएका महाबली भृङ्गी मण्डपमा चढे । तिनले तुरुन्तै आफ्नो बल प्रयोग गरेर त्यस मण्डपलाई भताभुङ्ग बनाए ।।३४।। भत्किएको मण्डपका सम्पूर्ण खण्डहरू सिन्धुको आँगनभरि छरिए । यो घटनापछि नन्दी, भूतराज र वीरभद्र नामक तीनवटा वीर पनि भृङ्गीको नजिकै आइपुगे ।।३५।। ती वीरहरू युद्धको आवेशमा थिए र तिनका अनुहार रीसका कारण राता देखिन्थे। ती वीरहरू सेनासहित दैत्यराज सिन्धुलाई एकै गासमा निल्न चाहन्थे । शिवजीका वीरहरूको युद्धावेश जानेर तरबार, ढाल, धनु, बाण, भाला र मुग्रोसमेत हातमा लिएका सिन्धुसेनाका वीरहरू यी चारै जना बली एवं तेजस्वी वीरहरूलाई मार-मार भन्दै युद्ध गर्ने इच्छा राखेर त्यहाँ आइपुगे । देवसेनाका साथ युद्ध गर्न आतुर असङ्ख्य दैत्ययोद्धाहरू ती चार जना शिवसेनाका वीरहरूसँग युद्ध गर्न लागे ।।३६-३८।। 'तँले ममाथि प्रहार गर्छस् भने म तलाइँ मारिदिन्छु' जस्ता शब्दहरूको कोलाहल चारैतिर सुनिन थाल्यो । त्यसपछि नन्दी आदि वीर र दैत्यसेनाको घोर युद्ध आरम्भ भयो ।।३९।। युद्धको मैदानमा धूलो उड्दा चारैतिर अन्धकार छायो । चम्किला शस्त्रहरूको प्रकाशमा नन्दी आदि चार जना वीरहरूले त्यस युद्धमा एक अरब दैत्यसेनाको संहार गरे ।।४०।। असङ्ख्य महावीरहरूलाई उचालेर भुइँमा पछारे । महावीर वीरभद्र, भृङ्गी आदिले समातेर आकाशतर्फ हुत्याइएका दैत्यवीरहरू भुइँमा खसेर सय टुक्रामा छरिए । बाण, शस्त्र, अस्त्र, खुट्टा र हातको प्रहारबाट देवसेनाका चार जना वीरहरूले दैत्यराज सिन्धुको सम्पूर्ण सेना सखाप पारे। त्यसपछि नन्दी आदि वीरहरूले वेगपूर्वक सिन्धुको दरबारमा गई पलङ्मा सुतिरहेको सिन्धुको कपालमा समातेर युद्धको मैदानमा रहेको विशाल मौलो नजिकै ल्याइपुऱ्याए । त्यसपछि सिन्धुदैत्यले अनेक शस्त्र-अस्त्रहरूको प्रहार गर्दै ती वीरहरूसँग युद्ध गर्न लाग्यो ।।४१-४४।। युद्धको क्रममा सिन्धुले पन्नगास्त्रको प्रहार गऱ्यो । त्यसबाट नन्दी, भूतराज र वीरभद्र सर्पैसर्पले बेरिए । त्यो देखेर भृङ्गीले पन्नगास्त्रलाई समाप्त गर्न गरुडास्त्र प्रहार गरे । सिन्धुले पनि आग्नेयास्त्र प्रहार गऱ्यो । त्यो देखेर भृङ्गीले पर्जन्यास्त्र प्रहार गरे । सिन्धुले वायव्यास्त्र प्रयोग गर्दा भृङ्गी आदि वीरहरूले पर्वतास्त्र प्रहार गरे ।।४५-४६।। त्यसपछि अस्त्रयुद्ध छाडेर

ततस्ते मल्लयुद्धेन योधयामासुरादरात् ।
नन्दी तु पातयामास मुकुटं दैत्यमस्तकात् ।।४७।।

भृङ्गी तु ताडयामास पृष्ठे दैत्यं महारुषा ।
वीरभद्रोऽग्रहीद् भार्यां कचे तस्याथ पश्यतः ।।४८।।

भूतराजो जघानैनं लत्तया वैरभावतः ।
दुर्गा नेत्रे निमील्यैव नापश्यत् तं तथाविधम् ।।४९।।

निन्दन्ती तस्य कर्माणि पपाल निजमन्दिरम् ।
आवेशात् सिन्धुदैत्योऽपि वीरभद्रं पदेऽग्रहीत् ।।५०।।

मुष्टिना नन्दिनं हत्वा शिखामाक्रम्य भृङ्गिणः ।
अपातयद् भूमितले भूतराजो मुमूर्च्छ ह ।।५१।।

मुकुटं मस्तके न्यस्य मुक्ताहारं गले यथा ।
तुरङ्गवरमारुह्य शेषानाहूय सैनिकान् ।।५२।।

हनिष्येऽद्य मयूरेशमित्युक्त्वा युयुधे पुनः ।
जगर्ज सहसा दैत्यो गर्जयन् विदिशो दिशः ।।५३।।

गतेषु तेषु वीरेषु चतुर्षु गणनायकम् ।
वदत्सु दैत्यसेनायां सर्वेषां नाशनं कृतम् ।।५४।।

आनीतः सिन्धुदैत्योऽपि रणभूमिं गणेश्वर ! ।
अल्पसेनाचरैर्युक्तं मोचयैनं भवार्णवात् ।।५५।।

वयमेव हनिष्यामो नाज्ञासीत् तव विघ्नराट् ।।५६।।

ती वीरहरूले सिन्धुसँग मल्लयुद्ध गरे । नन्दीले दैत्यराजको शिरको मुकुट भुइँमा खसाइदिए । भृङ्गीले क्रोधले त्यसको पिठ्यूँमा प्रहार गरे । त्यहाँ युद्ध भइरहँदा वीरभद्रले सिन्धुदैत्यकै सामु नजिकै बसिरहेकी त्यसकी महारानी दुर्गाको केशमा समाते। दुर्गाले हेर्दाहेर्दै वीरभद्रले सिन्धुको केशमा समाए । त्यो मौका छोपेर भूतराजले बलपूर्वक सिन्धुलाई लात्तीले हिर्काउन थाले । दुर्गाले आफ्ना पतिको दुर्दशा देख्न सकिनन् र आँखा चिम्लिइन्। त्यसपछि आफ्ना पति सिन्धुका कुकर्महरूको निन्दा गर्दै आफ्नो घरतर्फ लागिन् । आवेशमा आएको दैत्यराज सिन्धुले वीरभद्रका खुट्टा समातेर तान्यो ।।४७-५०।। त्यसले आफ्नो मुड्कीले नन्दीमाथि प्रहार गऱ्यो, भृङ्गीका केश समातेर भुइँमा पछाऱ्यो र मुड्कीको प्रहारबाट भूतराजलाई पनि मूर्च्छित तुल्यायो । शिववीरहरूले भुइँमा फ्याँकिदिएको मुकुटलाई धारण गरी घाँटीमा हार लगाएर उत्तम घोडामा सवार भएको सिन्धुले आफ्ना बाँकी सेना जम्मा गरेपछि भन्यो – 'हे सैनिकहरू ! आजै म मयूरेश श्रीगणेशलाई मार्छु । तिमीहरू पीर नगर, युद्ध गर ।' यसरी निर्देशन दिएर आफ्नो गर्जनबाट चारै दिशा थर्कमान बनाउँदै युद्ध गर्न लाग्यो । ती चारै वीर पनि भगवान् श्रीगणेशका सामु गए । तिनीहरूले आफूहरूले दैत्यसेनाका असङ्ख्य योद्धाहरूको वध गरेको समाचारका साथै सिन्धुदैत्यलाई समातेर रणभूमिमा ल्याइएको र त्यसको सेना थोरैमात्र बाँकी रहेको समाचार पनि श्रीगणेशलाई पनि सुनाए।।५१-५४।। तिनले फेरि सिन्धुदैत्यलाई मारी त्यसको आतंकबाट संसारलाई मुक्त गर्नुपर्छ भनी बिन्ती गर्दै भने – 'हे प्रभो ! त्यसलाई हामी आफैले नै मार्ने थियौं तर हजुरको आज्ञा नभएकाले त्यसो गरेनौं ।'।।५५-५६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे श्रीगणेशसेनाविजयवर्णनं नाम द्वाविंशत्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशसेनाद्वारा दैत्यसेनाको संहार' शीर्षकान्वित एक सय बाइसौं अध्याय पूर्ण भयो ।।१२२।।

ॐ

## त्रयोविंशत्युत्तरशततमोऽध्यायः { १२३अध्याय }

**क उवाच**

आगतं सिन्धुमाकर्ण्य जहृषे स मयूरराट् ।
नीलकण्ठं समारुह्य ययौ युद्धाय सत्वरः ।।१।।
चतुर्भिरायुधैः सर्वा भासयन् विदिशो दिशः ।
कल्पान्तमेघसदृशनादेन नादयन्नभः ।।२।।
ददर्श पुरतः सिन्धुं युद्धाय कृतनिश्चयम् ।
सोऽप्येनं समरे दृष्ट्वा पश्यति स्म पुनः पुनः ।।३।।
यथा सिंहं नागराजो गरुडं चाथ वायुभुक् ।
शिवापतिं त्रिपुरो वा विष्णुं वा मधुकैटभौ ।।४।।
शुम्भो वापि निशुम्भो वा जगदम्बां महाबलाम् ।
ततो युद्धं प्रकुर्वाते नानास्त्रैस्तैः परस्परम् ।।५।।
जपाकुसुमसङ्काशौ देहौ जातौ तदा तयोः ।
ददाह पृथिवीं साद्रिं शस्त्रसङ्घट्टजोऽनलः ।।६।।
चकम्पे पृथिवी सर्वा साब्धिद्वीपा सपर्वता ।
बाणमादाय सिन्धुः स वह्न्यस्त्रेणाभिमन्त्र्य च ।।७।।
ससर्ज दग्धुं तं देवं मयूरेशं रणाङ्गणे ।
स दहन् देवसेनां तां दशदिक्षु ससर्प ह ।।८।।
ततः पाशं मयूरेशो मेघास्त्रेण सुयोज्य च ।
न्यक्षिपद् दैत्यसेनायां कम्पयन् भुवनत्रयम् ।।९।।
अशमच्च ततो वह्निर्जलधाराऽभिवृष्टिभिः ।
प्रभूतेनाथ तमसा दिशो व्याप्ता दशापि च ।।१०।।
विशीर्णाः पर्वतास्ताभिः पतिता वृक्षसञ्चयाः ।
अयं किं प्रलयः प्राप्त इत्यशोचत् स दैत्यराट् ।।११।।
पवनास्त्रेण तान् मेघाँस्तदा सिन्धुर्न्यवारयत् ।
स वायुः कम्पयामास गगनञ्च दिशो दश ।।१२।।
ततो देवोऽमन्त्रयत् स कमलं निजहस्तके ।
पर्वतास्त्रेण सहसा तत्याज दैत्यपुङ्गवे ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** - सिन्धु दैत्यलाई रणभूमिमा आएको थाहा पाएपछि भगवान् मयूरेश प्रसन्न हुनुभयो। मयूरमा सवार भई तीव्रगतिमा युद्धका लागि प्रस्थान गर्नुभयो ।।१।। उहाँले आफ्ना चार बाहुमा रहेका चार प्रकारका आयुधहरूको प्रकाशबाट चारै दिशा र विदिशा प्रकाशित गर्नुभयो र प्रलयकालका बादलको झैं गम्भीर गर्जनबाट आकाशलाई शब्दायमान गराउनुभयो।।२।। उहाँले रणभूमिमा गएर दृढ अठोटसहित युद्धका लागि तयार भएका सिन्धुलाई देख्नुभयो । त्यसले पनि युद्धभूमिमा गई गजराजले सिंहलाई हेरेझैं, सर्पराजले गरुडलाई हेरेझैं, मधु-कैटभले विष्णुलाई हेरेझैं, त्रिपुरासुरले शिवजीलाई हेरेझैं र शुम्भ-निशुम्भले जगदम्बा दुर्गालाई हेरेझैं पटक-पटक श्रीगणेशलाई हेरिरहेको थियो ।।३-४।। त्यसपछि ती दुई महावीरहरू शस्त्र एवं अस्त्रको वर्षा गर्दै घोर संग्राम गर्न लागे । संग्राममा व्यस्त भएका ती वीरहरूका शरीर जपापुष्प (बाह्रमासे फूल) झैं राता देखिन्थे । शस्त्र-संघर्षबाट पैदा भएको आगाको ज्वालाले पृथिवीलाई डढाउन थाल्यो । पर्वत,द्वीप र सागरसहित पृथिवी कम्पायमान भइन् । सिन्धु दैत्यले एउटा बाण हातमा लिई अग्निको मन्त्रले अभिमन्त्रित गरेर रणभूमिमा मयूरेशलाई ढलाउने आशयले आग्नेयास्त्रको सृष्टि गर्‍यो । त्यो आग्नेयास्त्र देवसेनामा फैलियो । त्यसपछि मयूरेश भगवान्‌ले पर्जन्यास्त्रले आफ्नो पाश बेरेर तीनै लोक कपाउँदै दैत्यसेनामाथि प्रहार गर्नुभयो ।।५-९।। पर्जन्यास्त्रको प्रहारबाट जलधाराको वृष्टि भइरहँदा पृथिवीमा फैलिएको आगाको ज्वाला शान्त भयो। चारैतिर अन्धकार छायो । दसै दिशा ढाकिए, अत्यधिक वृष्टिका कारण पर्वत टुक्रिन थाले र वृक्ष ढल्न थाले । दैत्यराज सिन्धु प्रलय नै आयो कि भनेर विचार गर्न लाग्यो ।।१०-११।। त्यस बेला त्यसले वायव्यास्त्रको प्रहार गरी श्रीगणेश भगवान्‌को पर्जन्यास्त्रलाई काट्यो। वायव्यास्त्रबाट पैदा भएको वायुसमूहले आकाश र दिशालाई कम्पायमान गरायो। त्यसपछि भगवान् श्रीगणेशले आफ्नो हातमा

उन्मूल्य तद् द्रुमान् व्योम द्योतयच्च दिशो दश ।
अगच्छद् दैत्यसेनायां प्रासुवत् पर्वतान् बहून् ।।१४।।

असङ्ख्यातैर्गिरिवरैश्छादितं पृथिवीतलम् ।
न स्थातुमवकाशोऽभून्न च गन्तुमथापि च ।।१५।।

पवनं कुण्ठितं दृष्ट्वा पर्वतान् सर्वतोऽपि च ।
वज्रास्त्रं प्रेरयामास ततो वज्राणि निर्ययुः ।।१६।।

असङ्ख्यातैश्च वज्रैश्च पर्वताश्चूर्णितास्तदा ।
ततोऽङ्कुशं मयूरेशो वज्रास्त्रेण न्यमन्त्रयत् ।।१७।।

ससर्ज तेषु वज्रेषु वज्रयुद्धमभूत् तदा ।
तच्छब्देन चकम्पे भूः पातालानि दिशो नभः ।।१८।।

न्यपतद् वज्रघातेन वह्निर्लोकान् ददाह सः ।
परस्परं निरस्तानि वज्राण्यन्तर्दधुस्तदा ।।१९।।

ततोऽवदन्महादैत्योऽमात्यान् प्रति महारुषा ।
किमनेन प्रयोगेण भस्म कुर्यां क्षणादमुम् ।।२०।।

शिवबालं शिवास्तन्यपानदक्षं शिवोचितम् ।
इत्युक्त्वाऽभिद्रवद् दैत्यो हन्तुं तं स गुणेश्वरम् ।।२१।।

दधार तं निरीक्ष्यैवमायान्तं दैत्यपुङ्गवम् ।
विराड्रूपो मयूरेशो बिभेद सहसा नभः ।।२२।।

चरणाक्रान्तपातालः श्रोत्रव्याप्तदिगन्तरः ।।२३।।

सहस्रपादं सहसा निरीक्ष्य
सहस्रनेत्रञ्च सहस्रशीर्षम् ।
खं रोदसी व्याप्य च तिष्ठमानं
सिन्धुर्मुमूर्च्छाथ पतँश्च भूमौ।।२४।।

आच्छादयन्तं हस्तेन व्योम सर्वं सुरेश्वरम् ।
सावधानमनाः किञ्चित् सस्मार रविजं वरम् ।।२५।।

सिन्धुरुवाच

रविणा पूर्वमुक्तोऽहं वरदाने महौजसा ।
आच्छादयेद् यो गगनमेकहस्तेन रेऽसुर ! ।।२६।।

रहेको कमललाई अभिमन्त्रित गरी दैत्यमाथि पर्वतास्त्रले प्रहार गर्नुभयो। त्यो वृक्षलाई निर्मूल गर्दै र आकाशलाई चम्काउँदै दैत्य-सेनामा पुग्यो । त्यसबाट अनेक पर्वत खडा भए। पृथिवी पर्वतै-पर्वतले ढाकिइन् । उभिने र हिँड्ने ठाउँसम्म रहेन।।१२-१५।। वायव्यास्त्र कुण्ठित भएको र चारैतिर पर्वतै-पर्वतको राशि खडा भएको देखेर सिन्धु दैत्यले वज्रास्त्र प्रहार गऱ्यो । त्यस बेला चारैतिर वज्रै-वज्र देखिन थाले। असङ्ख्य वज्रहरूको प्रहारबाट पर्वतहरू टुक्रिन थाले । त्यसपछि श्रीगणेशले पनि वज्रास्त्रद्वारा अङ्कुशलाई अभिमन्त्रित गर्नुभयो। त्यसबाट करोडौं वज्र पैदा भए । दुबै योद्धाहरूको बीचमा वज्रयुद्ध शुरू भयो । वज्रका शब्दले पृथिवी कम्पायमान भइन्। पाताल, दसै दिशा र आकाश पनि कम्पित भए ।।१६-१८।। वज्रास्त्रको सङ्घर्षबाट पैदा भएको अग्निज्वालाले संसारलाई डढाउन थाल्यो । परस्परमा निरस्त भएका वज्रहरू अन्तर्धान भए । त्यसपछि महादैत्य सिन्धुले आफ्ना अमात्यहरूलाई रोषपूर्वक भन्यो- 'अब यी अस्त्रहरूको प्रयोग किन ? म शिवजीको छोरो र पार्वतीको दूध चुस्ने बच्चालाई एकै छिनमा खरानी बनाउँछु ।'।।१९-२०।। यसरी रोषपूर्वक कुरा गरेर त्यसले श्रीगणेशमाथि प्रहार गरी उहाँलाई समात्यो । दैत्य र दैत्यको मायालाई देखेर भगवान्ले विराट् रूप धारण गर्नुभयो । उहाँको विराट् शरीरले आकाश ढाक्यो। उहाँका चरणहरू पातालसम्म फैलिए र उहाँका कानहरूले दिशा एवं विदिशा ढाकिए । भगवान् श्रीगणेश सहस्रपाद, सहस्रनेत्र र सहस्रशिरा हुनुभयो। त्यसपछि उहाँ पृथिवी, अन्तरिक्ष र आकाशलाई ढाकेर उभिनुभयो । भगवान्को विशाल र आँखामा नअटाउने रूप देखेर सिन्धु मूर्च्छित भई भुइँमा लड्यो । होशमा आएपछि आफ्नो एउटा हातद्वारा आकाशलाई ढपक्कै ढाक्नुभएका भगवान् श्रीगणेशको स्वरूप देखेर त्यसले आफ्नो मन एकाग्र गराई सूर्यले दिएको वरदानको संझना गऱ्यो ।।२१-२५।।

**सिन्धुले भन्यो -** वरदान दिने प्रसङ्गमा तेजोराशि श्रीसूर्यले मलाई भन्नुभएको थियो - 'जसले एउटा हातले आकाश

स ते मुक्तिपदं सद्यो नेष्यते बहुकालत: ।
अतोऽनेन रणेनाऽलं यद् भाव्यं तद् भविष्यति ।।२७।।
पुनर्निरीक्ष्यमाणोऽसौ ह्रस्वकायं ददर्श तम् ।
षड्भुजं तु मयूरेशं परं विस्मयमाययौ ।।२८।।
ततोऽवरुह्य देवेशो मयूरेश: शिखण्डिन: ।
उपस्पृश्य जलं शुद्धं जजाप परमं मनुम् ।।२९।।
परशुं मन्त्रयामास महोव्याप्तं दिगन्तरम् ।
लक्ष्यीकृत्य रिपोर्नाभिं सुधामन्त्रेण संयुतम् ।।३०।।
स्फोटयन्निव ब्रह्माण्डं क्रोधरक्तविलोचन: ।
ज्वालामालाकुलं तं स मुमोच गिरिजासुत: ।।३१।।
स मोच्यमानो गगनं नादयन् विदिशो दिश: ।
भासयन् महसा पृथ्वीं सपर्वतवनाकराम् ।।३२।।
दृष्ट्वा दैत्य: समायान्तं परशुं कालसन्निभम् ।
शीघ्रं चक्रे धनुर्घोरं शरं यावद्धि योज्यते ।।३३।।
तावत् स विभिदे नाभिममृताभियुतं लघु ।
अमृते नि:सृते दैत्यो वाताहत इव द्रुम: ।।३४।।
पपात सहसा भूमौ वज्राहत इवाचल: ।
प्रसार्य वक्त्रं रुधिरं वमन् प्राणान् विसृज्य स: ।।३५।।
मयूरेशप्रतापेन मुक्तिं प्राप सुदुर्लभाम् ।
पश्यतां सर्वलोकानां तदद्भुतमिवाभवत् ।।३६।।
अवतेरुर्विमानानि युद्धं द्रष्टुं स्थितानि ह ।
पपात पुष्पवृष्टिश्च शनैर्मेघा जगर्जिरे ।।३७।।
अशीशमद् रजो भौमं ववौ वात: सुखावह: ।
प्रसेदुश्च दिश: सर्वा गन्धर्वा मधुरं जगु: ।।३८।।
ननृतुश्चाप्सर:सङ्घास्तुष्टुवुर्मुनिदेवता: ।
षडाननादयो वीरा मयूरेशं मुदा युता: ।।३९।।

सर्वे ऊचु:

परब्रह्मरूपं चिदानन्दरूपं
सदानन्दरूपं सुरेशं परेशम्।
गुणाब्धिं गुणेशं गुणातीतमीशं
मयूरेशमाद्यं नता: स्मो नता: स्म: ।।४०।।

ढाकिदिनेछ त्यसले नै तिमीलाई मुक्तिपदमा पुऱ्याउने छ।' अब युद्ध व्यर्थ छ जे हुन्छ, त्यो हुनेछ । यसरी विचार गरिररहेको सिन्धुका सामु भगवान्‌ले सानो रूप धारण गर्नुभयो । श्रीगणेशलाई बदलिएको अवस्थामा देखेर दैत्य चकित भयो ।।२६-२८।। भगवान् श्रीगणेश पनि मयूरबाट ओर्लिनुभयो । उहाँले शुद्ध जल स्पर्श गरी परम मन्त्रको जप गर्नुभयो । दिगन्तसम्म तेज फैलाउने आफ्नो परशुलाई अभिमन्त्रित गर्नुभयो । त्यसपछि अमृतले भरिएको सिन्धुको नाभिलाई लक्षित गरी क्रोधले राता आँखा गराउँदै उहाँले ब्रह्माण्ड फुटाउने गरी ज्वालामय परशु प्रहार गर्नुभयो।।२९-३१।। गगनलाई शब्दायमान तुल्याउँदै र प्रकाश-पुञ्जबाट सागर, वन, पर्वत एवं द्वीपसहित पृथिवीलाई प्रकाशमय बनाउँदै आइरहेको मृत्युसमान भयङ्कर श्रीगणेशको परशु देखेर दैत्यले अत्यन्त तीव्र गतिमा धनुबाट बाण झिकी प्रहार गर्न खोजिरहेकै बेला श्रीगणेशको परशुले सिन्धु दैत्यको अमृतले भरिएको नाभिलाई भेदन गऱ्यो । नाभि फुटी अमृतभेदन हुँदा अमृत छताछुल्ल भुइँमा फैलियो । त्यसपछि हावाले ढालेको रूख र वज्रले ढालेको पर्वतझैं त्यो दैत्य भुइँमा पछारियो । केही बेरपछि आफ्नो बाएको मुखबाट रगतको बान्ता गर्दै सिन्धु दैत्यले प्राणत्याग गरेपछि त्यसको शरीर भुईंमा ढल्यो।।३२-३५।। भगवान् मयूरेशका प्रतापले सारा संसारले हेर्दाहेर्दै सिन्धु दैत्यले दुर्लभ मुक्तिधाम पनि प्राप्त गऱ्यो । श्रीगणेश र सिन्धुको युद्ध हेर्न आएका देवताका विमानहरू भुइँमा ओर्लिए र आकाशबाट पुष्पवृष्टि भयो । बादल गर्जन गर्न थाले, पृथिवीको धूलो शान्त भयो, मन्द एवं पवित्र पवन प्रवाहित हुन थाल्यो । दिशा निर्मल भए, गन्धर्व मधुरगान गर्न प्रवृत्त भए, अप्सराका समूह नाच्न थाले, मुनि एवं देवताले स्तुति गरे, हर्षित भएका षडानन आदि वीरहरूले समवेत स्वरमा मयूरेश भगवान्‌को जयकार गर्दै स्तुति गर्न लागे ।।३६-३९।।

**सबैले भने** - परब्रह्मस्वरूप, सच्चिदानन्दरूप, सदा आनन्दस्वरूप, देवताका स्वामी, परम ईश्वर, गुणका सागर, गुणदेखि अतीत र संसारका नियन्त्रक भगवान् मयूरेशलाई नमस्कार गर्दछौं ।।४०।। जगत्‌का वन्दनीय, एकस्वरूप,

जगद्वन्द्यमेकं परोङ्कारमेकं
गुणानां परं कारणं निर्विकल्पम्।
जगत्पालकं हारकं तारकं तं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः।।४१।।
महादेवसूनुं महादैत्यनाशं
महापूरुषं सर्वदा विघ्ननाशम्।
सदा भक्तपोषं परं ज्ञानकोशं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः।।४२।।
अनादिं गुणादिं सुरादिं शिवाया
महातोषदं सर्वदा सर्ववन्द्यम्।
सुरार्यन्तकं भुक्तिमुक्तिप्रदं तं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः।।४३।।
परं मायिनं मायिनामप्यगम्यं
मुनिध्येयमाकाशकल्पं जनेशम्।
असङ्ख्यावतारं निजाज्ञाननाशं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः।।४४।।
अनेकक्रियाकारणं श्रुत्यगम्यं
त्रयीबोधितानेककर्मादिबीजम् ।
क्रियासिद्धिहेतुं सुरेन्द्रादिसेव्यं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः ।।४५।।
महाकालरूपं निमेषादिरूपं
कलाकल्परूपं सदागम्यरूपम् ।
जनज्ञानहेतुं नृणां सिद्धिदं तं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः ।।४६।।
महेशादिदेवैः सदा सेव्यपादं
सदा रक्षकं योगिनां चित्स्वरूपम् ।
सदाकामरूपं कृपाम्भोनिधिं तं
मयूरेशमाद्यं नताः स्मो नताः स्मः ।।४७।।
सदा भक्तानां त्वं प्रसभपरमानन्दसुखदो
यतस्त्वं लोकानां परमकरुणामाशु तनुषे ।
षडूर्मीणां वेगं सुरवर ! सदा नाशय विभो !
ततो मुक्तिः श्लाघ्या तव भजनतोऽनन्तसुखदात्।।४८।।

ॐकारस्वरूप, गुणभन्दा पर वर्तमान, परम कारण, निर्विकल्प स्वरूप, जगत्का पालक, जगत्का तारक, जगत्का हर्ता, आद्य ईश्वर मयूरेशलाई बारंबार प्रणाम गर्दछौं ।।४१।। महादेवका सुपुत्र, महादैत्यका नाशक, महापुरुष, विघ्ननाशक, भक्तका पालक, परमज्ञानका कोश भगवान् मयूरेशलाई नमस्कार गर्दछौं ।।४२।। अनादिस्वरूप, गुणभन्दा पर रहनुभएका, देवताहरूका प्रथम देवता, पार्वतीलाई आनन्दप्रदान गर्ने सत्पुत्र, सर्वदा सबैद्वारा वन्दनीय, राक्षसका संहारक र भुक्ति एवं मुक्तिका दाता मयूरेशलाई बारंबार नमस्कार गर्दछौं ।।४३।। परम मायावी, मायावीहरूद्वारा अगम्य, मुनिहरूद्वारा ध्यान गर्न योग्य, आकाशभन्दा पनि व्यापक, प्राणीमात्रका ईश्वर, असङ्ख्य अवतारधारी र भक्तहरूको अज्ञानका नाशक मयूरेशलाई बारंबार नमस्कार गर्दछौं ।।४४।। अनेक क्रियाहरूका कारण, वेदद्वारा पनि जान्न नसकिने स्वरूपबाट शोभायमान, वेदद्वारा बताइएका उत्तम कर्मका आदिकारण, क्रियासिद्धिका मूल कारण र इन्द्रादि देवताद्वारा वन्दनीय भगवान् मयूरेशलाई बारंबार नमस्कार गर्दछौं ।।४५।। महाकालस्वरूप, निमेष; काष्ठा; कला आदिका रूप, सदा भक्तद्वारा प्राप्त गर्न सकिने सुन्दर स्वरूपले सुहाउनुभएका, मानिसको ज्ञानका कारण, भक्त र साधकहरूलाई सिद्धि प्रदान गर्नुहुने भगवान् मयूरेशलाई बारंबार नमस्कार गर्दछौं ।।४६।। महादेव आदि देवताहरूद्वारा सेवित, योगीहरूका रक्षक, चैतन्यस्वरूप, इच्छानुसार रूपधारण गर्न समर्थ र कृपाका सागर भगवान् मयूरेशलाई बारंबार नमस्कार गर्दछौं ।।४७।। हे भगवन् श्रीगणेश ! हजुर भक्तहरूका लागि परम आनन्द र सुखका दाता हुनुहुन्छ। हजुरले आफ्ना भक्तहरूमाथि परम करुणाको विस्तार गर्नुहुन्छ। हजुरले हाम्रा काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यजस्ता नराम्रा भावनाहरूको नाश गर्नुहोस् । त्यसपछि मात्र हामीले हजुरको अनन्तसुखदायक भजन गरेर मुक्ति प्राप्त गर्न सक्नेछौं। हे गजानन ! हामीले हजुरको के स्तुति गरौं ? हजुर मन, वचन र कर्मभन्दा पर हुनुहुन्छ । हामीले हजुरसँग के प्रेम गरौं ? हजुर आफै प्रेमका सागर हुनुहुन्छ । हामीसँग हजुरका गुणहरूको

किमस्माभिः स्तोत्रं गजवदन ! ते शक्यमतुलं
विधातुं वा रम्यं गुणनिधिरसि प्रेम जगताम् ।
न चास्माकं शक्तिस्तव गुणगणं वर्णितुमहो
त्वदीयोऽयं वारां निधिरिव जगत्सर्जनविधिः ।।४९।।

क उवाच

एवं स्तुत्वा पुनस्तेऽमुं प्रार्थयामासुरादरात् ।
यदुक्तं ते मयूरेश ! तत्कृतं परमं वचः ।।५०।।

सर्वेषां सुरसङ्घानामवध्योऽयं हतोऽसुरः ।
ततोऽगात् पार्वती तत्र जहृषे चालिलिङ्ग तम् ।।५१।।

शिवोऽपि प्रययौ तत्र समालिङ्ग्य तमब्रवीत् ।
सम्यक् कृतं त्वया वत्स ! त्रैलोक्यं हर्षनिर्भरम् ।।५२।।

सिन्धोर्वधः सर्वसुरैरसाध्यो न च ते श्रमः ।
पराक्रमवतः सर्वलोकरक्षारतस्य च ।।५३।।

चतुर्वेदाऽनिरूप्यस्य सर्वविद्यानिधेरपि ।
एवमुक्त्वा गतास्ते तु सर्वे स्वस्थानमादृताः ।।५४।।

मयूरेशं नमस्कृत्य ततो देवाब्रुवँश्च तम् ।
इदं यः पठते स्तोत्रं स कामाँल्लभतेऽखिलान् ।।५५।।

सहस्रावर्तनात् कारागृहस्थं मोचयेज्जनम् ।
अयुतावर्तनान्मर्त्योऽसाध्यं यत् साधयेत् क्षणात्।।५६।।

सर्वत्र जयमाप्नोति श्रियं परमदुर्लभाम् ।
पुत्रबान्धववाँश्चैव वशतामखिलं नयेत् ।।५७।।

क उवाच

एवमुक्त्वा ह्यनुज्ञाताः साध्वित्युक्त्वा ययुः सुराः ।
मयूरेशो गणैर्युक्तः स्वधाम प्रत्यपद्यत ।।५८।।

वर्णन गर्ने सामर्थ्य छैन । हजुरको संसारनिर्माण-पद्धति महासागरझैं अगम्य यद्वा दुस्तर रहेको छ ।।४८-४९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी षडानन आदि वीरहरूले भगवान् श्रीगणेशको स्तुति गरेपछि आदरपूर्वक प्रार्थना गरे - 'हे प्रभु ! हजुरले जुन आज्ञा दिनुभएको थियो त्यो आज्ञा पूरा गर्‍यौं । हजुरले पनि देवताहरूद्वारा अवध्य मानिएका असुरको वध गर्नुभयो ।' तिनीहरूको प्रार्थनापछि भगवती पार्वती श्रीगणेशका सामु आउनुभयो र हर्षपूर्वक आफ्ना प्यारा पुत्रलाई आलिङ्गन गर्नुभयो ।।५०-५१।। त्यस बेला शिवजी पनि त्यहाँ आउनुभयो र श्रीगणेशलाई आलिङ्गन गर्दै भन्नुभयो - 'हे पुत्र ! तिमीले तीनै लोकलाई हर्षको सागरमा डुबाउने उत्तम कर्म गर्‍यौ। सिन्धुको वध गर्ने काम देवताहरूद्वारा साध्य थिएन । तिमीले त्यसलाई सजिलैसँग मारिदियौ । किनकि तिमी पराक्रमका खानी छौ र सम्पूर्ण लोकका पालक पनि हौ । तिमी चारै वेदद्वारा बताइने तत्त्व हौ र सबै विद्याका निधि पनि हौ ।' यसरी आफ्ना उद्गार व्यक्त गरेर भगवान् शिवजी आफ्नो धामतर्फ जानुभयो र शिवगण पनि श्रीगणेशलाई नमस्कार गरी आ-आफ्ना धामतर्फ गए ।।५२-५४।। त्यसपछि देवताहरूले भने - 'जसले यो स्तोत्र पाठ गर्छ त्यसले सम्पूर्ण ईप्सित फल प्राप्त गर्दछ । यो स्तोत्रलाई एक हजारपटकसम्म पाठ गर्ने साधकले कारागारमा रहेको बन्दीलाई पनि छुटाउन सक्छ। दश हजारपटक आवृत्ति गर्ने मानिसले आफूले चिताएका सम्पूर्ण कामनाहरूको फल प्राप्त गर्दछ, सर्वत्र विजयलाभ गर्दछ, परम दुर्लभ लक्ष्मीलाई प्राप्त गर्दछ, पुत्रवान् एवं धनवान् बन्दछ र सबैलाई आफ्नो अधीनमा तुल्याउन समर्थ हुन्छ ।।५५-५७।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी प्रार्थना र स्तोत्रको फल बताएपछि देवताहरू श्रीगणेशबाट आज्ञा प्राप्त गरी जय-जयकार गर्दै आ-आफ्ना धामतर्फ लागे । भगवान् श्रीगणेश पनि आफ्ना गणहरूका साथ श्रीगणेशधाममा जानुभयो ।।५८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिन्धुवधो नाम त्रयोविंशत्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीमयूरेश्वरद्वारा दैत्यराज सिन्धुको वध र सर्वत्र जय जयकार' शीर्षकान्वित एक सय तेईसौं अध्याय पूर्ण भयो ।।१२३।।

ॐ

## चतुर्विंशत्युत्तरशततमोऽध्याय:　　　{ १२४ अध्याय }

क उवाच

पतिते सिन्धुदैत्ये तु हतशेषा रणे स्थिता: ।
आययुर्गण्डकीं यावत् तावत् ते चिन्तया युता: ।।१।।

उग्रा दुर्गा चक्रपाणिरतिष्ठन् विह्वला भृशम् ।
तावत् तेषां दुष्टचिह्नं बभूव विविधं तदा ।।२।।

उदक्शिरा: प्रसुष्वाप कश्चित् तत्राशुभावह: ।
जानुनोर्मस्तकं न्यस्य तस्थौ तूष्णीं चलन्निव ।।३।।

हनौ पाणितलं न्यस्य तस्थौ काचिन्मुदं विना ।
एतस्मिन्नन्तरे दूता यमदूता इवाययु: ।।४।।

अतिम्लानमुखा दीना नाब्रुवन् मूकतां गता: ।
पृष्टास्ते प्राहुरपरे वृत्तान्तं रणभूगतम् ।।५।।

दूता ऊचु:

असङ्ख्यातान् महावीरान् हत्वा सिन्धुर्दिवं गत: ।
बालानस्मान् परित्यज्य तेन हीना रुदामहे ।।६।।

निरीक्ष्य देवान् निहतान् क्रुद्धोऽगाद् गिरिजासुत: ।
अस्त्रैरस्त्राणि संवार्य मुमोच परशुं शितम् ।।७।।

तेन सिन्धुर्मृतस्तत्र पतितो धरणीतले ।
मुमूर्च्छुस्तत्र सर्वेऽपि तदीया नागराश्च ह ।।८।।

श्रुत्वा वार्तां दूतमुखाद् रुरुदु: सर्व एव ते ।
विललापाथ दुर्गा सा जघान शिर उत्कटम् ।।९।।

मुक्तकेशा मुहुर्वक्त्रं निघ्नती गतभूषणा ।
उग्रा च जननी चास्य चक्रपाणि: पिता तदा ।।१०।।

पौराश्च रुरुदुस्तत्र निघ्नन्त: पाणिना मुखम् ।
अवनौ शिर आस्फाल्य लुलुण्ठुर्घोरनिस्वना: ।।११।।

**ब्रह्माजीले भन्नुभयो-** सिन्धु दैत्यको मृत्युपछि युद्धभूमिबाट बाँचेर फर्केका चिन्तित योद्धाहरू गण्डकीपुरीमा आइपुग्दा उग्रा, दुर्गा र चक्रपाणि व्याकुल अवस्थामा थिए । ती सबैले अनेक नराम्रा लक्षण देखिरहेका थिए ।।१-२।। तिनीहरूको दृष्टिमा कुनै अमङ्गलजनक मानिस उत्तरतिर शिर गराई सुतिरहेको थियो । कुनै मानिस दुई घुँडाको बीचमा टाउको राखेर मौन भई चलायमान अवस्थामा थियो । कुनै आइमाई च्यूँडोमा हात राखी अप्रसन्न मुद्रामा बसेकी थिई । त्यस बेला यमदूतझैं लाग्ने दैत्यराजका दूतहरू त्यहाँ आइपुगे। ती दूतहरू मलिन, निस्तेज, कान्तिहीन र केही बोल्न नसक्ने लाटाजस्ता देखिएका थिए । अरूद्वारा सोधिएका ती दूतहरूले युद्धभूमिको वृत्तान्त बताए ।।३-५।।

**दूतहरूले भने -** देवतापक्षका असङ्ख्य महावीरहरूलाई रणभूमिमा मारेर दैत्यराज सिन्धु हामीजस्ता बालकहरूलाई असहाय अवस्थामा छाडी दिवङ्गत हुनुभएको छ । त्यसै पीरले हामी रोइरहेका छौं ।।६।। देवताहरूलाई मरेको देखेर रिसाएका श्रीगणेशले आफ्ना अस्त्रले सिन्धुराजका अस्त्र काटेपछि तीखो धार भएको बञ्चरो प्रहार गरे ।।७।। त्यसै बञ्चरोबाट आक्रमण गरिएका दैत्यराजले रणभूमिमा पछारिएर वीरगति प्राप्त गर्नुभयो। दूतका मुखबाट सिन्धुले वीरगति प्राप्त गरेको समाचार थाहा पाएर त्यहाँका सबै नागरिक र दरबारका बन्धु-बान्धवसमेत रुन थाले । रानी दुर्गा विलाप गर्न थालिन् र तिनले भुइँमा बेसरी आफ्नो टाउको ठोकिन् ।।८-९।। तिनका केश खुला थिए, शरीरका गहना र वस्त्र अस्त-व्यस्त भई खसेका थिए । तिनीले आफ्ना दुई हातले आफ्नै मुखमा प्रहार गरिरहेकी थिइन् । सिन्धुकी माता उग्रा, पिता चक्रपाणि र नगरवासीहरू पनि दु:खित भई आफ्ना हातले टाउका, गाला र छातीमा प्रहार गरी भुइँमा शिर ठोक्दै घोर क्रन्दनका साथ लडिबुडी गरिरहेका थिए ।।१०-११।। सिन्धुको मृत्युसमाचारले दु:खित भएको

कश्चिद् धूलिं निचिक्षेप मुखे शिरसि दु:खित: ।
हस्तपृष्ठं ददंशान्यस्ताभ्यां भूमिमथाहनत् ।।१२।।
अशपन् गिरिजापुत्रं स्त्रियो भङ्क्त्वा कराङ्गुली: ।

उग्रोवाच

नानायत्नैस्तपसा सूर्यतुष्ट्या
नत्या स्तुत्या लङ्घनै: सर्वदानै:।
प्रात:कालान् मा हतस्त्वं कथञ्चि-
च्छूरो मानी केन नीतोऽसि रे त्वम्।।१३।।

त्रिलोकनायकेनाऽहं श्लाघ्या त्रैलोक्यमण्डले ।
शपिष्यन्ति च मां लोका हतभाग्याऽसि साम्प्रतम्।।१४।।

जित: कृतान्त: पूर्वं ते कथं तेन समागम: ।
प्राप्तस्त्वया कथं पुत्र ! न जित: पुरनेव स: ।।१५।।

सकामो गिरिजापुत्रस्त्वयि याते दिवं सुत ! ।
मामपृष्ट्वा कथं यात: स्वर्गलोकं सुखावहम् ।।१६।।

दु:खितायां मयि सुत ! कथं सन्तोषमेष्यसि ।
गर्जन्ति नैव जीमूतास्त्वयि गर्जति पुत्रक ।।१७।।

नि:शब्द: स कथं पुत्र ! पतितस्त्वं रणाङ्गणे ।

दुर्गोवाच

देहैक्यं कृतवान् धाता दम्पत्योर्वेददर्शनात् ।।१८।।

प्राणैक्यं न कृतं कस्माद् ब्रह्मणा मूढबुद्धिना ।
नाहं शचीं च सावित्रीं सौभाग्यमदगर्विता ।।१९।।

गणयामि न चान्याश्च सा कथं विधवाऽभवम् ।
स्वहस्तेन च कस्तूरीं चन्दनञ्च यदा भवान् ।।२०।।

कुनै पुरवासी मानिसले आफ्नो मुखमा धूलो भरिरहेको थियो, कुनै अर्को पुरवासीले आफ्नै हातमा दाँतले टोक्दै र त्यो हातलाई भुइँमा ठोक्दै विलाप गरिरहेको देखियो ।।१२।। दैत्यपक्षका नारीहरूले आफ्ना हातका औँला भाँची–भाँची श्रीगणेशलाई सरापिरहेका थिए ।

माता उग्राले भनिन् – 'प्रतिदिन बिहानैदेखि नै अनेक यत्नपूर्वक तपस्या, सूर्याराधना, देववन्दना, देवस्तुति, उपवास र अनेक थरि दानजस्ता कर्महरूका कारण कसैद्वारा पनि आजसम्म आहत नभएका हे शूर एवं स्वाभिमानी मेरा छोरा सिन्धु! तिमीलाई कसले कसरी मान्यो र कहाँ लिएर गयो ?'।।१३।। हे पुत्र ! तिमीजस्ता त्रिलोकका नायक पुत्रकी आमा भएका कारण स्वर्ग, मर्त्य र पातालमा मेरो प्रशंसा हुन्थ्यो। अब ती लोकका बासिन्दाहरूले मलाई भाग्य नभएकी आमा भनेर निन्दा गर्नेछन् ।।१४।। हे पुत्र ! तिमीले पहिले नै युद्धमा यमराजलाई परास्त गरेका थियौ, अहिले ती यमसँग कसरी भेट भयो ? किन हार्‍यौ ? त्यसलाई फेरि किन जित्न सकेनौ ?।।१५।। हे पुत्र ! तिमी दिवङ्गत भएपछि पार्वतीको छोरा श्रीगणेशको कामना पूरा भएको छ । हे पुत्र ! तिमी मसँग कुनै सोधपुछ नगरी किन एक्लै सुखदायक स्वर्गमा गयौ ?।१६।। म यहाँ तिम्रो बिरहले दु:खी भएर रहँदा तिमी स्वर्गको सुख पाएर पनि कसरी सन्तुष्ट हुन सक्छौ ? हे छोरा ! तिमी गर्जदा बादलहरूको गर्जन बन्द हुन्थ्यो ।।१७।। हे पुत्र ! आज तिमी नि:शब्द भएर रणाङ्गणमा किन सुतिरहेका छौ ?'

दुर्गाले भनिन् – विधाताले वेदको अध्ययन गरी हामी दम्पतीको शरीरको एकता अथवा सम्बन्ध गराए ।।१८।। तर मूढ बुद्धि भएका विधाताले हामी दुबैका प्राणहरूलाई एउटै किन बनाएनन् ? प्राणमा एकता गरिएको भए आज हामी दम्पती सँगै स्वर्ग जाने थियौँ । सौभाग्यको स्वाभिमानले दिप्त भएर रहेकी मैले कहिले पनि इन्द्राणी, सावित्री र अरू पतिव्रता नारीहरूलाई पनि आफूसमान भाग्यवती ठानिनँ । तर आज मलाई विधवा हुनुपर्‍यो । हे स्वामी ! हामी दुई दम्पतीको प्रीतिपूर्ण सहवासकालमा हजुरले आफ्ना हातले मेरा अङ्गहरूमा कस्तूरी र चन्दनको लेप घसिदिनुहुन्थ्यो र मेरा कामसन्तप्त अङ्गहरू शीतल भएर आउँथे । हे पतिदेव !

चर्चिति स्म तदाङ्गानि शीतलानि ममाऽभवन् ।
इदानीं दह्यमानानि शोकेन तानि निर्वप ।।२१।।

न भक्षयसि पूर्वं त्वं मद्विना विषमण्वपि ।
स कथं मां विना स्वर्गसुखं भोक्ष्यसि तादृशम् ।।२२।।

अपराधं विना भृत्ये नोदासीना भवन्ति हि ।
साधवः समशीलाश्च तत् कथं मामुपेक्षसे ।।२३।।

उपाधिरहितं प्रेम कृतं नानाविधं पुरा ।
अनिर्वाच्यं कथं त्यक्त्वा तद् गतोऽसि सुरान्तक।।२४।।

क उवाच

तपोवृद्धा ज्ञानवृद्धाः प्राब्रुवन् निष्ठुरं वचः ।
न रोदनं प्रशंसन्ति धर्मशास्त्रविदो जनाः ।।२५।।

यदश्रु सुहृदामास्ये प्रेतस्य तत्पतेद् ध्रुवम् ।
तस्मात् तस्य हितं यत् स्यात् तत् कर्तव्यं दयावता।।२६।।

विचार्यमाणे तस्यापि मोक्षोऽदायि कृपावता ।
निर्गुणेन चिदानन्दघनेन ब्रह्मरूपिणा ।।२७।।

दयापरवशाज्जन्म बिभ्रता लोकशङ्कृता ।
मयूरेशेन सङ्ग्रामे निघ्नता सम्मुखञ्च तम् ।।२८।।

आत्मनो नैव मरणं नोत्पत्तिः क्वापि विद्यते ।
अनादित्वान्निर्गुणत्वान्नित्यत्वाद् वेदनिश्चयात् ।।२९।।

स्वार्थं हि रोदते जन्तुर्हितं प्रेतस्य नेहते ।
असङ्ख्यभारवाड् देवी न भारं सहते धरा ।।३०।।

प्रेतस्य शेषः कमठो वराहोऽसौ धराधरः ।
इत्युक्त्वा ते तदा शोकं विजहुर्बुधवाक्यतः ।।३१।।

उग्रा च चक्रपाणिश्च दुर्गा च सखीभिः सह ।
नागराश्चापि शोचन्तो ययुः सङ्ग्राममण्डलम् ।।३२।।

ददृशुः सेवकैः सिन्धुं वीज्यमानं रणाङ्गणे ।
पतितं वक्त्रकमलं व्यादाय सितलोचनम् ।।३३।।

अहिले मेरा ती अङ्ग फेरि सन्तप्त भएका छन् । हजुर आउनुहोस् र त्यसैगरी कस्तूरी र चन्दनको लेप घसेर मेरो सन्तापलाई शान्त तुल्याउनुहोस् ।।१९-२१।। हे पतिदेव ! पहिले तपाईंले म नभएसम्म एक थोपा पानी पनि एक्लै खानुहुँदैनथ्यो । अहिले म नहुँदा ती स्वर्गका सुख कसरी भोगिरहनुभएको छ ?।।२२।। समान शील र आचार भएका सज्जनहरू आफ्ना सेवकहरूमा विना अपराध उदासीन हुँदैनन्, तर हजुरले किन मेरो उपेक्षा गर्नुभयो ? हे मेरा स्वामी ! हजुरले मसँग कुनै स्वार्थको गन्ध नभएको अनिर्वचनीय प्रेम गरेर आज मलाई किन एक्लै छाडेर जानुभयो ?।।२३-२४।।

**ब्रह्माजीले भन्नुभयो** – त्यस बेला त्यहाँ भेला भएका तपोवृद्ध र ज्ञानवृद्ध पुरुषहरूले यथार्थ कुरा गर्दै भने – 'धर्मशास्त्र जानेका मानिसले रुने कामलाई राम्रो मान्दैनन् । मृत मानिसका आफन्तहरूले आँसु बगाउँदा त्यो आँसु निश्चित रूपमा मृतकका मुखमा पर्दछ । त्यस कारण तिनीहरूको हितका लागि आफन्तहरूले दयावान् भएर संयमी बन्नुपर्दछ ।।२५-२६।। राम्ररी विचार गर्ने हो भने निर्गुण, चिदानन्दघन, ब्रह्मस्वरूप, कृपालु र भक्तहरूमाथि दया जागेर अवतार धारण गर्नुहुने, लोकशङ्कर र हाम्रा राजा सिन्धुलाई सङ्ग्राममा वीरगति दिलाउनुहुने भगवान् श्रीगणेशले मोक्ष प्रदान गर्नुभएको छ। त्यस कारण चिन्ता गर्ने आवश्यकता छैन । आत्मतत्त्व कहिले उत्पन्न हुँदैन र मर्दैन पनि । वेदको भनाइअनुसार त्यो आत्मतत्त्व अनादि, निर्गुण र नित्य छ । असङ्ख्य प्राणीहरूको भार वहन गर्ने पृथिवीले प्रेतहरूको भार सहन गर्दिनन् । तर कछुवा, शेषनाग र वराहले ती पृथिवीलाई पनि धारण गर्दछन् ।' यसरी सम्झाएर वृद्धहरू चुप लागे । आफन्तहरूले पनि तिनका कुरा सुनेर शोक परित्याग गरे । त्यसपछि चक्रपाणि, उग्रा र सँगिनीहरूका साथ रहेकी दुर्गा र नगरवासीहरू पनि सिन्धुको शव हेर्न संग्रामभूमितर्फ गए।।२७-३२।। ती सबैले मुख खुला गराई सेता आँखा पल्टाएर भुइँमा लडेको, सैनिकहरूद्वारा चामर हम्केर सेवा गरिएको, मुखबाट दुर्गन्धमय रगत बगाइरहेको र गिद्ध एवं स्यालजस्ता प्राणीहरूले घेरिएको सिन्धुको शव देखे।

असृक्स्रवन्तं दुर्गन्धं पक्षिश्वापदसङ्कुलम् ।
उपविष्टास्तु परितः शोचन्तो भृशदुःखिताः ।।३४।।
अङ्के कृत्वा शिरस्तस्य दुर्गाऽशोचत् खरस्वना ।
पादसंवाहनं नाथ ! हस्ताभ्यां पूर्वमाचरम् ।।३५।।
जनमध्ये न तच्छक्यमुत्तिष्ठ प्राणनायक ! ।
शत्रौ जीवति निद्रां त्वं कथं वीराधिगच्छसि ।।३६।।

तन्मुखे स्थापयित्वास्यं हाहाकारञ्च साऽकरोत् ।
न्यषेधन् बुधविज्ञास्तां तत उग्राऽब्रवीद् वचः ।।३७।।
चक्रपाणिः पिता चास्य क्षालयन्तौ शुशुचतुः ।
उत्तिष्ठ वत्स ! किं शेषे शेषे रिपुगणे सति ।।३८।।
वज्रिवज्राहत इव पतितो धरणीतले ।
इदानीं बाल ! युद्धे त्वं कथं निपतितो भुवि ।।३९।।
जितः कृतान्तो भ्रूक्षेपात् तद्वशं कथमागतः ।
किञ्चिद् वाक्यं वद विभो ! हृदयानन्दकारकम् ।।४०।।
यस्य शब्देन त्रैलोक्यं कम्पते स्म पुराऽनघ !।
कथं स्ववचनं नाद्य वदसे मन्दविक्रम ।।४१।।
नावाभ्यामपराद्धं ते येन मौनं त्वमाश्रितः ।
न भाषसे रोषवशात् सेनाशेषसमन्वितः ।।४२।।
कथं विह्वलतां यातः कामं यो जितवान् रुचा ।
ततो विज्ञाश्च वृद्धाश्च नानादृष्टान्तदर्शनैः ।।४३।।
समादध्युः प्ररुदतो मृतानुमरणं न हि ।
रामो दाशरथिः किं नु लोकान्तरगतो न हि ।।४४।।
विक्रमेण रिपुं जित्वा गतः किं न रघूत्तमः ।
अन्येऽपि शतशो भूपास्त्वत्कृते मरणं गताः ।
कीर्तिं नानाविधां कृत्वा स्वर्गस्थाः सुखमश्नुते ।।४५।।

क उवाच

ततस्ते सँस्कृतिं चक्रुर्बिल्वचन्दनदारुभिः ।
दुर्गा सहैव संयाता पातिव्रत्यगुणान्विता ।।४६।।

त्यसपछि ती सबै आफन्त वरिपरि बसेर चिन्ता गर्न लागे । आफ्ना पतिको लाश काखमा राखेर क्रन्दन गरिरहेकी दुर्गाले विलाप गर्दै भनिन् - 'हे नाथ ! मैले आफ्ना हातहरुले हजुरका पाउ दबाएकी थिएँ । अहिले पनि म हजुरका पाउ दबाउन चाहन्छु । तर यतिका मानिसहरूको बीचमा मलाई लाज लाग्छ। कृपया उठ्नुहोस् । हे वीर ! हजुरका शत्रु जीवित छन्। हजुर किन निदाउनुभएको छ ?'।।३३-३६।। यसरी विलाप गर्दै महारानी दुर्गाले सिन्धुको मुखमा आफ्नो मुख जोडेर हाहाकार गरिन् । वृद्ध र विज्ञहरूले त्यसो नगर्न सम्झाए । उग्रा र चक्रपाणिले आफ्ना आँसुले सिन्धुको मुख पखाल्दै शोकमुद्रामा भने - 'हे बाबु ! उठ । शत्रु बाँकी छन्, तिमी सुत्नु हुँदैन । इन्द्रको वज्रबाट आहत पर्वतझैं किन लडिरहेका छौ ? अहिले तिमी एउटा बालकसँग किन हार्‍यौ ? तिमीले त कुनै दिन आँखीभौं घुमाएरमात्र यमराजलाई जितेका थियौ ? आज यमका वशमा कसरी पर्‍यौ ? हे पराक्रमी पुत्र ! केही त मनलाई आनन्द दिने वचन बोल । हे निष्पाप पुत्र! पहिले तिम्रो शब्दबाट त्रिलोकी नै काँप्दथ्यो, आज त्यस्तो शब्द किन बोल्दैनौ ?।।३७-४१।। हे बाबु ! हामी वृद्ध बाबु-आमाले केही अपराध नगर्दा पनि तिमी हामीसँग नबोली किन मौन भएका छौ ? तिम्रो सेना अझै बाँकी छ। हे बाबु ! तिमीले आफ्नो सौन्दर्यबाट कामदेवलाई पनि जितेका थियौ। आज युद्धमा किन विह्वल भयौ र शत्रुलाई परास्त गर्न सकेनौ?' यसरी आमा-बाबुले विलाप गरिरहँदा विज्ञ र वृद्धजनहरूले अनेक दृष्टान्त देखाएर चक्रपाणि र उग्रालाई भने - 'जति रोए पनि मरेका प्राणीको पछि लागेर बाँचेका मानिसले आफ्नो दुर्दशा गराउनु हुँदैन । दशरथका छोरा प्रतापी श्रीराम के पराक्रमबाट शत्रुलाई जितेपछि लोकान्तरमा पुग्नुभएन ? अरू हजारौं राजाहरू पनि तपाइँहरूका लागि युद्धमा लड्ने क्रममा वीरता देखाएर वीरगति प्राप्त गरी यशस्वी भएका छन् । ती आज स्वर्गमा सुखभोग गर्दैछन्।।४२-४५।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि ती सबै आफन्तहरूले बेल र चन्दनका काठ जम्मा गरी दैत्यराज सिन्धुको अन्तिम संस्कार सम्पन्न गरे । पतिव्रताहरूमा शिरोमणि महारानी दुर्गा सती गइन् । दाहसंस्कारपछि पुरवासीहरूसहित सिन्धुका पिता

ततो ययौ मयूरेशं चक्रपाणिः सनागरः ।
नमस्कृत्य प्रतुष्टाव बद्धाञ्जलिपुटः शनैः ।।४७।।

राजोवाच

निर्गुणस्त्वं परात्मासि चराचरगतिर्विभो !।
त्रयीगम्यो गुणाध्यक्षो विरजा विश्वनायकः ।।४८।।

तवैव मायया देवा मोहितास्त्वां न ते विदुः ।
अहं धन्यो नागरिका धन्यास्त्वद्दर्शनाद् विभो ।।४९।।

क उवाच

एवं तेन स्तुतो देवः करुणाब्धिर्मयूरराट् ।
उवाच परमप्रीतः सर्वशास्त्रार्थतत्त्ववित् ।।५०।।

देव उवाच

वरं वरय मत्तस्त्वं चक्रपाणे ! हतार्भक !।

राजोवाच

यदि तुष्टोऽसि देवेश यदि देयो वरो मम ।।५१।।

तदा गृहानुपागच्छ पुनीहि नगरीमिमाम् ।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं बर्हिणं स समारुहत् ।।५२।।

ययौ स नगरं पश्चात् त्र्यम्बको गिरिजायुतः ।
अग्रतस्ते गणाः सर्वे मुनयो हर्षनिर्भराः ।।५३।।

वाद्यत्सु सर्ववाद्येषु ययुस्ते गण्डकीं पुरीम् ।
नानाध्वजपताकाभिर्युतां संसिक्तपद्धतिम् ।।५४।।

चक्रपाणिले भगवान् श्रीगणेशका सामु गई हात जोडेर प्रणाम गरी प्रार्थना गर्दै भने - 'हे भगवन् ! हजुर निर्गुण परमात्मा हुनुहुन्छ, चर एवं अचरका अन्तिम गन्तव्य हुनुहुन्छ, वेदद्वारा मात्र हजुरको अनुमान गर्न सकिन्छ, हजुर तीन गुणका स्वामी हुनुहुन्छ, पापमुक्त र गुणमुक्त पनि हुनुहुन्छ। हे प्रभु ! हजुर विश्वका नायक हुनुहुन्छ। हजुरको मायाबाट मोहित भएका देवताहरूले हजुरलाई राम्ररी जान्न सक्दैनन्। हे अन्तर्यामी ! आज म र मेरा प्रजाहरू हजुरको दर्शन पाएर धन्य भएका छौं' ।।४६-४९।।

**ब्रह्माजीले भन्नुभयो** - चक्रपाणिद्वारा प्रार्थना गरिनुभएका भगवान् करुणासागर मयूरेशले प्रसन्न भई भन्नुभयो।

**श्रीगणेशले भन्नुभयो** - हे चक्रपाणि ! म तिमीसँग प्रसन्न छु, वर माग ।

**चक्रपाणिले भने** - 'हे देवताका अधिपति ! हजुर मसँग सन्तुष्ट हुनुहुन्छ र मलाई वर दिन चाहनुहुन्छ भने मेरो घरमा पाल्नुहोस् र मेरो नगरलाई पवित्र बनाइदिनुहोस् ।'

**ब्रह्माजीले भन्नुभयो** - चक्रपाणिको प्रार्थना सुनेर भगवान् श्रीगणेश मयूरमा सवार भई तिनको राजधानी गण्डकीपुरीमा जानुभयो । उहाँका पछिपछि भगवती पार्वती र भगवान् शङ्कर पनि जानुभएको थियो । श्रीगणेशका अगाडि उहाँका गणहरू प्रसन्न मुद्रामा प्रस्थान गरेका थिए ।।५०-५३।। वाद्यघोषका साथ भगवान् श्रीगणेशलगायत सबै देवताहरू अनेक ध्वजा-पताकाले सिँगारिएको सफा, सुन्दर र जलद्वारा पखालिएको राजमार्ग र उपमार्गद्वारा सजिएको गण्डकी नगरीमा पुग्नुभयो ।।५४-५५।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिन्धुनिरुद्धदेवगणमोचनं नाम चतुर्विंशत्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको गण्डकीनगरमा प्रवेश र बन्दी देवगणहरूको कारामोचन' शीर्षकान्वित एक सय चौबीसौं अध्याय पूर्ण भयो ।।१२४।।

ॐ

## पञ्चविंशत्युत्तरशततमोऽध्याय: { १२५ अध्याय }

क उवाच

सभां संवारयामास चक्रपाणि: परो गत: ।
महार्घ्यांस्तरणैर्वस्त्रै: पताकाध्वजचामरै: ।।१।।

नानारत्नेषु दीप्तेषु भूमिस्तम्भगतेषु च ।
अनन्तो दृश्यते यत्र सङ्क्रान्तप्रतिमो नर: ।।२।।

ददर्श नगरीं देवो नानाध्वजविराजिताम् ।
प्रासादशिखरारूढा: पश्यन्ति स्माऽसुरस्त्रिय: ।।३।।

ततो मुक्ता: सुरास्ते तं सम्मुखं चक्रपाणिना ।
आययुर्माधव: शक्रोऽनल ऐलविलोऽपि च ।।४।।

चन्द्र रवि: शची चान्ये वाद्यघोषेण सत्वरम् ।
स्वस्ववाहात् समुत्तीर्य प्रणेमु: सर्व एव तम् ।।५।।

आलिलिङ्गुर्मयूरेशं देवा: पौराश्च सादरम् ।
माधवश्च मयूरेशं दृष्ट्वा हर्षसमन्वित: ।।६।।

प्रशशंसु: सिन्धुवधात् सर्वे हर्यादय: सुरा: ।

देवा ऊचु:

आक्रान्तं विष्टपं येन स हत: क्षणमात्रत: ।।७।।

स्थानानि स्वपदान्याशु नेदृग्दृष्टो न वा श्रुत: ।
अत्र ये वैष्णवा: शैवा: शाक्ता: सौराश्च तेऽप्यमुम् ।।८।।

तत्तद्रूपं निरीक्ष्यैव पुपूजु: परया मुदा ।
मयूरेश जयस्वेति श्रुत्वा वाच: सुविस्मिता: ।।९।।

बालकाश्च सुसम्पन्ना मुग्धा: प्रौढाश्च योषित: ।
पुपूजुर्मनसा देवं वृद्धाश्च तरुणास्तदा ।।१०।।

चक्रपाणिगृहे देवो मध्ये सिंहासने शुभे ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशबाट गण्डकी पुरी आउने वचन पाएपछि खुसी भएका चक्रपाणि भगवान् जानुमन्दा पहिले त्यहाँ पुगिसकेका थिए । त्यहाँ तिनले आफ्नो राजसभालाई बहुमूल्य वस्त्र, ध्वजा-पताका, चामर आदिद्वारा सजाए । राजसभाका भुइँ र स्तम्भहरूमा जडित रत्नहरूमा प्रतिबिम्बित एउटा मानिस अनन्तरूपको देखिन्थ्यो । भगवान् श्रीगणेश त्यहाँ पुग्नुभयो र ध्वजा-पताकाले सुन्दर नगरीलाई नजर गर्नुभयो । राजभवनको शिखरमा सवार दैत्यसुन्दरीहरूले भगवान् श्रीगणेशको यात्रा नजर गरिरहेका थिए ।।१-३।। श्रीगणेशको प्रेरणाले चक्रपाणिद्वारा कारागारमा थुनिएका देवताहरू मुक्त भए। भगवान् नारायण, इन्द्र, कुबेर, वायु, सूर्य, चन्द्र र अरू पनि वाद्यघोषका साथ भगवान्का सामु आइपुगे । ती सबैले आफ्ना वाहनबाट ओर्लेर भगवान्लाई प्रणाम गरे ।।४-५।। देवता र पुरवासीहरूले श्रीगणेशलाई आदरपूर्वक अङ्कमाल गरे । भगवान् विष्णु मयूरेश श्रीगणेशलाई देखेर प्रसन्न हुनुभयो ।।६।। त्यसपछि नारायणादि देवताहरूले सिन्धुको वध गर्नुभएका कारण खुसी भई श्रीगणेशको प्रशंसा गरे ।

**देवताहरूले भने** - 'जसले एकछिनमा स्वर्गमा आक्रमण गर्‍यो त्यस सिन्धुलाई श्रीगणेशले तत्काल मारिदिनुभयो। त्यसले थुनेका देवताहरूलाई पनि आ-आफ्ना पदमा स्थापित गर्नुभयो। यस्तो घटना देखिएको र सुनिएको पनि थिएन। त्यहाँ रहेका शैव, वैष्णव, सौर र शाक्त सम्प्रदायका उपासकहरूले पनि भगवान् श्रीगणेशको स्वरूपमा आ-आफ्ना आराध्य भगवान् अथवा भगवतीको रूप दर्शन गरी आनन्दका साथ पूजा गरे। भगवान् श्रीगणेशको जय होस् ! यस प्रकारको जय-जयकार वाणी सुनेर त्यहाँका बाल-बालिका चकित भए भने प्रौढ नारीहरू मुग्ध भए। वृद्ध र तरुणहरूले पनि भगवान् श्रीगणेशको दर्शन पाएर पूजा-अर्चना गरे ।।७-१०।। श्रीगणेश चक्रपाणिको राजसभाको मध्यभागमा रहेको मङ्गलमय सिंहासनमा विराजमान हुनुभयो। उहाँका वरिपरि

उपविष्टो मयूरेशो विबुधाश्च समन्ततः ।
मुनयश्च गणाः सर्वे सप्तकोटिमिता मुने ।।१२।।

नुनुवुर्बन्दिनः सर्वे धन्या देवा नृपास्तथा ।
ननृतुश्चाप्सरःसङ्घा जगुस्ते नारदादयः ।।१३।।

चक्रपाणिस्ततः सर्वान् सम्पूज्य विधिवत् तदा ।
उवाच च सभामध्ये धन्यं मे जन्म कर्म च ।।१४।।

इन्द्रादयो लोकपालाः समितौ यस्य मेऽधुना ।
शतजन्मार्जितैः पुण्यैर्मयूरेशो निरीक्षितः ।।१५।।

क उवाच

इन्द्रो दृष्ट्वा मयूरेशं प्रथमं पूजितं रुषा ।
अब्रवीत् सहसा भ्रान्तो मायया जगदीशितुः ।।१६।।

शक्र उवाच

चतुर्मुखोऽपि लक्ष्मीशो जगदुत्पत्तिकारकः ।
मूढोऽसि चक्रपाणे ! त्वमर्भकस्य प्रपूजनात् ।।१७।।

अस्मान् धिक्कृत्य यन्मोहात् पूजितो बालकस्त्वया ।
जनकं सर्वलोकानां त्यज्य संहारकारकम् ।।१८।।

त्रैलोक्यजननीमम्बां सृष्टिस्थित्यन्तकारिणीम् ।
रविं त्रैलोक्यनेतारं त्रयीकर्मप्रवर्तकम् ।।१९।।

हित्वा सम्पूजितो बालो नेदं सम्यक् कृतं त्वया ।।२०।।

क उवाच

एवं वदति देवेन्द्रे चक्रपाणिस्तदाऽब्रवीत् ।
रुद्रात् सूर्यात् कुबेराच्च शक्राच्च मरुतोऽनलात्।।२१।।

दृष्टः पराक्रमोऽतीव सिन्धुदैत्यविनाशनात् ।
मोक्षात् सर्वसुराणाञ्च कारागाराद् गुणेश्वर ।।२२।।

योऽवतीर्णो भुवो भारं हर्तुं शिवनिवेशने ।
परमात्माऽनन्तशक्तिर्नानादैत्यविभञ्जनः ।।२३।।

क उवाच

एवं वदति तस्मिँस्तु श्रुतः शब्दः सुरैर्महान् ।
मूर्च्छिताः पतिताः केचिद् ब्रह्माण्डस्फोटशङ्कया।।२४।।

विद्वान्, ऋषि र देवताहरूका साथै सात करोड शिवगण पनि विराजमान थिए। दर्शन पाएर धन्य भएका कारामुक्त देवगण र राजगणले पनि भगवान्‌को स्तुति गरे । अप्सराहरू नाचे र नारद आदि ऋषिहरू मङ्गलगानमा प्रवृत्त भए।।११-१३।। राजा चक्रपाणिले सबैको विधिवत् पूजा गरेपछि सभाको बीचमा गएर भने- आज मेरा जन्म र कर्म धन्य भएका छन्। मेरो सभामा इन्द्र आदि लोकपाल विराजमान हुनुहुन्छ र सय जन्मका पुण्यले मैले भगवान् श्रीगणेशको दर्शन पाएको छु ।।१४-१५।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशको मायाबाट मोहित इन्द्र श्रीगणेशको प्रथमपूजा भएको देखेर रिसाए ।

**इन्द्रले भने** – ब्रह्मा, नारायण र शङ्कर संसारका स्रष्टा, पालक र संहारक हुनुहुन्छ। हे चक्रपाणि ! ब्रह्मा आदि देवता र हामीजस्ता देवताहरूका राजा हुँदाहुँदै हाम्रो तिरस्कार गरी बालक श्रीगणेशको पूजा गरेर तिमीले मूर्खता देखाएका छौ। संसारका पिता ब्रह्मा, पालक विष्णु, संहारकर्ता शिव, सृष्टि-स्थिति र संहारकी स्वामिनी जगदम्बा पार्वती, त्रिलोकीका नायक र वैदिक कर्मका प्रवर्तक सूर्यलाई समेत छोडेर तिमीले बालकको पूजा गर्‍यौ। तिमीबाट यो साह्रै अनुचित कार्य भएको छ।।१६-२०।।

**ब्रह्माजीले भन्नुभयो** - इन्द्रले रिसाएर श्रीगणेशको प्रथमपूजाको विरोध गरेपछि चक्रपाणिले भने - मैले शिव, सूर्य, कुबेर, इन्द्र, वायु, अग्नि आदि देवताको पराक्रमभन्दा विशिष्ट पराक्रम भगवान् श्रीगणेशमा देखेको छु । किनकि ती-ती देवताले मार्न नसकेको सिन्धु दैत्यलाई भगवान् श्रीगणेशले मारिदिनुभएको छ । उहाँले सबै कारागारमा थुनिएका देवतालाई मुक्त गराउनुभएको छ । उहाँ पृथिवीको भार हरण गर्न शिवजीको पवित्र घरमा अवतरित हुनुभएको छ । उहाँ अनन्त शक्तिसम्पन्न र अनेक दैत्यका संहारक परमात्मा हुनुहुन्छ ।।२१-२३।।

**ब्रह्माजीले भन्नुभयो** - चक्रपाणिले यसरी आफ्ना भाव व्यक्त गरेपछि त्यहाँ रहेका सबै देवता, राजा चक्रपाणि, सभासद् तथा भेला भएका नर-नारीहरूले भगवान् श्रीगणेशको गर्जन सुने । ब्रह्माण्ड नै फुटाउन सक्ने त्यो गर्जन सुनेर केही मूर्च्छा परे र केही भुइँमा पछारिए। पृथिवी काँप्न थालिन् । कहाँ

चकम्पे धरणी सर्वा न प्राज्ञायत किञ्चन ।
कोटिसूर्यप्रकाशेन सहसाच्छादितं जगत् ।।२५।।

ततस्तैस्त्रिदशैस्तत्र दृष्टो देवोऽतिसुन्दरः ।
नानालङ्कारसंयुक्तो दशबाहुर्गजाननः ।।२६।।

एवं दृष्ट्वा स्वरूपं ते विस्मितास्त्रिदशास्तदा ।
पुनस्तमेव ददृशुः पञ्चरूपिणमीश्वरम् ।।२७।।

पद्मासनगतं मध्ये वक्रतुण्डं शिवं पुनः ।
आग्नेय्यां नैर्ऋते सूर्यं पार्वतीं मारुतेऽपि च ।।२८।।

नारायणं तथैशान्ये ततो भ्रममिताः सुराः ।
ततस्ते शुश्रुवुर्व्योमवाणीं भ्रमनिवारिकाम् ।।२९।।

आराध्योऽयं सर्वजनैरेको जातः स पञ्चधा ।
अनादिनिधनो देवो जगद्व्यापी गजाननः ।।३०।।

अयमेव सदा पूज्यः सर्वविघ्नविनाशनः ।
देवैर्मनुष्यैर्यक्षैश्च नागै रक्षोभिरेव च ।।३१।।

एतस्मिन् पूजिते पञ्चपूजनञ्च भविष्यति ।
न बुद्धिभेदं तनुयादेतस्मिन् नरकाय सा ।।३२।।

क उवाच

श्रुत्वैवं ते मयूरेशं शुण्डादण्डविराजितम् ।
ददृशुर्वज्रिमुख्यास्त आद्यमोङ्काररूपिणम् ।।३३।।

ततः प्रबुद्धास्ते देवास्त्यक्त्वा भ्रान्तिं स्मयञ्च तम् ।
पुपूजुर्जयशब्दैस्तं सर्वान्तर्यामिणं विभुम् ।।३४।।

ततः पुपूजे हर्षेण चक्रपाणिर्गुणेश्वरम् ।
पञ्चामृतैः शुद्धजलैर्दिव्यवस्त्रैश्च भूषणैः ।।३५।।

पुष्पैर्धूपैश्च दीपैश्च नैवेद्यैर्विविधैरपि ।
फलताम्बूलनिचयैर्दक्षिणाभिरनेकशः ।।३६।।

नीराजनैर्मन्त्रपुष्पैर्नतिभिः स्तुतिभिस्तदा ।
तथैव पूजयामास भक्त्या सर्वसुरानपि ।।३७।।

के भइरहेको छ भन्ने कुरा कसैले पनि थाहा पाएन । करोडौं सूर्यको प्रकाश संसारमा फैलियो । त्यहाँ रहेका देवताहरूले विशिष्ट अलङ्कारद्वारा अलङ्कृत, दशबाहु, अतिसुन्दर र हात्तीको जस्तो मुखमण्डलद्वारा देदीप्यमान विशिष्ट देवताको दर्शन गरे। दिव्यदर्शन पुरुषलाई देखेर देवता चकित भए । केही बेरपछि ती दिव्यदर्शन ज्योतिर्मय देवताले आफूलाई पञ्चायतन देवताका रूपमा देखाए अर्थात् माझमा श्रीगणेशको रूप, आग्नेयमा शङ्करको रूप, नैऋत्यमा सूर्यको रूप, वायव्यमा पार्वतीको रूप र ऐशान्यमा विष्णुको रूप गरी पाँच रूपमा ती देवता परिणत भए। यसरी एउटै स्वरूपलाई पाँच रूपमा परिणत भएको देखेर देवताहरू भ्रममा परे । त्यसपछि ती देवताले भ्रमनिवारण गर्ने आकाशवाणी सुने ।।२४-२९।। आकाशवाणीको भनाइ थियो - हे देवतागण ! दिव्य स्वरूपका देवता सबैद्वारा आराधनीय छन्। एउटै देवता पाँच रूपमा परिणत भएका छन्। पहिले एकरूपमा प्रकट भई फेरि पाँच रूपमा प्रकट हुने देवता अरू कुनै होइन अपितु अनादि, अनन्त, व्यापकरूप भगवान् गजानन नै हुनुहुन्छ। सबै प्रकारका विघ्नहरूको नाश गर्ने श्रीगजानन देवता मानव, यक्ष, नाग र राक्षसद्वारा पूजनीय हुनुहुन्छ । उहाँको पूजा गरेमा पाँचै देवताको पूजा हुनेछ । श्रीगणेशमा भेदबुद्धि गर्नुहुँदैन। जसले उहाँलाई भेददृष्टिले हेर्दछ त्यो नरकमा जान्छ ।।३०-३२।।

**ब्रह्माजीले भन्नुभयो** - यो आकाशवाणी सुनेपछि इन्द्र आदि देवताले सुन्दर, सूँढद्वारा सुहाउनुभएका, आद्यस्वरूप, ॐकाररूप भगवान् श्रीगणेशको अकस्मात् दर्शन प्राप्त गरे।।३३।। श्रीगणेशको दिव्य दर्शनपछि चैतन्य पाएका देवताले भ्रान्ति र विस्मय हटाई जय जयकार गर्दै अन्तर्यामी श्रीगणेशप्रभुको पूजा गरे।।३४।। त्यसपछि हर्षपूर्वक राजा चक्रपाणिले पञ्चामृत, शुद्ध जल, दिव्य वस्त्र, अलङ्कार, पुष्प, धूप, दीप, अनेक थरि नैवेद्य, फल, पान, सुपारी, दक्षिणा, आरती, मन्त्रपुष्पाञ्जलि, प्रणाम र स्तुतिसमर्पण गरी भगवान् श्रीगणेशको पूजा गरे। यसैगरी तिनीहरूले त्यहाँ आएका सबै देवताहरूको पनि पूजा गरे ।।३५-३७।। त्यसपछि चक्रपाणिले

उवाच तान् नृपवरो धन्योऽहञ्च प्रपूजनात् ।
यतो नैतादृशः क्वापि जातः सर्वसमागमः ।।३८।।

ततस्तत्राब्रवीद् हृष्टो नारदश्चतुराननम् ।

नारद उवाच

सिद्धिबुद्धिविवाहार्थमाज्ञया तेऽब्जसम्भव ।।३९।।

शिवं शिवाञ्च विज्ञाप्य निश्चयः प्राङ्मया कृतः ।
मयूरेशाय सम्यक् ते दातव्ये बहुलक्षणे ।।४०।।

ततः सर्वे सुरा देवं ब्रह्माणं मन्मथातुराः ।
प्रत्येकं ते ह्ययाचन्त मम देहीति सादरम् ।।४१।।

ततो ब्रह्मा तयोर्हस्ते मालां दत्त्वाऽब्रवीदिदम् ।

क उवाच

त्रयस्त्रिंशत्कोटिसुरेष्वेको यो भासते हृदि ।।४२।।

तमेव वृणुतं देव्यौ मालाभ्यां मत्समक्षतः ।
त्यक्त्वा सर्वान् सुरांस्ते तु सिद्धिबुद्धी ह्युभे तथा।।४३।।

मयूरेशगले माले निक्षिपेतां मुदा तदा ।
विमनस्कास्ततो देवा असृजन् श्वासमारुतम् ।।४४।।

ताभ्यां जानुगताभ्यां तु शुशुभे स मयूरराट् ।
ब्रह्मा यथाविधि तयोर्विवाहमकरोत् तदा ।।४५।।

उवाच स सभामध्ये मया लब्धं हृदि स्थितम् ।
न्यवेदयत् तं देवेशं मयूरेशं विधानतः ।।४६।।

अद्य यावन्मयैते वै पालिते बहुयत्नतः ।
इदानीं ते मया दत्ते रक्षस्व बहुयत्नतः ।।४७।।

तत इन्द्रादयो देवा मयूरेशं व्यजिज्ञपुः ।
तव प्रसादाद् देवेश ! मुक्ताः कारागृहात् ततः ।।४८।।

भने - 'हे देवगण! आज मैले तपाईंहरूको पूजा गर्ने अवसर पाएँ, धन्य भएको छु । सबै देवगण, ऋषिगण, राजगण, सेवक, परिवार एवं प्रजाहरूको यस्तो भेला कहिले पनि भएको थिएन।'।।३८।। त्यसै बेला अचानक आइपुगेका नारदजीले ब्रह्माजीसँग निवेदन गरे ।

**नारदजीले भन्नुभयो**- 'हे पिताश्री! म हजुरको आज्ञाबाट सिद्धि र बुद्धिको विवाहका लागि शङ्कर र पार्वतीसँग भेटेर विचारविमर्श गरिसकेको थिएँ । उहाँहरूको आशय पाएर हजुरका सुन्दर एवं सुलक्षण कन्या सिद्धि र बुद्धिको विवाह श्रीगणेशसँग गर्नुपर्छ भन्ने निश्चय गरिसकेको छु ।'।।३९-४०।। नारदजीका ती कुरा सुनेर कामातुर भएका सबै देवताहरूले आदरपूर्वक हात जोडेर ब्रह्माजीसँग सिद्धि र बुद्धिको विवाह हामीसँग गरिदिनुहोस् भनी याचना गरे ।।४१।। त्यसपछि ब्रह्माजीले सिद्धि र बुद्धिका हातमा माला राखिदिएर निर्देशन दिनुभयो ।

**ब्रह्माजीले भन्नुभयो** - हे छोरीहरू ! तिमी दुबैले तैंत्तीस करोड देवताहरूमध्ये कुनै एक देवता, जसलाई तिम्रो मनले रुचाउँछ, तिनको घाँटीमा मेरा सामु माला लगाइदिएर पतिको रूपमा वरण गर । ब्रह्माजीको आज्ञा पाएका ती सिद्धि र बुद्धिले सबै देवताहरूलाई छाडी आनन्दपूर्वक मुस्काउँदै भगवान् श्रीगणेशका घाँटीमा माला पहिन्याए ।।४२-४३।। यो दृश्य देखेर खिन्न भएका देवताहरूले लामो सास फेरे । ती दुबैलाई दायाँ बायाँ राखेर उभिनुभएका भगवान् श्रीगणेश अत्यन्त सुहाउनुभयो। त्यसपछि ब्रह्माजीले विधिपूर्वक ती दुबै छोरीहरूको श्रीगणेशका साथ विवाह गराइदिनुभयो ।।४४-४५।। विवाहसम्पन्न भएपछि ब्रह्माजीले सभामा भन्नुभयो- 'हे देवतागण ! आज मैले मनले चिताएको कुरा पाएको छु ।' त्यसपछि ब्रह्माजीले भगवान् श्रीगणेशलाई निवेदन गर्नुभयो । 'हे मयूरेश ! आजसम्म यी मेरा दुई छोरीको ठूलो जतनले मैले पालन-पोषण गरें । अहिले मैले तपाईंलाई सुम्पिएको छु । जतनले रक्षा गर्नुहोस्' ।।४६-४७।। त्यसपछि इन्द्र आदि देवताले भगवान् श्रीगणेशसँग निवेदन गरे- 'हे प्रभो! हजुरको कृपाबाट हामी कारागारबाट मुक्त भएका छौं। हजुरले लोककण्टक

ततः सिन्धुर्गतो मोक्षं स्वस्थानं कृपया तव ।
यास्यामो देह्यनुज्ञां नो मुनिभिर्गौतमादिभिः ।।४९।।

दैत्यको वध गर्नुभयो र त्यो दैत्य हजुरकै कृपाबाट मोक्ष प्राप्त गरी दिव्य धाममा पुग्यो । अब हामी गौतम आदि ऋषिहरूका साथ हजुरसँग बिदा लिन चाहन्छौं । आज्ञा दिनुहोस्' ।।४८-४९।।

**क उवाच**

ददावाज्ञां मयूरेशो यातुकामान् मुदा तदा ।
पार्वती च स्नुषे चोभे स्वाङ्कमारोप्य सादरम् ।।५०।।

मयूरेशञ्च परमं हर्षमाप शिवान्विता ।
ददौ दानान्यनेकानि वासांस्याभरणानि च ।।५१।।

य इदं शृणुयान्मर्त्यो विवाहञ्च वधं शुभम् ।
सिन्धोर्जयं गणेशस्य सर्वकामाँल्लभेन्नरः ।।५२।।

**ब्रह्माजीले भन्नभुयो** - भगवान् श्रीगणेशले जान चाहने देवता, मुनि आदिलाई प्रेमपूर्वक बिदा गर्नुभयो । त्यसपछि पार्वती आफ्ना दुई बुहारी सिद्धि एवं बुद्धि र छोरा श्रीगणेशलाई प्रेमपूर्वक काखमा राखी परम आनन्दमा मग्न हुनुभयो । हर्षको त्यो अवसरमा अनेक थरि दान, वस्त्र, आभूषणको उपहारसमेत प्रदान गर्नुभयो। जुन मानिसले सिद्धि र बुद्धिका साथ भगवान् श्रीगणेशको विवाह प्रसङ्ग, सिन्धुको वध र श्रीगणेशको विजयको प्रसङ्गमा आधारित यो कथा सुन्दछ त्यसका मनोरथ परिपूर्ण हुन्छन् ।।५०-५४।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे श्रीगणेशविवाहवर्णनं नाम पञ्चविंशत्युत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'मयूरेश श्रीगणेशको सिद्धि एवं बुद्धिका साथ विवाह वर्णन' शीर्षकान्वित एक सय पच्चीसौं अध्याय पूर्ण भयो ।।१२५।।

ॐ

# षड्विंशत्युत्तरशततमोऽध्यायः { १२६ अध्याय }

क उवाच

सिद्धे विवाहे च ततो मयूरेशः शिखण्डिनम् ।
आरुह्य सहसा गन्तुं नगरीं स्वामियेष सः ।।१।।
स्वं स्वं वाहनमारूढा गीर्वाणास्तत्क्षणेन च ।
यान्ति स्म पुरतस्तस्य मुनयः पृष्ठतो ययुः ।।२।।
अन्वयुर्नागराः सर्वे स्त्रियश्च बालका अपि ।
आनन्दयुक्ता नगरात् सहसा चक्रपाणिना ।।३।।
वाद्यत्सु सर्ववाद्येषु ननृतुश्चाप्सरोगणाः ।
रणभूमिं गतो यावन्मयूरेशोऽखिलैर्वृतः ।।४।।
तावत् स्कन्दादयो वीराः प्रार्थयाञ्चक्रिरे विभुम् ।

वीरा ऊचुः

सेनाचरा दैत्यगणैर्निहता युद्धसम्भ्रमात् ।।५।।
उत्तस्थुः सर्व एवैते त्वत्कटाक्षामृतोक्षिताः ।
तान् दृष्ट्वा जीवितांस्तेन सर्वे देवाश्च नागराः ।।६।।
विस्मयं परमं प्राप्ताः साधु साध्वब्रुवँस्तदा ।
ततो योजनमात्रञ्च दत्त्वा मार्गमवस्थितः ।।७।।
देवोऽब्रवीच्चक्रपाणिं मूर्ध्नि दत्त्वा करं शुभम् ।
आलिङ्ग्य दशदोर्दण्डैः शत्रुपक्षभयङ्करैः ।।८।।

देव उवाच

त्वं याहि गण्डकीं शीघ्रं नागरैर्मम वाक्यतः ।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं मुमोचाश्रूणि सत्वरम् ।।९।।
नागराश्च प्रणम्योच्चैरूचुर्वाक्यं शुचान्विताः ।
यत्र यासि नयास्माँस्त्वमत्र त्यक्तुं न चार्हसि ।।१०।।
नागतः स्यात् पूर्वमेव तदा दुःखं न नो भवेत् ।
एवमुक्त्वा नमस्कृत्य ययुः सर्वे तदाज्ञया ।।११।।
चक्रपाणिरपि तदा नमस्कृत्य ययौ पुरः।
वर्णयन्तो गुणगणाँस्तदीयानद्भुतान् बहून् ।।१२।।
क्षणेन नगरीं प्राप्य चक्रपाण्यनुमोदिताः ।
नागराः स्वगृहं प्राप्ताश्चक्रपाणिर्निजालयम् ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेशका साथ सिद्धि र बुद्धिको विवाह सम्पन्न भएपछि उहाँले मयूरमा सवार भई आफ्नो नगरीतर्फ जाने इच्छा गर्नुभयो ।।१।। आ-आफ्ना वाहनमा सवार भएका देवताहरू पनि तत्काल भगवान्का पछि लागे । देवताहरूका पछि ऋषिहरू पनि गए।।२।। ऋषिहरूपछि चक्रपाणिका साथ गण्डकी नगरवासी नर-नारी र बालकहरू गए। गण्डकी पुरीमा उत्सवका बाजाहरू बजिरहेका थिए र अप्सराहरू नाचिरहेका थिए । जहाँ पहिले सिन्धु र श्रीगणेशको सङ्ग्राम भएको थियो त्यस ठाउँमा पुग्दासम्म त्यहाँका नर-नारीहरूले श्रीगणेशलाई घेरे र पछ्याए । त्यसपछि स्कन्द आदि वीरहरूले श्रीगणेशको प्रार्थना गरे ।।३-४।। ती वीरहरूले भने - 'श्रीगणेशले दैत्यहरूद्वारा मारिएका हाम्रा सैनिकहरूलाई कटाक्षपातरूप अमृतद्वारा बचाइदिनुभयो ।' श्रीगणेशको कृपाकटाक्षबाट नै सम्पूर्ण देवता र नगरवासीहरू पनि बाँचे र विस्मृत भएर सबैले साधुवाद गरे । भगवान्को बिदाइ गर्न आएका चक्रपाणिले श्रीगणेशको पाउमा प्रणाम गरे । भगवान्ले तिनका शिरमा हात राखी आफ्ना दश भुजाहरूद्वारा आलिङ्गन गर्दै भन्नुभयो ।।५-८।।

**श्रीगणेशले भन्नुभयो** - 'हे राजा ! चक्रपाणि ! तिमी आफ्ना नगरवासीहरूका साथ गण्डकीपुरीतर्फ फर्क । यो मेरो आज्ञा हो ।'

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका यी कुरा सुनेर चक्रपाणिले आफ्ना आँखाबाट आँसु बगाए । शोकसन्तप्त नगरवासीहरूले पनि भगवान्लाई प्रणाम गरेर भने - 'हे भगवन्! हजुर जहाँ जानुहुन्छ त्यहाँ हामीलाई पनि लैजानुहोस् । हामीलाई विरहको दुःखले दुःखी बनाएर हजुरले नछोड्नुहोस् ।।९-१०।। हजुर यहाँ नआउनुभएको भए यति माया र प्रेम बस्ने थिएन, विरहको दुःख पनि लाग्ने थिएन । भेट भयो, कुराकानी भए र गहिरो माया पनि बस्यो।' यसरी आफ्ना मनका भावना पोखेर भगवान्को गुणगान गर्दै उहाँसग आज्ञा लिएर गण्डकी नगरका बासिन्दा नर-नारीहरू आ-आफ्ना घरतर्फ फर्के ।।११-१३।।

पञ्चानामपि देवानां प्रासादानप्यकारयत् ।
पञ्चायतनमूर्तींश्च स्थापयामास तेषु च ।।१४।।

प्रत्यहं पूजयामास भक्तिभावसमन्वितः ।
मयूरेशपुरीं प्राप्तो मयूरेशोऽपि तत्क्षणात् ।।१५।।

आश्चर्यं परमं प्राप्ता गणाः सर्वे निरीक्ष्य ताम् ।
यस्यां रत्नमयाः स्तम्भा भित्तयोऽष्टापदान्विताः।।१६।।

एको ना दृश्यते तत्रासङ्ख्यातजनसंयुतः ।
प्रविश्य स सभां रम्यां ब्रह्मादीनुपवेश्य च ।।१७।।

मध्ये विवेश च ततो लोकयन् सर्वतः स्वयम् ।
ददर्श पूर्वभागे स मन्मथं रतिसंयुतम् ।।१८।।

देवीं मार्जारनाम्नीं तां लोके ख्यातां सुखप्रदाम् ।
दक्षिणस्यां दिशि तदाऽलोकयत् पार्वतीशिवौ ।।१९।।

तत्पुरो विरजां देवीं भक्तकामप्रपूरिकाम् ।
पश्चिमायां दिशि ततो वराहं धरणीयुतम् ।।२०।।

आश्रयां नाम देवीञ्च सर्वविघ्नहरां शुभाम् ।
उत्तरस्यां दिशि तदा श्रीहरिं समलोकयत् ।।२१।।

मुक्तादेवीञ्च विख्यातां सर्वमुक्तिप्रदां ततः ।
त्रयस्त्रिंशत्कोटिसुराः स्थितास्तद्दर्शनेच्छया ।।२२।।

भाद्रशुक्लप्रतिपदि स्नात्वाऽभ्यर्च्य गजाननम् ।
गत्वा तु पूर्वदिग्भागे मार्जारीं पूजयेत् ततः ।।२३।।

दत्त्वा दानानि विप्रेभ्यः स्मृत्वा ध्यात्वा गजाननम् ।
मौनं व्रतं समास्थाय न श्रुत्वा पादजध्वनिम् ।।२४।।

चक्रपाणिले राजधानी फर्केर श्रीगणेश, शिव, विष्णु, सूर्यनारायण र देवीका अलग-अलग मन्दिर बनाई पञ्चायतन मूर्तिहरूको प्रतिष्ठा गरे ।।१४।। तिनले दिनदिनै भक्तिभावले पाञ्चायन देवताको पूजा गरे । चक्रपाणिसँग बिदा लिनुभएका भगवान् श्रीगणेश पनि तत्काल मयूरेशपुरीमा प्राप्त हुनुभयो ।।१५।। देवताहरू श्रीगणेशलाई आउनुभएको देखेर आश्चर्यमा परे । मयूरेश धामका भवनका स्तम्भहरू रत्नमय थिए र भित्ताका बीच-बीचमा सुवर्णहरू जडित गरिएका थिए । तिनमा एउटा मानिसले आफूलाई एक हजार संख्यामा प्रतिबिम्बित भएको पाउँथ्यो । श्रीगणेश आफ्नो सभाभवनमा प्रवेश गर्नुभयो । उहाँले आफ्नो स्वागतका लागि आएका ब्रह्मा आदि देवताहरूलाई आ-आफ्नो ठाउँमा बसाउनुभयो र आफू सभाभवनको माझमा रहेको दिव्य आसनमा चारैतर्फ हेर्दै विराजमान हुनुभयो । त्यसपछि भगवान् श्रीगणेशले आफू बसेको ठाउँदेखि पूर्वपट्टि रतिसहित कामदेवलाई देख्नुभयो ।।१६-१८।। श्रीगणेशले त्यहीं नजिकै लोकमा सुख दिने देवीका रूपमा विख्यात मार्जारीलाई देख्नुभयो । उहाँले आफू बसेको आसनबाट दक्षिण दिशामा आफ्ना माता-पिता शिव-पार्वतीको दर्शन गर्नुभयो ।।१९।। उहाँले शिवपार्वतीका सामुमा रहेकी भक्तहरूको कामना पूरा गर्ने विरजादेवीलाई देख्नुभयो। श्रीगणेशले आफू बसेको आसनदेखि पश्चिम दिशातर्फ हेर्दा पृथिवी र वराहलाई देख्नुभयो ।।२०।। त्यहीं नै विघ्नहरण गर्ने देवीका रूपमा प्रख्यात आश्रयालाई पनि देख्नुभयो । त्यसपछि भगवान् श्रीगणेशले उत्तर दिशातर्फ दृष्टिपात गर्नुभयो । उहाँले त्यहाँ लक्ष्मीसहित भगवान् नारायणको दर्शन गर्नुभयो ।।२१।। त्यहीं नै श्रीगणेशले सबैलाई मुक्ति प्रदान गर्ने देवीका रूपमा विख्यात मुक्तादेवीको दर्शन गर्नुभयो । भगवान्का सामु मञ्चमा उहाँकै दर्शन गर्ने लालसाले बसिरहेका तेंतीस कोटि देवताहरूको दर्शन गर्नुभयो । श्रीगणेशधामको महिमा बताउने क्रममा भगवान् ब्रह्माजी व्यासलाई भन्नुहुन्छ- 'हे व्यास! भगवान् श्रीगणेशको दिव्य धाममा जान चाहने भक्तले भाद्र शुक्ल प्रतिपदा तिथिमा बिहानै उठी भगवान् गजाननको पूजा गरेर पूर्व दिशातिर गई मार्जारी देवीको पूजा गर्नुपर्दछ।।२२-२३।। त्यसपछि ब्राह्मणहरूलाई दान दिएर भगवान् श्रीगणेशको ध्यान र स्मरण गरी मौन व्रत लिनुपर्दछ र नीचकर्ममा लिप्त मानिसहरूको वचन सुन्नुहुँदैन।

कृमिकीटपतङ्गादीन् न हिंसेत् प्रयतः शुचिः ।
पुनः स्नात्वा समभ्यर्चेद् देवदेवं गजाननम् ।।२५।।

पूर्ववत् तु द्वितीयेऽह्नि तृतीये च ततः क्रमात् ।
तथैव दक्षिणद्वारि विरजां द्वितीयेऽहनि ।।२६।।

तृतीये पश्चिमद्वारि तथैवाश्रयसंज्ञिताम् ।
नत्वाऽर्चयेच्चतुर्थ्यां तु तद्वदुत्तरतो नरः ।।२७।।

मुक्तां देवीं समभ्यर्च्य मयूरेशञ्च तद्दिने ।
पूजामहोत्सवं कुर्याद् रात्रौ जागरणं चरेत् ।।२८।।

एवं यः कुरुते भक्त्या द्वाराणि चोपवासतः ।
स सर्वाल्लभते कामान् मयूरेशप्रसादतः ।।२९।।

चतुर्थ्यामेव चत्वारि शक्तो द्वाराणि पूर्ववत् ।
नद्यन्तर्मज्जनं देवदर्शनञ्च करोति यः ।।३०।।

तस्य सद्यः फलं दद्यात् परितुष्टो गजाननः ।
तस्माच्छुक्लप्रतिपदमारभ्य ब्रह्मचर्यवान् ।।३१।।

ततश्चतुर्थ्यामुषसि स्नानं कृत्वा विधानतः ।
नित्यं सम्पाद्य विधिवन्मयूरेशं समर्चयेत् ।।३२।।

प्रदक्षिणानमस्कारान् कुर्यादेवैकविंशतिम् ।
पूर्वद्वारे नमस्कृत्य मार्जारीं त्वरयान्वितः ।।३३।।

एवं शिवामाश्रयाञ्च मुक्तादेवीं नमेत् पराम् ।
प्रारभेद् दिनशेषे तु मयूरेश्वरपूजनम् ।।३४।।

षोडशैरुपचारैस्तु पूजयेत् सुसमाहितः ।
रात्रौ जागरणं कुर्याद् गीतवादित्रनिस्वनैः ।।३५।।

प्रभाते विमले स्नात्वा पुनर्देवं समर्चयेत् ।
ब्राह्मणैः सह कुर्वीत पारणं स्वस्य शक्तितः ।।३६।।

तेभ्यो दद्याद् हिरण्यञ्च वासो धान्यं गवादिकम् ।
एवं यः कुरुते मर्त्यो दुःसाध्यमपि साधयेत् ।।३७।।

पुत्रपौत्रयुतो भोगान् भुक्त्वा चान्ते व्रजेद् दिवम् ।
इन्द्रादयो लोकपालाः पूजयिष्यन्ति तं नरम् ।।३८।।

कृमि-कीट-पतङ्गहरूको हत्या गर्नुहुँदैन र संयमी एवं पवित्र भएर बस्नुपर्छ। भगवान्को पूजा र उपासना गरेपछि फेरि नुहाएर अन्तिम पूजा गर्नुपर्दछ ।।२४-२५।। भाद्र शुक्ल द्वितीयाको दिन र तृतीयाको दिन पनि यसैगरी दिनचर्या बनाउनुपर्दछ । दोस्रो दिन दक्षिण दिशामा गएर विरजाको पूजा गर्नुपर्दछ र पश्चिम दिशामा गएर आश्रयादेवीको पूजा गर्नुपर्दछ। भाद्र शुक्ल चतुर्थीका दिन बिहानै उठी नुहाएर उत्तरतर्फ गई मुक्तादेवीको पूजा गरेर भगवान् मयूरेशको पूजा गर्नुपर्दछ । रात्रिमा पूजाको उत्सव मनाउँदै जाग्राम बस्नुपर्दछ ।।२६-२८।। जसले चार दिशाका द्वारहरूमा गएर पूजा गर्छ र उपवास बस्छ त्यसले भगवान् श्रीगणेशको कृपाबाट सबै ईप्सित फल प्राप्त गर्दछ ।।२९।। जसले चतुर्थीका दिनमात्र भए पनि चारै द्वारमा गएर चार प्रकारका देवीहरूको पूजन गर्दछ, जसले देवदर्शनभन्दा पहिले र देवदर्शनपछि पनि स्नान गर्दछ त्यस देवदर्शनमा रमाउने साधकमाथि भगवान् श्रीगणेश प्रसन्न हुनुहुन्छ । त्यस कारण भाद्र शुक्ल प्रतिपदादेखि लिएर ब्रह्मचर्य व्रत धारण गरी भाद्र शुक्ल चतुर्थीका दिन बिहान स्नान गरेर विधिपूर्वक नित्यकर्म गरी उपवास बस्ने भक्तले भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ ।।३०-३२।। पूजा गर्ने क्रममा एक्काइस पटक नमस्कार र एक्काइस पटक प्रदक्षिणा गर्नुपर्दछ । पूर्व ढोकामा गएर मार्जारी देवीलाई नमस्कार गरेपछि शिव, पार्वती, आश्रयादेवी र मुक्तादेवीलाई नमस्कार गर्नुपर्दछ। सबैको पूजा सकिएपछि सायंकालमा भगवान् मयूरेश्वर श्रीगणेशको पूजा गर्नुपर्दछ । भगवान्को पूजा गर्दा आवाहन, आसन, चन्दन, पुष्प, अक्षता आदि सोह्र प्रकारका उपचारहरू चढाउनुपर्दछ । रात्रिमा गीत, वाद्य र नृत्यका साथ जाग्राम बस्नुपर्दछ ।।३३-३५।। पञ्चमीका दिन बिहान उठेर स्नान गरी फेरि भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ । श्रीगणेशपूजन सकिएपछि ब्राह्मणहरूका साथ रही आफ्नो शक्तिअनुसार व्रतको पारणा गर्नुपर्दछ ।।३६।। साधकले ब्राह्मणहरूलाई वस्त्र, धन, धान्य, गाई र सुवर्ण दान दिनुपर्दछ । जसले यसरी भाद्र शुक्ल प्रतिपदादेखि पञ्चमीसम्म भगवान् श्रीगणेशको आराधना गर्दछ त्यसका दुःसाध्य कामहरू पनि साध्य बन्दछन् ।।३७।। त्यो भक्त पुत्र-पौत्रले सम्पन्न भई यस लोकका सम्पूर्ण भोगहरू भोगेर अन्तमा स्वर्गमा जान्छ। त्यस्ता भक्तको त्यहाँ इन्द्र आदि

सेवन्ते पादकमलं तस्य या अष्टनायिकाः ।
अन्धस्तु लभते दृष्टिं मूको वाचं लभेद् ध्रुवम् ।।३९।।

वधिरः श्रुतिमाप्नोति पङ्गुश्च चरणावपि ।
भार्यार्थी लभते भार्यां विद्यार्थी लभते मतिम् ।।४०।।

एतदेव फलं प्रोक्तं द्वारेषु चोपवासतः ।
ततः कदाचिद् देवेशो मयूरेशोऽखिलान् सुरान् ।।४१।।

उवाच श्लक्ष्णया वाचा हरिब्रह्मशिवादिकान् ।

मयूरेश उवाच

यदर्थमवतीर्णोऽहं तत्कार्यं च कृतं सुराः ।।४२।।

निहता बहवो दैत्या भूभारश्च कृतो लघुः ।
सिन्धोः कारागृहात् सर्वे मोचिता अमृतान्धसः ।।४३।।

स्वाहास्वधावषट्कारा भविष्यन्ति यथा पुरा ।
भवतामाज्ञया देवा यास्ये स्वं धाम साम्प्रतम् ।।४४।।

एवमाकर्ण्य तद्वाक्यं देवाः सर्वे शुचान्विताः ।
त्यजन्तोऽश्रूणि सम्प्रोचुः परस्परमुखेक्षणाः ।।४५।।

अस्मांस्त्यक्त्वा मयूरेश ! क्व वा गन्तुं समीहसे ।
कथं स्नेहं परित्यज्य नैष्ठुर्यं परमं गतः ।।४६।।

ततस्तत् पार्वती श्रुत्वा सहसा शोककर्षिता ।
पपात मूर्च्छिता भूमौ मुहूर्तादवदच्च सा ।।४७।।

पार्वत्युवाच

दीननाथ ! दयासिन्धो ! सिन्धुदैत्यविमर्दन ! ।
क्व यास्यति जगन्नाथ ! हित्वा मां जननीं तव ।।४८।।

न स्थास्यन्ति मम प्राणास्त्वयि याते सुरेश्वर ! ।

देव उवाच

द्वापरे पुनरेवाहं यास्ये त्वत्पुत्रतां शुभे ।।४९।।

लोकपालहरूले पूजा गर्दछन् । स्वर्गका अष्टनायिकाहरूले त्यस्ता भक्तका पाउ दबाएर सेवा गर्दछन् । अन्धाले यसरी व्रत गर्दछ भने आँखाको शक्ति प्राप्त गर्दछ । लाटाले यसरी आराधना गर्दछ भने वाणीको शक्ति प्राप्त गर्दछ । बहिराले यसरी व्रत गर्दछ भने सुन्ने शक्ति प्राप्त गर्दछ । लङ्गडाले यसरी भक्ति गर्दछ भने चरणहरू प्राप्त गर्दछ । पत्नीको कामना गर्ने मानिसले यसरी भक्ति गर्दछ भने उत्तम पत्नी प्राप्त गर्दछ । विद्यार्थीले यसरी भक्ति गर्दछ भने उत्तम बुद्धि र विद्या प्राप्त गर्दछ' ।।३८-४०।। यसरी भगवान् श्रीगणेशको धामका चार द्वारहरूको उपासनाबाट प्राप्त गरिने फल बताइएको छ । एक दिनको कुरा हो भगवान् श्रीगणेशले नारायण, ब्रह्मा, शिव आदि सम्पूर्ण देवताहरूलाई मधुर वाणीद्वारा सम्बोधन गर्दै भन्नुभयो -

**श्रीगणेशले भन्नुभयो**- 'हे देवताहरू ! मैले जुन कामका लागि अवतार लिएको थिएँ, त्यो काम पूरा गरें ।।४१-४२।। मैले धेरै थरि दैत्यहरू मारेर पृथिवीको भार हलुका बनाएँ । सिन्धु दैत्यको कारागारमा थुनिएका सबै देवताहरूलाई मुक्त गराएँ ।।४३।। अब तीनै लोकमा पहिलेजस्तै स्वाहा, स्वधा र वषट्कारका कर्महरू सम्पन्न हुनेछन् । हे देवगण ! तपाईँहरूले मलाई आज्ञा दिनुहोस् । म श्रीगणेशधाम जान चाहन्छु ।' भगवान् श्रीगणेशका यी कुरा सुनेर सबै देवताहरू शोकमग्न भए । आँखाबाट आँसु बगाउँदै परस्परमा एकले अर्काको मुख हेर्दै भने - 'हे श्रीगणेश ! हामीहरूलाई छाडेर हजुर कहाँ जान चाहनुहुन्छ ? हामीसँग गाँसिको माया चट्टक्क बिर्सेर किन यतिविधि निष्ठुर हुनुभएको छ ?' ।।४४-४६।। आफ्ना छोरा श्रीगणेशको कुरा सुनेर पार्वती पनि शोकविह्वल भई मूर्च्छित भएर भुइँमा लड्नुभयो । एक मुहूर्तपछि जागेर उहाँले आफ्ना भाव यसरी व्यक्त गर्नुभयो ।।४७।।

**पार्वतीले भन्नुभयो** - 'हे दीननाथ ! हे दयाका सागर ! हे सिन्धु दैत्यका संहारक ! हे जगन्नाथ ! आफ्नी आमालाई छाडेर हजुर कहाँ जानुहुन्छ ? हजुर जानुभएपछि मेरा पनि प्राण रहनेछैनन् ।'

**श्रीगणेशले भन्नुभयो** - 'हे आमा पार्वती ! हे कल्याणी ! म फेरि द्वापरयुगमा हजुरको पुत्र भएर पैदा हुनेछु ।।४८-४९।।

न मिथ्या वचनं मे स्यान्न चिन्तां कर्तुमर्हसि ।
ममापि दुःखमतुलं वियोगात् तव जायते ।।५०।।

नैकत्र सर्वदा मातः ! सुहृदां वसतिर्भवेत् ।
सिन्दूरो नाम दैत्योऽपि भविष्यति सुदारुणः ।।५१।।

अवध्यः सर्वदेवानां तदाऽहं स्यां तवार्भकः ।
स्मृतमात्रस्तवाग्रेऽहं स्थास्यामि शिवनन्दिनि ।।५२।।

ततः षडाननः प्राह नय मां यत्र यास्यसि ।
बालके कृपणे दीने नौदासीन्यं हि युज्यते ।।५३।।

देव उवाच

न चिन्तां कुरु बन्धो ! त्वमत्रायास्याम्यहं पुनः ।
भवतो न वियोगो मे सर्वान्तर्यामिणः खलु ।।५४।।

तस्मै ददौ मयूरं तं मयूरेशः स्वबन्धवे ।
मयूरध्वज इत्येवं नाम चक्रेऽस्य तत्क्षणात् ।।५५।।

आरुरोह मयूरं तं स्कन्दो बन्धोरथाज्ञया ।
तस्मिन्नेव क्षणे देवोऽन्तर्दधे स मयूरराट् ।।५६।।

तस्मिन्नन्तर्हिते केशा अपश्यन् हृदि तं सदा ।
ततो ब्रह्मा वालुकाभिः कृत्वा मूर्तिं गजाननीम् ।।५७।।

स्थापयामास विधिवत् प्रासादे सुमनोहरे ।
पुपूजुः सर्वलोकास्तमुपचारैर्यथाविधि ।।५८।।

वसिष्ठाद्या मुनिगणाः सस्नुर्ब्रह्मकमण्डलौ ।
सर्वं नित्यविधिं कृत्वा ययुर्मूर्तिं सुशोभनीम् ।।५९।।

उपोष्य केचिद् पिदधुर्द्वाराणि धामलब्धये ।
स्नात्वा नत्वा मयूरेशं धावमानास्तथाऽपरे ।।६०।।

ऊचुः परस्परं देवा मुनयोऽपि मुदा तदा ।
नैतादृशं पुण्यक्षेत्रं यत्र देवः स्थितः स्वयम् ।।६१।।

हे आमा! मेरो वचन मिथ्या हुँदैन, हजुरले चिन्ता नगर्नुहोस्। मलाई पनि हजुरसँग वियुक्त भएर रहँदा साह्रै दुःख लाग्नेछ, तर के गर्ने ? संसार हो, आफन्तहरूसँग सधैं सँगै बस्न पाइँदैन। द्वापर-युगमा डरलाग्दो सिन्दूर नाम गरेको दैत्य पैदा हुनेछ ।।५०-५१।। देवताहरूद्वारा त्यसको वध असम्भव हुनेछ। हे शिवगृहिणी ! त्यस बेला म हजुरको पुत्र भएर पैदा हुनेछु । हजुरले संझना गर्नुभयो भने जुन बेला र जुनसुकै ठाउँमा पनि दिनदिनै हजुरका सामु हाजिर हुनेछु' ।।५२।। त्यसपछि भगवान् श्रीगणेशका दाजु स्कन्दले दुःखी हुँदै भन्नुभयो - 'हे भाइ श्रीगणेश ! मलाई हजुर जहाँ जानुहुन्छ त्यहीं लैजानुहोस् । नाता जेसुकै भए पनि म हजुरका निमित्त बालक हुँ, सानो चित्तको मानिस हुँ र दीनदुःखी छु । त्यस कारण तपाईंले मेरो उपेक्षा गर्न हुँदैन' ।।५३।।

**श्रीगणेशले भन्नुभयो -** 'हे दाजु ! हजुरले चिन्ता नगर्नुहोस्। म फेरि यहाँ आउनेछु । म सबैका घटघटमा अन्तर्यामी भएर बस्ने भएकाले हजुर र मेरो कहिल्यै पनि वियोग हुँदैन'।।५४।। यसरी संझाएर भगवान् श्रीगणेशले आफ्ना दाजु स्कन्दलाई आफ्नो वाहन मयूर टक्र्याउनुभयो र स्कन्दको नाम मयूरध्वज राखिदिनुभयो। त्यसपछि स्कन्द आफ्ना भाइ श्रीगणेशबाट प्राप्त भएको वाहन मयूरमा सवार हुनुभयो।।५५-५६।। त्यसपछि तुरुन्तै भगवान् मयूरेश सबैका सामु अन्तर्धान हुनुभयो । श्रीगणेश अन्तर्धान हुनुभएपछि ब्रह्मा, विष्णु र शिवजीले हृदयमा उहाँको ध्यान गर्नुभयो । ब्रह्माजीले बालुवाको श्रीगणेशमूर्ति बनाएर आफ्नो ब्रह्मधाममा सुन्दर मन्दिर तयार गरी मूर्ति प्रतिष्ठा गर्नुभयो। ब्रह्माजीलगायत सबै सत्यलोकका बासिन्दाले विधिपूर्वक अनेक थरि उपचारहरूबाट भगवान् गजाननको पूजा गरे।।५७-५८।। वशिष्ठ आदि मुनिहरूले ब्रह्मकमण्डलुभवा नदीमा स्नान गरी नित्यविधि पूरा गरेर ब्रह्माजीले स्थापना गर्नुभएको गजानन मूर्तिसामु आई आराधना गरे । कसैले त्यहाँ बसेर उपवास गर्दै श्रीगणेशधामप्राप्तिका लागि द्वारपूजा गरे । कसैले स्नान गरी भगवान्लाई प्रणाम गरे । पूजाका लागि दौडिरहेका सम्पूर्ण देवता र ऋषिहरूले आपसमा वार्तालाप गरे । देवताहरूले भने - 'यो ब्रह्मधामसमान अर्को पुण्यक्षेत्र छैन । यहाँ भगवान् मयूरेश विघ्नहर्ता र सबैका कामना परिपूर्ण तुल्याउने परमात्मा बनेर विराजमान हुनुहुन्छ' ।।५९-६१।।

मयूरेशो विघ्नहरो भक्तानां कामपूरकः ।
पूजयित्यैवमुक्त्वा तु जग्मुस्ते स्वं स्वमाश्रमम् ।।६२।।

ब्रह्मादयः सुराः स्वं स्वं पदमभ्यागमँस्तदा ।
शङ्करः सपरीवारः कैलासमगमन्मुदा ।।६३।।

स्वधास्वाहावषट्कारैरिन्द्राद्या मुमुदुस्तदा ।

क उवाच

एवं ते सर्वमाख्यातं त्रेतायुगकृतं मुने ।।६४।।

मयूरेशस्य चरितं श्रवणात् सर्वकामदम् ।
धन्यं यशस्यमायुष्यं सर्वपापहरं नृणाम् ।।६५।।

पुत्रदं धनदं विद्याप्रदं दुःखनिवारणम् ।
आधिव्याधिहरं कुष्ठदुष्टरोगादिनाशनम् ।।६६।।

पठतां शृण्वतां पुंसां भुक्तिमुक्तिप्रदं शुभम् ।
विजयश्रीप्रदं नृणां क्षत्रियाणां विशामपि ६७।।

शूद्राणामपि सर्वेषां श्रीप्रदं पुष्टिवर्धनम् ।
यद् यत् ते परिपृष्टं मे तत् तत् ते कथितं मुने ।।६८।।

गजाननस्य चरितं पुनः श्रोष्यसि मन्मुखात् ।।६९।।

यसरी वार्तालाप गरेर भगवान् श्रीगणेशको पूजा गरी ती सबै देवता एवं ऋषिहरू आ-आफ्ना धामतर्फ गए ।।६२।। ब्रह्मा आदि देवताहरू पनि आ-आफ्ना धामतर्फ जानुभयो । स-परिवार भगवान् शङ्कर कैलासतर्फ लाग्नुभयो ।।६३।। पृथिवीमा स्वधा, स्वाहा र वषट्कारपूर्वक कर्महरू चल्न थाले । इन्द्र आदि देवताहरू प्रसन्न भए ।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! मैले तिमीलाई भगवान् मयूरेशले त्रेतायुगमा गर्नुभएको लीलाको व्याख्यान गरें ।।६४।। भगवान्को चरित्रश्रवण गर्दा सबै कामनाहरू परिपूर्ण हुन्छन् । धन-धान्यको लाभ हुन्छ, कीर्ति प्राप्त हुन्छ, आयु वृद्धि हुन्छ र मानिसका सबै पाप नष्ट हुन्छन् ।।६५।। भगवान् श्रीगणेशको पूजनबाट पुत्र; धन र विद्याको प्राप्ति हुन्छ, दुःखहरूको विनाश हुन्छ, मन एवं शरीरका रोग समाप्त हुन्छन् र कुष्ठ आदि असाध्य रोगहरू पनि समाप्त हुन्छन् ।।६६।। जसले भगवान् श्रीगणेशका लीलासम्बन्धी कथाहरूको पाठ गर्दछ र श्रवण गर्दछ त्यसले भुक्ति एवं मुक्ति प्राप्त गर्दछ । श्रीगणेशको कथा सुन्ने र पढ्ने क्षत्रियले विजय एवं ऐश्वर्य प्राप्त गर्दछ, वैश्यले सम्पत्ति प्राप्त गरी व्यापार-वाणिज्यमा उन्नति गर्दछ र शूद्रले श्रीसम्पत्ति र पुष्टि प्राप्त गर्दछ । हे व्यास ! तिमीले जुन कुरा सोधेका थियौ मैले त्यसको उत्तर दिएँ । भगवान् गजाननका अरू चरित्रका विषयमा म फेरि बताउनेछु ।।६७-६९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे मयूरेशान्तर्धानवर्णनं नाम षड्विंशत्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीमयूरेशको स्वानन्दभुवन प्राप्ति' शीर्षकान्वित एक सय छब्बीसौं अध्याय पूर्ण भयो ।।१२६।।

ॐ

## सप्तविंशत्युत्तरशततमोऽध्यायः　{ १२७ अध्याय }

व्यास उवाच

चतुरानन ! देवेश ! गुणेशचरितं शुभम् ।
कथितं विस्तराद् देव ! नाहं तृप्तोऽस्मि तच्छ्रवात्।।१।।

सुधया तु विरक्तः स्यान्न कथाश्रवणान्नरः ।
त्रेतायुगकथा सर्वा गुणेशस्य श्रुता मया ।।२।।

गजाननेति नामास्य द्वापरे तु कुतोऽभवत् ।
मूषको वाहनं चास्य कथं यातो महाविभो ।।३।।

कृपया संशयममुं छिन्धि त्वं कमलासन ! ।

क उवाच

सम्यक् पृष्टं त्वया वत्स ! मम चित्तगतं मुने ।।४।।

यतः श्रोता च वक्ता च पृच्छकः सिद्धिमाप्नुयात् ।
तां कथां कथयिष्यामि विनायककृतां मुने ।।५।।

द्वापरे यत् कृतं तेन चरितं शृणु साम्प्रतम् ।
यथा गजाननो देवो रक्तवर्णश्चतुर्भुजः ।।६।।

गजाननश्चाखुवाहस्तत्सर्वं कथयामि ते ।
कदाचिद् ब्रह्मभुवनं यातः शम्भुर्यदृच्छया ।।७।।

उत्थापयामास तदा प्रसुप्तं कमलासनम् ।
स उत्थितो महाजृम्भां चकार क्रोधसंयुतः ।।८।।

तत एको महाघोरः पुरुषः समपद्यत ।
स च चक्रे महाघोरं शब्दं सर्वभयङ्करम् ।।९।।

चकम्पे पृथिवी तेन साब्धिद्वीपा सपर्वता ।
दिक्पालाश्चकिताः सर्वे शेषः क्षुब्धोऽसृजद् विषम्।।१०।।

विशीर्णा गिरयः सर्वे भूतान्याकुलतां ययुः ।
कल्पान्त इव तत्रासीत् त्रैलोक्यवासिनां नृणाम् ।।११।।

**व्यासले भन्नुभयो** - हे विधाता ! हे देवताहरूका स्वामी ! हजुरले भगवान् श्रीगणेशको मङ्गलमय चरित्र विस्तारपूर्वक मलाई सुनाउनुभयो । त्यो सुनेर म अघाएको छैन ।।१।। मानिस अमृत पिएर अघाउन सक्छ र विरक्त हुनसक्छ तर कथा सुनेर कहिल्यै पनि अघाउँदैन र विरक्त पनि हुँदैन । मैले भगवान् श्रीगणेशको त्रेतायुगमा घटेको कथा सुनें । द्वापरयुगमा भगवान् श्रीगणेशको नाम गजानन कसरी रह्यो ? ।।२-३।। फेरि मूसो उहाँको वाहन कसरी बन्न पुग्यो ? हे अन्तर्यामी प्रभु ! कृपा गरेर मेरो यो सन्देह निराकरण गर्नुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! तिमीले मसँग मेरै हृदयमा खेलिरहेको विषयलाई छोएर राम्रो प्रश्न गर्‍यौ किनकि उत्तम वक्ता र उत्तम श्रोताले कार्यमा सफलता प्राप्त गर्दछन् । विनायकको द्वापरयुगसम्बन्धी लीला र चरित्रमा आश्रित कथा म बताउनेछु। हे वेदव्यास! भगवान्ले द्वापरयुगमा जस्ता लीला गर्नुभयो तिनको विषयमा म सुनाउँछु (तिमीले श्रद्धापूर्वक सुन। भगवान् श्रीगणेश चतुर्बाहु र रक्तवर्ण जसरी हुनुभयो त्यो इतिहास पनि तिमीलाई मैले सुनाउनेछु ।।४-६।। जसरी भगवान् गजानन मूसाको वाहनमा सवार हुनुभयो त्यो कुरा पनि म बताउनेछु । कुनै दिनको कुरा हो, भगवान् शङ्कर आफ्नो इच्छाले ब्रह्माजीको सत्यलोकमा पुग्नुभयो ।।७।। त्यहाँ ब्रह्माजी मस्त निद्रामा हुनुहुन्थ्यो। शिवजीले उठाउनुभयो । अचानक निद्रा टुटेकाले आश्चर्यपूर्वक आँखा खोल्दै रिसाएर उहाँले ठूलो हाई गर्नुभयो ।।८।। ब्रह्माजीले हाई गर्दा एउटा डरलाग्दो पुरुष पैदा भयो। त्यो पैदा भएको घोर पुरुषले सबै संसारलाई भयभीत गराउने महाघोर गर्जन गर्‍यो ।।९।। त्यस गर्जनबाट पर्वत, द्वीप र समुद्रसहित पृथिवी काँप्न थालिन् । दिक्पालहरू आश्चर्यमा परे । आत्तिएका शेषनागले पनि आफ्ना फणाबाट विषको धारा बगाए ।।१०।। पर्वतका शिखरहरू ढल्न थाले । सम्पूर्ण प्राणीहरू आकुल-व्याकुल भए । स्वर्ग, मर्त्य र पाताल लोकमा बस्ने मानिसहरूका लागि त्यहाँ कल्पान्तमा अर्थात् प्रलयकालमा हुने दृश्य खडा भयो । त्यो पैदा भएको डरलाग्दो पुरुष आफ्ना टाउकाले ब्रह्माण्डलाई

ब्रह्माण्डं मस्तकेनासौ स्फोटयन्निव तस्थिवान् ।
यद्देहतश्चारुगन्धो व्यानशे भुवनत्रयम् ।।१२।।

जपाकुसुमदेहस्य प्रभयारुणिता: दिश: ।
अयं किं मदनो जातो द्वितीयो ब्रह्मसम्भव: ।।१३।।

कामस्तु लज्जितस्तस्य सद्यो रूपनिरीक्षणात् ।
पुरस्तं सन्निरीक्ष्यैनं विस्मित: कमलासन: ।।१४।।

कस्य त्वं कुत उत्पन्न: किं चिकीर्षसि तद् वद ।

पुरुष उवाच

अनेकानि सुरेश ! त्वं ब्रह्माण्डानि सृजस्यपि ।।१५।।

विभ्रान्त इव कस्मान्मां सर्वज्ञ: सन् विपृच्छसि ।
जृम्भायास्ते समुत्पन्नं कथं मां नावबुध्यसे ।।१६।।

अनुगृह्णीष्व पुत्रं मां देहि नाम यथामति ।
स्थानञ्च देहि मे नाथ ! भक्ष्यं कार्यञ्च मे वद ।।१७।।

इत्याकर्ण्य वचस्तस्य प्रोवाच चतुरानन: ।
रक्तं वपुर्यतस्तेऽस्ति सिन्दूराख्यो भविष्यसि ।।१८।।

सामर्थ्यञ्च महत् ते स्यात् त्रैलोक्याकर्षणाक्षमम् ।
क्रोधादालिङ्गसे यं त्वं शतधा स भविष्यति ।।१९।।

पञ्चभ्योऽपि च भूतेभ्यो न भयं ते कदाचन ।
देवदानवयक्षेभ्यो मानुषेभ्यो भयं न ते ।।२०।।

इन्द्रादिलोकपालेभ्य: कालादपि भयं न ते ।
न नागेभ्यो न रक्षोभ्यो नाहोरात्रे भयं न ते ।।२१।।

सजीवान्न च निर्जीवाद् भयं सिन्दूर ! ते भवेत् ।
वस यत्र मनस्ते स्यात् स्थातुं त्रिभुवनेष्वपि ।।२२।।

तत: स वरदानेन तुतोष चतुरास्यज: ।
चक्रन्द कम्पयन् शब्दैस्त्रैलोक्यं सचराचरम् ।।२३।।

फुटाउन तम्सिएसरि उभियो । त्यसका शरीरबाट फैलिएको मीठो गन्ध त्रिभुवनमा नै व्याप्त भयो ।।११-१२।। जपापुष्पजस्तै रातो वर्ण भएको त्यस डरलाग्दो प्राणीको रातो वर्णको कान्तिबाट दिशाहरू पनि रातै भए । मानिसले मनमा तर्क गरे – 'के यो ब्रह्माजीबाट पैदा भएको दोस्रो कामदेव हो? स्वयं कामदेव त यस पुरुषको रूप दर्शन गर्नासाथ आफूभन्दा सुन्दर भएकाले लज्जित भए । आफ्ना सामु विचित्र प्राणी उभिएको देखेर ब्रह्माजी पनि चकित हुनुभयो ।।१३-१४।। उहाँले त्यसलाई सोध्नुभयो – 'तिमी कस्का छोरा हौ ? कुन माताबाट पैदा भयौ? के काम गर्न चाहन्छौ ? मलाई बताऊ ।'

पुरुषले भन्यो- 'हे ब्रह्माजी! तपाईंले त असंख्य ब्रह्माण्डको रचना गर्नुहुन्छ, सबै कुरा जान्नुहुन्छ, भ्रान्तिमा परेझैं गरी मलाई किन सोध्नुभएको हो ? तपाईंले हाई गर्दा तपाईंकै मुखबाट उत्पन्न भएको मलाई के तपाईंले चिन्नुहुन्न ? म तपाईंको छोरा हुँ । ममाथि कृपा गर्नुहोस् र आफ्नो बुद्धिअनुसार मेरो नामकरण गर्नुहोस् । म कहाँ बस्ने ? मलाई आवासको व्यवस्था मिलाउनुहोस्। हे नाथ ! मैले खाने के हो र गर्ने के हो ? त्यसको पनि निरूपण गर्नुहोस् ।।१५-१७।। आफ्नो हाईबाट जन्मेका विचित्र पुरुषको कुरा सुनेर ब्रह्माजीले भन्नुभयो – तिम्रो शरीरमा रातो वर्ण छ, तिमी सिन्दूरजस्ता राता छौ त्यस कारण तिम्रो नाम सिन्दूर रहनेछ ।।१८।। तिम्रो सामर्थ्य महान् हुनेछ र त्यस सामर्थ्यले स्वर्ग, मर्त्य एवं पाताललाई आफ्नो वशमा ल्याउनेछौ। तिमीले जसलाई रीसले आलिङ्गन गर्नेछौ, त्यसको शरीर सय टुक्रा भएर भुइँमा फैलिनेछ । तिमीलाई पृथिवी, जल, आकाश, तेज र वायु यी पाँच तत्त्वबाट कहिल्यै पनि डर हुनेछैन । देवता, दानव, यक्ष र मानिसबाट पनि तिमीलाई कुनै डर हुनेछैन ।।१९-२०।। इन्द्र आदि लोकपाल र यमराजबाट पनि तिमीलाई डर हुनेछैन । नाग, राक्षस, दिन र रातबाट पनि तिमीलाई भय हुनेछैन । हे सिन्दूर! सजीव र निर्जीव पदार्थबाट पनि तिमीलाई डर हुनेछैन । हे छोरा ! स्वर्ग, मर्त्य, पातालमध्ये कुन लोकको कुन ठाउँमा तिमीलाई बस्न मन लाग्छ, त्यहाँ बस ।।२१-२२।। ब्रह्माजीबाट यसरी वरदान पाएपछि त्यो पुरुष अत्यन्त सन्तुष्ट भयो । त्यसपछि आफ्नो घोर गर्जनबाट जड-चेतनसहित स्वर्ग, मर्त्य, पाताललाई

चुक्षुभुः सागराः सर्वे लोकपालाश्च दुद्रुवुः ।
उवाच स तदा देवं नमस्कृत्य पितामहम् ।।२४।।

सिन्दूर उवाच

तव वाक्यामृतेनाहं प्रीतो ब्रह्माण्डनायक !
त्वमेव विश्वं सृजसि पासि हंसि गुणैस्त्रिधा ।।२५।।

त्वयि सुप्ते जगत् सुप्तमन्धकारश्च जायते ।
महद् भाग्यं मम विभो ! तपोदानव्रतैर्विना ।।२६।।

पुत्रस्नेहात् प्रसन्नस्त्वं नान्यथा ते प्रसन्नता ।
कल्पकोटितपोभिस्त्वं प्रसन्नो जायसे विभो ।।२७।।

क उवाच

इत्युक्त्वा तं प्रणम्यासौ कृत्वापि च प्रदक्षिणाम् ।
जगाम मनसा भूमिं मार्गे तर्कमथाकरोत् ।।२८।।

न मे तपो वा ध्यानं वा जपः स्वाध्याय एव च ।
कथं तेन वरा दत्ताः मिथ्या उत ऋता नु ते ।।२९।।

गत्वा द्रक्ष्यामि पितरमित्युक्त्वाऽगात् पितामहम् ।
तुलयित्वा तु दोर्दण्डौ जगर्ज स भयानकः ।।३०।।

तमेवालिङ्गितुं चैच्छत् तत ऊचे पितामहः ।
पुत्रस्नेहान्मया दत्ता वरा अन्यस्य दुर्लभाः ।।३१।।

दुष्टभावान्ममैव त्वमपकर्तुमिहागतः ।।३२।।

भुजगस्य पयो दत्तं विषमेव हि जायते ।
दुष्टभावं गतो यस्मात् तस्माद् दैत्यो भविष्यसि ।।३३।।

परमात्माऽवतीर्याशु हनिष्यति गजाननः ।
तवाङ्गं सुरभि ज्ञात्वा स्वाङ्गे तन्मर्दयिष्यति ।।३४।।

कपाउँदै क्रन्दन गर्न थाल्यो । त्यस गर्जनबाट सागरहरू क्षुब्ध भए, लोकपालहरू डराएर भाग्न थाले । सिन्दूरले आफ्ना पिता ब्रह्माजीलाई प्रणाम गरेर भन्यो ।।२३-२४।।

**सिन्दूरले भन्यो** - 'हे ब्रह्माण्डका स्वामी ! हजुरको वाणीरूप अमृतपान गरेर म अत्यन्त प्रसन्न भएको छु । हजुरले तीन गुणको आश्रय लिएर विश्वको रचना गर्नुहुन्छ, पालन गर्नुहुन्छ र संहार गर्नुहुन्छ । हजुर निदाउनुभयो भने संसारै निदाउँछ र त्यसमा अन्धकार फैलिन्छ । हे अन्तर्यामी पिताश्री ! म अत्यन्त भाग्यशाली प्राणी रहेछु किनकि तपस्या, दान, व्रत केही नगरीकन हजुरबाट मैले ठूलो वरदान पाएँ ! मलाई छोरो जानेर माया गरी हजुर ममाथि ज्यादै प्रसन्न हुनुभएको हो, अन्यथा यसरी सबैप्रति हजुर प्रसन्न हुनुहुन्न । हे अन्तर्यामी! कति मानिसले करोडौं कल्पसम्म तपस्या गरेर मात्र हजुरलाई प्रसन्न तुल्याउँछन्' ।।२५-२७।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्ना पिता ब्रह्माजीसामु मनका कुरा व्यक्त गरेर उहाँलाई प्रणाम र प्रदक्षिणासमेत गरी त्यसले मनदेखि नै पृथिवीतर्फ जाने विचार गर्‍यो । पृथिवीतर्फ जाँदा बाटामा त्यसको मनमा तर्क उठ्यो- 'मैले तपस्या, ध्यान, जप र शास्त्रको अध्ययन केही गरेको छैन । केही नगर्दा पनि ब्रह्माजीले कसरी मलाई यस्ता वरदान दिनुभयो । ती सत्य हुन् अथवा मिथ्या ? त्यसको निधो भएन ।।२८-२९।। त्यस कारण वरदानलाई प्रमाणित गर्न म फेरि ब्रह्माजीका नजिकमा जान्छु भनेर त्यो ब्रह्माजीका सामु गयो । त्यहाँ गएर आफ्ना दुवै भयानक हातहरू उचाली गर्जन गर्‍यो । ब्रह्माजीलाई नै क्रोधपूर्वक आलिङ्गन गर्ने इच्छा गर्‍यो । त्यो देखेर ब्रह्माजीले त्यसलाई भन्नुभयो - 'हे छोरा ! तिमीलाई मैले पुत्रस्नेह गरी अरूलाई दुर्लभ मानिएका वरहरू दिएँ । दुष्ट स्वभाव भएका कारण तिमी मेरै अपकार गर्न आइपुग्यौ ।।३०-३२।। हे दुष्ट ! मैले तिम्रो त्यो भाव थाहा पाएको थिइनँ । तिमी राम्रा हौला भन्ने विचार गरेको थिएँ । सर्पलाई दूध खुवाउँदा त्यसले विष नै ओकल्छ । तिमीले दुष्ट भावनालाई आत्मसात् गरेर व्यवहार गर्‍यौ । त्यस कारण तिमी दैत्य हुनेछौ र गजानन परमात्माले अवतार लिएर तिम्रो वध गर्नुहुनेछ । उहाँले तिम्रो अङ्गलाई सुगन्धित जानेर आफ्नो

सिन्दूरारुणदेहश्च सिन्दूरप्रिय एव च ।
भविष्यति स देवोऽपि सिन्दूरवध एव च ।।३५।।

एवमुक्त्वा पपालाशु भयेन कमलासनः ।
मनोवायुमहावेगो निश्वासश्वाससङ्कुलः ।।३६।।

दैत्योऽपि पृष्ठतो याति शापमाकर्ण्य मन्युमान् ।
स्वेदेनार्द्रतनुर्दुष्टो दृष्ट्वा दृष्ट्वा पुरो व्रजन् ।।३७।।

धरिष्यामि पदेऽन्यस्मिन्निति दैत्योऽभ्यधावत ।
वैकुण्ठमगमद् ब्रह्मा कम्पमानस्त्वरान्वितः ।।३८।।

अङ्गमा लेपन गर्नुहुनेछ । त्यस कारण उहाँको शरीर सिन्दूरझैं रातो हुनेछ। सिन्दूरका प्यारा भगवान् श्रीगणेश तिम्रै नामबाट सिन्दूरसंहारकका रूपमा प्रसिद्ध हुनुहुनेछ ।।३३-३५।। यसरी सिन्दूरनामक दैत्यसँग कुरा गरेपछि त्योसँग डराएर भगवान् ब्रह्माजी भाग्नुभयो । मन र वायुको भन्दा पनि तीव्र वेगमा दौडिई लामा-लामा श्वास-प्रश्वास लिंदै अगाडि बढ्नुभयो ।।३६।। उहाँ अगाडि बढ्दा त्यो दैत्य उहाँको पछि लाग्यो । आफूमाथि ब्रह्माजीको सराप परेको जानेर रिसाएको त्यो दैत्य दौडिदा-दौडिदा पसिनै पसिनाले ढाकियो तर त्यसले ब्रह्माजीलाई पछ्याउन छाडेन। ब्रह्माजी काँप्दै वैकुण्ठमा विराजमान भगवान् नारायणका शरणमा पुग्नुभयो ।।३७-३८।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे सिन्दूरोत्पत्तिर्वर्णनं नाम सप्तविंशत्युत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्दूरासुरको उत्पत्ति' शीर्षकान्वित एक सय सत्ताईसौं अध्याय पूर्ण भयो ।।१२७।।

ॐ

## अष्टाविंशत्युत्तरशततमोऽध्यायः { १२८ अध्याय }

क उवाच

स ददर्श समासीनं नारायणमनामयम् ।
रत्नकाञ्चनविलसत्पद्मासनगतं विभुम् ।।१।।

सोऽपि तं पुरतो वीक्ष्य विवर्णवदनं तदा ।
तत्पृष्ठतो महादैत्यं गगनस्पर्धिमस्तकम् ।।२।।

उदतिष्ठत वेगेन दयालुः कमलापतिः ।
धृत्वा करं समालिङ्ग्य स्वासने कं न्यवेशयत् ।।३।।

सम्पूज्य परिपप्रच्छ किं ते कार्यमुपस्थितम् ।
कथं च म्लानवदनः श्वासवांश्च हतप्रभः ।।४।।

मम खेदः समुत्पन्नो दृष्ट्वैव त्वां पितामह ।
इति तद्वचनं श्रुत्वा जगाद कमलासनः ।।५।।

क उवाच

प्रबोधितः शिवेनाहं प्रतिसुप्तो निजालये ।
ततो मे जृम्भतो वक्त्रान्निर्गतः पुरुषो महान् ।।६।।

पतन्ति भूतले भानि यन्मस्तकविघाततः ।
तस्य सौरभगन्धेन सर्वे देवा विसिस्मिरे ।।७।।

यस्य लावण्यमीक्ष्यैव लज्जितो मदनोऽभवत् ।
यस्य क्रन्दितशब्देन चकम्पे भुवनत्रयम् ।।८।।

स नमस्कृत्य मां देव विनीतः पुरतः स्थितः ।
ततस्तस्मै वरा दत्ताः पुत्रस्नेहेन माधव ! ।।९।।

यं यं त्वमालिङ्गयसि स स मृत्युमुपैष्यति ।
कालोऽपि न रणे स्थातुं तव शक्तो भविष्यति ।।१०।।

स्थानं च स्वेच्छया तस्य दत्तं देव ! मया ततः ।
नमस्कृत्य गतो दूरं वितर्कात् पुनरागतः ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - सिन्दूरनामक दैत्यले सताइएका ब्रह्माजी वैकुण्ठमा पुग्नु भएपछि उहाँले रत्न र सुवर्णले शोभायमान भई पद्मासनमा विराजमान निर्विकाररूप भगवान् नारायणको दर्शन गर्नुभयो ।।१।। नारायणले पनि आफ्ना सामु मलिन अनुहार लिएर आएका ब्रह्माजी र उहाँको पिछा गर्दै आएको, आफ्नो मस्तकले आकाश स्पर्श गर्ने र विशालकाय दैत्यलाई देख्नुभयो। दुबैलाई देखेर भगवान् नारायण आफ्नो आसनबाट उठ्नुभयो । दयालु भगवान् नारायणले ब्रह्माजीलाई हातमा समातेर आफ्नै आसनमा बसाउनुभयो । पूजा गरी सम्मान गरेर उहाँले ब्रह्माजीलाई सोध्नुभयो- 'हे ब्रह्माजी ! तपाईँलाई के आइलाग्यो ? किन तपाईँको अनुहार मलिन छ? किन लामो सास फेरिरहनु भएको छ? किन तपाईँको मुखमा कान्ति छैन ? हे ब्रह्माजी ! तपाईँलाई यस हालतमा देखेर म दुःखी भएको छु।' भगवान् नारायणका यस्ता कुरा सुनेर ब्रह्माजीले नारायणसँग निवेदन गर्नुभयो ।।२-५।।

**ब्रह्माजीले भन्नुभयो** - हे नारायण ! कुनै दिन म ब्रह्मलोकको आफ्नो भवनमा निदाइरहेको थिएँ । एक्कासि त्यहाँ पुग्नुभएका शिवजीले मलाई जगाउनुभयो । म जाग्दा मेरो मुखबाट ठूलो हाई प्रकट भयो । त्यसबाट एउटा डरलाग्दो पुरुष उत्पन्न भयो ।।६।। त्यस पुरुषले टाउकाले स्पर्श गर्दा आकाशका ताराहरू भुइँमा खसेका थिए । त्यसको शरीरबाट बाहिर प्रवाहित हुने गन्धले देवताहरू छक्क परे । त्यस पुरुषको सौन्दर्य देखेर कामदेवले लाजको अनुभव गरे । त्यस पुरुषको क्रन्दनको शब्दले तीनै लोक काँप्न थाले ।।७-८।। त्यो पुरुष मलाई नमस्कार गरेर नम्रतापूर्वक मेरा अगाडि उभियो । हे नारायण ! मैले त्यस बेला छोरालाई झैं माया गरी अनेक थरि वर दिएँ।।९।। मैले त्यसलाई भनें- 'हे बाबु ! तिमीले ज-जसको आलिङ्गन गर्छौ त्यो मर्नेछ। काल पनि युद्धमा तिम्रा सामु रहन सक्नेछैन ।' यसरी बताएर मैले त्यसलाई स्वेच्छापूर्वक स्वर्ग, मर्त्य, पातालमध्ये कुनै ठाउँमा पनि बस्न सक्छौ भनी बस्ने ठाउँ दिएँ । मलाई नमस्कार गरेर त्यो गयो । त्यसलाई बाटामा तर्क उठेछ र त्यो फेरि फर्केर मेरा सामु आयो ।।१०-११।। मसँग

सर्वेवालिङ्गितुं यातोऽपलमस्माद् भयादहम् ।
हंसमारुह्य सहसा वेगेन त्वामुपागतः ।।१२।।

दृष्ट्वा दृष्ट्वा पृष्ठगतं कम्पः श्वासश्च मेऽभवत् ।
विना त्वां शरणं कं वा यामि सर्वेश्वरेश्वर ।।१३।।

ततोऽब्रवीन्महाविष्णुर्ब्रह्माणं शरणागतम् ।

### देव उवाच

एवं दत्त्वा वरान् देव ! सङ्कटं प्राप्य बुद्धितः ।।१४।।

इदानीं चिन्तया किं स्याद् यद् भाव्यं तद् भविष्यति।
न पीडां त्रिषु लोकेषु विधातुमुद्यतो भवेत् ।।१५।।

### क उवाच

यावत् तौ चिन्तयाविष्टौ स्थितौ ब्रह्महरी तदा ।
तावत् स पुरतोऽतिष्ठद् दृष्ट्वा ताभ्यां महासुरः ।।१६।।

जगर्ज गर्जयामास त्रैलोक्यं बलवत्तरम् ।
ब्रह्माण्डं कम्पयामास ब्रह्माणञ्च तदा खलः ।।१७।।

सोऽवदद् रक्ष-रक्षेति विष्णुं त्रैलोक्यरक्षकम् ।
ततो विष्णुर्जगौ दैत्यं वाचा मधुरया तदा ।।१८।।

### देव उवाच

न त्वया वरदानेन मत्तेन योद्धुमुत्सहे ।
अहं सत्त्वगुणोपेतः पालने निरतः सदा ।।१९।।

अयञ्च ब्राह्मणो ब्रह्मा तेन योद्धुं न चार्हसि ।
नव युद्धप्रदो देवः ख्यातोऽसौ मदनान्तकः।।२०।।

तेन युद्ध्यस्व ते कीर्तिमर्हती स्यात् त्रिलोकगा ।

आउँदा मलाई नै आलिङ्गन गर्न खोज्यो । त्यसको आलिङ्गनबाट जो कोही मर्नसक्ने म आफैले दिएको वरदान सम्झेर म भागें । हंसमा सवार भई वेगपूर्वक म हजुरको शरणमा आएको छु ।।१२।। तर त्यो दुष्ट पनि मलाई पछ्याउँदै यहाँसम्म आइपुगेको छ। जबजब मैले त्यो पुरुषलाई पछ्याइरहेको अवस्थामा देख्छु तबतब डरले मेरो मुटु काँप्छ र श्वास तीव्र गतिमा चल्न थाल्दछ। हे सर्वेश्वर भगवन् नारायण ! हजुरलाई छाडी कसको शरणमा जाऊँ ?'।।१३।। ब्रह्माजीका यी कुरा सुनेर शरणमा आएका ब्रह्माजीलाई भगवान् नारायणले सम्बोधन गर्नुभयो।

**नारायणले भन्नुभयो** - 'हे ब्रह्माजी ! तपाइँले पहिले बुद्धिपूर्वक वरदान दिनुभएन । वरदान दिंदा विचार गरेर दिनुपर्छ। अहिले आफैले दिएको वरदानबाट तपाईं सङ्कटमा पर्नुभएको छ। अब चिन्ता गरेर के हुन्छ ? जे हुन लेखेको छ त्यही हुन दिनुहोस् । अब तपाईंका कारणबाट त्यो संसारलाई पीडा दिन उद्यत हुनेछ' ।।१४-१५।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी ब्रह्मा र विष्णु चिन्ताले युक्त भएर रहनु भएको समयमा सामुना रहेको त्यो महादैत्य गर्जन गर्न थाल्यो र स्वर्ग, मर्त्य, पाताललाई गर्जनबाट थर्काउन थाल्यो ।।१६।। त्यस दुष्टले ब्रह्माजी र ब्रह्माजीद्वारा निर्मित ब्रह्माण्डलाई पनि कम्पायमान बनायो । त्यसपछि ब्रह्माजीले तीन लोकका रक्षक नारायणसँग हे नारायण ! रक्षा गर्नुहोस् रक्षा गर्नुहोस् भनी प्रार्थना गर्नुभयो । त्यस बेला भगवान् नारायणले दैत्यसँग मीठा वचन प्रयोग गर्दै कुराकानी गर्नुभयो।।१७-१८।।

**नारायणले भन्नुभयो** - 'हे दैत्य ! तिमीले गर्जन गर्‍यौ। तिम्रो गर्जन भनेको हाम्रा निमित्त युद्धको आह्वान हो । तिम्रो आफ्नो शक्ति छैन । पाएको वरदानबाट मातेका छौ । त्यस कारण अरूको शक्तिबाट बलवान् देखिने आफ्नो शक्ति नभएका नामर्दसँग मलाई युद्ध गर्ने मन छैन । म सत्त्वगुणले सम्पन्न छु र सदा संसारको रक्षामा तत्पर छु ।।१९।। अब ब्रह्माजीसँग युद्ध गर्ने कुरा तिमी गर्न सक्छौ तर ब्रह्माजी ब्राह्मण हुनुहुन्छ । ब्राह्मणसँग तिमीले के युद्ध गर्ने ? त्यो युद्ध सुहाउँदैन। तिमीसँग युद्ध गर्नसक्ने देवता भगवान् शङ्करमात्र हुनुहुन्छ र तिमीले सक्छौ भने उहाँसँग युद्ध गर । संसारमा तिम्रो उज्ज्वल कीर्ति फैलिनेछ।'

क उवाच

इत्याकर्ण्य वचस्तस्य जहृषे दैत्यपुङ्गवः ।।२१।।

उड्डीय प्रययौ सद्यः कम्पयन् भुवनत्रयम् ।
पातयन् पर्वतान् वृक्षाँश्चूर्णयन् सहसा बहून् ।।२२।।

दिग्गजाश्चलिताः सर्वे सञ्जग्मुर्विदिशो दिशः ।
एवमुपत्यकां यातः कैलासस्य महागिरेः ।।२३।।

ददर्शाधित्यकायां स ध्यानस्थं गिरिशं खलः ।
नन्दिभृङ्गिगणाकीर्णं पार्वत्या सेवितं विभुम् ।।२४।।

व्याघ्रचर्मपरीधानमर्धचन्द्रविभूषणम् ।
भस्माङ्गरागशोभाढ्यं करिचर्मोत्तरीयकम् ।।२५।।

दृष्ट्वा देवं तदा दैत्यो निनिन्द सहसा हरम् ।
अनेन किं मया युद्धं कर्तव्यं तापसेन ह ।।२६।।

एतस्य सुन्दरीं भार्यां नीत्वा यामि यदृच्छया ।
एवं निश्चित्य मनसा गौरीमन्तिकमाययौ ।।२७।।

तदा चकम्पे गिरिजा कल्पान्ते जगती यथा ।
निमील्य नयने मूर्च्छामापाशु भयविह्वला ।।२८।।

दधार तां केशपाशे स दैत्यो दुष्टमानसः ।
उड्डीय चलितो वेगाच्छुशोच गिरिजा तदा ।।२९।।

रावणेन नीयमाना यथा सा धरणीसुता ।

गिरिजोवाच

औदासीन्यं कथं यातो मयि देवोऽखिलार्थवित् ।।३०।।

ध्यानं कथं गतोऽस्यर्धे ह्रियमाणे त्वदङ्गके ।
नाकारि दास्यं न्यूनं ते येन काठिन्यमागतः ।।३१।।

कः सखा मोचयेन्मां हि प्राणदाता भवेच्च कः ।
पुनर्मे शङ्करं को नु दर्शयेद् बलवत्तरः ।।३२।।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् नारायणका कुरा सुनेर त्यो दैत्य अत्यन्त प्रसन्न भयो ।।२०-२१।। त्यो तुरुन्तै उडेर तीन लोक कपाउँदै पर्वत र रूखहरूलाई धूलोपीठो बनाउँदै गयो । त्यो उडानबाट दिग्गजहरू पनि कम्पायमान भए र दिशा-विदिशातर्फ लागे । यसरी त्यो दैत्य कैलास महागिरिको उपत्यकामा पुग्यो ।।२२-२३।। त्यहाँ गएर त्यस दुष्टले कैलासको अधित्यकामा ध्यानमुद्रामा विराजमान शङ्कर भगवान्‌लाई देख्यो। उहाँ नन्दी, भृङ्गी आदि गणहरूबाट घेरिएर पार्वतीद्वारा सेवित भई विराजमान हुनुहुन्थ्यो ।।२४।। उहाँले बाघको छाला लगाउनु भएको थियो । उहाँको निधारमा चन्द्रमा अलङ्कारका रूपमा रहेका थिए । खरानीलाई अङ्गराग बनाएर धारण गर्नुहुने शङ्कर भगवान् उज्ज्वल शोभाले सम्पन्न हुनुहुन्थ्यो र उहाँले हात्तीको छाला उत्तरीय बनाएर ओढ्नु भएको थियो ।।२५।। भगवान् शङ्करलाई देखेर त्यस दैत्यले उहाँको निन्दा गर्न थाल्यो । यस्ता जङ्गलमा बस्ने निर्बल तपस्वीसँग के युद्ध गर्ने ? ।।२६।। बरु यसकी दुलही अत्यन्त राम्री रहेछन् । यिनलाई म आफ्नै इच्छाले लिएर जान्छु । यसरी मनले निश्चय गरेर त्यो पार्वतीका समीपमा आइपुग्यो ।।२७।। त्यसलाई देखेर महाप्रलयको समयमा पृथिवी काँपेझैं पार्वती पनि डराएर थुर्थुर काँप्नुभयो । आँखा चिम्लिएर बस्दाबस्दै डरले उहाँ मूर्च्छित हुनुभयो ।।२८।। त्यस बेला दुष्ट मन भएको दैत्यले पार्वतीको चुल्ठो तान्यो । त्यसपछि त्यसले वेगपूर्वक उडेर उहाँलाई साथ लिएर गयो । त्यस बेला गिरिजाले शोक गर्नुभयो । रावणद्वारा अपहरण गरिंदा भगवती सीताले जसरी साधारण नारीझैं व्याकुल भएर शोक गर्नुभएको थियो त्यसरी नै पार्वतीले पनि शोक गर्नुभयो।

**पार्वतीले भनिन्** – 'सम्पूर्ण रहस्यका ज्ञाता मेरा प्राणनाथ भगवान् शङ्करले मेरो किन उपेक्षा गर्नुभयो र मप्रति किन उदासीन हुनुभयो? ।।२९-३०।। हे शिवजी ! आफ्नो आधा अङ्ग मानिएकी श्रीमतीलाई अरूले अपहरण गर्दा पनि कत्ति पीर नगरेर हजुर ध्यानमा लाग्नुभयो । मैले हजुरको सेवामा कहिले पनि त्रुटि गरेजस्तो लाग्दैन । किन आज मप्रति कठोर हुनुभयो?।।३१।। मलाई कुन मित्रले यस्तो कष्टबाट मुक्ति प्रदान गर्ला ? कसले मलाई प्राणदान गर्ला ? कुन बलवान् मानिसले यस दुष्टका हातबाट छुटाएर भगवान् शङ्करका सामु पुऱ्याउला ?' ।।३२।।

क उवाच

ततः शोकाकुलां वीक्ष्य तां गणाः प्राब्रुवँस्तदा ।
अनेन योद्धुं शक्तिर्नो त्रैलोक्यनाशिनाऽधुना ।।३३।।

शिवश्च ध्याननिष्ठोऽभूद् दैवादस्यानुकूलता ।
नीता नो जननी विश्वसृष्टिस्थित्यन्तकारिणी ।।३४।।

मोहिनी सर्वदेवानां सर्वदुःखविनाशनी ।
लावण्यलहरी नीता सर्वयोषिद्वरा शुभा ।।३५।।

रत्नभूता कथं नीता कथं सा पुनरेष्यति ।
ध्यानस्थे शङ्करे सर्वनाशनं नेत्रवह्नितः ।।३६।।

तस्मिन् यास्यति लोभेन पुत्रानिव जनन्यथ ।
एवं शोकं प्रकुर्वत्सु हाहाकारै रुदत्सु च ।।३७।।

गणेषु विससर्जाशु ध्यानं क्रोधान्महेश्वरः ।
क्रोधानलेन ब्रह्माण्डं दहन्निव दिशो दश ।।३८।।

पप्रच्छ तान् गणान् शम्भुः सङ्कटं किमुपस्थितम् ।
भस्मसात् तं करिष्यामि येन वः कदनं कृतम् ।।३९।।

इति तद्वचनं श्रुत्वा प्रोचुस्तं ते गणास्तदा ।
त्वयि ध्यानस्थिते देव ! मन्दराचलसन्निभः ।।४०।।

कृतान्तसमरूपः सन्नागतो दैत्यपुङ्गवः ।
यस्य श्वासानिलहता अचलाश्चलतां गताः ।।४१।।

सम्मोहं प्रापिता देवा दर्शनादेव शङ्कर !
ततः स गिरिजां धृत्वा केशपाशे महाबलः ।।४२।।

निनाय सत्वरं व्योममार्गेण जननीं हि नः ।
नीयमाना शिवा प्राह धाव धावेति सत्वरम् ।।४३।।

मूर्च्छिता पतिता भूमौ वयं सर्वे विमूर्च्छिताः ।
तथाविधां समादाय ययौ स दुष्टमानसः ।।४४।।

श्रुत्वा तेषां वचः शम्भुर्जज्वाल परमं रुषा ।
कुर्वन् भस्मेव लोकानामारुरोह वृषं निजम् ।।४५।।

**ब्रह्माजीले भन्नुभयो** – त्यस बेला पार्वतीलाई शोकले व्याकुल भएकी देखेर शिवजीका गणहरू निराश भए । तिनले भने- 'के गरौं? शिवजी ध्यानमा हुनुहुन्छ। दैवले गर्दा यस दानवले अनुकूल समय पायो । हामी यो दुष्ट दानवसँग लड्न सक्दैनौं। यसले त्रिलोकीलाई नै जित्ने सामर्थ्य राख्दछ । हाम्री आमा पार्वती संसारको सृष्टि, पालन र संहारमा समर्थ हुनुहुन्छ। सबै देवताहरूलाई आफ्नो गुण र सौन्दर्यबाट मुग्ध तुल्याउने सामर्थ्य पनि राख्नुहुन्छ । प्राणीहरूका अनेक थरि कष्टलाई निवारण गर्ने दयालु जगदम्बाका रूपमा प्रसिद्ध हुनुहुन्छ । सौन्दर्यकी विचित्र लहरी हुनुहुन्छ । त्यस्ती नारीरत्न पार्वतीलाई दानवले आज लग्यो । उहाँलाई कसरी फर्काउन सकिन्छ ? लोभी दानवको लोभकै कारण ध्यानमा विराजमान हुनुभएका संहारका अधिपति भगवान् शङ्करको आँखाको क्रोधज्वालाबाट दानवका साथै जगत् पनि खरानी हुनसक्छ भन्दै छोरा हराउँदा आमाहरूले हाहाकार गरेझैं शिवगणले शोक गर्दै हाहाकार गरिरहेको अवस्थामा भगवान् शङ्कर क्रोधपूर्वक ध्यानबाट जाग्नुभयो । उहाँको क्रोधको आगोले दसै दिशासहित ब्रह्माण्डलाई डढाएजस्तो तातो परिस्थिति पैदा भयो ।।३३-३८।। भगवान् शिवजीले आफ्ना गणहरूसँग भन्नुभयो – के सङ्कट आइलाग्यो? किन हाहाकार गरिरहेका छौ ? तिमीहरूलाई जसले कष्ट दियो त्यसलाई मैले खरानी बनाउनेछु ।।३९।। यसरी भगवान् शङ्करका कुरा सुनेर ती गणहरूले भने – 'हजुर ध्यानमा लाग्नुभएपछि मन्दराचलझैं विशाल आकारको यमराजझैं डरलाग्दो दैत्य आइपुग्यो । त्यसको श्वासप्रश्वासको आघातबाट पर्वतहरू पनि कम्पायमान भए । हे शङ्कर ! त्यसको दर्शन गर्नासाथ देवताहरू पनि मोहित भए । त्यसपछि त्यस महाबली दैत्यले पार्वतीलाई चुल्ठोमा समातेर आकाशमार्गबाट उडायो ।।४०-४२।। दैत्यद्वारा अपहरण गरिएकी पार्वतीले हामीलाई दौड, दौड मलाई बचाऊ भनी क्रन्दन गर्नुभयो । क्रन्दन गर्दागर्दै मूर्च्छित भई आकाशबाट भुइँमा लड्नुभयो । यो देखेर हामीहरू पनि मूर्च्छित भयौं । त्यसपछि त्यस दुष्टले उहाँलाई फेरि लिएर गयो' ।।४३-४४।। आफ्ना गणहरूका यस्ता कुरा सुनेर भगवान् शङ्कर क्रोधले सन्तप्त हुनुभयो । संसारलाई भस्म बनाउन सक्ने दृष्टिले चारैतिर हेर्दै उहाँ नन्दीमा सवार हुनुभयो ।।४५।। उहाँले आफ्ना दश

त्रिशूलादीनि शस्त्राणि दधानो दशभिर्भुजैः ।
नभोमार्गेण प्रययौ गर्जयन् विदिशो दिशः।।४६।।

यत्रासीत् सिन्दूरो दैत्यस्तं देशमगमत् क्षणात् ।
अहनत् पृष्ठदेशे तं तस्थौ स सम्मुखं तदा ।।४७।।

मुञ्च भार्यां महादुष्ट ! दृष्टः सन् क्व गमिष्यसि ।
इत्युक्तः स रुषाविष्टस्त्रिलोकीं भस्मतां नयन् ।।४८।।

बाहुभ्यां मारयन्नेव प्रययौ शिवसन्निधौ ।
उवाच च महादैत्यो गर्वेण परिमोहितः ।।४९।।

नाहं मशकवाक्येन बिभेमि भुवनाधिप: ।
यस्य श्वासानिलेनाशु कम्पते मेरुपर्वतः।।५०।।

तस्य मे गणना नास्ति मुखं मां मा प्रदर्शय ।
यदि शक्तिर्मया सार्धं युद्धं कर्तुं तदा कुरु ।।५१।।

नो चेदन्यां परिणीय ततः सौख्यमवाप्स्यसि ।
किं मया सह योद्धव्यं मशकेन त्वया लघो ।।५२।।

एवमुक्त्वा बाहुयुद्धं कर्तुं शङ्करमाययौ ।
दुर्गा देवी तु संस्मार मयूरेशं स्वचेतसि ।।५३।।

द्विजरूपधरो देवो मयूरेशस्ततस्तयोः ।
अन्तराले प्रादुरासीत् कोटिसूर्यनिभः क्षणात् ।।५४।।

सर्वाङ्गसुन्दरो नानाभूषणैरुपशोभितः ।
परशुं मध्यतः कृत्वा वारयामास दैत्यपम् ।।५५।।

उवाच श्लक्ष्णया वाचा सिन्दूरं तं द्विजोत्तमः ।
त्रैलोक्यजननीं गौरीं स्थापयाशु ममान्तिके ।।५६।।

युध्यस्व शङ्करेण त्वं यावज्जयपराजयौ ।
जयो यस्य भवेत् तेन ग्राह्येति नान्यथा वचः ।।५७।।

क उवाच

द्विजवाक्यं समाकर्ण्य सिन्दूरो हृष्टमानसः ।
स्थापयामास गिरिजां युद्धाय बहुलालसः ।।५८।।

भुजाहरूमा त्रिशूल आदि शस्त्रहरू धारण गर्नुभएको थियो । गर्जनबाट दसै दिशा थर्काउँदै उहाँ आकाशमार्गद्वारा दैत्य बसेको ठाउँमा पुग्नुभयो र त्यसको पिठ्यूँमा प्रहार गर्दै मुखमा हेर्नुभयो। हे दुष्ट ! तैंले मेरी प्रिया पार्वतीलाई छाडिदे । तँ अब मेरा आँखाका सामु परेको छस्, कहाँ जान सक्छस् ? यसरी शिवजीका कुरा सुनेर रोषको आवेगमा आई स्वर्ग, मर्त्य एवं पाताललाई नै खरानी बनाउने किसिमले आफ्ना दुवै भुजाहरूद्वारा शिवजीमाथि प्रहार गर्न खोज्दै त्यो उहाँका सामु आइपुग्यो । अहङ्कारले मत्त भएको त्यस महादैत्यले शिवजीलाई भन्यो ।।४६-४९।। 'म लामखुट्टेका कुरा सुनेर डराउने दैत्य होइन । म स्वर्ग, मर्त्य एवं पातालको अधिपति हुँ । मेरो श्वासको हावाबाट सुमेरु पर्वत काँप्दछ । मेरो तुलना कसैसँग हुन सक्दैन । तैंले मेरा सामु मुख नदेखा । यदि तेरो सामर्थ्य छ भने मसँग युद्ध गर् । यिनी पत्नीको माया मार् किनकि अब यी मेरी भइन् । तैंले अर्की बिहे गरे हुन्छ । अर्की श्रीमतीबाट नै सुख पाउनेछस् । तँ कीरा फट्याङ्ग्रा जस्तो प्राणीले म विश्वको सर्वाधिक बलवान् वीरसँग लड्न सुहाउँदैन' ।।५०-५२।। यसरी उत्तर दिएर त्यो दैत्य भगवान् शङ्करसँग बाहुयुद्ध गर्न आइपुग्यो । त्यस बेला भगवती पार्वतीले आफ्नो मनमा भगवान् मयूरेश श्रीगणेशको संझना गर्नुभयो ।।५३।। शिवजी र त्यस दैत्यको बीचमा भगवान् श्रीगणेश करोडौं सूर्यको प्रकाशलाई पनि मन्द तुल्याउने स्वरूप लिएर ज्योतिर्मय रूपमा प्रकट हुनुभयो ।।५४।। भगवान् श्रीगणेश सर्वाङ्गसुन्दर र अनेक थरि विभूषणद्वारा विभूषित हुनुहुन्थ्यो । भगवान् शङ्करमाथि जाई लाग्ने दैत्यलाई छेक्न उहाँले शिवजी र दैत्यको बीचमा आफ्नो बञ्चरो तेर्स्याउनुभयो ।।५५।। त्यसपछि ब्राह्मणवेष लिएका श्रीगणेशले मधुर वाणीबाट सिन्दूरनामक दैत्यलाई भन्नुभयो -' हे दैत्य ! तैंले तीनै लोककी आमा भगवती पार्वतीलाई मेरो नजिकमा ल्याउने काम गर् ।।५६।। त्यसपछि तँ भगवान् शङ्करसँग युद्ध आरम्भ गर् । जय र पराजयको दृष्टिकोणबाट म हेरिरहनेछु । जसले युद्धमा विजय प्राप्त गर्छ त्यसले यी पार्वतीलाई आफ्नी बनाएर लैजानेछ । यसमा फरक पर्ने छैन' ।।५७।।

**ब्रह्माजीले भन्नुभयो** - शिवजी र आफ्नो बीचमा रहेका ब्राह्मणका कुरा सुनेर दैत्य सिन्दूर अत्यन्त प्रसन्न भयो । ब्राह्मणले

तयोस्तु पश्यतोरेव तावुभावप्ययुध्यताम् ।
सिन्दूरश्च महेशश्च नानायुद्धविशारदौ ।।५९।।

क्रोधसंरक्तनयनौ तुल्यतेज:पराक्रमौ ।
बाहुभ्यां वेष्टितुं यावदियेष सोऽसुरो हरम् ।।६०।।

अदृश्य एव परशुरस्य जघ्ने बलादुरः ।
क्षीणशक्तिं ततो दैत्यं त्रिशूलेनाहनद्धरः ।।६१।।

ततोऽशक्तं द्विजवरो वदति स्म हितं वचः ।
त्रैलोक्यनायकेन त्वं न युद्धं कर्तुमर्हसि ।।६२।।

गिरिजाशां विहायाशु व्रजस्व निजमन्दिरम् ।
नो चेदयं शिवो भस्म करिष्यति तवाधुना ।।६३।।

एवमुक्तो द्विजेनाऽसौ वाञ्छां त्यक्त्वा भुवं ययौ ।
ततः सा पार्वती प्राह द्विजं प्राप्ते जयं शिवे ।।६४।।

कोऽसि त्वं मुनिशार्दूल ! येनाहं मोचिता खलात् ।
निजं मे दर्शय स्वीयं रूपं नेदं स्वभावजम् ।।६५।।

मम प्राणाधिकोऽसि त्वं सखा प्राणप्रदो यतः ।
न भवेदुपकारस्ते प्राणे त्यक्ते द्विजोत्तम ।।६६।।

एवमाश्रुत्य तां वाचमुवाच स मुनीश्वरः ।
न च मातर्मयाकारि किञ्चिदत्र महेश्वरः ।।६७।।

अजयत् सिन्दूरं दैत्यं मोचिता त्वं शिवेन ह ।
इत्युक्त्वा पूर्वरूपं स आविश्चक्रे विनायकः ।।६८।।

दशदोर्दण्डरुचिरं कर्णकुण्डलमण्डितम् ।
कस्तूरीतिलकं रत्नमुक्तामालाविभूषितम् ।।६९।।

भनेझैं उहाँका सामु पार्वतीलाई लिएर राख्यो र युद्ध गर्ने इच्छा प्रकट गऱ्यो । ब्राह्मण र पार्वतीले हेरिरहेकै नाना युद्धमा सिपालु सिन्दूर र शङ्करले युद्ध गरे ।।५८-५९।। (उनी) दुवै वीरहरू युद्धकलामा निपुण थिए, दुवैका आँखा रीसले राता देखिन्थे र दुवैका पराक्रम समान थिए । जब त्यस सिन्दूर दानवले आफ्ना दुवै हातबाट भगवान् शङ्करलाई अठ्याउने प्रयास गऱ्यो त्यस बेलामा अदृश्य रूपमा आएको बञ्चराले त्यसको छातीमा प्रहार गऱ्यो । बञ्चराको प्रहारबाट निस्तेज बन्न पुगेको त्यस दैत्यमाथि भगवान् शङ्करले त्रिशूलप्रहार गर्नुभयो ।।६०-६१।। त्यसपछि साह्रै अशक्त अवस्थामा पुगेको त्यस दैत्यलाई ब्राह्मणका रूपमा आउनुभएका भगवान् श्रीगणेशले हितकारी वचन भन्नुभयो - 'हे दैत्य ! स्वर्ग, मर्त्य र पातालका स्वामी शिवजीसँग तिमीले युद्ध गर्न सुहाउँदैन । पार्वतीको आशा छाडेर छिटै तिमी आफ्नो घरतर्फ लाग । तिमीले त्यसो गरेनौ भने भगवान् शङ्करले तिमीलाई भखरै खरानी बनाउनुहुनेछ' ।।६२-६३।। यसरी ब्राह्मणद्वारा उपदेश प्राप्त गरेपछि त्यो दैत्य पार्वती पाउने आशा छाडेर पृथिवीतर्फ लाग्यो । भगवान् शिवजीले विजय प्राप्त गर्नुभएपछि पार्वतीले ब्राह्मणलाई भन्नुभयो – 'हे मुनिश्रेष्ठ ! तपाईं को हुनुहुन्छ? आज तपाईंले आएर मलाई दुष्टबाट बचाउनु भयो । तपाईंले आफ्नो वास्तविक रूप देखाउनुहोस् । अहिले देखिएको तपाईंको यो रूप वास्तविक होइन ।।६४-६५।। तपाईंले मलाई प्राणदान गर्नुभएको हुँदा तपाईं मेरा लागि प्राणभन्दा प्यारा मित्र हुनुभएको छ । हे ब्राह्मण ! प्राणत्याग भएको भए तपाईंको उपकारको मूल्य हुने थिएन । म बाँच्न पाएँ त्यसैले तपाईंको उपकारको मूल्यबोध गरेकी छु' ।।६६।। पार्वतीका यी कुरा सुनेर ब्राह्मणका रूपमा आउनुभएका भगवान् श्रीगणेशले भन्नुभयो– 'हे आमा! मैले के गरेको छु र सबै भगवान् शङ्करकै प्रताप हो। उहाँले नै सिन्दूर दैत्यलाई जित्नुभयो । उहाँले नै हजुरलाई दानवको हातबाट जोगाउनुभयो ।' ब्राह्मणरूप श्रीगणेशले त्यसो भनेपछि आफ्नो सही रूप देखाउनुभयो ।।६७-६८।। श्रीगणेशको वास्तविक रूप अत्यन्त सुन्दर थियो । उहाँको निधारमा कस्तूरीको टीका थियो। उहाँ रत्न र मोतीको हारले अलङ्कृत हुनुहुन्थ्यो र अरू अनेक अलङ्कारहरूको कान्तिका कारण पनि अत्यन्त राम्रा देखिनुहुन्थ्यो। उहाँको घाँटी शङ्खसमान थियो र उहाँको स्वरूपकान्ति शेषनागको

नानालङ्काररुचिरं शेषकण्ठमणिप्रभम् ।
दृष्ट्वैवं परमात्मानं ननन्द गिरिजा तदा ।।७०।।

ननाम पादयोस्तस्य स उत्थाप्य च तां जगौ ।

विनायक उवाच

त्रेतायुगे प्राप्नुवं त्वां दास्यामि दर्शनं पुनः ।।७१।।

अवतीर्य द्वापरे ते गृहे नाम्ना गजाननः ।
भविष्यामि हनिष्यामि सिन्दूरं दैत्यमोजसा ।।७२।।

क उवाच

मुनिरूपधरो देव उक्त्वा चान्तरधीयत ।
ततः शुशोच गिरिजा मूर्च्छां सा परमां ययौ।।७३।।

तत ऊचे विश्वनाथो मनः स्वस्थं कुरु प्रिये ।
पश्य त्वं हृदि तं देवं विनायकमनामयम् ।।७४।।

न मिथ्या भाषितं तस्य यदुक्तं तत् करिष्यति ।
एवमुक्त्वा महादेवो वृषारूढस्तया सह ।।७५।।

आययौ परमप्रीतः कैलासं पर्वतेश्वरम् ।।७६।।

मणिसमान चम्किरहेको थियो । परमात्मा श्रीगणेशलाई यस रूपमा देखेर पार्वती प्रसन्न हुनुभयो ।।६९-७०।। पार्वतीले उहाँको पाउमा प्रणाम गर्नुभयो । श्रीगणेशले पनि पार्वतीलाई उठाई नम्रतापूर्वक कुराकानी गर्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - 'हे आमा पार्वती ! मैले त्रेतायुगमा हजुरलाई फेरि दर्शन दिनेछु । म हजुरको घरमा द्वापरयुगमा गजाननको रूप लिएर आउनेछु । त्यस बेला मैले सिन्दूरनामक दैत्यलाई मार्नेछु' भनेको थिएँ ।

**ब्रह्माजीले भन्नुभयो** - ब्राह्मणरूप धारण गर्ने भगवान् श्रीगणेश आमा पार्वतीसँग यसरी कुरा गरेर अन्तर्धान हुनुभयो। त्यसपछि पार्वती चिन्तित र मूर्च्छित हुनुभयो ।।७१-७३।। भगवान् शङ्करले पार्वतीलाई मूर्च्छित हुनुभएको देखेर संझाउनुभयो- 'हे प्रिया ! तिमीले मनलाई स्वस्थ बनाऊ, आँखा चिम्लेर आफ्नै मुटुमा हेर त्यहाँ भगवान् श्रीगणेश विराजमान हुनुभएको छ । उहाँले बोलेको कुरा फरक पर्दैन, उहाँले जे भन्नुभएको छ त्यो गर्नुहुनेछ ।' यसरी पार्वतीलाई संझाएर भगवान् शङ्कर पार्वतीका साथ नन्दीमाथि सवार हुनुभयो ।।७४-७५।। केही बेरमा नै उहाँ पर्वतराज कैलासको उपत्यकामा पुग्नुभयो ।।७६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गजाननदर्शनं नामाऽष्टाविंशत्युत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शिव एवं सिन्दूरासुरको सङ्ग्राम र द्विजरूप श्रीगणेशको दर्शन' शीर्षकान्वित एक सय अट्ठाईसौं अध्याय पूर्ण भयो ।।१२८।।

ॐ

# ऊनत्रिंशदुत्तरशततमोऽध्यायः {१२९ अध्याय}

क उवाच

ततो दैत्यो मृत्युलोकं गतो गर्वादगर्जत ।
कम्पिताः पर्वताः सर्वे वृक्षा निपतिता भुवि ।।१।।

पक्षिसिंहाः श्वापदानि बभ्रमुः कानने तदा ।
ततो जिगाय नृपतीन् सर्वान् वीरांश्च दानवः ।।२।।

ब्रह्मादयो जिता येन तेनायुध्यन् कथं नृपाः ।
केचिद् द्विधा कृतास्तेन केचिन्नभसि बभ्रमुः ।।३।।

केचिच्च सम्मुखे युद्धं कृत्वा स्वर्गं गता नृपाः ।
केचिच्च शरणं याताः सेवकत्वमुपागताः ।।४।।

केचिद् भ्रष्टपदा जग्मुरभिमानेन काननम् ।
एवं जित्वा नृपान् सर्वान् मुनीनामाक्रमे मतिम् ।।५।।

अकरोद् दुष्टबुद्धिः स बबन्ध सहसा च तान् ।
तदा केचिन्मुनिगणास्त्यक्त्वा देहं दिवं गताः ।।६।।

केचिच्च मेरुकन्दर्यां न्यवसन् विगतज्वराः ।
केचिच्च निहतास्तेन केचिच्च ताडिता भृशम् ।।७।।

प्रासादाः सकलास्तेन विध्वस्ता देवता अपि ।
एवं तु प्रलये जातेऽलुप्यन् क्रिया च वैदिकी ।।८।।

स्वाहास्वधावषट्कारा हाहाकारोऽप्यजायत ।
देवा गिरिगुहास्थास्ते मुनयो यक्षकिन्नराः ।।९।।

न्यमन्त्रयन्त कार्यार्थं तत्र प्राह बृहस्पतिः ।
विद्यमानेभ्यो देवेभ्यस्तेभ्यः सर्वेभ्य एव च ।।१०।।

न भयं विद्यते तस्य तस्माद् देवं विनायकम् ।
प्रार्थयध्वं यदा विप्राः प्रादुर्भावं शिवालये ।।११।।

गजाननेति नाम्ना स करिष्यति च साम्प्रतम् ।
हनिष्यति बलाद् दैत्यं सिन्दूरं नात्र संशयः ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** – युद्धमा शिवजीसँग परास्त भएको त्यो सिन्दूर दैत्य मृत्युलोकमा गएर अहङ्कार गर्दै गर्जन थाल्यो। त्यसको गर्जनबाट पर्वत काँपे र वृक्षहरू भुइँमा लडे ।।१।। जङ्गलमा रहेका चरा-चुरुङ्गी, सिंह, बाघ र अरू जनावरहरू आत्तिएर एवं छट्पटाएर चारैतिर घुम्न थाले । त्यसपछि त्यस दानवले पृथिवीमा घुम्दै अनेक वीर र अनेक राजाहरूलाई युद्धमा परास्त गऱ्यो ।।२।। जसले ब्रह्मा आदि देवतालाई पनि युद्धमा परास्त गरेको थियो, त्यस्तो सिन्दूर दैत्यसँग ती राजाहरू कसरी युद्ध गर्न सक्थे ? त्यसले युद्धमा ती वीर एवं राजाहरूलाई माऱ्यो । केहीलाई दुई टुक्रा पाऱ्यो, केहीलाई आकाशमा फ्याँक्यो र ती त्यहाँ चक्कर काट्न थाले ।।३।। कसैसँग सम्मुखमै लडेर तिनलाई माऱ्यो । ती सबै स्वर्गमा गए । केही बाँचेका राजा र वीरहरूले शरणमा आएर सेवक बन्ने प्रतिज्ञा गरे । केही पदच्युत भएका राजाहरू स्वाभिमानका कारण त्यसको शरणमा नगएर वनतर्फ लागे । यसरी सिन्दूर दैत्यले सबै राजाहरूमाथि विजय प्राप्त गरी मुनिहरूमाथि आक्रमण गर्ने विचार गऱ्यो ।।४-५।। त्यसको मनमा नराम्रा भावना र नराम्रा बुद्धि खेल्न थाले । त्यसले ऋषिहरूलाई समातेर ल्याई बाँध्यो। त्यसको बन्धनमा परेका कतिपय मुनिहरू देहत्याग गरी दिवङ्गत भए ।।६।। केही भागेर मेरुपर्वतको गुफामा गई शान्तिपूर्वक बस्न थाले । कसैलाई त्यसले घाइते तुल्यायो र कसैलाई बेसरी पिट्यो ।।७।। त्यसले सम्पूर्ण देवताका मन्दिरहरूमा विध्वंस मच्चायो र देवमूर्तिलाई टुक्रा टुक्रा बनायो । यसरी प्रलयकालीन दृश्य उपस्थित भएपछि पृथिवीमा स्वाहा, स्वधा र वषट्कारजस्ता वैदिक कर्महरू लुप्त भए । चारैतिर हाहाकार फैलियो । पर्वतको गुफामा रहेका देवता, मुनि, यक्ष र किन्नरहरूले विचार-विमर्श गर्न बृहस्पतिलाई बोलाए । त्यस बेला बृहस्पतिले उपस्थित देवताहरूका सामु भन्नुभयो – सिन्दूर दैत्यबाट अब डराउनुपर्दैन। भगवान् श्रीगणेशको प्रार्थना गर्नुहोस् । जब भगवान् श्रीगणेश कैलास पर्वतमा रहेको भगवान् शिवजीको धाममा गजाननका रूपबाट प्रकट हुनुहुनेछ त्यस बेला उहाँले आफ्नो पराक्रमबाट सिन्दूर दैत्यलाई मार्नुहुनेछ । यसमा कुनै सन्देह छैन ।।८-१२।।

निराबाधं जगत् सर्वं भविष्यति तदा सुराः ।
एवमुक्तास्तु जीवेन ते तु देवादयोऽखिलाः ।
भक्त्या परमया युक्तास्तुष्टुवुस्तं विनायकम् ।।१३।।

देवा ऊचुः

जगतः कारणं योऽसौ रविनक्षत्रसम्भवः ।
सिद्धसाध्यगणाः सर्वे यत एव च सिन्धवः ।।१४।।

गन्धर्वाः किन्नरा यक्षा मनुष्योरगराक्षसाः ।
यतश्चराचरं विश्वं तं नमामि विनायकम् ।।१५।।

यतो ब्रह्मादयो देवा मुनयश्च महर्षयः ।
यतो गुणास्त्रयो जातास्तं नमामि विनायकम् ।।१६।।

यतो नानावताराश्च यश्च सर्वहृदि स्थितः ।
यं स्तोतुं नैव शक्नोति शेषस्तं गणपं भजेत् ।।१७।।

सिन्दूरो निर्मितःकेन विश्वसंहारकारकः ।
तेनार्तौ प्रापितं विश्वं त्वयि स्वामिनि जाग्रति ।।१८।।

अन्यं कं शरणं यामः को नु पास्यति नोऽखिलान् ।
जह्येनं दुष्टबुद्धिं त्वमवतीर्य शिवालये ।।१९।।

इत्युक्त्वा परितेपुस्ते नानानुष्ठानतत्पराः ।
निराहारा यताहाराः प्राणायामपरायणाः ।।२०।।

धूमपानरताः केचित् केऽपि मौनावलम्बिनः ।
एकपादस्थिताः केचिज्जलमध्ये स्थिताः परे ।।२१।।

ऊर्ध्वबाहुतया केचित्केचिच्च योगमास्थिताः ।
केचिच्चकृतुः स्वान् देहान् केचिच्च मस्तकानपि।।२२।।

एवं तेषां निरीक्ष्यैव तपांसि गणराट् तदा ।
आविरासीत् कोटिसूर्यप्रलयानलसन्निभः ।।२३।।

त्यस बेला सम्पूर्ण जगत्का विघ्नबाधा समाप्त हुनेछन् । यसरी बृहस्पतिद्वारा उपदेश प्राप्त गरेका देवताहरूले परम भक्तिपूर्वक श्रीगणेशको प्रार्थना गर्न थाले ।।१३।।

**देवताहरूले भने** - 'सूर्यको नक्षत्रमा पैदा हुनुभएका, जगत्को उत्पत्तिका कारण, जसबाट सिद्धगण र साध्यगण पैदा हुन्छन्, जसबाट महासागरहरूको उत्पत्ति हुन्छ, जसबाट किन्नर-यक्ष-गन्धर्व-मानिस-सर्प र राक्षस पैदा हुन्छन्, जसबाट सम्पूर्ण जड-चेतनसहितको विश्व पैदा हुन्छ ती भगवान् विनायकलाई नमस्कार गर्दछौं ।।१४-१५।। जुन भगवान् श्रीगणेशबाट ब्रह्मा आदि देवता, ऋषि, मुनि र महर्षि पैदा हुन्छन् ती विनायक भगवान्लाई प्रणाम गर्दछौं । जुन भगवान्बाट सत्त्व, रज र तमोगुण पैदा हुन्छन् ती विनायक भगवान्लाई प्रणाम गर्दछौं ।।१६।। जसले अनेक थरि अवतार लिएर संसारको कल्याण गर्नुहुन्छ, जो सबैका हृदयमा विराजमान हुनुहुन्छ र जसको स्तुति गर्न शेषनाग पनि समर्थ हुँदैनन् ती गणनायकलाई हामीले भज्नुपर्दछ ।।१७।। जसले विश्वसंहार गर्ने सामर्थ्य भएको सिन्दूर दैत्यको निर्माण गरे, तिनले संसारलाई ठूलो कष्ट दिए । आज भगवान् श्रीगणेश हुँदाहुँदै हामी कसका शरणमा जाऔं ? हामीलाई कुन अर्को महापुरुषले रक्षा गर्न सक्छ ? हे भगवन् श्रीगणेश ! हजुरले छिटो कैलासमा अवतार लिएर दुष्ट सिन्दूर दैत्यलाई मारिदिनुहोस्' ।।१८-१९।। यस्तो प्रार्थना गरेर ती देवताहरूले निराहार रही प्राणायाम गर्दै तपस्या, मन्त्रजप आदि अनेक कर्म गरेर दिन बिताए ।।२०।। केही देवताहरू एउटा खुट्टामा उभिएर तपस्या गरिरहेका थिए, केही देवताहरू पानीमा उभिएर तपस्या गरिरहेका थिए, केहीले अग्निको धूवाँ पान गरेर तपस्या गरिरहेका थिए र केहीले मौनव्रत लिएर तपस्या गरिरहेका थिए । केही देवताहरूले आफ्ना दुबै हात आकाशतर्फ फैलाएर तपस्या गरिरहेका थिए, केही अष्टाङ्ग योगको साधनामा संलग्न थिए । केही देवताहरूले भगवान् श्रीगणेशको प्रसन्नताका लागि आफ्नै अङ्गका टुक्रा-टुक्राहरू लुछेर भगवान्लाई चढाइरहेका थिए । केहीले आफ्ना शिरहरू समर्पण गर्दै थिए ।।२१-२२।। देवताहरूको यस किसिमको तपस्या देखेर भगवान् श्रीगणेश कोटिसूर्य र प्रलयकालको अग्निझैं ज्वालामय बनेर त्यहाँ प्रकट हुनुभयो ।।२३।।

दृष्ट्वा तेजोमयं रूपं जहृषुस्ते सुरास्तदा ।
यश्चिन्तितः स एवायमाविर्भूतोऽखिलेश्वरः ।।२४।।

अपनेष्यति नो दुःखं नात्र कार्या विचारणा ।
तत ऊचे स भगवांस्तान् सुराँश्चिन्तया युतान् ।।२५।।

हनिष्ये सिन्दूरं देवा मा चिन्तां कर्तुमर्हथ ।
दुःखप्रशमनं नाम स्तोत्रं वः ख्यातिमेष्यति ।।२६।।

अतो दुःखविनाशो वा जातोऽस्मान्मदनुग्रहात् ।
एककालं द्विकालं वा त्रिकालं वापि यः पठेत् ।।२७।।

कदाचिन्न भवेदस्य दुःखं त्रिविधमण्वपि ।
अहं तु साम्प्रतं देवा अवतीर्य शिवालये ।।२८।।

नाम्ना गजानन इति ख्यातः सर्वार्थसाधकः ।
भविष्यामि हनिष्यामि सिन्दूरादीन् महासुरान् ।।२९।।

करिष्यामि शिवादास्यं कौतुकानि प्रदर्शयन् ।

क उवाच

एवमुक्त्वा ततो देवांस्तत्रैवान्तरधीयत ।।३०।।

ततोऽकस्माद् हैमवती शिवानुग्रहतो दधौ ।
तद्गर्भं ववृधेऽत्यन्तं दिने दिने यथा शशी ।।३१।।

ततस्तत्तेजसा तप्ता नानादोहदकाङ्क्षिणी ।
उवाच शङ्करं गौरी सन्तप्ता गर्भतेजसा ।।३२।।

अतिशीतस्थलं यत्र तत्र मां नय शङ्कर !
ततोऽसौ वृषभारूढः पृष्ठे तामुपवेश्य ह ।।३३।।

भासयन्तीं महातेजःपुञ्जेन विदिशो दिशः ।
वाद्यत्सु सर्ववाद्येषु ययौ स क्षितिमण्डलम् ।।३४।।

नानागणैः समायुक्तो बभ्राम काननानि सः ।
भ्रमता तेन दृष्टं हि पर्यलीकाननं महत् ।।३५।।

तत्र विश्रान्तिमकरोत् पार्वत्यानुमतस्तदा ।
नानापुष्पसमाकीर्णं नानाद्रुमफलान्वितम् ।।३६।।

त्यस बेला भगवान् श्रीगणेशको तेजोमय स्वरूप देखेर ती सबै देवताहरू प्रसन्न भएर भन्न लागे – जुन भगवान् श्रीगणेशको आराधना गरिरहेका थियौं, आज उहाँ नै हाम्रा सामु प्रकट हुनुभयो ।।२४।। स्वर्ग-मर्त्य-पातालका स्वामी भगवान् श्रीगणेशले हाम्रा कष्ट नाश गर्नुहुनेछ । यसमा कुनै शङ्का छैन र विचार पनि गर्नुपर्दैन ।' त्यसपछि चिन्ता गरिरहेका देवताहरूलाई भगवान् श्रीगणेशले भन्नुभयो – 'हे देवगण! म सिन्दूर दैत्यलाई भर्खरै मारिदिन्छु, तपाईंहरू चिन्तामुक्त हुनुहोस्। तपाईंहरूले पाठ गर्नुभएको यो स्तोत्र दुःखप्रशमन स्तोत्रका रूपमा संसारमा प्रख्यात हुनेछ ।।२५-२६।। अब मेरो कृपाबाट तपाईंहरूको दुःख नष्ट हुनेछ । जसले दिनमा एक पटक, दुई पटक अथवा तीन पटक यस स्तोत्रको पाठ गर्दछ त्यसलाई आध्यात्मिक, आधिदैविक र आधिभौतिक दुःख लेशमात्र पनि हुँदैन । म अब छिटै भगवान् शङ्करको धाम कैलासमा गजाननको नामबाट अवतार लिएर सबै भक्तहरूको कार्य सिद्ध गर्नेछु र सिन्दूर आदि महादैत्यहरूको संहार गर्नेछु ।।२७-२९।। मैले भगवती पार्वतीको पुत्रका रूपमा रहेर उहाँलाई बाललीला देखाउँदै उहाँको सेवा गर्नेछु ।'

**ब्रह्माजीले भन्नुभयो** – यसरी देवताहरूसामु प्रतिज्ञा गरी भगवान् श्रीगणेश तत्काल अन्तर्धान हुनुभयो ।।३०।। त्यसपछि अकस्मात् भगवती पार्वतीले शिवजीको कृपाबाट गर्भधारण गर्नुभयो। त्यो गर्भ शुक्लपक्षको चन्द्रमाझैं प्रतिदिन बढ्न थाल्यो ।।३१।। आफ्नो गर्भमा रहेका बालकको तेजबाट सन्तप्त भएकी पार्वतीले गर्भकालीन अनेक इच्छाहरू व्यक्त गर्दै भगवान् शङ्करलाई भन्नुभयो – 'म गर्भको तेजले सन्तप्त भएकी छु । जहाँ अत्यन्त शीतल ठाउँ छ त्यहाँ मलाई लैजानुहोस्।' त्यसपछि नन्दीमाथि सवार हुनुभएका भगवान् शङ्कर गर्भको तेजले संसारलाई नै प्रकाशित गर्ने भगवती पार्वतीलाई साथमा लिएर चारैतिर बजिरहेका बाजाहरूको मधुर ध्वनि श्रवण गर्दै गणहरूका साथ पृथिवीभ्रमणमा जानुभयो । वनहरूमा घुम्दाघुम्दै उहाँले पर्यलीनामक विशाल वन देख्नुभयो।।३२-३५।। उहाँले पार्वतीको अनुमति लिएर त्यहाँ विश्राम गर्नुभयो । त्यो वन हरिया वृक्ष र लताले शोभायमान, अनेक फलफूलले सम्पन्न र तलाउ

सरोवापीयुतं सान्द्रतरुच्छायं मनोरमम् ।
यत्रोस्त्राणां न प्रवेशः कैलासशिखरोपमम् ।।३७।।

नन्दनादधिशोभं तद् वनं चैत्ररथादपि ।
तद्वीक्ष्य गिरिजा प्रोच इच्छया सदृशं शिवम् ।।३८।।

वनं प्राप्तं महादेव ! क्रीडावोऽत्र चिरं विभो ।
गणानामपि सर्वेषां प्रीतिस्तत्र ह्यभूत्तदा ।।३९।।

ततो गणा मण्डपं ते चक्रुस्तत्प्रियकाम्यया ।
नानावेदीगृहयुतं नानोपस्करसंयुतम् ।।४०।।

तत ऊचे शिवो देवीं वसात्र त्वं गणैर्युता ।
यद् यत्ते प्रार्थितं तत्ते दास्यन्ति मदनुग्रहात् ।।४१।।

ततः स्वयं जगामाशु ध्यानस्थोऽभूद्धिमालये ।
सखीभिः पार्वती तत्र चिक्रीडे सा यथारुचि ।।४२।।

अरक्षँस्तां कोटिगणाः समन्तादावृतास्तदा ।
तदाज्ञावशगाः सर्वे कन्दमूलफलाशिनः ।।४३।।

एवं कुवाले रमणीय थियो । सघनताका कारण त्यहाँ सूर्य एवं चन्द्रमाका किरणहरूको प्रवेश सम्भव थिएन । त्यस पर्यली वनमा कैलासको शिखरमा जस्तै शीतलता थियो । त्यो वन इन्द्रको नन्दन वन र कुबेरको चैत्ररथ वनभन्दा पनि रमणीय थियो। त्यस वनलाई देखेर भगवती पार्वतीले भगवान् शिवजीलाई भन्नुभयो - 'हे प्रभो ! हामी उत्तम वनमा आएका छौँ । अब धेरै कालसम्म हामीले आनन्दपूर्वक विहार गरौँ ।' त्यस वनमा गएपछि भगवान् शिवजीका गणहरू पनि रमाए ।।३६-३९।। ती गणहरूले भगवान् शङ्कर र पार्वतीको आनन्दविहारका लागि सुन्दर मन्दिर तयार गरे । त्यस मन्दिरमा अनेक वेदी र अनेक थरि सामग्री थिए। त्यसपछि शिवजीले पार्वतीलाई भन्नुभयो- 'हे पार्वती ! तिमी गणहरूका साथ यहीं बस । तिमीले चाहेका पदार्थ गणहरूले पुऱ्याउने छन् । तिमीमाथि मेरो अनुग्रह रहनेछ' ।।४०-४१।। यसरी पार्वतीलाई आज्ञा दिएर भगवान् शङ्कर हिमालयमा गई ध्यानमा लीन हुनुभयो । पार्वती पनि आफ्ना सँगिनीहरूका साथ विहार गर्दै रमाएर रहनुभयो । सुरक्षाका लागि खटिएका कन्दमूलभोजी करोडौं शिवगणले सुरक्षा र सेवा गरे।।४२-४३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गौरीदोहदवर्णनं नामैकोनत्रिंशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'गर्भिणी पार्वतीका गर्भकालिक इच्छा पूरा गर्दै शिवगणद्वारा निरन्तर शुश्रूषा' शीर्षकान्वित एक सय उनन्तीसौं अध्याय पूर्ण भयो ।।१२९।।

ॐ

## त्रिंशदुत्तरशततमोऽध्याय: { १३० अध्याय }

क उवाच

ततस्तु नवमे मासि पूर्णे साऽसूत बालकम् ।
चारुचन्द्राननं पद्मशोभाजिन्नयनं शुभम् ।।१।।

किरीटकेयूरधरं कोटिसूर्यसमप्रभम् ।
प्रवालाधरशोभाढ्यं चतुर्बाहुविराजितम् ।।२।।

मुक्ताहारधरं चारुकङ्कणैरुपशोभितम् ।
परशुं कमलं मालां मोदकांश्च करैर्दधत् ।।३।।

ध्वजाङ्कुशाब्जविलसत्पादपद्मसमन्वितम् ।
किङ्किणीजालविलसच्चारुगुल्फयुतं शुभम् ।।४।।

भालचन्द्रं कोटिचन्द्रनिभं वह्निसमप्रभम् ।
एवं दृष्ट्वा स्वरूपं सा चकम्पे हर्षनिर्भरा ।।५।।

किमिदं तेज उदितं नयनाच्छादकं महत् ।
कोऽसि त्वं वद मे चेतो नन्दयस्व कृपां कुरु ।।६।।

इत्युक्त्वा तं नमश्चक्रे स्मरन्ती पूर्वजं वच:।
तत ऊचे महोमूर्तिर्मा मातर्विमना भव ।।७।।

गुणेशोऽहमनेकानां ब्रह्माण्डानां विधायक:।
असङ्ख्याता मेऽवतारा न ज्ञायन्तेऽमरैरपि।।८।।

इच्छया सृष्टिसंहारपालनानि करोम्यहम् ।
त्रिधा रूपं विधायाहं विश्वस्य शिवनन्दिनि ।।९।।

त्रेतायुगेऽवतीर्णेन त्वद्गृहे लीलया पुरा ।
अनेकानि चरित्राणि कृतानि सिन्धुनाशनम् ।।१०।।

मयूरेश्वरनामाहं षड्भुजोऽर्जुनवर्णक:।
तदा मया वचो दत्तं द्वापरे ते सुत: पुन: ।।११।।

भवेयं सेवकश्चाहं सिन्दूरान्मोचिता मया ।
द्विजरूपेण सहसा स्मर सर्वं शुचिस्मिते ।।१२।।

ब्रह्माजीले भन्नुभयो – नौ महिना पुगेपछि भगवती पार्वतीले सुन्दर, चन्द्रमाजस्तो अनुहार भएका, कमलको शोभालाई परास्त गर्ने आँखाले सुहाउनुभएका, मङ्गलमय किरीट र केयूर धारण गर्नुहुने, कोटिसूर्यसमान कान्तिले सुहाउनुभएका, मूँगाको माला धारण गरी अत्यन्त शोभासम्पन्न देखिनुहुने, चतुर्बाहु, मोतीको हार र सुन्दर बाला लगाउनुहुने, आफ्ना हातहरूमा परशु: कमल: माला र लड्डू लिनुहुने, पाउमा ध्वजा: अङ्कुश र कमलका चिह्नले शोभायमान, किङ्किणीले सुहाउनु भएका, शिरमा चन्द्रमा धारण गर्नुहुने, करोडौं चन्द्रको कान्तिले सुहाउनुभएका र अग्निझैं देदीप्यमान बालकलाई पैदा गर्नुभयो। बालकको यति राम्रो स्वरूप देखेर भगवती पार्वती अत्यन्त हर्षित र कम्पित हुनुभयो ।।१-५।। मेरो कोखबाट कस्तो तेज पैदा भयो ? तेजको कान्तिले मैले आँखाले हेर्न पनि सकिन ? मेरा आँखाका ज्योति ढाकिए । हे बाबु ! तिमी को हौ ? भन। आफ्नो मीठो वाणीले मेरो हृदयलाई आनन्दित तुल्याऊ । ममाथि कृपा गर । यसरी भाव व्यक्त गरेर पार्वतीले प्राचीन घटनाहरू याद गर्दै बालकलाई नमस्कार गर्नुभयो । त्यसपछि ती तेजोमूर्ति बालकले भने– 'आमा! चिन्ता नगर्नुहोस्।।६-७।। म अनेक ब्रह्माण्डको स्रष्टा तीन गुणको स्वामी श्रीगणेश हुँ । मेरा असङ्ख्य अवतारका विषयमा देवताहरू पनि राम्ररी जान्दैनन् ।।८।। हे शिवप्रिया पार्वती ! म आफ्नो इच्छाले तीन रूप लिएर संसारको सृष्टि, संहार र पालन आदि कार्य गर्दछु । म पहिले त्रेतायुगमा लीलापूर्वक हजुरको घर कैलासमा पैदा भएको थिएँ । मैले अनेक चरित्रहरू त्यहाँ देखाएँ । त्यस बेला सिन्धु दैत्यको नाश पनि गरें । त्यस समयमा म मयूरेश्वरको नामबाट प्रसिद्ध थिएँ । मेरो त्यस अवतारको वर्ण सेतो थियो र म छ भुजाले सुहाएको थिएँ । त्यस बेला मैले हजुरलाई द्वापरयुगमा फेरि हजुरको पुत्र भएर जन्म लिनेछु भन्ने वचन दिएको थिएँ । आज म हजुरको सेवा गर्न आइपुगेको छु । हजुरलाई याद होला म गर्भमा आउनुभन्दा पहिले हजुरका सामु आएको थिएँ। सिन्दूर दैत्यले हजुरको अपहरण गर्दा ब्राह्मणको रूप लिएर मैले हजुरलाई त्यस दैत्यबाट मुक्त गरेको थिएँ । हे आमा !

तदापि तनयस्तेऽहं भविष्यामीत्यथाब्रुवम् ।
तदिदं वचनं सत्यं मयाऽसम्पादि पार्वति ।।१३।।

भूभारञ्च हरिष्यामि सिन्दूरञ्च महाबलम् ।
सेवनञ्च करिष्यामि तव मातर्गजाननः ।।१४।।

विख्यातोऽहं भविष्यामि भक्तानां कामपूरकः ।

क उवाच

एवं श्रुत्वा वचो गौरी स्मृत्वा सर्वं पुरातनम् ।।१५।।

नत्वा तुष्टाव देवेशं विश्वेशं विघ्ननाशकम् ।

गौर्युवाच

निर्विकल्पचिदानन्दघनं ब्रह्मस्वरूपिणम् ।।१६।।

भक्तप्रियं निराकारं साकारं गुणभेदतः ।
नमाम्यहमतिस्थूलमणुभ्योऽणुतरं विभुम् ।।१७।।

अव्यक्तं व्यक्तिमापन्नं रजःसत्त्वतमोगुणम् ।
मायाविनं मायिनञ्च सर्वमायाविदं प्रभुम् ।।१८।।

सर्वान्तर्यामिणं नित्यं सर्वाधारं परात्परम् ।
चतुर्णामपि देवानां मानसस्याप्यगोचरम् ।।१९।।

महद् भाग्यं मम विभो ! स त्वं मे पुत्रतां गतः ।
प्रतीक्षन्त्या मम विभो ! प्रत्यक्षं दर्शनं गतः।
इदानीं त्वद्वियोगो मे न स्याद् देव ! तथा कुरु ।।२०।।

एवं वदन्त्यां तस्यां तु देवो रूपान्तरं दधौ ।
चतुर्भुजं भालचन्द्रं शुण्डादण्डविराजितम् ।।२१।।

अनेकभूषणयुतं चिन्तामणियुतं हृदि ।
दिव्याम्बरं दिव्यगन्धं सिद्धिबुद्धियुतं तदा ।।२२।।

रुरोद बालवच्चाज्ञो ददृशे गिरिजा तु तम् ।
शुशोच बहुधा तन्वी निधिः केन हृतो मम ।।२३।।

त्यो घटना याद गर्नुहोस् । त्यस बेला पनि मैले हजुरलाई अब म छिट्टै पुत्र भएर जन्मनेछु भनेको थिएँ । हे आमा ! त्यही प्रतिज्ञा पूरा गर्न अहिले म हजुरको गर्भबाट पैदा भएको छु । मैले पृथिवीको भार हरण गर्नेछु र महाबली सिन्दूर दैत्यको पनि संहार गर्नेछु । हे आमा ! मैले हजुरको सेवा गर्नेछु ।।९-१४।। यस संसारमा म भक्तहरूको कामना पूरा गर्ने गजाननका रूपमा विख्यात हुनेछु ।'

**ब्रह्माजीले भन्नुभयो** – आफ्नो गर्भबाट जन्मेका बालकको वचन सुनेर भगवती गौरीले पुराना सबै कुरा संझनुभयो ।।१५।। त्यसपछि देवताका अधिपति विश्वका स्वामी विघ्नविनाशक श्रीगणेशको स्तुति गर्नुभयो ।

**गौरीले भन्नुभयो** – 'निर्विकल्प स्वरूप, चिदानन्दघन, ब्रह्मरूप, भक्तका प्यारा, गुणअनुसार कहिले निराकार र कहिले साकार रूपमा अवतीर्ण हुनुहुने हे गजानन ! हजुरलाई नमस्कार गर्दछु । स्थूलभन्दा पनि अतिस्थूल, अणुभन्दा पनि अत्यन्त अणु, व्यापक, अव्यक्त, व्यक्त, रज, सत्त्व र तमोगुणलाई क्षुब्ध गराई प्रकट हुनुहुने, मायावी र सम्पूर्ण मायाका खेलहरूलाई जान्ने, संसारका प्रभु, अन्तर्यामी, नित्य, सबैका आधार, परात्पर, ब्रह्मा, विष्णु, महेश र इन्द्रका मनबाट पनि अगोचर हजुरलाई नमस्कार गर्दछु।।१६-१९।। हे सर्वव्यापी परमात्मा ! मेरो अहोभाग्य हो कि हजुरजस्ता ब्रह्माण्डका नायक आज मेरा पुत्र बनेर आउनुभएको छ । म हजुरको प्रतीक्षा गरिरहेकी थिएँ। हे ईश्वर ! आज मैले प्रत्यक्ष दर्शन पाएँ । हे प्रभो ! अब हजुरको वियोग कहिले सहन नपरोस्, त्यस्तो व्यवस्था मिलाउनुहोस्' ।।२०।। यसरी पार्वतीले प्रार्थना गरिरहेकै समयमा भगवान् श्रीगणेशले आफ्नो रूपान्तरण गर्नुभयो । त्यस बेला उहाँले चतुर्बाहु, भालचन्द्र, सुँढले शोभायमान, अनेक अलङ्कारद्वारा अलङ्कृत, हृदयमा चिन्तामणि धारण गर्ने, दिव्य वस्त्र, दिव्य गन्धले शोभायमान, सिद्धि एवं बुद्धिद्वारा सेवित, सुन्दर स्वरूप प्रकट गर्नुभयो । अनि भगवान् श्रीगणेश केही नजान्ने अज्ञानी बालकझैं रुन थाल्नुभयो ।।२१-२२।। बालकले रूपान्तरण गरी अदृश्य भएपछि भगवती पार्वतीले चिन्ता गर्दै भन्नुभयो – 'मेरा ती सुन्दर भगवान्लाई कसले लग्यो ? तीन लोकमा मुखमा सूँढ धारण

न बालस्त्रिषु लोकेषु दृष्टः शुण्डाविराजितः ।
ब्रह्मादयो हसिष्यन्ति लोकाश्चेक्ष्येदृशं शिशुम् ।।२४।।

एवं बहुविधं शोकं श्रुत्वाऽगाच्छङ्करो गृहम् ।
सगणस्तं शिशुं गृह्य प्राह तां शृणु मे प्रिये ।।२५।।

अनादिनिधनो देवः शुण्डादण्डविराजितः ।
यत्र कुण्ठाश्चतुर्वेदाः शास्त्राणि मुनयो वराः।।२६।।

प्रपञ्चे गुम्फिता येन नानाकार्यवता प्रिये ।
सर्वान्तर्याम्यनेकानां ब्रह्माण्डानाञ्च कारकः ।।२७।।

चत्वार्यस्य च रूपाणि चतुर्षु च युगेषु च ।
कृते दशभुजो नाम्ना विनायक इति श्रुतः।।२८।।

त्रेतायुगे शुक्लवर्णः षड्भुजोऽसौ मयूरराट् ।
सिन्धुं हत्वाऽपालयत् सोऽवतीर्य स्वालये प्रिये ।।२९।।

स एवायं रक्तवर्णश्चतुर्बाहुविराजितः।
अवतीर्णो गृहे नौ हि सिन्दूरं निहनिष्यति ।।३०।।

आरुह्य मूषकं देवो भूभारञ्च हरिष्यति ।
नाम्ना गजानन इति त्रैलोक्ये ख्यातिमेष्यति ।।३१।।

अयं कलियुगे देवि ! धूम्रकेतुरिति प्रथाम् ।
चतुर्बाहुश्चारुनेत्रो यास्यते रुचिरां भुवि ।।३२।।

निशम्य शिववाक्यं स उवाच बालकः स्फुटम् ।

बाल उवाच

सम्यग्बुद्धं स्वरूपं मे सम्यगुक्तं त्वया शिव ।।३३।।

अवतीर्णस्तव गृहे सेवां कर्तुञ्च सिन्दुरम् ।
निहन्तुञ्च निहन्तारं देवानां सर्वभूभुजाम् ।।३४।।

गर्ने बच्चा मैले देखेकी थिइनँ । मेरो घरमा हात्तीको सूँढजस्तो सूँढ भएको बच्चा देखेर सबै मानिसले मलाई खिसी गर्नेछन् । अरू त के कुरा ब्रह्मा र विष्णु पनि हाँस्नु हुनेछ । संसारका मानिसले पनि मलाई अर्कै दृष्टिले हेर्नेछन्' ।।२३-२४।। पार्वतीका यस्ता शोकमय वचन सुनेर गणसहित भगवान् शङ्कर त्यहाँ आउनुभयो । ती बालकलाई काखमा लिएर शङ्करले पार्वतीलाई भन्नुभयो - 'हे प्रिया ! तिमीले सुन - जसको आदि छैन, अन्त पनि छैन त्यस्ता परमात्मा आज हाम्रो घरमा हात्तीको जस्तो सूँढ लिएर शोभायमान हुनुभएको छ । यी बालकका हृदयमा चार वेद गुम्फित भएर रहेका छन्, शास्त्रहरू उहाँकै हृदयमा विराजमान छन्, देवता र मुनिहरू उहाँकै विराट् रूपभित्र समाहित हुन्छन् । संसारको सृष्टि, पालन र संहार कार्यमा व्यस्त परब्रह्मका लागि केही पनि असम्भव छैन । उहाँ सबैका घट-घटमा अन्तर्यामी भएर विराजमान हुनुहुन्छ र कोटि-कोटि ब्रह्माण्डका निर्माता हुनुहुन्छ। उहाँले चार युगमा चार प्रकारका स्वरूप धारण गर्नुहुन्छ। सत्ययुगमा उहाँका दश भुजा हुन्छन् र उहाँलाई भक्तहरूले विनायकको नामबाट सम्बोधन गर्दछन् । त्रेतायुगमा सेतो वर्णका ६ भुजाले सम्पन्न र मयूरमा सवार गर्ने मयूरवाहनका रूपमा भक्तहरूले उहाँलाई चिन्दछन्। द्वापरयुगमा हाम्रै धाममा अवतीर्ण भएर उहाँले सिन्धु दैत्यको हत्या गर्नुभयो । आज उहाँ नै रातो वर्णका चतुर्बाहु भएर यहाँ अवतरित हुनुभएको छ। अब उहाँले संसारको कण्टक सिन्दूर-नामक दैत्यको हत्या गर्नुहुनेछ । मूसामा सवार भई पृथिवीको भारहरण गर्नुहुनेछ । संसारमा उहाँलाई मानिसहरूले गजाननका रूपबाट चिन्नेछन् । उहाँ नै पछि कलियुगमा पैदा भएर धूम्रकेतुका नामबाट विख्यात हुनुहुनेछ । त्यस बेला पनि श्रीगणेश चतुर्बाहुका रूपमा रहनुहुनेछ' ।।२५-३२।। शिवजीका कुरा सुनेर भर्खर जन्मेका ती बालकले स्पष्ट वाणीमा उहाँसँग कुराकानी गरे ।

बालकले भने - 'हे शिवजी ! हजुरले मेरो स्वरूपलाई राम्ररी जान्नुभएको रहेछ र तदनुसार वर्णन गर्नुभयो ।।३३।। अहिले म हजुरका घरमा अवतीर्ण भएको छु । यो अवतार मेरा माता-पिता शिव-पार्वतीको सेवाका निमित्त भएको हो। यसै अवतारमा मैले सिन्दूरनामक दैत्यको वध गर्नेछु । यसै अवतारमा देवता,

मर्दनं भूधराणाञ्च त्रैलोक्यजयशालिनम् ।
हत्वा तं विश्वसन्तोषं करिष्यामि च शङ्कर ।।३५।।

भक्तानां कामपूरश्च वेदकर्मप्रवर्तकः ।
भविष्यामि वरेण्यस्य वरदो ज्ञानदायकः ।।३६।।

मयि भक्तिर्भवेत् तस्य मम ध्यानपरायणः।
देवद्विजातिथीनाञ्च पूजकः पञ्चयज्ञकृत् ।।३७।।

पुराणश्रवणे सक्तः स्वाचारः सत्यवान् शुचिः ।
पुष्पिका नाम यस्यापि पत्नी धर्मपरायणा ।।३८।।

पतिव्रता पतिप्राणा पतिवाक्यपरायणा ।
ताभ्यां द्वादशवर्षाणि तपस्तप्तं सुदारुणम् ।।३९।।

तयोर्मया वरो दत्त एष्ये वां पुत्रतां ध्रुवम् ।
पुष्पिकायां प्रसूतायामद्यैव राक्षसैः शिशुः ।।४०।।

नीतश्च त्यक्ष्यते प्राणाँस्तस्मान्मां नय तत्र ह ।
एवमाकर्ण्य तद्वाक्यं शिवो हर्षसमन्वितः।।४१।।

नानावाङ्मयपुष्पैस्तं पूजयामास भक्तितः ।।४२।।

मुनि, सम्पूर्ण पृथिवीका राजा, पर्वत आदि विशाल तत्त्वहरूलाई भताभुङ्ग तुल्याउने त्रिलोकीमा विजयको उन्माद देखाउने सिन्दूर दैत्यलाई मारेर संसारलाई नै शान्त र सुखी तुल्याउनेछु।।३४-३५।। म यस अवतारमा भक्तहरूको कामना पूरा गर्ने, वेदले बताएका कर्मकाण्डको प्रवर्तन गर्ने, वरेण्य राजालाई वरदान दिने र भक्तहरूलाई ज्ञान प्रदान गर्ने भगवान्‌का रूपमा चिनिने छु ।।३६।। राजा वरेण्य मेरो ध्यानमा लीन छन् । तिनको ममा अपार भक्ति छ । तिनले देवता, ब्राह्मण र अभ्यागतहरूको आराधना गर्दछन् । तिनले पञ्चमहायज्ञ सम्पादन गर्दछन्, पुराणश्रवणमा श्रद्धा राख्दछन् । ती उत्तम आचार-विचारले सम्पन्न, सत्यवादी र पवित्रात्मा पुरुष हुन् । तिनकी धर्मपत्नी पुष्पिका धर्मपरायण नारी हुन् ।।३७-३८।। राजा वरेण्यकी महारानी पुष्पिका पतिव्रता छिन्, पतिका निमित्त प्राणभन्दा पनि प्यारी छिन् र पतिको आज्ञापालनमा दत्तचित्त छिन् । ती दुबै दम्पतीले बाह्रवर्षसम्म कठोर तपस्या गरेका थिए ।।३९।। तिनीहरूलाई मैले तपाईँहरूको पुत्र बनेर पैदा हुनेछु भन्ने वरदान दिएको थिएँ । अब पुष्पिकाले बालक पैदा गर्दैछिन् । तिनको बालकलाई अहिले नै राक्षसहरूले अपहरण गर्नेछन् र त्यस बालकले प्राणत्याग गर्नेछ । त्यस कारण हजुरहरूले मलाई केही समयका लागि रानी पुष्पिका जहाँ शयन गर्छिन् त्यस सुत्केरी कोठामा लगेर राखिदिनुहोस् ।' बालकका यस्ता कुरा सुनेर भगवान् शिवजी अत्यन्त हर्षित हुनुभयो र उहाँले अनेक स्तुतिद्वारा बालकको पूजा गर्नुभयो।।४०-४२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गजाननाविर्भावो नाम त्रिंशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'भगवान् गजाननको आविर्भाव' शीर्षकान्वित एक सय तीसौँ अध्याय पूर्ण भयो ।।१३०।।

ॐ

# एकत्रिंशदुत्तरशततमोऽध्यायः { १३१ अध्याय }

क उवाच

ततश्चिन्तां चकारासौ तत्र नेतुं तु बालकम् ।
तज्ज्ञात्वा प्राह तं नन्दी स्वामिन् ! युष्मत्प्रसादतः ।।१।।

शोषयिष्ये समुद्रांस्तु चूर्णयिष्ये गिरीनपि ।
आज्ञापय ततो मह्यं भवान् कार्यं हृदि स्थितम् ।।२।।

क उवाच

भणितं तस्य तच्छ्रुत्वा तुष्टः प्राह हरः स तम् ।

हर उवाच

साधु साधु त्वया प्रोक्तमाशयं मे विवृण्वता ।।३।।

पौरुषं ते मया ज्ञातं शतशो नन्दिकेश्वर !
इदानीमथ यत्कार्यं वदामि तत्कुरुष्व भोः ।।४।।

माहिष्मत्यां महापुर्यामास्ते राजा महाबलः ।
वरेण्य इति विख्यातो नानाधर्मपरायणः ।।५।।

यस्य पत्नी महाभागा पुष्पिका नाम नामतः ।
तस्यां सद्यः प्रसूतायां सुप्तायां कापि राक्षसी ।।६।।

निन्ये बालं तत्पुरतो नेयो बालस्त्वया लघु ।
नीत्वा स्थाप्यस्तत्पुरतो यावन्निद्राति सा शुभा ।।७।।

क उवाच

एवमाज्ञां समाकर्ण्य शङ्करेण समीरिताम् ।
शीघ्रं बालं समादाय नभोमार्गेण सत्वरः ।।८।।

प्राक्षिपत् पुरतो बालं सा न सुप्ता बुबोध तम् ।
शीघ्रमुड्डीय स प्रायान्नन्दिकेशो महेश्वरम् ।।९।।

उवाच निजवृत्तान्तं मार्गे स्वयमनुष्ठितम् ।
अकस्माद् गगनादेव राक्षसी घोरदर्शना ।।१०।।

भक्षयन्ती बालमांसं मामाश्रित्य स्थिता विभो ।
तव प्रसादात् पुच्छेन वेष्टिता राक्षसी मया ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि भगवान् शङ्करले वरेण्य राजाको घरमा बालकलाई कसरी पुऱ्याउने भनी चिन्ता गर्नुभयो। भगवान्लाई चिन्तित देखेर नन्दीले भने - हे भगवन्! हजुरको कृपाले मैले समुद्र सुकाउन सक्छु, पर्वतलाई धूलो-पीठो बनाउन सक्छु र हजुरले आज्ञा गर्नुहोस् म जे पनि गर्न सक्छु। अहिले हजुरलाई कुन कारणले चिन्ता भएको छ त्यो खुलाउनुहोस् ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** - नन्दीका कुरा सुनेर शिवजी प्रसन्न हुनुभयो र उहाँले नन्दीलाई निर्देशन दिनुभयो ।

**शिवजीले भन्नुभयो**- 'हे नन्दी! राम्रो कुरा गऱ्यौ । तिमीले मेरो मनको कुरा बुझेका रहेछौ ।।३।। हे नन्दीश्वर ! मैले तिम्रो पुरुषार्थ धेरै पटक देखेको छु । अहिले मैले जुन काम अह्राउँदैछु त्यसलाई राम्रोसँग सम्पन्न गर ।।४।। माहिष्मती महानगरीमा बलशाली र धर्मपरायण वरेण्यनामक राजा छन् । तिनकी पत्नीको नाम पुष्पिका हो । ती भाग्यवती नारी हुन् । पुष्पिका सुत्केरी भएर सुतिरहेको अवस्थामा कुनै राक्षसीले आएर भर्खर पैदा भएको बच्चा अपहरण गरेको छ । ती पुष्पिका अहिले निदाइरहेकी छिन्। तिनलाई आफ्नो बालकको अपहरण भएको थाहा छैन। तिमीले हाम्रा यी बालकलाई त्यहाँ पुऱ्याऊ । पुष्पिका निदाएकै समयमा तिनका काखमा सुताएर फर्क' ।।५-७।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् शङ्करको आज्ञा पाएर नन्दी अतिशीघ्र भगवान्ले दिनुभएको बालक हातमा लिई आकाशमार्गबाट माहिष्मती पुगे र पुष्पिकाको काखमा बच्चा सुताइदिए। पुष्पिकाले केही पनि थाहा पाइनन् । नन्दी तीव्रवेगले फेरि भगवान् शङ्करका सामु फर्किए । तिनले भगवान् शङ्करसँग आफूले जाँदा गरेका कार्यहरूको वर्णन पनि गरे। नन्दीले भने- 'हे भगवन् ! म यहाँबाट जाँदा आकाशमा डरलाग्दी राक्षसी फेला परी ।।८-१०।। त्यसले मेरो हातमा रहेको बालकलाई खोसी त्यसका शरीरको मासु लुछ्न थाली । हजुरको कृपाले मैले त्यसलाई मेरा पुच्छरले बाँधे । आकाशमा धेरै पटक घुमाएर

भ्रामयित्वा विनिक्षिप्ता महापर्वतमस्तके ।
शतधा खण्डिता सा तु त्वन्नामोच्चारणात् प्रभो।।१२।।

ततोऽपश्यं महाव्रातं गन्धर्वाणां दुरात्मनाम् ।
कथं मया तैर्योद्धव्यं रक्षितव्यः कथं शिशुः ।।१३।।

इति चिन्ताकुलतया स्मृतस्त्वं हृदि शङ्कर !
ततः पुच्छेन शृङ्गाभ्यां क्रोधोच्छ्वासैश्च लत्तया।।१४।।

हुङ्कारेण च तान् सर्वान् निवार्य बलवत्तरान् ।
मृताः केचिद् हताः केचित् केचिद्भग्नशिरोऽङ्घ्रयः।।१५।।

पतिताः शतधा भूमौ पुष्पवृष्टिस्ततोऽपतत् ।
ततोऽहमगमं देव ! कृत्वा कार्यं त्वयेरितम् ।।१६।।

तवेच्छाविषयं को नु हन्यात् त्रैलोक्यमण्डले ।
अतस्त्वन्नामतो देव ! जयं, प्राप्तः स बालकः ।।१७।।

ततः शिवो हर्षयुतो लिलिङ्ग नन्दिकेश्वरम् ।
उवाच च प्रसन्नात्मा ज्ञातं ते पौरुषं दृढम् ।।१८।।

नास्ति त्रिभुवने कोऽपि त्वत्समो नन्दिकेश्वर !

क उवाच

ततः प्रणम्य विश्वेशं पार्वतीमगमच्च सः ।।१९।।

प्रणम्य तां योज्य हस्तौ प्रोचे मधुरया गिरा ।
मातः ! शिवाज्ञया बालो नीतो माहिष्मतीं पुरीम्।।२०।।

वरेण्यपत्न्याः पुरतः पुष्पिकाया न्यधायि सः ।
यतस्तेन पुरा दत्तो वरस्तस्य बभूव ह ।।२१।।

अहं पुत्रत्वमेष्यामि ब्रह्मज्ञानप्रकाशकः ।
निशम्य वचनं तस्य सर्वज्ञा पार्वती तदा ।।२२।।

जहर्ष जननी तस्य शिशोर्वीर्यमनन्तकम् ।
उवाच परया भक्त्या ज्ञातं ते पौरुषं सुत ।।२३।।

एउटा ठूलो पर्वतको चुचुरोमा पछारें । हजुरको नाम लिनाले त्यसको शरीर सय टुक्रा भएर फैलियो। यसरी मैले हजुरको कृपाबाट बालकको रक्षा गरें ।।११-१२।। त्यसपछि म बालक लिएर जाँदै थिएँ। बाटोमा गन्धर्वहरूको समूह भेटियो, ती गन्धर्वसँग कसरी युद्ध गर्ने र कसरी बालकको रक्षा गर्ने भन्ने मलाई चिन्ता पऱ्यो । त्यस बेला पनि मैले हजुरलाई सम्झें। मलाई जोश आयो, पुच्छर, सिङ र खुट्टाले क्रोधपूर्वक मैले तिनलाई हिर्काएँ । मेरा श्वास-प्रश्वास र हुँकारबाट पनि तीमाथि प्रहार भयो। यसरी हजुरको कृपाले युद्धमा तिनलाई पनि जितें। केही गन्धर्वहरू मरे, केही भागे र कसैका टाउका एवं खुट्टा भाँचिए ।।१३-१५।। सयौं गन्धर्व भुईंमा पछारिए । मैले यसरी गन्धर्वहरूमाथि विजय गरेपछि आकाशबाट पुष्पवृष्टि भयो । त्यसपछि म माहिष्मती पुगें । हजुरले बताएअनुसारको काम पूरा गरें । हजुरले जुन कुरा चाहनुहुन्छ त्यसलाई स्वर्ग, मर्त्य र पातालमा कसले अन्यथा गर्नसक्छ ? हजुरको नामजपबाट विजय प्राप्त हुन्छ । हजुरकै प्रभावले बालक पुष्पिकाका कारबमा पुगे ।।१६-१७।। नन्दीका यस्ता कुरा सुनेर खुसी हुनुभएका शङ्करले तिनलाई आलिङ्गन गर्नुभयो र प्रसन्न भएर भन्नुभयो - 'हे नन्दी ! मैले तिम्रो अलौकिक पराक्रम थाहा पाएँ, तीनै भुवनमा तिमीसमान पराक्रमी कोही पनि छैन ।'

**ब्रह्माजीले भन्नुभयो** - नन्दी भगवान्सँग वार्तालाप गरी उहाँलाई प्रणाम गरेर पार्वतीको दर्शन गर्न गए । पार्वतीलाई हात जोडी प्रणाम गरेपछि मधुर वचन उच्चारण गर्दै निवेदन गरे - हे आमा पार्वती ! शिवजीको आज्ञाबाट मैले बालकलाई माहिष्मती नगरीमा पुऱ्याएँ ।।१८-२०।। ती बालकलाई वरेण्य राजाकी रानी पुष्पिकाको बिस्तरामा सुताएँ । पहिले भगवान् श्रीगणेशले पुष्पिकालाई म तिम्रो छोरा भएर जन्मिनेछु भन्ने वचन दिनुभएको रहेछ । वरदानको वाणी यस प्रकारको थियो- 'हे पुष्पिका ! म ब्रह्मज्ञानको प्रकाशन गर्ने तिम्रो पुत्र भएर जन्मनेछु ।' नन्दीका कुरा सुनेर सर्वज्ञा पार्वती प्रसन्न हुनुभयो । वास्तवमा पार्वती नै बालककी वास्तविक आमा हुनुहुन्थ्यो । उहाँले प्रसन्न भएर नन्दीलाई भन्नुभयो- हे नन्दी ! तिम्रो यथार्थ

हता त्वया महाघोरा राक्षसी घोरनिस्वना ।
गन्धर्वांश्च हता दुष्टा रक्षितश्चैव बालकः ।।२४।।

अज्ञातस्थापितस्तत्र महत् कार्यमिदं कृतम् ।
इत्युक्त्वा विससर्जामुं विश्रान्तिं चाकरोत्तदा ।।२५।।

पराक्रम मैले थाहा पाएँ । डरलाग्दो गर्जन गर्ने भयङ्कर आकारकी राक्षसीलाई तिमीले मार्‍यौ, दुष्ट गन्धर्वहरूलाई पराजित गर्‍यौ र मेरा बालकको रक्षा गर्‍यौ ।।२१-२४।। माहिष्मती नगरीमा पुगेर मेरो बालकलाई पुष्पिकाको काखमा राखिदियौ । हे नन्दी ! तिमीले ठूलो कार्य सम्पन्न गरेका छौ । पार्वतीले नन्दीसँग यसरी कुरा गरेपछि तिनलाई बिदा गर्नुभयो र आफूले पनि आश्रमभित्र पसेर विश्राम गर्नुभयो ।।२५।।

ॐ

॥ इति श्रीगणेशपुराणे क्रीडाखण्डे गन्धर्वजयो नामैकत्रिंशदुत्तरशततमोऽध्यायः ॥

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'नन्दिकेश्वरद्वारा गन्धर्वहरूको पराजय र श्रीगणेशलाई वरेण्य राजाको दरबारमा पुर्‍याई सूतिकागारमा स्थापना' शीर्षकान्वित एक सय एकतीसौँ अध्याय पूर्ण भयो ।।१३१।।

ॐ

## द्वात्रिंशदुत्तरशततमोऽध्यायः { १३२ अध्याय }

क उवाच

ततः कदाचिद् दैत्येन्द्रः सिन्दूरो मदगर्वितः ।
सभासनगतः प्राह वृथा मे पौरुषं कृतम् ।।१।।
इन्द्रादयो न मे युद्धं ददुर्ब्रह्मादयो हरिः ।
राज्ञां तु गणना नैव मृत्युलोकनिवासिनाम् ।।२।।
कुलीनाया यथा नार्या यौवनं हि पतिं विना ।
तथा मे पौरुषं व्यर्थं विना योद्धाऽभवत् खलु।।३।।
ततोऽन्तरिक्षे वाणीं स शुश्राव परमाद्भुताम् ।

आकाशवाण्युवाच

किमर्थं वल्गसे मूढ ! जातोऽस्ति तव युद्धदः ।।४।।
पार्वत्या उदराद् गर्भो वरेण्यगृहगोऽधुना ।
वर्द्धतेऽनन्तलीलोऽसौ यथेन्दुः शुक्लपक्षगः ।।५।।

क उवाच

श्रुत्वेत्थं सहसा वाणीं मुमूर्च्छ सिन्दूरस्तदा ।
विहर्षश्चिन्तयामास किमिदं केन भाषितम् ।।६।।
यदि दृश्यो भवेन्मह्यं खादेयं तं समस्तकम् ।
कालस्य मे कथं मृत्युः पश्चात् सूर्योदयो यथा ।।७।।
एवमुक्त्वोदतिष्ठत् स गर्जयन् विदिशो दिशः।
उड्डीय सहसा प्रायात् कैलासं गिरिजालयम् ।।८।।
चूर्णयन् पर्वतान् वृक्षान् पातयन् स्वाङ्गमारुतात् ।
चेलतुः कूर्मशेषौ च चकम्पे च वसुन्धरा ।।९।।
न ददर्श शिवं तत्र पुनः सर्वसहां ययौ ।
बभ्राम वसुधां सर्वां शिवं वेगाद् गवेषयन् ।।१०।।
पर्यल्याख्यं महारण्यमाजगाम रुषान्वितः ।
ददर्श दूरतो गौरीसहितं शङ्करं तदा ।।११।।
मण्डपञ्च गणाँश्चैव सरांसि चोत्पलानि च ।
ततो जगाम सहसारिष्टं गौर्यै प्रकल्पितम् ।।१२।।
अदृष्ट्वा तत्र बालं स चुकोपाग्निरिव ज्वलन् ।
ततः स तर्कयामास न वाणी नभसो मृषा ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** – त्यसपछि कुनै दिन सभामा पुगेको मदमत्त दैत्यराज सिन्दूरले भन्यो – 'मेरो पुरुषार्थ र पराक्रम व्यर्थ भयो । ब्रह्मा आदि देवता र इन्द्र आदि राजाहरू पनि मसँग युद्ध गर्न चाहँदैनन् । स्वयं नारायणले पनि युद्ध गर्न मानेनन् । पृथिवीमा रहेका राजाहरूको त कुनै गणना नै छैन । कुलीन पतिव्रता नारीको जवानी पतिविना व्यर्थ भएझैं प्रतिस्पर्धी शत्रु नहुँदा मेरो पराक्रम व्यर्थ भयो' ।।१-३।। यसरी सभामा दैत्यराजले आफ्ना कुरा बताइरहेको समयमा अद्भुत आकाशवाणी भयो ।

**आकाशवाणीले भन्यो** – 'हे दैत्यराज ! किन घमण्ड गरेका छौ ? तिमी मूर्ख छौ किनकि तिमीसँग युद्ध गर्ने बालक अन्यत्र पैदा भइसकेको छ । पार्वतीका गर्भबाट पैदा भएको त्यो शत्रु बालक अहिले माहिष्मती पुरीमा वरेण्य राजाको घरमा शुक्लपक्षको चन्द्रमाझैं दिनदिनै हुर्किरहेको छ । त्यो बालक अत्यन्त ठूलो पराक्रम गर्न समर्थ छ' ।।४-५।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी आकाशवाणी सुनेपछि दैत्यराज सिन्दूर मूर्च्छित भयो । होशमा आएपछि त्यसले यो के हो ? कसले भन्यो ? भन्ने चिन्ता गऱ्यो । जसले आकाशमा रहेर यो कुरा गऱ्यो, त्यसलाई देख्न पाएको भए मैले टाउकैसित निल्ने थिएँ । म महाँकाल स्वरूप हुँ, मेरो मृत्यु कसरी हुनसक्छ? के पश्चिमबाट सूर्य उदाउँछ ? यसो भनेर त्यो दसै दिशा थर्काउँदै कैलासपर्वतमा गयो ।।६-८।। त्यहाँ जाँदा त्यो रूख र पर्वत ढाल्दै गएको थियो र त्यसको हिंडाइबाट पृथिवी काँपेकी थिइन् र शेषनाग पनि कम्पायमान भएका थिए । कैलासमा पुगेर त्यसले शिवजीलाई देखेन र पृथिवीमा फर्की कुना-कुना हेर्दै शिवजीको खोजी गऱ्यो । घुम्दै जाँदा पर्यलीनामक वनमा पुगेर त्यसले टाढैबाट पार्वतीसहित विराजमान भगवान् शङ्करलाई देख्यो। सुन्दर मन्दिर, शिवगण, तलाउ र त्यहाँ फुलिरहेका कमलका फूल देख्यो । त्यसपछि त्यो सुत्केरी भएकी पार्वतीलाई बस्न भनी बनाइएको सुत्केरी कोठामा पुग्यो । त्यहाँ त्यसले बालक देखेन। बालक नदेखेपछि आगोझैं रीसको ज्वाला प्रकट गर्दै विचार गर्न लाग्यो – आकाशवाणी झुट्टा हुँदैन । पार्वतीबाट जन्मेको बालकले मलाई अवश्य मार्नेछ । त्यो पैदा भएको छैन भने

अस्याः सुतो मां हि हन्यान्न जातश्चेद् भविष्यति ।
तस्मादेनां निहन्म्यद्य मूलच्छेदस्ततो भवेत् ।।१४।।

क उवाच

एवं निश्चित्य मनसा ततः शस्त्रमुपाददे ।
यावद्दुमां हन्ति दुष्टस्तावद् दृष्टः शिशुः पुरः ।।१५।।
चतुर्भुजोऽतिरुचिरो मुकुटाङ्गदभूषितः ।
परशुं कमलं मालां दधद् विस्मयदायकः ।।१६।।
कटौ शेषं गले हारं नूपुरौ चाङ्घ्रियुग्मयोः ।
निवृत्तस्तद्वधात् सद्यस्तां च सुप्तामन्यत ।।१७।।
उधार बालकं हस्तेऽकाङ्क्षत् क्षेप्तुं महोदधौ ।
एवं निश्चितसङ्कल्पस्ततोऽसौ चलितः पुरा ।।१८।।
ततः स बालो ववृधे हिमाचल इवापरः ।
सिन्दूरोऽपि चकम्पेऽसौ महाभारातुरः क्षणात् ।।१९।।
श्वासाकुलः पुरो गन्तुं न शशाक स्वशक्तितः ।
ततस्तत्याज तं बालं दैत्यो विह्वलतां गतः ।।२०।।
बाले तु पतिते भूमौ महारावविराविणि ।
चेलुश्च पर्वता नादैश्चकम्पे च वसुन्धरा ।।२१।।
बभ्रमुर्विहगा व्योम्नि नानारावविराविणः।
अर्णवाः क्षोभिताः सप्त ब्रह्माण्डमपि पुस्फुटे ।।२२।।
स बालः पतितो रेवाजलान्ते मुनिसन्निधौ ।
तत्र तीर्थमभूच्छ्रेष्ठं गणेशकुण्डमित्युत ।।२३।।
अस्या आजन्मतः पापं नाशमेति स्मृतेः क्षणात् ।
दर्शनाद् दशजन्मीयं स्नानाच्च शतजन्मजम् ।।२४।।
सेवनं मोक्षदं यस्य चानुष्ठानवतां नृणाम् ।
तद्देहरुधिरात् तत्र प्रस्तरा रक्ततां गताः ।।२५।।
त एव नार्मदाः ख्याता गाणेशाः पापनाशनाः ।
दर्शनात् पूजनात् सर्वकामदा भक्तिकारिणाम् ।।२६।।
नर्मदामहिमा सर्वो वर्णितुं नैव शक्यते ।
ततः स जहर्षे दैत्यो रिपुर्मे नाशतां गतः ।।२७।।

पनि त्यो पैदा हुनेछ। त्यस कारण त्यसलाई पैदा गर्ने पार्वतीलाई मार्दा मृत्युको जरो काटिने छ ।।९–१४।।

(ब्रह्माजीले भन्नुभयो – यसरी पार्वतीलाई मार्ने निश्चय गरेर त्यसले हातमा अस्त्र लिएर पार्वतीमाथि प्रहार गर्न लाग्दा आफ्ना सामु एउटा विचित्र बालक देख्यो ।।१५।। ती बालक चतुर्बाहु थिए र अत्यन्त सुन्दर पनि । तिनका शिरमा मुकुट र बाहुमा केयूर थिए । चार हातहरूमा परशु, कमल, माला र पाश धारण गरेका थिए । तिनका कम्मरमा शेषनाग बेरिएका थिए । घाँटीमा हार थियो । दुवै चरणमा नूपुर थिए । यस्ता बालकलाई देखेपछि दैत्यले पार्वतीको हत्या गर्ने विचार छोड्यो । तिनलाई निदाएकी अवस्थामा देखेर बालकलाई समाती महासागरमा फ्याँकिर मार्ने विचार गरी हिंड्यो । त्यस बेला त्यो दैत्य आफ्ना सामु प्रकट भएका बालकको विचित्र रूप देखेर दङ्ग पर्‍यो । ती बालक त्यसका सामु हिमालयका आकारमा उभिएका थिए। तिनको त्यो विशाल आकार भएको शरीरबाट च्याँपिएको त्यो दैत्य काँप्न थाल्यो ।।१६–१९।। त्यसले सास लिन पनि सकेन। भएको शक्ति लगाएर ती बालकलाई भुइँमा पछार्‍यो तर आफू साह्रै व्याकुल भयो। महागर्जनशाली बालक भुइँमा खस्न लाग्दा भएको गर्जनबाट पर्वत र पृथिवी कम्पायमान भए । चराचुरुङ्गी शब्द गर्दै आकाशमा उड्न थाले । सात महासागर क्षुब्ध भए । ब्रह्माण्डहरू पनि फुटेसमान भए र ती बालक रेवानदीको किनारमा तपस्या गरिरहेका कुनै मुनिका अगाडि खसे। बालक खसेको ठाउँमा श्रीगणेश कुण्डको नामबाट प्रसिद्ध तीर्थ पैदा भयो ।।२०–२३।। श्रीगणेश कुण्डसहितकी नर्मदा नदीको स्मरण गर्नाले मात्र जन्मभरिका पाप नष्ट हुन्छन् । ती रेवानदीको दर्शन गर्नाले दश जन्मका पाप नष्ट हुन्छन् । रेवानदीमा स्नान गर्नाले सय जन्मका पाप नष्ट हुन्छन् । त्यहाँ रही तपस्या गर्नाले भक्त मुक्त हुन्छ । ती बालक पछारिंदा तिनका शरीरबाट खसेका रगतका धाराले त्यहाँका ढुङ्गा पनि रातै भएका थिए।।२४–२५।। पछि गएर ती ढुङ्गा पापनाशक नर्मदेश्वर श्रीगणेशका रूपमा प्रख्यात भए। ती शिलाहरूको दर्शन र पूजा गर्नाले भक्तहरूका सबै कामना परिपूर्ण हुन्छन् ।।२६।। नर्मदा नदीको महिमा बताइसाध्य छैन । आर्कोतर्फ राक्षसको कुरा गरौं – त्यो सिन्दूर दैत्यले बालकलाई भुइँमा पछारेपछि अब मलाई मार्ने बालक मर्‍यो भनी प्रसन्नता व्यक्त गर्‍यो ।।२७।।

तावत् कुण्डात् समुद्भूतो भीषणः पुरुषो महान् ।
जटाभारेण संछन्नो वल्लीछन्नो धरो यथा ।।२८।।

दंष्ट्राकरालवदनो जिह्वाव्यालीसमावृतः ।
दीर्घपाण्यङ्घ्रियुगलः श्वासव्याकुललोचनः ।।२९।।

दृष्ट्वा तथाविधं तं तु क्रोधव्याकुललोचनः।
उवाच दैत्यः सिन्दूरो न चास्य गणना मम ।।३०।।

एवमुक्त्वा खड्गहस्तो ययौ हन्तुं तु तं रुषा ।
खड्गेन हन्ति तं यावत् तावत् स ददृशेऽम्बरे ।।३१।।

उवाच दैत्यं रे दैत्य ! वृथा मां त्यक्तवान् क्षितौ ।
तवान्तकस्तु रे मूढ ! वर्धितः क्वचिदेव हि ।।३२।।

हनिष्यत्येव नूनं त्वां साधुरक्षणतत्परः ।
अन्तर्दधे ततो भीम एवमुक्त्वा स पूरुषः ।।३३।।

ततो दैत्यो महारोषादुवाच निजसेवकान् ।
ध्रियतां ध्रियतामेष येनोक्तं पौरुषं वचः ।।३४।।

यदा तं क्वाऽपि नापश्यत् तदा स्वस्थानमागमत् ।
द्रक्ष्यामि तं यदा शत्रुं जयिष्य इत्यमन्यत ।।३५।।

एतावच्चरितं तस्य पार्वत्याऽज्ञायि नैव तत् ।
तस्यैव मायामोहेन प्राप्तया मोहमुत्तमम् ।।३६।।

ततः प्रोवाच गिरिशं पार्वती विनयान्विता ।
अत्र पीडा दैत्यकृता प्रारब्धा जगदीश्वर ।।३७।।

कैलासं गन्तुमिच्छामि तवेच्छा चेन्नयस्व माम् ।
एवमाकर्ण्य तद्वाक्यं जहृषे शङ्करोऽपि च ।।३८।।

आरुह्य नन्दिनं सद्यः पार्वत्या सह शङ्करः ।
सप्तकोटिगणाकीर्णः कैलासं प्राप तत्क्षणात् ।।३९।।

प्रविश्य स्वालयं गौरी परमं हर्षमाययौ ।।४०।।

त्यसले प्रसन्नता व्यक्त गरिरहेकै समयमा नर्मदा नदीको किनारमा रहेको श्रीगणेशकुण्डबाट डरलाग्दो पुरुष पैदा भयो। त्यो पुरुष लहराले बेरिएको पर्वतझैं जटाले जेलिएको थियो । त्यसको मुखमा ठूला दाह्रा भएका कारण त्यो भयङ्कर थियो । त्यसको जिब्रो सर्पको आकारको थियो । त्यसका हात - खुट्टा लामा लामा थिए । त्यो पुरुष सिन्दूर दैत्य भएको ठाउँमा पुग्यो । त्यसलाई देखेर सिन्दूरले आफ्ना क्रोधले राता भएका आँखा नचाउँदै भन्यो - यस्ता पुरुषलाई मैले केही पनि गन्दिनँ ।।२८-३०।। यसो भनेपछि त्यो हातमा तरबार लिएर कुण्डबाट आएको पुरुषलाई मार्न अगाडि बढ्यो । सिन्दूर दैत्यले खड्ग प्रहार गर्न लाग्दा कुण्डबाट उत्पन्न भएका पुरुषलाई आकाशमा देख्यो। आकाशमा पुगेको त्यस पुरुषले भन्यो- 'हे सिन्दूर! तैंले मलाई व्यर्थमा पृथिवीमा फ्याँकिस्, तँलाई मार्ने तेरो शत्रु त कहीं बढिरहेको छ । तेरो शत्रु सज्जनको रक्षक हो र त्यसले तँलाई मार्नेछ।' सिन्दूरले आकाशमा गएका पुरुषको यस्तो वचन सुन्यो । त्यसपछि आकाशपुरुष पनि अन्तर्धान भयो । सिन्दूर दैत्यले सिपाहीहरूलाई जम्मा गरेर आदेश दियो - मसँग चाहिंदा नचाहिंदा कुरा गर्ने र मलाई मृत्युको कठोर खबर सुनाउने आकाशमा रहेको पुरुषलाई समात । तर ती सैनिकहरूले प्रयास गर्दा पनि आकाशपुरुषलाई समात्न सकेनन् । किनकि त्यो अन्तर्धान भइसकेको थियो । सिन्दूरका सिपाही निराश भए । सिन्दूर घरतर्फ प्रस्थान गऱ्यो । जुन बेला देखिनेछ त्यस बेला मार्नेछु भन्ने सङ्कल्प गऱ्यो ।।३१-३५।। पर्यलीवनमा भएका भगवान् श्रीगणेशका यी चरित्रलाई पार्वतीले थाहा पाउनुभएन । उहाँ पनि श्रीगणेशको मायाबाट मोहित हुनुभएको थियो । भगवान् शङ्करसँग निवेदन गर्दै पार्वतीले भन्नुभयो - यहाँ दैत्यहरूका उपद्रव हुनथाले । साह्रै पीडा भयो । म कैलास जान चाहन्छु। हजुरको इच्छा हुन्छ भने मलाई कैलास पुऱ्याउनुहोस् । पार्वतीका कुरा सुनेर भगवान् शङ्कर प्रसन्न हुनुभयो । त्यसपछि उहाँ पार्वतीका साथ नन्दीमा सवार भई सात करोड शिवगणद्वारा सुरक्षित कैलासधाममा पुग्नुभयो । पार्वती पनि आफ्नो धाममा प्रवेश गरेपछि प्रसन्न हुनुभयो ।।३६-४०।।

ॐ

॥ इति श्रीगणेशपुराणे क्रीडाखण्डे कैलासाधिगमनं नाम द्वात्रिंशदुत्तरशततमोऽध्यायः ॥

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'शिव र पार्वतीको कैलास प्राप्ति' शीर्षकान्वित एक सय बत्तीसौं अध्याय पूर्ण भयो ।।१३२।।

ॐ

## त्रयस्त्रिंशदुत्तरशततमोऽध्यायः { १३३ अध्याय }

व्यास उवाच

पुष्पिकानिकटे त्यक्तो वरेण्यस्य गृहे स किम् ।
चकार तन्ममाचक्ष्व कार्यं विस्तरतोऽब्जज ।।१।।

क उवाच

सम्यक् पृष्टं त्वया वत्स ! हृदयानन्दकारकम् ।
कथयिष्ये विधानेन तत्सर्वं पापनाशनम् ।।२।।
तस्यां निशायां व्युष्टायां ददर्श पुष्पिका सुतम् ।
चतुर्बाहुं रक्तवर्णं गजवक्त्रमलङ्कृतम् ।।३।।
कस्तूरीतिलकं मुक्तामालया सुविराजितम् ।
पीतवस्त्रपरीधानं चारुचन्दनचर्चितम् ।।४।।
देदीप्यमानं वपुषा नानालङ्कारसंयुतम् ।
ततः सा पुष्पिका दृष्ट्वा बालकं तु तथाविधम् ।।५।।
विस्मिता दुःखिता चापि भयभीताऽभवत् तदा ।
घ्नती वक्षो बहिर्याता पाणिभ्यां शोककर्शिता ।।६।।
तदाक्रन्दितमाकर्ण्य मीलिताः परिचारिकाः ।
ताभिरत्यद्भुतं दृष्ट्वा बालकं तं तथाविधम् ।।७।।
नृपोऽपि ज्ञातवृत्तान्तः सगणोऽभिययौ गृहे ।
ततस्तेऽपि भयोद्विग्ना दृष्ट्वा बालं तथाविधम् ।।८।।
अधीराः पपलुस्तस्य केचिन्मूर्च्छामुपाययुः ।
केचिच्च नृपतिं प्राहुर्न जातो न भविष्यति ।।९।।
न दृष्टो न श्रुतः क्वापि बाल एतादृशो नृणाम् ।
नैवायं स्थापनीयस्ते वंशच्छेदकरो गृहे ।।१०।।
एवमाकर्ण्य सर्वेषां वाक्यं मेने स भूपतिः ।
दूतानुवाच बालोऽयं त्यज्यतां गहने वने ।।११।।
ततो दूता गता मध्ये गृहीत्वा बालकं तु तत् ।
गहनं काननं दृष्ट्वा वायुस्पर्शविवर्जितम् ।।१२।।
तीरे तु सरसस्तत्र क्षिप्त्वा ते पर्णसञ्चयैः ।
आच्छाद्य प्रययुः शीघ्रं वरेण्यं नृपतिं पुनः ।।१३।।

**व्यासले भन्नुभयो-** हे ब्रह्माजी! माहिष्मती पुरीमा वरेण्य राजाको घरमा पुष्पिकाको बिस्तरामा राखिएका बालकले के गरे? तिनका कार्यको विषयमा मलाई विस्तारपूर्वक भन्नुहोस्।।१।।

**ब्रह्माजीले भन्नुभयो -** हे व्यास ! हृदयमा आनन्द बर्साउने राम्रो विषयमा जिज्ञासा गर्‍यौ । म विधिपूर्वक पापनाशक श्रीगणेशको सम्पूर्ण चरित्र बताउनेछु ।।२।। नन्दीले शिवजीका पुत्रलाई त्यहाँ राखिदिएपछि अर्को दिन बिहान पुष्पिकाले पुत्रदर्शन गरिन् । ती बालक चतुर्बाहु, रक्तवर्ण, गजानन, अलङ्कारद्वारा अलङ्कृत, कस्तूरीतिलकधारी, मोतीको मालाद्वारा सुशोभित, पीताम्बरधारी, सुन्दर चन्दनको लेपद्वारा सुगन्धित, अङ्ग-प्रत्यङ्गको सुन्दर कान्तिबाट दर्शनीय र विविध अलङ्कारले रमणीय थिए । पुष्पिका त्यस्ता विचित्र स्वरूपका बालकको दर्शन गरेर आश्चर्यमा परिन्, दुःखित भइन् र भयभीत पनि । आफ्ना दुबै हातले छाती पिट्दै शोकमग्न भई क्रन्दन गरिरहेकी ती पुष्पिका सुत्केरी कोठाबाट बाहिर आइन् ।।३-६।। तिनको क्रन्दन सुनेर परिचारिकाहरूले भित्र गई विचित्र बालकको दर्शन गरे। राजा वरेण्यले पनि बालक जन्मिएको थाहा पाएर सेवकसहित त्यहाँ आई बालकको मुख हेरे । ती पनि भयभीत र अधीर भए । दर्शकमध्ये केही भागे, केही मूर्च्छित भए, केही मानिसले राजालाई भने - 'यस्तो बालक कहीं पैदा भएको थिएन। फेरि पैदा हुने पनि छैन । यस्तो बालक न देखिएको छ, न सुनिएको छ, यसलाई घरमा राख्नुहुँदैन । यसले तपाईंको वंश भुटिदिनेछ'।।७-१०।। सबैका कुरा सुनेपछि राजा वरेण्यले त्यो सुझावलाई स्वीकार गरी दूतहरूलाई भने - यसलाई वनमा लगेर फ्याँक । दूतले पनि आज्ञाअनुसार बालकलाई घना जङ्गलमा पुर्‍याए । हावा पनि नछिर्ने जङ्गलमा रहेको तलाउको तीरमा बालक सुताई त्यसलाई पातले ढाकिदिए र तुरुन्तै वरेण्यको दरबारमा फर्के ।।११-१३।। त्यहाँ आउँदा सभाको बीचमा राजालाई देखी नमस्कार गर्दै भने - हे राजन्! हजुरको आज्ञाले सिंह र बाघले भरिएको वनमा बालक राखी आएका छौं । यति बेला त्यसलाई जङ्गली जनावरहरूले खाइसके होलान् ।

सभामध्ये नृपं दृष्ट्वा नमस्कृत्याऽब्रुवँस्तदा ।
आज्ञया तव राजेन्द्र ! सिंहव्याघ्रनिषेविते ।।१४।।
त्यक्त्वा बालं समायाता भक्षितः स्याद् वनेचरैः ।

क उवाच

यावच्च भक्षितुं याता जम्बुकास्तावदेव तम् ।।१५।।
पराशरो मुनिवरो ददर्श करुणानिधिः ।
चतुर्भुजं गजास्यं तं कोटिसूर्यनिभं शिशुम् ।।१६।।
नानालङ्कारसंयुक्तं दिव्याम्बरविभूषितम् ।
सर्पवेष्टितसन्नाभिं चिन्तामणिविभूषितम् ।।१७।।
मुमोह मायया तस्मै सर्वज्ञाननिधिर्मुनिः ।
शुशोच किमिदं विघ्नं मम नाशाय निर्मितम् ।।१८।।
इन्द्रेण मे तपोनाशं काङ्क्षता स्वार्थसाधनम् ।
अकारि न मया किञ्चिद् दुष्कृतं पापभीरुणा ।।१९।।
दीननाथ ! चन्द्रचूड ! रक्ष मां महतो भयात् ।
एवं शोचन्तमालोक्य गजास्यः करुणायुतः ।।२०।।
निराकरोन्मोहजालं तं ततोऽलक्षयत् पुरः ।
तमेव परमात्मानं परब्रह्मस्वरूपिणम् ।।२१।।
भक्तानां रक्षणं कर्तुमीदृशं वेषमास्थितम् ।
धन्यं मेऽद्य जनुर्मातापितरौ च तपो महत् ।।२२।।
निरस्तौ जन्ममृत्यू मे प्राप्तं वाञ्छितमुत्तमम् ।
केनायं हतभाग्येन बालस्त्यक्तो वनान्तरे ।।२३।।

क उवाच

एवमुक्त्वा मुनिः सोऽथ निन्ये बालं स्वमाश्रमम् ।
वत्सलाऽस्य ततः पत्नी दृष्ट्वा बालं तथाविधम् ।।२४।।
आनीतं स्वामिना ज्ञात्वा ननन्द स्नेहनिर्भरा ।
हृदये विनिवेश्यैनं प्राह प्राणपतिं तदा ।।२५।।
बहुकालकृतं स्वामिँस्तपस्ते फलितं गुरु ।
यस्य स्वरूपं न ब्रह्मा न हरो न श्रियः पतिः ।।२६।।
मुनयो न विदुः साक्षाद् दर्शनं जातमद्य नौ ।
यः कर्ता रक्षिता हन्ता सर्वस्य जगतः प्रभुः ।।२७।।

**ब्रह्माजीले भन्नुभयो** – हे व्यास ! दूतहरू फर्केपछि तलाउको तीरमा सुतिरहेको बालकलाई खान स्यालहरू पुगिसकेका थिए ।।१४–१५।। तिनले खान नभ्याउँदै त्यहाँ आइपुगेका करुणासागर पराशर मुनिले अचम्मको बालक देखे। तिनले दर्शन गर्दा ती बालक चतुर्बाहु, गजानन, कोटिसूर्यसमान तेजस्वी, अलङ्कारद्वारा अलङ्कृत, दिव्यवस्त्र धारी, सर्पद्वारा वेष्टित र चिन्तामणिद्वारा अलङ्कृत थिए ।।१६–१७।। यस्ता बालकको दर्शनपछि ज्ञानका निधि पराशर मुनि पनि बालकको मायाबाट मोहित भए । तिनले मनमनै चिन्ता गर्दै भने – 'मेरो सर्वनाश गर्न निर्माण गरिएको यो कुन तत्त्व हो ? के मेरो तपोभङ्ग गर्न चाहने इन्द्रले स्वार्थसिद्धिका लागि मलाई यो दृश्य देखाएका हुन् ? पापसँग सधैं डराउने मैले इन्द्रको कुभलो कहिले गरेको छैन ।।१८–१९।। हे चन्द्रमौलि शङ्कर ! मलाई यस महाभयबाट रक्षा गर्नुहोस् ।' पराशरलाई आत्तिएको देखेर भगवान् श्रीगणेशलाई दया लाग्यो । उहाँले पराशरको मनमा उत्पन्न मोहजाल हटाउँदै प्रत्यक्ष दर्शन दिनुभयो । पराशरले पनि परब्रह्म, परमात्मा, भक्तको रक्षाका लागि चतुर्बाहुका रूपमा प्रादुर्भाव हुनुभएका भगवान् श्रीगणेशको दर्शन गरे अनि श्रद्धापूर्वक भने – आज मेरो जन्म धन्य भयो । माता-पिता धन्य हुनुभयो। मेरो तपस्या धन्य भयो । जन्म र मृत्युका कष्ट समाप्त भए । किनकि मैले आज बालकका रूपमा परब्रह्मको दर्शन पाएँ । कुन अभागीले यस्ता सुन्दर बालकलाई वनमा ल्याई फ्याँकि होला ? ।।२०–२३।।

**ब्रह्माजीले भन्नुभयो** – यसो भनेर मुनि पराशरले ती बालकलाई आफ्नो आश्रममा पुऱ्याए । करुणा र वात्सल्यकी मूर्ति पराशरकी पत्नी वत्सला पनि त्यस्ता बालकलाई पतिले ल्याउनुभएको देखेर आनन्द र स्नेहले परिपूर्ण भइन् । बालकलाई छातीमा टाँस्दै तिनले पति पराशरलाई भनिन्- 'हे स्वामी! हजुरले दीर्घ–कालसम्म गर्नुभएको तपस्या सफल भयो । जसको स्वरूपलाई ब्रह्मा, शिवजी र भगवान् नारायणले पनि राम्ररी जान्नुहुन्न, त्यस्ता परब्रह्मको प्रत्यक्ष दर्शन पायौं । जगत्का कर्ता, पालक र हर्ता, ब्रह्माण्डका स्वामी, पृथिवीको भार हरण गर्न

अवतीर्णो भुवो भारं हर्तुं नानावतारकृत् ।
महद् भाग्यं हि नौ स्वामिन्ननायासेन विश्वभृत् ।।२८।।

अक्षिगोचरतां यातो मनोवाचामगोचरः ।

क उवाच

तस्य बालस्य स्पर्शेन स्तनौ पीनपयोधरौ ।।२९।।

जातौ पपौ ततो बालः सा चानन्दमवाप ह ।
ततः शुश्राव राजाऽसौ वरेण्यो बालकं तु तम् ।।३०।।

पराशरेण मुनिना पालितं दिव्यचक्षुषा ।
वाद्यघोषेण महता शर्कराश्च गृहे गृहे ।।३१।।

दापयामास हर्षेण ब्राह्मणान् सुहृदोऽपि च ।
तोषयामास वस्त्राद्यैः काञ्चनै रत्नसञ्चयैः ।।३२।।

गावः कामदुघा जाताः शुष्कवाप्यो जलान्विताः ।
आश्रमे तु मुनेस्तस्य शुष्कवृक्षाः फलान्विताः ।।३३।।

य इदं शृणुयान्मर्त्यः पुत्रबान्धववान् भवेत् ।।३४।।

अवतार लिनुहुने विश्वका धारक, मन र वाणीद्वारा अगोचर गजानन प्रभुलाई अनायास आँखाले देख्न पायौँ । यो हाम्रो सौभाग्य हो ।')

(ब्रह्माजीले भन्नुभयो - ती बालकको स्पर्शमात्रले पराशर पत्नीका दुवै स्तनमा दूध भरिए ।।२४-२९।। त्यसपछि प्रभुले पनि आनन्दपूर्वक दूध पान गर्नुभयो । पराशर पत्नीले अपूर्व आनन्दको अनुभव गरिन् । त्यसपछि राजा वरेण्यले ती बालकलाई वनमा दिव्यज्ञानी पराशर मुनिले पालन-पोषण गरिरहेको कुरा थाहा पाए । बाजा बजाएर घर-घरमा चिनी बाँड्न पठाए । रत्न, वस्त्र, सुवर्ण र दक्षिणाद्वारा ब्राह्मणहरूलाई प्रसन्न गराए । त्यहाँका गाईहरूले कामधेनुले झैं दूध दिन लागे। सुकेका पोखरीमा पानी भरिए, उता मुनिका आश्रममा पनि चारैतिर हरियाली फैलियो । सुकेका रूख हरिया भए र फलफूलले परिपूर्ण भए। जसले श्रीगणेशको यो कथा श्रवण गर्दछ त्यस साधक धनवान् एवं पुत्रवान् भई संसारका सुख प्राप्त गर्दछ ।।३०-३४।।

ॐ

## इति श्रीगणेशपुराणे क्रीडाखण्डे पराशरदर्शनं नाम त्रयस्त्रिंशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'वरेण्यबाट वनमा परित्यक्त बालगणेशद्वारा पराशरको दर्शन र पराशरद्वारा श्रीगणेशको संरक्षण' शीर्षकान्वित एक सय तेत्तीसौं अध्याय पूर्ण भयो ।।१३३।।

ॐ

## चतुस्त्रिंशदुत्तरशततमोऽध्यायः　　{ १३४ अध्याय }

क उवाच

बालः स ववृधे तत्र दिवसे दिवसे शशी ।
आनन्दं जनयन् मातुः पितुश्च चरितैः स्वकैः ।।१।।

व्यास उवाच

वद ब्रह्मन् ! गुणेशस्य चरितं द्वापरोद्भवम् ।
श्रुत्वा पूर्वचरित्राणि न तृप्तिर्मेऽभवत् प्रभो ।।२।।

गजाननेति नामास्य वाहनं मूषकः कथम् ।
एतत् सर्वं सविस्तारं वद मे चतुरानन ।।३।।

क उवाच

अत्रैवोदाहरन्तीममितिहासं पुरातनम् ।
प्रह्लादस्य च संवादं भार्गवस्य कवेरपि ।।४।।

एवमेव पुरा पृष्टः प्रह्लादेन महामुनिः ।
तस्मै प्रोवाच भगवान् कविस्तच्छृणु साम्प्रतम् ।।५।।

शृणु प्रह्लाद ! येनास्य वाहनं मूषकोऽभवत् ।
तदहं सम्प्रवक्ष्यामि श्रवणात् सर्वकामदम् ।।६।।

पुरा शक्रसभामध्ये क्रौञ्चो गन्धर्वसत्तमः ।
वामदेवमुनिं सोऽथ त्वरावान् प्रपदाऽहनत् ।।७।।

स शशाप च गन्धर्वं मूषकस्त्वं भविष्यसि ।
कल्पयिष्यति वाहत्वे त्वामाक्रम्य गुणेश्वरः ।।८।।

स एव करुणायुक्तो मोक्षं नेष्यति विश्वकृत् ।
पराशराश्रमे सोऽथ पपात मूषकाकृतिः ।।९।।

गिरिशृङ्गनिभो घोरो महारोमा महारवः ।
महावीर्यो महादंष्ट्रो महास्वनविराजितः ।।१०।।

तस्याश्रमे महाघोरमुपद्रवमथाकरोत् ।
भक्षयामास धान्यानि भङ्क्त्वा मृत्पात्रसञ्चयान् ।।११।।

**ब्रह्माजीले भन्नुभयो –** पराशरद्वारा पोषित बालक श्रीगणेश शुक्लपक्षका चन्द्रमा झैं दिनदिनै बढ्दै जानुभयो । उहाँ आफ्नो चरित्रद्वारा पिता र माताको आनन्द बढाइरहनुभको थियो ।।१।।

**व्यासले भन्नुभयो –** 'हे चतुरानन ! भगवान् श्रीगणेशको द्वापरयुगको चरित्र सुनाउनुहोस् । उहाँका चरित्र सुनेर म अघाएको छैन । श्रीगणेशको नाम गजानन कसरी रह्यो ? मूसो कसरी उहाँको वाहन बन्यो ? मलाई यो कुराको विस्तारपूर्वक उत्तर दिनुहोस्' ।।२-३।।

**ब्रह्माजीले भन्नुभयो –** हे व्यास ! यस विषयमा एउटा पुरानो इतिहास रहेको छ । त्यो इतिहास भृगुवंशका शुक्राचार्य र हिरण्यकश्यपुका छोरा प्रह्लादको संवादमा आधारित छ । जसरी तिमीले अहिले मलाई श्रीगणेशको विषयमा सोधेका छौ त्यसैगरी पुरानो समयमा प्रह्लादले शुक्राचार्यसँग सोधेका थिए। विद्वान् शुक्राचार्यले जसरी प्रह्लादलाई बताए त्यसैगरी म तिमीलाई बताउँछु, सुन ।।४-५।।

**शुक्राचार्यले भने –** हे प्रह्लाद ! कसरी मूसो श्रीगणेशको वाहन भयो? यो कुरा म पहिले तिमीलाई बताउँछु। यस कथाको श्रवण गर्नाले सबै प्रकारका कामनाहरू पूर्ण हुन्छन् ।।६।। एक दिनको कुरा हो स्वर्गमा इन्द्रको सभा चलिरहेको थियो । त्यहाँ क्रौञ्च नामक गन्धर्व पनि पुगेका थिए । तिनले हतार – हतारमा हिंड्दा आफ्ना खुट्टाको अगाडिको भागले वामदेव ऋषिलाई कुल्चिए ।।७।। वामदेव ऋषिले रिसाएर गन्धर्वलाई भने– तँ मूसो हुनेछस्। भगवान् श्रीगणेशले तँलाई समातेर आफ्नो वाहन बनाउनुहुनेछ ।।८।। पछि गएर विश्वका विधाता दयालु श्रीगणेशले तँलाई स्वर्ग र मोक्ष प्रदान गर्नुहुनेछ । वामदेवद्वारा सराप पाएको त्यो गन्धर्व अचानक मूसो बनी पराशर ऋषिको आश्रममा खस्यो ।।९।। मूसो भएतापनि त्यो असाधारण थियो । त्यो पर्वतको चुचुराजस्तै आकार भएको, डरलाग्दो, शरीरभरि लामा लामा र बाक्ला रौंले ढाकिएको, लामा-लामा नङ्ग्रा भएको, ठूला दाह्रा भएको र भयङ्कर स्वरले गर्जन गर्ने पराक्रमी थियो ।।१०।। त्यसले पराशर ऋषिको आश्रममा आतङ्क मच्चायो । माटाका ठूला-ठूला भाँडामा जम्मा गरिएको धान खायो। पुस्तक, लुगा र रूखका बोक्रा पनि खाई त्यसले

पुस्तकानि च वस्त्राणि वल्कलानि महान्त्यपि ।
स सारभूतं यत्सर्वं भक्षयामास मूषकः ।।१२।।

पुच्छाघातेन वृक्षान् स पातयामास भूतले ।
चुञ्चुकारेण शब्देन गर्जयामास विष्टपम् ।।१३।।

ज्ञात्वा तथाविधं तं तु चिन्तामाप मुनीश्वरः ।
दुर्जनस्य बलात्कारैः स्थानं त्याज्यं न संशयः ।।१४।।

अधुना क्व नु गन्तव्यं कस्मिन् स्थाने सुखं भवेत् ।
प्राणत्यागे महादोषं वदन्ति शास्त्रचिन्तकाः ।।१५।।

कथं सुखाश्रमे दुःखं प्राप्तं कर्मप्रसङ्गतः ।
कस्य वा स्मरणं कार्यं को वा दुःखात् प्रमोक्ष्यति।।१६।।

क एनं नाशयेदत्र कः समर्थो भवेद् वधे ।
कमद्य शरणं यायां को नस्त्राता भविष्यति ।।१७।।

एवं पितृवचः श्रुत्वा बालकोऽनन्तविक्रमः ।
उवाच मधुरं वाक्यं चिन्तां मा कुरु सर्वथा ।।१८।।

मयि तिष्ठति दुष्टानां संहारिणि महाप्रभौ ।
पुत्रतां ते प्रयातोऽस्मि विधास्ये ते प्रियं तु यत् ।।१९।।

यस्य मे क्रन्दितेनेयं पृथिवी शीर्णतामियात् ।
पर्वताश्चूर्णतामापुः पादाघातेन मे मुने ।।२०।।

पश्य मे कौतुकं तात ! नयाम्येनं तु वाहताम् ।
एवमुक्त्वाऽसृजत् पाशं कोटिसूर्यनिभं शिशुः ।।२१।।

मेघेष्विव तडित्पुञ्जः शुशुभे सोऽन्तरिक्षगः ।
तत्यजुर्भयतो देवाः स्वानि धिष्ण्यानि तत्क्षणात्।।२२।।

स ययौ वह्निवदनो दशदिग्भ्रमणे रतः ।
पाताले मूषकं कण्ठे बद्ध्वा बहिरकाशयत् ।।२३।।

मूर्च्छामवाप महतीमाखुः पाशबलार्दितः ।
शुशोच परमक्रुद्धो निरुद्धश्वासमारुतः ।।२४।।

हानि पुऱ्यायो । घरमा जे-जति गतिला पदार्थहरू थिए, ती सबै खायो अनि बिगाऱ्यो। त्यसले पुच्छरले हानेर ठूला-ठूला रूखलाई पनि भुइँमा लडायो । चूँ-चूँ शब्दले चीत्कार गर्दै त्यसले आकाशलाई पनि शब्दायमान गरायो ।।११-१३।। आफ्ना आश्रममा खसेको डरलाग्दो मूसाको उपद्रव थाहा पाएर पराशर ऋषिलाई ठूलो चिन्ता पऱ्यो । उनले भने - हुन त दुर्जनको आक्रमणका कारण आफ्नो ठाउँ छोड्नु हुँदैन, तर यो मूसाले गर्दा बस्न नसकिने भयो । अहिले कहाँ जाऊँ ? कहाँ गएर सुख प्राप्त हुन्छ ? प्राणत्याग गरूँ भने शास्त्रका चिन्तकहरूले ठूलो पाप बताएका छन् ।।१४-१५।। सुखमय आश्रममा कुन कर्मको प्रसङ्गले आज दुःख आइलाग्यो? यो विपत्तिको बेलामा कसलाई भनूँ ? कसले मलाई यो दुःखबाट मुक्त गर्ला ? ।।१६।। कसले यो मूसाको नाश गरिदेला? यसको वध गर्न को समर्थ होला ? म कसका शरणमा जाऊँ ? मेरो रक्षा गर्ने पुरुषार्थी पुरुष को होला ? पिता पराशरका यस्ता कुरा सुनेर अनन्त पराक्रमी बालक श्रीगणेशले मीठो वाणी बोल्नुभयो - हे पिता ! दुष्टको संहारक र संसारको परमेश्वर म यहाँ छँदाछँदै हजुरले कुनै प्रकारको चिन्ता नगर्नुहोस् ।।१७-१८।। अहिले म हजुरको छोरा भएर अवतरित छु । हजुरलाई हित हुने र प्यारो लाग्ने काम गर्दछु। हे पिताश्री ! मेरो गर्जनबाट यो पृथिवी चिरा-चिरा हुनसक्छ । मेरा खुट्टाको आघातबाट पर्वतहरू धूलो-पीठो हुनसक्छन् । हजुरले मेरो आश्चर्यदायक कर्म हेर्नुहोस्। अब मैले यसलाई आफ्नो वाहन बनाउनेछु । पिताश्रीसँग यस्ता कुरा गरेर भगवान् श्रीगणेशले करोडौं सूर्यको प्रकाश भएका पाशको सिर्जना गर्नुभयो।।१९-२१।। त्यो पाश बादलको माझमा बिजुली चम्केझैं आकाशमा पुगेर चम्किन थाल्यो । त्यसलाई देखेर देवताहरू डराएर तिनले तत्कालै आ-आफ्ना धाम छाडिदिए ।।२२।। टुप्पामा आगाको ज्वाला भएको त्यो पाश दसै दिशामा चक्कर काट्न थाल्यो । त्यस पाशदेखि डराएर पराशरको आश्रममा आतङ्क मच्चाउने मूसो पनि भागेर पाताल पुग्यो । श्रीगणेश भगवान्को पाश पातालमा पुग्यो र त्यसले मूसाको घाँटीमा कसी त्यसलाई पातालदेखि माथि पृथिवीतर्फ लिएर आयो । पाशको शक्तिबाट ठूलो चोट खाएको त्यो मूसो मूर्च्छा पऱ्यो। होशमा आएपछि क्रोधले गर्जन गर्दै सास रोकिएको मूसाले चिन्ताको मुद्रामा भन्यो - 'कसरी आज मलाई कालले आक्रमण गऱ्यो ? दैववश मेरा आँखासामु मृत्यु आइपुग्यो ।

कथं कालस्य मरणमागतं दैवनिर्मितम् ।
भवितव्यं भवत्येव पुरुषार्थो निरर्थकः ।।२५।।

येन दंष्ट्राग्रमात्रेण दारिताः पर्वता बहु ।
न मया गणिता देवा नासुरा राक्षसा नराः ।।२६।।

तस्य मे केन पाशेन कण्ठोऽक्रामि गतायुषः ।

क उवाच

मूषके प्रब्रुवत्येवं यावत् तावद् गजाननः ।।२७।।

चकर्ष मनसा तं स सोऽगान् मूषकसंयुतः ।
यथा गारुडशास्त्रज्ञः सर्पं कर्षति तत्क्षणात् ।।२८।।

स तं दृष्ट्वा पाशकण्ठो मूषको लब्धधीः क्षणात् ।
नमस्कृत्य विभुं देवं गजाननमनामयम् ।।२९।।

तुष्टाव परया भक्त्या चिदानन्दघनं प्रभुम् ।
त्वमेव जगतां नाथः कर्ता हर्ता प्रपालकः ।।३०।।

गुणत्रयविहीनश्च गुणत्रयसहायकृत् ।
मायातीतोऽपि मायावी मायिनामपि मोहकृत् ।।३१।।

ब्रह्मादीनामगम्यस्त्वं मुनिहृत्पद्मसंस्थितः ।
कारणं करणं कर्ता कारणानां च कारणम् ।।३२।।

सोऽद्य दृष्टः स्वचक्षुर्भ्यामतो धन्यं जनुर्मम ।
धन्यौ मे पितरौ नेत्रे तपो विद्या व्रतं जपः ।।३३।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं प्रीतोऽसौ द्विरदाननः ।
प्राह भक्तिं दृढां ज्ञात्वा भक्तं तं मूषकं विभुः ।।३४।।

तवैव पुरुषार्थेन देवद्विजद्रुहोऽनघ !
निर्गुणोऽहं गुणी जातो दुष्टनाशनहेतवे ।।३५।।

हुनुपर्ने कुरा नभई छाड्दैन। अब मैले पुरुषार्थ गर्नुको कुनै औचित्य छैन।।२३-२५।। मैले आफ्नो दाह्राको चुच्चाले अनेक पटक पर्वतलाई पनि विदीर्ण गरेको छु । मैले देवताहरूको कहिले पनि गणना गरिनँ । मान्छे, असुर, राक्षसको वास्ता मैले गरिनँ ।।२६।। तर आज मेरो आयु सकिएर त होला, म जस्तो वीर पुरुषको घाँटी पनि एउटै पाशका कारण अवरुद्ध भयो ।'

**ब्रह्माजीले भन्नुभयो-** यसरी मूसाले आफ्ना मनका कुरा खोलिरहेको समयमा भगवान् श्रीगणेशले मन लगाएर पाशलाई आफूतिर तान्नुभयो । त्यो पाश मूसालाई पनि तान्दै श्रीगणेशका नजिकमा पुग्यो । सर्पहरूलाई वश गर्ने विद्या जानेका सपेराहरूले जसरी एकैछिनमा सर्पलाई आफूतिर तान्दछन् त्यसैगरी भगवान् श्रीगणेशले मूसोसहित त्यो पाशलाई तान्नुभएको थियो ।।२७-२८।। घाँटीमा पाश धसिएको मूसाले भगवान्लाई देखेर उत्तम बुद्धि प्राप्त गऱ्यो । त्यसपछि अन्तर्यामी, दोषविहीन, सच्चिदानन्दघन, परमप्रभु गजानन भगवान्लाई प्रणाम गरी स्तुति गऱ्यो । मूसाले भन्यो - हे प्रभो ! हजुर नै संसारका स्वामी, हर्ता, कर्ता र पालक पनि हुनुहुन्छ।।२९-३०।। हे प्रभु! हजुरमा सत्त्व, रज एवं तमोगुण छैनन् तर ती गुणलाई सघाएर संसारको रचना गर्नुहुन्छ । हजुर मायादेखि पर हुनुहुन्छ तर माया जान्नेलाई पनि मोहमा पुऱ्याउने मायाका अधिपति पनि हुनुहुन्छ ।।३१।। हजुरलाई ब्रह्मा आदि देवताहरूले पनि राम्ररी बुझ्न सक्दैनन् । हजुर भगवान्को ध्यानमा निरन्तर लागिरहने मुनिहरूका हृदयमा विराजमान हुनुहुन्छ । हजुर संसारका कर्ता र संसार बनाउने साधन एवं संसारका कारण पनि हुनुहुन्छ । हजुर कारणका पनि महाकारण हुनुहुन्छ । आज मैले हजुरलाई आफ्नै आँखाले देख्न पाएँ । मेरो जन्म धन्य भयो । मलाई जन्म दिने माता-पिता धन्य हुनुभयो । मेरा नयन पनि धन्य भए । मेरा तपस्या, विद्या, व्रत र जप पनि धन्य भए ।।३२-३३।।

**ब्रह्माजीले भन्नुभयो-** मूसाका यी कुरा सुनेर प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले त्यो मूसालाई आफ्नो भक्त र त्यसको भक्तिलाई उत्तम भक्ति जानेर भन्नुभयो - हे मूसा ! देवता र ब्राह्मणका द्रोही गर्ने तिम्रो पुरुषार्थ कै कारण अहिले म निर्गुण ब्रह्म पनि दुष्टहरूको नाश गर्ने कार्यका लागि गुणवान् भएको छु । साधुहरूको रक्षाका निमित्त समर्थ भएको छु ।

साधूनां रक्षणार्थाय यतस्त्वां शरणं गतम् ।
अतस्ते दत्तमभयं वरं वृणु यमिच्छसि ।।३६।।

मूषक उवाच

नाहं वृणे गजास्य ! त्वां त्वमेव वृणु वाञ्छितम् ।

क उवाच

इत्युक्तो मूषकेनासौ गर्वितेन गजानन: ।।३७।।

वाहतां मम याहि त्वं यदि सत्यं वचस्तव ।
तथेत्युक्ते स पिङ्गाक्षो रुरोहाक्रम्य तत्क्षणात् ।।३८।।

भारेण चूर्णयँस्तं तु पुनर्देवमयाचत ।
अहन्ते वाहनं जातो लघुभूतो भव प्रभो ।।३९।।

याचतस्तस्य वचसा लघुभारोऽभवद् विभु: ।
एतद् दृष्ट्वा महाश्चर्यं प्रणम्य मुनिरब्रवीत् ।।४०।।

न बाले पौरुषं क्वापि मया दृष्टं जगत्त्रये ।
यच्छब्दात् पर्वता: शीर्णा लोकपालाश्च्युतस्थला: ।।४१।।

स त्वया क्षणमात्रेण नीतो वाहनतां बलात् ।
तत आगत्य माताऽस्य वत्सला गृह्य तं शिशुम् ।।४२।।

प्रस्नुतौ पाययामास स्तनौ माता मुदा युता ।
उवाच न च जाने ते स्वरूपञ्च पराक्रमम् ।।४३।।

जन्मजन्मान्तरीयेण पुण्येन नौ गृहं गत: ।
तत: स मूषकं बद्ध्वा चिक्रीडे प्राकृतो यथा ।।४४।।

एवं ते कथिता चास्य यथा मूषकवाहता ।।४५।।

तिमी मेरो शरणमा आएका छौ, मैले तिमीलाई अभयदान दिन्छु । अरू तिमी के चाहन्छौ ? वर माग ।।३४-३६।।

**मूसाले भन्यो** - 'हे भगवन् श्रीगणेश ! मलाई कुनै वरदान चाहिएको छैन । तपाईँलाई केही वरदान चाहिएको छ भने माग्नुहोस् । म तपाईँको कामना पूरा गर्दछु ।'

**ब्रह्माजीले भन्नुभयो**- घमण्डी मूसाले भगवान् श्रीगणेशलाई मलाई केही चाहिएको छैन, तपाईँलाई चाहिएको भए माग्नुहोस् भनेपछि श्रीगणेशले भन्नुभयो - 'हे मूसा ! अब उप्रान्त तिमी मेरा वाहन बन।' मूसाले हुन्छ भनेपछि भगवान् श्रीगणेश मूसामा आरोहण गर्नुभयो ।।३७-३८।। भगवान् श्रीगणेशका शरीरको ठूलो भारले च्याँपिएर आत्तिएको मूसाले उहाँसँग प्रार्थना गऱ्यो- 'हे भगवन्! हजुरले भने बमोजिम म हजुरको वाहन बनेको छु। अब हजुर सानो आकारका हुनुहोस्।' सर्वव्यापक श्रीगणेशले पनि मूसाको याचना सुनेर आफू सानो आकारका र हलुका पनि हुनुभयो । यो आश्चर्यजनक घटना देखेर श्रीगणेशलाई प्रणाम गर्दै पराशर मुनिले भने- 'हे बाबु! मैले तीनै लोकमा कहीं पनि तिमीजस्ता बालकको यस्तो पुरुषार्थ देखेको छैन। जसको गर्जनबाट पर्वतका चुचुराहरू टुक्रिएर झरे एवं लोकपालहरू भुइँमा खसे ।।३९-४१।। त्यस्तो भयङ्कर मूसालाई पनि तिमीले एकै छिनमा आफ्नो पराक्रमबाट वाहन बनायौ ।' त्यसपछि पराशर ऋषिकी पत्नी वत्सला माताले दूधको धारा बगाइरहेका आफ्ना स्तन आनन्दपूर्वक श्रीगणेशलाई चुसाइन् । दूध चुसाउँदा तिनले भनिन्- 'हे बाबु ! म तिम्रो स्वरूप र पराक्रमका विषयमा केही पनि जान्दिनँ ।।४२-४३।। जन्मजन्मान्तरका पुण्यले अहिले तिमीलाई हामीले छोराका रूपमा पायौं ।' त्यसपछि भगवान् श्रीगणेश सामान्य बालक हुनुभयो र मूसालाई बाँधेर त्योसँग खेल्न थाल्नुभयो । हे प्रह्लाद! तिमीलाई मैले भगवान् श्रीगणेशका वाहन मूसाको विषयमा बताएँ । त्यो कसरी श्रीगणेशको वाहन हुनपुग्यो भन्ने विषयलाई पनि स्पष्ट गरें ।।४४-४५।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे मूषकवाहनरूपधारणं नाम चतुस्त्रिंशदुत्तरशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'पराशरका घरमा रहनुभएका श्रीगणेशद्वारा मूसोलाई वाहनका रूपमा स्वीकार' शीर्षकान्वित चौंतीसौं अध्याय पूर्ण भयो ।।१३४।।

ॐ

## पञ्चत्रिंशदुत्तरशततमोऽध्यायः { १३५ अध्याय }

व्यास उवाच

किमनेन कृतं पूर्वं पुण्यं पापञ्च पद्मज !
येनायं मौषकं जन्म प्राप देवस्य वाहताम् ।।१।।

क उवाच

सम्यक् पृष्टं त्वया वत्स ! ममापि मनसः प्रियम् ।
ब्रवीमि सकलं तच्च तदिहैकमनाः शृणु ।।२।।

सुमेरुशिखरे रम्यः सौभरेराश्रमो महान् ।
अभूद् वृक्षसमाकीर्णो नानापक्षिगणान्वितः ।।३।।

वसिष्ठाद्या मुनिगणा देवा इन्द्रपुरोगमाः ।
आयान्ति सौभरेस्तस्य दर्शनार्थं दिने दिने ।।४।।

महत्तपोवृद्धिदीप्तेरत्यग्निरवितेजसः ।
ख्यातस्य सर्वलोकेषु ध्याननिष्ठस्य चेश्वरे ।।५।।

तस्य पत्नी महाभागा मनोमयीति विश्रुता ।
पतिव्रतासु सर्वासु विख्याता भर्तृवल्लभा ।।६।।

रम्यता तु रतेस्तस्या जिता रम्यतयाऽखिला ।
शचीप्रभृतयः सर्वा न प्रापुः समतालवम् ।।७।।

कदाचित् सौभरिर्होमशालायां प्रातरुत्थितः ।
कृत्वा होमं वनं यातः समिदर्थं गृहे स्थिता ।।८।।

मनोमयी सुशीला सा गृहकार्यरताऽभवत् ।
तदा दुष्टस्तु गन्धर्वः क्रौञ्चनामा समागतः ।।९।।

विश्रान्तिरभवत्तस्य दृष्ट्वाश्रममनुत्तमम् ।
नानाशालासमाकीर्णं बहुच्छायं सुशीतलम् ।।१०।।

एतादृशो रम्यतर आश्रमो यस्य स प्रभुः ।
धन्यं जपस्तपस्तस्य क्षणेनायं सुखप्रदः ।।११।।

**व्यासले भन्नुभयो** - 'हे लोकपितामह ! पहिले त्यस मूसाले कुन पुण्य र कुन पाप गरेको थियो ? जुन पाप र पुण्यका कारण मूसाको योनिमा जन्म लिन बाध्य भयो र भगवान् श्रीगणेशको वाहन हुने सौभाग्य पनि प्राप्त गऱ्यो' ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! मैले मनले रुचाएको विषयमा तिमीले राम्रो प्रश्न गऱ्यौ । म ती सबै कुराको उत्तर दिन्छु । एकाग्रचित्त भएर सुन ।।२।। सुमेरु पर्वतको शिखरमा सौभरि ऋषिको अत्यन्त राम्रो, वृक्षहरूबाट घेरिएको र विशाल आश्रम थियो । त्यहाँ अनेक थरि पक्षिगणहरू रहेका थिए । इन्द्र आदि देवता र वसिष्ठ ऋषिहरू दिनदिनै ठूलो तपस्याका कारण अत्यन्त दीप्तिमान्, सूर्य एवं अग्निको तेजभन्दा पनि चहकिलो तेज भएका, लोकविख्यात र ईश्वरको ध्यानमा तत्पर महात्मा सौभरिको दर्शन गर्न त्यहाँ आउँथे ।।३-४।। सौभरि ऋषिकी भाग्यवती पत्नी मनोमयीका नामबाट संसारमा प्रसिद्ध थिइन् । ती सबै पतिव्रता नारीहरूमा उत्तम थिइन् र आफ्ना पति सौभरिकी अत्यन्त प्यारी पनि थिइन् ।।५-६।। तिनले आफ्नो सौन्दर्यबाट कामदेवकी अर्धाङ्गिनी रतिको सौन्दर्यलाई पनि परास्त गरेकी थिइन् । इन्द्राणी आदि दिव्यनारीहरूले मनोमयीका अङ्ग-प्रत्यङ्गमा रहेको सौन्दर्यको लेशमात्र सौन्दर्य पनि पाएका थिएनन् ।।७।। कुनै एक दिनको कुरा हो, बिहान चाँडै उठेका सौभरिले होमशालामा गई होमसम्पन्न गरे । त्यसपछि ती समिधा जम्मा गर्न वनतर्फ गए । तिनकी पत्नी मनोमयी घरका कार्यमा व्यस्त भइन् । त्यस बेला दुष्ट स्वभावको क्रौञ्चनामक गन्धर्व त्यस आश्रममा आइपुग्यो ।।८-९।। शान्त, अनेक पर्णशालाहरूले शोभायमान, घना छाया भएको र अत्यन्त शीतल आश्रम देखेर त्यस गन्धर्वले शान्ति र विश्रान्तिको अनुभव गऱ्यो।।१०।। जसको यस्तो महिमामय आश्रम छ ती ऋषि साँच्चिकैका प्रभु हुन् ती महापुरुषको जप धन्य छ र तप पनि। यो सुखप्रद आश्रममा दीर्घकालसम्म बस्न पाएमा साधकले मुक्ति पनि प्राप्त गर्न सक्छ । यस्तो बयान गरी त्यो गन्धर्व सौभरिको

चिरस्थानान्मुक्तिदः स्यादित्युक्त्वा तद्गृहं ययौ ।
ददर्श मुखचन्द्रं स मनोमय्या मनोरमम् ।।१२।।

यस्या दर्शनमात्रेण हरोऽपि स्मरसाद् भवेत् ।
तस्याः कटाक्षपातेन मदनानलविह्वलः ।।१३।।

स बभूव तदासक्तो दधार सहसा करे ।
तत्करस्पर्शमात्रेण चकम्पे सा मुमूर्च्छ च ।।१४।।

मनोमयी न शशाप भर्तृस्मरणतत्परा ।
म्लाना च शुष्ककण्ठा च सस्वेदाक्षिस्त्रवज्जला।।१५।।

बभूव परमोद्विग्ना मुमोह च शुशोच च ।
कमद्य शरणं यामि कोऽस्माद् दुष्टात् प्रमोक्ष्यते ।।१६।।

न कृतं दुष्कृतं किञ्चिदिह जन्मनि संस्मरे ।
जन्मान्तरीयपापेन सुखदुःखमुपस्थितम् ।।१७।।

दुष्टभावं तु तं ज्ञात्वा सान्त्वयन्त्यब्रवीदिदम् ।
अहं दुहितृतुल्या ते जनकेन समोऽसि मे ।।१८।।

ज्ञानवानसि पापे त्वं मा वर्तस्व गतत्रपः ।
पापिनो यान्ति नरकं वर्षकोटिगणान् बहून् ।।१९।।

तस्मान्मुञ्च महाभाग कृपणां पुत्रिकोपमाम् ।
नो चेदहं करिष्यामि प्राणत्यागं न संशयः ।।२०।।

स्त्रीहत्यादोषसम्भूतं पापं ते स्यान्महत्तरम् ।
मम भर्ता महाभागो वनादायास्यतेऽधुना ।।२१।।

तस्य क्रोधानलस्त्वां हि भस्मत्वं नेष्यते क्षणात् ।
विनाज्ञां तस्य नो किञ्चित्कार्यं कार्यं मया लघु ।।२२।।

नो चेत्त्वां भस्मसात्कुर्यां सृष्टिञ्च ब्रह्मणोऽपि च ।
एवं वदन्त्यां तस्यां तु सौभरिः समुपागतः ।।२३।।

घरभित्र प्रविष्ट भयो । त्यहाँ त्यसले सौभरिकी धर्मपत्नी मनोमयीको चन्द्रमाझैं सुन्दर मुखमण्डलको दर्शन पायो ।।११-१२।। मनोमयीको सौन्दर्य भगवान् शङ्करलाई पनि कामातुर बनाउन समर्थ थियो । मनोमयीले दृष्टिपात गर्दा त्यो गन्धर्व कामविह्वल भयो । मनोमयीमा आसक्त भई त्यसले तिनको हात समात्यो। गन्धर्वले हातमा स्पर्श गर्नासाथ मनोमयी थर्थर काँपिन् र मूर्च्छित भइन् ।।१३-१४।। जागेपछि पतिको संझना गर्दै विह्वल भइन् तर तिनले गन्धर्वलाई सराप दिइनन् । ती ओइलाएसरि भइन्, तिनको घाँटी सुक्यो, पसिनाले शरीर ढाक्यो, आँखाबाट बर्बर आँसु बग्न थाले, अत्यन्त उद्विग्न र किंकर्तव्यविमूढ भएर पीर गर्न थालिन्- आज म कसका शरणमा जाऊँ ? यो कष्टबाट कसले मुक्त गर्ला ? यो जन्ममा मैले कुनै पाप गरेकी छैन, मलाई पूरापूर संझना छ । जन्म-जन्मान्तरका पापले सुख र दुःख उपस्थित हुने गर्दछ ।।१५-१७।। गन्धर्वको पापभावना बुझेर त्यसलाई संझाउँदै मनोमयीले भनिन् - 'हे गन्धर्व ! म तिम्री छोरीसमान छु र तिमी मेरा पितासमान छौ । हे निर्लज्ज पुरुष ! तिमीमा भगवान्ले दिएको अलिकति ज्ञान र अलिकति बुद्धि छ भने त्यसको सदुपयोग गर । पापमा नपर । पापीहरू कोटि-कोटि वर्षसम्म नरकमा वास गर्दछन् भन्ने कुरा ख्याल गर । हे महाभाग ! म तिम्री छोरीसमान हुँ, मलाई तिमीले छाडिदेऊ । छाड्दैनौ भने मैले यहीं तिम्रासामु प्राणत्याग गर्नेछु। यसमा कुनै सन्देह छैन ।।१८-२०।। त्यसबाट तिमीलाई नारीजातिको वध गरेको ठूलो पाप लाग्नेछ । अब मेरा पति वनबाट फर्किनु हुनेछ । उहाँको क्रोधको आगोले तिमीलाई खरानी बनाउन सक्छ । पतिको आज्ञाविना मैले कुनै सानो काम पनि गर्ने गरेकी छैन । अहिले उहाँ यहाँ हुनुहुन्न त्यस कारण मैले तिमीलाई सराप दिन सकिनँ । उहाँ यहाँ हुनुभएको भए उहाँको आज्ञा लिएर तिमीलाई मैले खरानी बनाइसक्ने थिएँ। तिमीलाई त के कुरा धर्मको विपरीत जाने ब्रह्माजीको सृष्टिलाई पनि मैले समाप्त पार्ने थिएँ ।' मनोमयी यस्ता कुरा गर्दै थिइन् त्यसै बेला सौभरि ऋषि पनि वनबाट घर आइपुगे।।२१-२३।।

तं दृष्ट्वा स्वाङ्गणगतं मध्याह्नरविसन्निभम् ।
मुमोच तेजसा तत्र धर्षितोऽसौ करं तदा ।।२४।।

अधोऽपश्यच्चकम्पे च मम्लाय च बिभाय च ।
मुनिः प्रोवाच सहसा प्रलयाग्निरिव ज्वलन् ।।२५।।
उत्ससर्ज तदा शापं गन्धर्वं प्रति दुःसहम् ।

मुनिरुवाच

असमक्षं यतो मे त्वं पत्नीं धर्षितवानसि ।।२६।।
असमक्षचरो मूढ ! मूषकस्त्वं भविष्यसि ।
चौरवत् पृथिवीं दार्य स्वोदरं पूरयिष्यसि ।।२७।।

क्रौञ्च उवाच

न मया बुद्धिपूर्वं ते धर्षितेयं मनोमयी ।
प्रसङ्गादभवत् सङ्गो दृष्ट्वेमां चारुरूपिणीम् ।।२८।।
करमात्रधृता चेयं तावत् त्वमपि दृष्टवान् ।
तेजसा ते प्रभीतेन मया मुक्ताऽनघा मुने ।।२९।।
अतोऽपराधं मे क्षन्तुमर्हसि त्वं कृपानिधे !
कुरुष्वानुग्रहं मह्यं शरणागतवत्सल ।।३०।।
अहं त्वां शरणं यामि कृपां कुरु ममोपरि ।
त्रैलोक्ये नेदृशी दृष्टा पातिव्रत्यगुणान्विता ।।३१।।

मुनिरुवाच

प्लवते सागरे मेरुरुदियात् पश्चिमे रविः ।
न मे वचोऽन्यथा भूयाद् वह्निः शीतत्वमाप्नुयात्।।३२।।
अथापि प्रब्रवीम्यद्य दुष्ट ! तच्छृणु सादरम् ।
पराशरगृहे देवो द्वापरेऽवतरिष्यति ।।३३।।
गजानन इति ख्यातस्तस्य वाहत्वमेष्यसि ।
तदा ब्रह्मादयो देवा मानयिष्यन्ति सादरम् ।।३४।।
तस्य हस्तगतः स्वर्गं पुनरेष्यसि सत्वरम् ।
एवमाकर्ण्य तद्वाक्यं दुःखहर्षसमन्वितः ।।३५।।

मध्याह्नकालका सूर्यझैं तेजस्वी सौभरिलाई आश्रमको आँगनमा आइपुगेको देखेर क्रौञ्च गन्धर्व कान्तिहीन बन्यो र मनोमयीको हात छाडिदियो। लाजले भुइँमा हेऱ्यो, थर्थर काँप्यो, हतप्रभ भयो र साह्रै भयभीत पनि। रीसले प्रलयको आगो झैं बलेका सौभरि ऋषिले सम्बोधन गर्दै त्यसलाई ठूलो र असह्य सराप दिए ।

**सौभरिले भने** – हे दुष्ट ! तैंले म नभएको बेला मेरो घरमा पसेर मेरी धर्मपत्नीमाथि बलात्कार गर्न खोजिस्, त्यस कारण हे मूर्ख ! तँ पनि जनसमूहसँग लुकेर बस्ने मूसाको रूपमा पैदा हुनेछस् । चोरले झैं पृथिवी खनेर आफ्नो पेट पाल्नेछस् ।।२४-२७।।

**गन्धर्वले भन्यो** – हे ऋषिवर ! मैले बुद्धिपूर्वक हजुरकी धर्मपत्नीलाई बलात्कार गर्न खोजेको होइन । घुम्दै आउँदा म हजुरको आश्रमभित्र पसें । हजुरकी श्रीमतीलाई अत्यन्त सुन्दरी देखेपछि मेरो होश गुम भयो । मैले सङ्गत गर्न खोजें तर कुनै पाप गरेको छैन। हातमा समातेको मात्र हो। हातमा समातिरहेको बेलामा हजुर आइपुग्नुभयो र देख्नुभयो । हे ऋषि ! हजुरको तेजबाट डराएर मैले यी निष्पाप नारीको हात छोडिदिएँ।।२८-२९।। हे कृपासिन्धु ! हजुरले मेरो अपराधलाई क्षमा दिनुहोस् । शरणागतमाथि कृपा गर्ने हे मुनि ! म माथि अनुग्रह गर्नुहोस् । म हजुरको शरणमा आएको छु, दया गर्नुहोस् । मैले तीनै लोकमा हजुरकी धर्मपत्नीसमान पतिव्रता अरू नारी देखेको छैन ।।३०-३१।।

**मुनिले भने** – सुमेरु सागरमा तैरिन सक्छ, सूर्य पश्चिममा उदाउन सक्छन्, आगो शीतल हुनसक्छ तर मेरो वचन अन्यथा हुँदैन ।।३२।। हे दुष्ट ! त्यसो हे तापनि मानवतापूर्वक म भन्छु तँ सुन् । भगवान् श्रीगणेश द्वापरयुगमा पराशरका घरमा पुत्र भएर अवतरित हुनुहुनेछ । उहाँ गजाननका नामबाट लोकमा विख्यात हुनुहुनेछ । तँ उहाँको वाहन बन्नेछस् । त्यसपछि तँलाई ब्रह्मा आदि देवताहरूले पनि आदर गर्नेछन् ।।३३-३४।। श्रीगणेशको अधीनमा रहेर तैंले उहाँको कृपाबाट स्वर्गमा जान पाउनेछस्। मुनिको वचन सुनेर त्यो गन्धर्व दुःख र हर्षले युक्त भयो ।।३५।।

क उवाच

पपात पृथिवीपृष्ठे महामूषकरूपधृक् ।
पराशरस्याश्रमे तु द्वापरे समुपस्थिते ।।३६।।

महाबलो महावीर्यो महापर्वतसन्निभः ।
मुनेराशीर्बलेनासौ गजाननसमीपगः ।।३७।।

अभवद् वाहरूपेण मूषकोऽसौ महाबलः ।
एतत् ते कथितं सर्वं यन्मे पृष्टं त्वयाऽनघ ।।३८।।

गजाननस्य वाहत्वं मूषकस्य यथाऽभवत् ।

मुनिरुवाच

सिन्दूरस्य वधं ब्रह्मन् ! कथं स कृतवान् विभुः ।।३९।।

गणेशस्तन्ममाचक्ष्व विस्तराच्चतुरानन !
श्रुत्वा वचो न मे तृप्तिर्जायतेऽमृतपानवत् ।।४०।।

भक्त्या शृणोमि देवेश ! सर्वज्ञस्त्वं वदस्व मे ।।४१।।

**ब्रह्माजीले भन्नुभयो** – त्यो गन्धर्व द्वापरयुग लागेपछि पराशर मुनिको आश्रममा विशाल शरीर भएको मूसाको रूपमा भुईँमा खस्यो । त्यस बेला त्यो मूसो महाबली, महापराक्रमी र महापर्वताकार देखिएको थियो । सौभरिको आशीर्वादका कारण त्यो भगवान् श्रीगणेशका समीपमा पुग्यो ।।३६–३७।। त्यसपछि उहाँको वाहनका रूपमा आश्रय पायो । हे व्यास ! मैले तिमीलाई सोधेका प्रश्नहरूको उत्तर दिएँ । भगवान् श्रीगणेश मूषकवाहन कसरी हुनुभयो भन्ने प्रश्नको उत्तर पनि बताएँ ।

**व्यासले भन्नुभयो** – भगवान् श्रीगणेशले दैत्यराज सिन्दूरको कसरी वध गर्नुभयो ? मलाई विस्तारपूर्वक उत्तर दिनुहोस् । श्रीगणेशसम्बन्धी चरित्र सुन्दा अमृतपानसरह आनन्द प्राप्त गर्दछु। तर तृप्ति भने हुँदैन। हे ब्रह्माजी ! हजुर सर्वज्ञ हुनुहुन्छ, मलाई मेरा प्रश्नको उत्तर दिनुहोस् । म परमभक्तिपूर्वक ती श्रीगणेशका चरित्रहरूको श्रवण गर्नेछु ।।३८–४१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे क्रौञ्चशापवर्णनं नाम पञ्चत्रिंशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'क्रौञ्चनामक गन्धर्वलाई चारित्रिक दोषका कारण मूसो हुने सराप परेको प्रसङ्ग' शीर्षकान्वित एक सय पैँतीसौँ अध्याय पूर्ण भयो ।।१३५।।

ॐ

## षट्त्रिंशदुत्तरशततमोऽध्यायः　　{ १३६ अध्याय }

क उवाच
एकस्मिन् दिवसे देवो जगाद मुनिसत्तमम् ।
पराशरं महाभाग्यं परदुःखप्रपीडितः ।।१।।
गजानन उवाच
सिन्दूरेण तु दुष्टेन पीडितं सकलं जगत् ।
स्वाहास्वधावषट्कारैर्वर्जितं वेदघोषतः ।।२।।
स्थानभ्रष्टा देवगणा भ्रष्टा ऋषिगणास्तथा ।
गजाननस्वरूपेण करिष्ये दुष्टनाशनम् ।।३।।
साधूनां पालनं चैव भूभारहरणं तथा ।
स्थापनं सर्वदेवानामानन्दं जगतोऽपि च ।।४।।
निधेहि मस्तके तात ! पाणिं मेऽभयदं शुभम् ।
अनुग्रहप्रसादात् ते हनिष्ये दुष्टदानवान् ।।५।।
मुनिरुवाच
आश्चर्यं परमं बाल ! बालभावात् प्रभाषसे ।
बालकः कौतुकाविष्टो याचते चन्द्रमण्डलम् ।।६।।
असाध्यं त्रिदशैः सर्वैः कर्म कर्तुं तथेच्छसि ।
यस्य श्वासेन गिरयः पतन्ति शतशो भुवि ।।७।।
पादाघातेन यस्याशु कम्पते भुवनत्रयम् ।
कथं त्वं युध्यसे तेन बिसतन्तुशरीरवान् ।।८।।
चत्वारि तव वर्षाणि पूर्णानि खेलयाऽधुना ।
ममानुग्रहमात्रेण त्वं चेच्छक्तो भविष्यसि ।।९।।
तदाऽयं निहितो हस्तो मस्तकेऽभयदायकः ।
क उवाच
ततो हर्षयुतो देवो नमस्कृत्य मुनिं तदा ।।१०।।
जननीमपि दुर्गाञ्च श्रीहरिं हरमेव च ।
ययौ योद्धुं मूषकं तमारुह्य स गजाननः ।।११।।
अङ्कुशं परशुं पाशं कमलञ्च चतुर्भुजैः ।
दधानो गर्जनेनाशु कम्पयन् भुवनत्रयम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - एक दिन अरूका दुःखले दुःखित हुनुभएका भगवान् गजाननले भाग्यशाली मुनि पराशरसँग कुरा गर्नुभयो ।।१।।

**श्रीगणेशले भन्नुभयो** - हे पिता ! दुष्ट सिन्दूर दैत्यले संसारलाई साह्रै सतायो । अहिले संसार वैदिकमन्त्रघोषबाट शून्य छ । स्वधा, स्वाहा एवं वषट्कार कहीं हुँदैन । देवगणहरू स्थानच्युत भएका छन् र ऋषिगण कर्मभ्रष्ट भएका छन् । अब म गजाननस्वरूप लिएर दुष्टको नाश, सज्जनको रक्षा र पृथिवीको भारहरण गर्दै देवताहरूको प्रतिष्ठा र सम्पूर्ण संसारलाई आनन्दप्रदान गर्ने काम गर्नेछु ।।२-४।। हे पिता ! मेरो शिरमा हजुरले आफ्नो अभयदायक र मङ्गलमय हात राखिदिनुहोस् । हजुरको कृपा र प्रसन्नता भएपछि मैले दुष्ट दानवहरूको नाश गर्नेछु ।।५।।

**मुनिले भने** - हे बालक ! तिमी बालक भएर पनि ठूलो आश्चर्यका कुरा गरिरहेका छौ । कुनै कौतुकपूर्ण बालकले आफ्ना बाबु-आमासँग चन्द्रमण्डल मागेजस्तै कुरा भयो । सम्पूर्ण देवताले गर्न नसकेको काम तिमी गर्न चाहन्छौ, जुन दुष्ट दानवको श्वास-प्रश्वासबाट सयौं पर्वत धराशायी हुन्छन्, जसको पादप्रहारबाट त्रिलोकी नै काँप्दछ, त्यस्तो घोर दानवसँग कमलको तन्तुजस्तो कोमल शरीर भएका तिमी कसरी युद्ध गर्न सक्छौ ? ।।६-८।। तिमीले जीवनका चार वर्ष खेलेर बिताएका छौ । यदि मेरो आशीर्वादले मात्र तिमी युद्ध गर्न समर्थ हुन्छौ भने मैले तिम्रो शिरमा अभयदायक हात राखिदिन्छु।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि खुसी हुनुभएका भगवान् गजाननले पराशरमुनि, आमा वत्सला, जगदम्बा भगवती, श्रीनारायण र श्रीशङ्करसमेतलाई प्रणाम गरी मूसामा सवार भई युद्धका लागि प्रस्थान गर्नुभयो ।।९-११।। आफ्ना चार हातमा अङ्कुश, परशु, पाश र कमल धारण गर्नुभएका, गर्जनद्वारा तीन भुवनलाई कम्पायमान गराइरहनुभएका, आफ्नो तेजबाट

प्रज्वलँस्तेजसा स्वेन प्रलयानलसन्निभः ।
क्षणेन प्राप सिन्दूरनगरं स गजाननः ।।१३।।

घुसृणेश्वरसान्निध्यात् सिद्धसिन्दूरवाडकम् ।
तत्रस्थः प्रशशासासौ सिन्दूरो भुवनत्रयम् ।।१४।।

तदुत्तरे स्थितो देवो जगर्ज गर्जयन् दिशः ।
चुक्षुभुः सागराः सप्त विशीर्णा गिरयोऽपि च ।।१५।।

श्रुत्वा निनादं तस्याशु सर्वे दैत्याश्चकम्पिरे ।
मुमूर्च्छुर्भीरवः सर्वे केचिन्मृत्युमुपाययुः ।।१६।।

सिन्दूरोऽपि मुमूर्च्छाशु क्षणेन प्रकृतिं ययौ ।
उवाच सेवकान् सर्वान् कोऽयं गर्जति दृश्यताम्।।१७।।

मूर्च्छा प्राप्ता मया कस्माद् यच्छब्देन पुरः कथम् ।
स्थास्यामि तत्पुरः स्थातुं कस्य शक्तिर्भविष्यति।।१८।।

ततस्ते सेवका जग्मुस्तदा बालसमीपतः ।
तद्रूपं ते निरीक्ष्यैव सिंहस्य करिणो यथा ।।१९।।

त्रिभ्युश्चैव चकम्पुश्च केचिद् धैर्यात् तमब्रुवन् ।
कस्य त्वं कुत आयातः किमर्थं तव नाम किम् ।।२०।।

सिन्दूरो विश्वसंहाररसिकः क्रोधसंयुतः ।
श्रुत्वा ते क्रन्दितं सर्वं कम्पितञ्च ससिन्दुरम् ।।२१।।

बालोऽपि बलवान् भासि चतुःपञ्चाब्दिकोऽपि च ।
दृश्यसे सर्वसंहारकारणाय क्षमः क्षणात् ।।२२।।

एवमाकर्ण्य तद्वाक्यं प्रोवाच स च तान् विभुः ।
अहं शिवसुतः ख्यातः पराशरगृहे वसन् ।।२३।।

दुष्टसंहाररसिको भक्तपालनतत्परः ।
नानावतारकुशलो ब्रह्मादीनामगोचरः ।।२४।।

गजाननेति मे नाम युद्धं कर्तुं समागतः ।
स्वामिनं वोऽथ गच्छन्तु तस्मै सर्वं ब्रुवन्तु च ।।२५।।

तस्मिन् हते मानसं मे तोषमेष्यति दुर्जये ।

क उवाच

ततस्ते निर्ययुः शीघ्रं सिन्दूरं प्राब्रुवन् वचः ।।२६।।

देदीप्यमान र प्रलयकालिक अग्निसमान ज्योतिर्मय भगवान् श्रीगणेश एकक्षणमा सिन्दूर दैत्यसमक्ष पुग्नुभयो ।।१२-१३।। घुसृणेश्वर ज्योतिर्लिङ्गको समीपमा रहेका कारण सिद्धिदायक मानिएको सिन्दूरबाडा भन्ने ठाउँमा रहेर सिन्दूर दैत्यले त्रिभुवनको शासन सञ्चालन गरिरहेको थियो ।।१४।। त्यसै सिन्दूरबाडाको उत्तर क्षेत्रमा पुगेर श्रीगणेशले दसै दिशा शब्दायमान गराउँदै गर्जन गर्नुभयो । त्यसबाट सात सागर क्षुब्ध भए । पर्वतहरू कम्पायमान भई चिरा-चिरा भए । श्रीगणेशको गर्जनका कारण दैत्यहरू काँप्न थाले, केही कातर दैत्य मूर्च्छित भए र केही निष्प्राण पनि भए।।१५-१६।। सिन्दूर दैत्य पनि एक क्षण मूर्च्छित भई जाग्यो । त्यसले आफ्ना सेवकहरूलाई यहाँ आएर कसले गर्जन गरिरहेको छ हेर भनी अह्राउँदै भन्यो - जसको गर्जन सुनेर मैले अकस्मात् मूर्च्छाको अनुभव गरें - त्यसका सामु म कसरी उभिने हो ? त्यसका सामु उभिएर युद्ध गर्ने कसको शक्ति होला ? त्यसपछि ती दैत्यका अनुचरहरू बालक श्रीगणेशका समीपमा पुगे । ती बालकको रूप हेरेर सिंहदर्शन गर्दा हात्तीझैं डराएर काँपे ।।१७-१९।। केही दैत्यले धैर्यपूर्वक भने - हे बालक ! तिमी कसका छोरा हौ ? कहाँबाट आएका हौ ? किन आएका हौ ? तिम्रो नाम के हो ? क्रोधी दैत्य सिन्दूर संसारको संहार गर्ने कलामा सिद्धहस्त र रसिक पनि छन् । तिम्रो गर्जन सुनेर संसार कम्पायमान भयो र ती सिन्दूर पनि कम्पायमान भए । तिमी चार वर्षका बालक भए पनि पराक्रमी र सबै संसारको संहार गर्न समर्थ पनि देखिन्छौ ।।२०-२२।। दैत्यदूतहरूका कुरा सुनेर श्रीगणेशले उत्तर दिनुभयो - म पराशरको घरमा बस्छु र शिवपुत्रका नामबाट प्रख्यात छु । म दुष्टको संहारमा रुचि राख्ने, भक्तको पालनमा तत्पर, अनेक अवतार लिन कुशल र ब्रह्मा आदि देवताहरूबाट पनि अगम्य गजानन हुँ । सिन्दूर दैत्यसँग युद्ध गर्न आएको छु । तिमीहरूले आफ्ना मालिकसँग गएर मेरा कुरा बताओ ।।२३-२५।। कसैले पनि जित्न नसकिने भनिएको सिन्दूर दैत्यको वध गरेपछि मेरो मनले सन्तोष अनुभव गर्नेछ।

**ब्रह्माजीले भन्नुभयो** - गजाननका कुरा सुनेर ती दैत्य तुरुन्तै सिन्दूर दैत्यका सामु गए । तिनले त्यहाँ आफूले देखेको र जानेको विषय निवेदन गरे ।।२६।।

दूता ऊचुः

वयं शीघ्रतरं याताः पुरुषं भवदाज्ञया ।
कृतान्तसदृशं तं तु दृष्ट्वा सर्वे च कम्पिताः ।।२७।।
ततो भवत्प्रतापेन तदग्रे प्राब्रुवाम च ।
ततस्तेन समाख्यातं निजं सर्वं समासतः ।।२८।।
गजाननेति नामास्य शिवपुत्रत्वमेव च ।
दुष्टदैत्यविनाशाय साधूनां पालनाय च ।।२९।।
साम्प्रतं तु त्वया सार्द्धं युद्धाय समुपागतः ।
स चतुर्वार्षिको बालो वल्गते बहुविस्तरम् ।।३०।।
इदानीं स्वस्वभावेन जहि शत्रुं निजं लघुम् ।
तव तु श्वासमात्रेण दूरे गच्छेदयं शिशुः ।।३१।।
यस्य ते दर्शनात् स्वामिँश्चकम्पुः शिवकादयः ।
तस्य ते गणना कास्ति बालकस्याल्पमेधसः ।।३२।।

क उवाच

एवं दूतवचः श्रुत्वा सिन्दूरश्चिन्तयातुरः ।
बभूव म्लानतुण्डश्च क्रोधारुणविलोचनः ।।३३।।
उद्वमन् नयनाद् वह्निं प्रलयानलसन्निभम् ।
उवाच दूतान् क्रोधेन हर्षेण च समन्वितः ।।३४।।

स उवाच

आश्चर्यं परमं दूता भवद्वचसि मेऽभवत् ।
सिंहेन सह योद्धुं वै मशकः कथमेष्यति ।।३५।।
चतुर्वर्षेण बालेन योद्धव्यं किं मया सह ।
यूयं ततः कथं भीता न जाने तत्र कारणम् ।।३६।।
मयि क्रुद्धे जगन्नश्येत् तत्र का गणनाऽस्य ह ।
जगर्ज गर्जयन् व्योम दिशोऽपि विदिशोऽपि च ।।३७।।
धृत्वा शस्त्राणि चास्त्राणि निर्ययौ युद्धलालसः ।
तत ऊचुरमात्यास्तं नमस्कृत्यासुराधिपम् ।।३८।।
सत्सु बलेष्वमात्येषु कथं यासि स्वयं रणम् ।
वयं तं हि हनिष्यामः प्रतापात् तव दैत्यप ।।३९।।

**दूतहरूले भने** - हे महाराज ! हामी हजुरको आज्ञा पाएर अति शीघ्र यमराजसमान पुरुषका समक्ष गयौँ । त्यसलाई देखेर डरले कम्पायमान भयौँ ।।२७।। त्यसपछि हजुरका प्रतापले त्यसका सामु गई कुरा गर्‍यौँ, सोध्यौँ पनि । त्यसले आफ्नो सम्पूर्ण वृत्तान्त सङ्क्षेपमा बतायो । त्यो शिवजीको पुत्र गजानन रहेछ। दुष्ट दैत्यहरूको संहार र सज्जनको रक्षाका लागि अहिले हजुरसँग युद्ध गर्न आएको रहेछ । त्यो चार वर्षको बच्चा कुरा गर्न धेरै सिपालु छ ।।२८-३०।। अहिले हजुरले वीरभाव अँगाली त्यो सानो बच्चालाई मारिदिनुहोस् । हजुरको सासको स्पर्शले मात्र त्यो बच्चा टाढा उड्न सक्छ ।।३१।। हजुरको दर्शनबाट शिव आदि देवता पनि कम्पायमान भएका थिए भने त्यो दुर्बुद्धि सानो बालकको के गणना हुनसक्छ ? ।।३२।।

**ब्रह्माजीले भन्नुभयो** - दूतका ती कुरा सुनेर दैत्यराज सिन्दूर चिन्ताले व्याकुल भयो, त्यसको मुख ओइलायो, रीसले आँखा राता भए, आँखाबाट प्रलयको आगो ओकल्दै क्रोध र हर्षले युक्त भई त्यसले दूतहरूसँग कुरा गर्‍यो ।।३३-३४।।

**सिन्दूरले भन्यो** - हे दूतहरू ! तिमीहरूका कुरा सुनेर मलाई अचम्म लागेको छ । लामखुट्टे कीरो सिंहसँग युद्ध गर्न कसरी जान सक्छ ? त्यो चार वर्षको बालकले मसँग कसरी युद्ध गर्न सक्छ ? तिमीहरू त्यस बालकबाट किन डराएका छौ? मैले त्यसको कारण जान्न सकिनँ ।।३५-३६।। म रिसाउँदा संसारै सखाप हुनेछ भने त्यस बच्चाको के गणना हुन्छ ? यस्तो कुरा गरेर दैत्यराज सिन्दूर दिशा, विदिशा र आकाशलाई शब्दायमान गराउँदै गर्जन गर्न थाल्यो ।।३७।। त्यसपछि आफ्ना हातमा शस्त्र-अस्त्र धारण गरी युद्धको कामना गर्दै घरबाट बाहिर निस्क्यो । त्यस बेला असुराधिपति सिन्दूरलाई प्रणाम गर्दै त्यसका मन्त्रीहरूले भने- हे दैत्यराज ! हामीजस्ता पराक्रमी अमात्यहरू छँदाछँदै हजुर आफै युद्ध गर्न किन जानुहुन्छ? हे दैत्यपति ! हजुरको प्रतापबाट हामीले त्यसलाई मारिदिनेछौँ ।।३८-३९।। यस्तै समयका लागि राज्यले ठूलो सेनाको

समयार्थं महासैन्यं पाल्यते सोऽयमागतः ।
प्राणाँस्त्यक्ष्यामहे सर्वे तव हेतोर्महाप्रभो ।।४०।।

अनुजानीहि यास्यामो हन्तुं बालं रिपुं तव ।

सिन्दूर उवाच
यामि सर्वे प्रपश्यन्तु पौरुषं मम सैनिकाः ।।४१।।

इत्युक्त्वा प्रययौ शीघ्रं बालं हन्तुं सुमुत्सुकः ।
स प्राप क्षणमात्रेण यत्र बालः स्थितोऽभवत् ।।४२।।

जगेर्ना गरेको हुन्छ । अहिले सेना र सेनापतिको काम लिने बेला आइपुग्यो । हे महाप्रभु ! हजुरका लागि हामी प्राणत्याग गर्न तयार छौं । हामीलाई आज्ञा दिनुहोस् । हामी तुरुन्तै हजुरको बालशत्रुलाई मारिदिनेछौं ।

**सिन्दूरले भन्यो** - हे दूतगण ! म आफै युद्ध गर्न जान्छु! मेरा सैनिकहरूले पनि मेरो अद्‌भुत पराक्रम हेरून् ।।४०-४१।। यस्ता कुरा गरेर त्यस सिन्दूर दैत्यले बालक मार्न उत्कण्ठित भई युद्धभूमिका लागि प्रस्थान गर्‍यो । त्यो एकै छिनमा गजानन बालक रहनुभएको ठाउँमा पुग्यो ।।४२।।

ॐ

इति श्रीगणेशपुराणे उत्तरखण्डे सिन्दूरनिर्गमो नाम षट्त्रिंशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सिन्दूरासुरको युद्धयात्रा' शीर्षकान्वित एक सय छत्तीसौं अध्याय पूर्ण भयो ।।१३६।।

ॐ

## सप्तत्रिंशदुत्तरशततमोऽध्यायः { १३७ अध्याय }

क उवाच

तं दृष्ट्वा बालकं प्राह सिन्दूरो मदगर्वितः ।
लज्जा मे जायते मन्द युध्यतो बालकेन ह ।।१।।

याहि शीघ्रं गृहं बाल ! पिब मातुः स्तनं मुदा ।
वृथा मच्छरपातेन सद्यो मृत्युमुपैष्यसि ।।२।।

पलायन्ते हि मां दृष्ट्वा केशाद्यास्त्रिदिवौकसः ।
मृते त्वयि तव स्नेहात् पितरौ ते मरिष्यतः ।।३।।

अतो गच्छ न मे स्वास्थ्यं दर्शयस्व किशोरक !
यस्य मे तलघातेन ब्रह्माण्डं शतधा भवेत् ।।४।।

देव उवाच

सत्यमुक्तं त्वया दुष्ट ! न चेतसि विचारितम् ।
न ज्ञातं मम सामर्थ्यं रूपं वा विविधं त्वया ।।५।।

यस्य मे क्रोधदृष्ट्यैव भ्रष्टाः स्युः सुरनायकाः ।
स्वेच्छयाऽहं सृजे भावैस्त्रिभिरेव हरामि च ।।६।।

विश्वं चराचरं नानारूपवाँस्तु युगे युगे ।
भूमिभारं महाघोरं हरामि दुष्टनाशनात् ।।७।।

न लघुर्लघुतामेति पराक्रमयुतोऽपि चेत् ।
अणुमात्रो दहेद् वह्निः सकलं नगरं महत् ।।८।।

जिजीविषुश्चेद् गच्छ त्वं नत्वा मां निजमन्दिरम् ।
मानिनो नैव निघ्नन्ति नतञ्च शरणागतम् ।।९।।

नो चेन्मच्छस्त्रपातेन स्वर्गलोकं गमिष्यसि ।
हते त्वयि सुखं यास्ये त्वया यत् पीडितं जगत् ।।१०।।

ब्रह्मणो वरदानेन मा गर्वं कुरु दैत्यराट् ।
विपरीतं भवेत् सर्वं विपरीतं यथा पुरा ।।११।।

स्तम्भेऽवतीर्णो न्यहनद्धिरण्यकशिपुं विभुः ।
सुग्रीवेण हतो बन्धू राममाश्रित्य कालतः ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - मदमत्त सिन्दूर दैत्यले बालकलाई देखेर भन्यो - हे बालक ! तिमीसँग युद्ध गर्दा मलाई लाज लागिरहेछ, छिटो घर जाऊ । आनन्दपूर्वक आफ्नी आमाको दूध चुस । यहाँ जोरी खोज्यौ भने लामखुट्टे मरेझैं छिट्टै मृत्युको मुखमा पुग्नेछौ।।१-२।। मलाई देखेर ब्रह्मा, शिव, विष्णु आदि देवता पनि डराएर भाग्छन् । तिमी अकार्थमा मर्‍यौ भने तिम्रा बाबु- आमा पनि पीरले मर्नेछन् । हे बालक ! यस कारण तिमी फर्क, मलाई आफ्नो अनुहार नदेखाऊ । मैले थप्पड प्रहार गर्दा ब्रह्माण्ड पनि सय टुक्रा भएर समाप्त हुनेछ ।।३-४।।

**श्रीगणेशले भन्नुभयो**- हे दुष्ट ! तैंले साँचो कुरा गरेको छस् तर मनमा मेरो स्वरूपको विचार गरेको छैनस् । मेरो सामर्थ्य थाहा पाएको छैनस् । मेरा विविध स्वरूपको विषयमा पनि तैंलाई थाहा छैन ।।५।। मेरो क्रोधपूर्ण दृष्टि पर्दा देवताका नायकहरू पनि स्थानभ्रष्ट हुन्छन् । मैले अनेक रूपसम्पन्न भई आफ्नो इच्छाअनुसार सत्त्व, रज र तमोगुणको आश्रय लिएर जगत्को रचना र संहार गर्दछु । दुष्टहरूको वध गरेर पृथिवीको असह्य भार हरण गर्दछु ।।६-७।। कुनै मानिस पराक्रमसम्पन्न छ भने त्यसको आकार सानो हुँदैमा त्यो सानो हुँदैन । अणुपरिमाणको आगोले विशाल नगरलाई सम्पूर्णतया खरानी बनाउन सक्छ ।।८।। तँ बाँच्न चाहन्छस् भने मलाई प्रणाम गरी आफ्नो घरतर्फ लाग् । स्वाभिमानीहरूले शरणागत र विनीतमाथि प्रहार गर्दैनन् ।।९।। शरणमा आएमा म तेरो रक्षा गर्न तयार छु, अन्यथा मेरो शस्त्रप्रहारबाट छिटै स्वर्गमा पुग्नेछस् । तैंलाई मारेपछि म सुखपूर्वक जानेछु । तैंले संसारलाई साह्रै सताएको छस् ।।१०।। हे दैत्यराज ! ब्रह्माजीको वरदानका कारण घमण्ड नगर, तैंले चिताएको भन्दा विपरीत फल पनि हुनसक्छ । जस्तै पहिले हिरण्यकशिपुले घमण्ड गर्दा विपरीत फल प्राप्त गरेको थियो । त्यस बेला भगवान् नारायणले स्तम्भमा प्रकट भएर हिरण्यकशिपुलाई मार्नुभएको थियो । समयचक्रका कारण सुग्रीवले रामको आश्रय लिएर आफ्नै बन्धुको हत्या गरेका थिए ।।११-१२।। तेरो पनि

विपरीता मतिर्जाता तवापि कालयोगत: ।
अतिस्थूलो लघुतरो भाससे मम साम्प्रतम् ।।१३।।
धृत्वा धैर्यञ्च लज्जाञ्च युद्धं कुरु मया सह ।

क उवाच

एवमुक्त्वा दधाराशु विराड्रूपं गजानन: ।।१४।।
ब्रह्माण्डादूर्ध्वमगमन्मस्तकश्चरणौ तथा ।
पातालानि च सप्तानि भित्त्वा यातौ श्रुती दिश: ।।१५।।
पश्यति स्म यदा दैत्यो बालं तं विश्वरूपिणम् ।
सहस्रशिरसं देवं सहस्राक्षं दिवो भुवम् ।।१६।।
सहस्रपादं व्याप्याशु स्थितं व्याप्य दिशो दश ।
दिव्याम्बरं दिव्यगन्धं दिव्यालङ्कारभूषितम् ।।१७।।
असङ्ख्यसूर्यसदृशमसङ्ख्यरूपिणं विभुम् ।
एवं दृष्ट्वा विराड्रूपं चकम्पे दैत्यमानसम् ।।१८।।
धृत्वा धैर्यं पुनर्दैत्यो ययौ देवस्य सन्निधौ ।
जगर्ज गर्जयन् व्योम दिशोऽपि विदिशोऽपि च ।।१९।।
उद्यम्य खड्गं सहसा देवं हन्तुमियेष स: ।
ययौ तत्पुरत: क्रोधात् पतङ्गो ज्वलनं यथा ।।२०।।

देव उवाच

नायं मूढो विजानीते स्वरूपं मम दुर्लभम् ।
अहमेव विमोक्ष्यामीत्युक्त्वा कण्ठे दधार तम् ।।२१।।
ममर्द सिन्दूरं तं स कराभ्यां बलवत्तरम् ।
ततस्तदसृजाङ्गानि विलिलिम्पारुणेन स: ।।२२।।
तत: सिन्दूरवदन: सिन्दूरप्रिय एव च ।
अभवज्जगतीख्यातो भक्तकामप्रपूरक: ।।२३।।
सिन्दूरे निहते देवा मुदा पुष्पाण्यवाकिरन् ।
अवाद्यञ्जयवाद्यानि ननृतुश्चाप्सरोगणा: ।।२४।।
आययुस्तत्र मुनयो वसिष्ठप्रमुखा: सुरा: ।
ब्रह्माद्या: सकला: शक्रपुरोगा वस्तुपाणय: ।।२५।।

कालचक्रका कारण बुद्धिविपरीत भएको छ । मलाई अहिले धेरै दूलो वस्तु पनि साना लागिरहेको छ । तँलाई युद्ध गर्ने इच्छा छ भने धैर्य र लज्जा दुवै धारण गरी युद्ध गर् ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी सिन्दूर दैत्यलाई संझाएपछि भगवान् गजाननले छिटै विश्वरूप धारण गर्नुभयो।।१३-१४।। उहाँको शिर ब्रह्माण्डभन्दा पनि माथि पुग्यो । दुवै पाउले सातै पाताल भेदन गरी त्यहाँभन्दा पनि भित्र प्रवेश गरे । कानहरूले विशालताका कारण दिशा र विदिशा पनि नाघे ।। त्यस दैत्यले विश्वरूपको दर्शन गर्दा भगवान् श्रीगणेशको त्यो विश्वरूप सहस्र शिरले सम्पन्न, सहस्र आँखाले युक्त, आकाशदेखि जमिनसम्म र दसै दिशा ढाकेर फैलिएका हजार पाउले सम्पन्न, दिव्य वस्त्र, दिव्य गन्ध र दिव्य अलङ्कारद्वारा अलङ्कृत, असङ्ख्य सूर्यसमान, असङ्ख्यरूपसम्पन्न, सर्वव्यापक र विराट् थियो । यस्तो रूप देखेर सिन्दूर दैत्यको मन काँप्न थाल्यो । त्यो धैर्य धारण गरी श्रीगणेशका सामु आयो । त्यसपछि आकाश र दिशालाई शब्दायमान गराउँदै गर्जन गर्‍यो।।१५-१९।। त्यसले हातमा तरबार लिएर गजाननमाथि प्रहार गर्ने चाहना गर्‍यो । त्यसपछि पतङ्ग अग्निका सामु गएझैं क्रोधले उहाँका सामु गयो ।।२०।।

**भगवान्ले भन्नुभयो**- हे मूर्ख ! तैँले मेरो दुर्लभ स्वरूप चिनेको छैनस् । म आफै तँलाई मोक्ष प्रदान गर्छु भनी त्यसको घाँटीमा समाउनुभयो । उहाँले दुई हातले त्यसको घाँटी अठ्याउनु भयो र धेरै प्रयास गर्दागर्दै पनि आफ्नो रोकिएको सास खुलाउन नसकी त्यो श्वासावरोधका कारण मर्‍यो । त्यसपछि त्यसका शरीरबाट रगतका धारा बहँदा त्यस रगतले रगताम्मे हुनुभएका भगवान् श्रीगणेशका अङ्ग-प्रत्यङ्ग पनि रातै भए ।।२१-२२।। त्यसपछि भगवान् श्रीगणेश सिन्दूरवदन र सिन्दूरप्रियका नामबाट जगत्मा विख्यात हुनुभयो । यी नामबाट आराधना गर्दा भक्तका कामना पूरा हुन्छन् ।।२३।। सिन्दूर दैत्यको वधपछि हर्षित भएका देवताले पुष्पवर्षा गरे, विजयका बाजा बज्न थाले र अप्सरा नाच्न थाले । त्यस बेला भगवान् गजाननको दर्शन गर्ने वसिष्ठ आदि मुनि र ब्रह्मा आदि देवताले हातमा उपहार लिएर भगवान्का सामु टक्र्याए ।।२४-२५।। तिनीहरूको नमस्कार र जयकारले

जयशब्दैर्नमःशब्दैः पूरयन्तो दिशो दश ।
ततः सर्वे भूमिपाला ययुस्तत्र मुदान्विताः ।।२६।।
षोडशैरुपचारैस्तमानर्चुः परमेश्वरम् ।
गजाननं चतुर्बाहुं सर्वाभरणभूषितम् ।।२७।।
दिव्याम्बरं दिव्यगन्धमाखुवाहनमीश्वरम् ।
प्रार्थयामासुरिन्द्राद्याः स्तोतुं त्वां न हि शक्नुमः ।।२८।।
यत्र कुण्ठाश्चतुर्वेदा ब्रह्माद्याश्च मुनीश्वराः ।
त्वं कर्ता कारणं कार्यं रक्षकः पोषकोऽपि च ।।२९।।
संहर्ता मोहनश्चास्य विश्वस्य ज्ञानदः क्वचित् ।
सरितः सागरा वृक्षाः पर्वताः पशवोऽखिलाः ।।३०।।
वायुराकाशः पृथिवी वह्निर्वारि त्वमेव च ।
ब्रह्मा विष्णुः शिवः शक्रो मरुतो मुनयोऽपि च ।।३१।।
गन्धर्वाश्चारणाः सिद्धा यक्षराक्षसपन्नगाः ।
अप्सरःकिन्नरा देव ! त्वमेव स चराचरम् ।।३२।।
वयं धन्या यतो दृष्टः प्रत्यक्षं मोक्षसाधनः ।
सिन्दूरे तु हते देव ! सुखं प्राप्ताः सुरोत्तमाः ।।३३।।
राजानो मुनयो लोकाः स्वस्वकार्ये मुदा रताः ।
भविष्यन्ति स्वधास्वाहावषट्काराश्रिताः क्रियाः ।।३४।।
नानावतारैः कुरुषे पालनं त्वं विशेषतः ।
दुष्टानां नाशनं सद्यो भक्तानां कामपूरकः ।।३५।।

क उवाच

एवमुक्त्वा सुरास्तं तु व्यदधुः सर्व एव ते ।
प्रासादं रम्यशिखरं स्थापयित्वा गजाननम् ।।३६।।
यस्य दर्शनमात्रेण मुच्यते पातकाज्जनः ।
कुलानि तारयेत् सप्त स्मरणादस्य मानवः ।।३७।।
पूजयित्वा प्रणम्यैनं परितृप्तिं ययुः सुराः ।
ततस्तं मुनयः सर्वे पुपूजुः परमादरात् ।।३८।।
सिन्दूरहेति नामास्य चक्रुः सिन्दूरनाशनात् ।
अतिसन्तुष्टमनसो नत्वा जग्मुः स्वमाश्रमम् ।।३९।।

दसै दिशा भरिएर घन्किए । त्यसपछि पृथिवीका सबै राजाहरू पनि भगवान्को दर्शन गर्न हर्षपूर्वक त्यहाँ आइपुगे । तिनीहरूले षोडशोपचारबाट भगवान् श्रीगणेशको पूजा गर्दै गजानन, चतुर्बाहु, सर्वाभरणसम्पन्न, दिव्यवस्त्रधारी, दिव्यगन्धसम्पन्न, मूषकवाहन परमेश्वरलाई प्रणाम गरी प्रार्थना गर्दै भने - हे परमेश्वर ! हजुरको स्तुति गर्न हामी समर्थ छैनौं ।।२६-२८।। हे देवताका अधिपति ! चारै वेद पनि हजुरको तत्त्वबोध गरी स्तुति गर्ने कार्यमा कुण्ठित हुन्छन् । ब्रह्मा आदि देवता र मुनिहरू पनि सम्पूर्णतया स्तुति गर्न समर्थ छैनन् । हजुर कर्ता, कारण, रक्षक, पोषक, संहारक, सम्मोहक र ज्ञानदायक प्रभु हुनुहुन्छ । हजुर नदी, सागर, वृक्ष, पर्वत, पशु, वायु, आकाश, पृथिवी, अग्नि र जलका रूपमा पनि हुनुहुन्छ । हे देवदेव ! हजुर चराचरसहित ब्रह्मा, विष्णु, शिव, इन्द्र, मरुत्, मुनि, गन्धर्व, सिद्ध, यक्ष, चारण, राक्षस, सर्प, अप्सरा र किन्नर पनि हुनुहुन्छ । वास्तवमा हजुर चराचररूप हुनुहुन्छ ।।२९-३२।। हामी धन्य छौं, किनकि आज प्रत्यक्षरूपमा मोक्षका साधक देवताको दर्शन पायौं । सिन्दूरको वध भएपछि सबै देवता सुखी भएका छन् ।।३३।। लोकमा पनि राजा, मुनि र सर्वसाधारण मानिस अहिले हर्षपूर्वक आफ्नो कार्यमा लागेका छन् । अब पृथिवीमा स्वाहा, स्वधा र वषट्कारका कर्महरू निर्विघ्न सम्पन्न हुँदैछन् । हजुरले अनेक अवतारहरूद्वारा जगत्का प्राणीहरूको विशेषरूपमा रक्षा गर्नुहुन्छ, दुष्टको नाश गर्नुहुन्छ र छिटै प्रसन्न भई भक्तहरूको कामना परिपूर्ण गर्नुहुन्छ ।।३४-३५।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी स्तुति गरेर देवताहरूले सुन्दर गजुर भएको भव्य मन्दिरको निर्माण गरे । तिनले त्यसमा भगवान् श्रीगणेशका प्रतिमाको प्रतिष्ठा गरे ।।३६।। जुन मन्दिरमा श्रीगणेश प्रतिमाको दर्शन गर्नाले दर्शकहरूका सबै पाप नष्ट हुन्छन् । कुनै पनि मानव श्रीगणेशको स्मरणमात्रले आफ्ना सात कुललाई तार्न समर्थ हुन्छ ।।३७।। गजानन भगवान्को पूजा र प्रणाम गर्नाले देवताहरू तृप्त भए । त्यसपछि त्यहाँ मुनिहरूले आई आदरपूर्वक श्रीगणेशको पूजा गरे । सिन्दूर दैत्यको नाश गरेका कारण त्यहाँ प्रतिष्ठा गरिएका श्रीगणेशलाई सिन्दूरहन्ता भनियो । दैत्यराज सिन्दूरको संहारका कारण मनले

ततः सर्वे मुनिवरा नत्वा देवं स्वभक्तितः ।
पुपूजुः परमात्मानं नानाद्रव्यैरनेकशः ।।४०।।

राजसदनमिति ते क्षेत्रं ख्यातिमुपैष्यति ।
वरेण्यस्तं विलोक्यैव निजपुत्रमबुध्यत ।।४१।।

यतो राज्ञां पदान्याशु हत्वा दैत्यं सुदारुणम् ।
दत्तानि भवता नाथ ! सिन्दूरं लोककण्टकम् ।।४२।।

दैत्यविमर्दन इति नाम ख्यातिमुपैष्यति ।
पुपूज तनयं स्नेहात् तदा दृष्टपराक्रमम् ।।४३।।

मुमोच स्नेहजं चाश्रु न शशाक प्रभाषितुम् ।
अतिगद्गदकण्ठत्वाद् रुरोद भृशदुःखितः ।।४४।।

वरेण्य उवाच

मूढभावेन सन्त्यक्तो विघ्नभीतेन पापिना ।
यं त्वां पूजयितुं याता ब्रह्मशक्रपुरोगमाः ।।४५।।

अनन्तकोटिब्रह्माण्डनायकं त्वां न विद्महे ।
कामधेनुं निधिं कल्पवृक्षं मूढो यथा त्यजेत् ।।४६।।

मायया मोहितस्तेऽहमत्यजं त्वां तथा गृहात् ।

क उवाच

इति तच्छुत्वमाकर्ण्य कृपया परमेश्वरः ।।४७।।

आलिलिङ्ग वरेण्यं तं चतुर्बाहुभिरादरात् ।
उवाच परया भक्त्या वरेण्यनृपतिं विभुः ।।४८।।

देव उवाच

पुराकल्पे महारण्ये तपस्तप्तं सुदारुणम् ।
उभाभ्यां पक्वपर्णानि भक्षयित्वा वटस्य ह ।।४९।।

दिव्यवर्षसहस्रेण प्रसन्नोऽहं तदाऽभवम् ।
भवद्भ्यां हि वृतः पुत्रो न मोक्षो मूढभावतः ।।५०।।

सोऽहं पुत्रत्वमापन्नो भूभारहरणाय च ।
सिन्दूरस्य वधं कर्तुं साधूनां पालनं तथा ।।५१।।

दूलो सन्तोषको अनुभूति गरिरहेका ती सबै देवता र ऋषिहरू गजाननलाई प्रणाम गरी आ-आफ्ना धामतर्फ गए ।।३८-३९।। त्यसपछि सबै मुनिहरूले परमात्मा श्रीगणेशलाई भक्तिपूर्वक प्रणाम गरी नानाद्रव्यले पूजा गरे । तिनीहरूले भने - यो क्षेत्र राजसदनका नामबाट संसारमा प्रसिद्ध हुनेछ । त्यस बेला वरेण्य राजाले पनि त्यहाँ आई भगवान्‌को दर्शन गरेर आफूले नचिनेका पुत्रलाई चिन्ने मौका पाए ।।४०-४१।। त्यस बेला वरेण्यले भने - हे भगवन् ! हजुरले लोककण्टक र निष्ठुर सिन्दूर दैत्यलाई मारेर राजाहरूलाई तिनका राज्य फिर्ता गराउनुभयो । अब हजुर संसारमा दैत्यविमर्दन नामबाट प्रसिद्ध हुनुहुनेछ । त्यसपछि ती वरेण्यले पराक्रम देखाउनु हुने आफ्ना बालक पुत्र श्रीगणेशको स्नेहपूर्वक पूजा गरे । प्रेमका आँसु बगाए । गला अवरुद्ध हुँदा ती धेरै बोल्न सकेनन् र अत्यन्त दुःखी भएर रोए ।।४२-४३।।

**वरेण्यले भने** - हे प्रभु ! अज्ञानका कारण विघ्नसँग डराएर म पापीले हजुरको परित्याग गरें । हजुरको पूजा गर्न ब्रह्मा, इन्द्र आदि देवताहरू पनि अग्रसर हुने थाहा पाएपछि मलाई पछुतो भयो । यस्ता महिमामय अनन्तकोटि ब्रह्माण्डका नायक प्रभुलाई पुत्रका रूपमा मेरो घरमा दर्शन पाएँ, तर चिन्न सकिनँ। मूर्खले कामधेनु, कल्पवृक्ष र चिन्तामणिलाई नचिनेर परित्याग गरेझैं मैले पनि हजुरको मायाद्वारा मोहित भएर हजुरलाई नै परित्याग गरें ।

**ब्रह्माजीले भन्नुभयो** - वरेण्यका शोकपूर्ण वचन सुनेर गजानन श्रीगणेशले कृपा गरी आफ्ना चार भुजाद्वारा वरेण्यलाई आलिङ्गन गर्नुभयो । त्यसपछि परम पितृभक्ति देखाउँदै अन्तर्यामी प्रभुले राजा वरेण्यसँग कुराकानी गर्नुभयो ।।४४-४८।।

**श्रीगणेशले भन्नुभयो** - पुरानो समयमा तपाईंहरू दुवै दम्पतीले महारण्यमा गई वरका सुकेका पात खाएर कठोर तपस्या गर्नुभयो ।।४९।। दिव्य हजार वर्षको तपस्यापछि म तपाईंहरूसँग प्रसन्न भएँ । तपाईंहरूले मलाई पुत्रको रूपमा प्राप्त गर्ने वरदान माग्नुभयो । अज्ञानका कारण मोक्ष भने माग्नुभएन । त्यस बेला वचन दिएको हुनाले पृथिवीको भारहरण, सिन्दूर दैत्यको वध र सज्जनहरूको पालनजस्ता कर्म म तपाईंहरूको पुत्रका रूपमा प्रकट भएको छु ।।५०-५१।। म निराकार एवं

अन्यथा न शरीरं मे निराकारस्य साक्षिणः ।
वचनं तु कृतं सत्यं त्रैलोक्यस्यापि तोषणम् ।।५२।।
यास्येऽधुना निजं धाम न त्वं शोके मनः कृथाः ।।

वरेण्य उवाच

संसारे बहुदुःखानि दृष्टानि दुःसहानि च ।।५३।।
इदानीं मोक्षमार्गं मे कृपया दिश दुःखहन् !
साक्षात्कारे कथं बन्धस्तव स्याद् द्विरदानन !।।५४।।
मुक्तिं येनोपदेशेन यास्यामि तद् वदस्व मे ।
योगं तं येन सन्त्यक्ष्ये कामं क्रोधं मृतेर्भयम् ।।५५।।

क उवाच

एवमाकर्ण्य तद्वाक्यं कृपया स गजाननः ।
उपवेश्य स्वासने तं हस्तं शिरसि चादधत् ।।५६।।
गणेशगीतां तस्मै स उपदेष्टुं प्रचक्रमे ।
निरस्य सर्वसन्देहान् विश्वरूपं प्रदर्श्य च ।।५७।।
गीतासारं ज्ञातवान् स गणेशस्योपदेशतः ।
स्थाप्य राज्यममात्येषु तपसे वनमाययौ ।।५८।।
अतिवैराग्यसंयुक्तो दध्यौ तञ्च गजाननम् ।
आवर्तयत् सदा गीतामनन्यविषयः कृती ।।५९।।
यथा जलं जले क्षिप्तं जलमेव हि जायते ।
तथा तद्ध्यानतः सोऽपि तन्मयत्वमुपाययौ ।।६०।।

मुनिरुवाच

चतुरानन ! देवेश ! कृपया परया वद ।
गीतां तां तु गणेशस्य सर्वाऽज्ञानविनाशिनीम् ।।६१।।

सबैको साक्षी परमात्मा हुँ । मेरो शरीरसम्बन्ध हुने प्रश्न उठ्दैन। तर उक्त लक्ष्यको परिपूर्तिका लागि म निराकारबाट साकार भएको हुँ । मैले दिएको वचन पूरा गरें । यस अवतारबाट स्वर्ग, मर्त्य, पाताललाई पनि दुष्टबाट मुक्त र सन्तुष्ट गराउनु थियो सो पनि पूरा भयो ।।५२।। म अब आफ्नो धाममा जानेछु, तपाइँहरूले शोक नगर्नुहोस् ।

**वरेण्यले भने** – हे दुःखहर्ता प्रभु! संसारमा अनेक दुःख देख्नमा आउँछन्, तसर्थ संसारबाट मुक्ति पाउन मलाई मोक्षमार्गको उपदेश गर्नुहोस्। हे गजानन! हजुरको प्रत्यक्ष दर्शन पाएपछि हामी बाबु-आमा किन बन्धनमा रहने?।।५३-५४।। जुन योगमार्गको उपदेशबाट हामी मुक्तिमार्गमा अग्रसर हुनसक्छौं त्यसको उपदेश गर्नुहोस्। जसबाट म काम, क्रोध र मृत्युको भय पन्छाएर मुक्तिमार्गमा अग्रसर हुन सकूँ त्यो योग मलाई बताउनुहोस् ।।५५।।

**ब्रह्माजीले भन्नुभयो** – वरेण्यका यी कुरा सुनेर गजानन भगवान्ले कृपापूर्वक वरेण्यलाई आफ्नै आसनमा बसाई तिनको शिरमा हात राखिदिनुभयो ।।५६।। त्यसपछि भगवान्ले वरेण्यलाई विश्वरूप देखाई सबै सन्देह हटाएर श्रीगणेशगीताको उपदेश गर्नुभएको हो । श्रीगणेशका उपदेशबाट गीतातत्त्वको बोध गरी राज्यलाई आफ्ना मन्त्रीहरूका जिम्मा लगाएर वरेण्य तप गर्न वन गए ।।५७-५८।। अत्यन्त वैराग्यसम्पन्न भई तिनले गजाननको ध्यान गरे । सबै विषय परित्याग गरी एकाग्र भएर तिनले गीताको पाठ दोहोर्‍याई तत्त्वबोध गरे ।।५९।। जस्तै जलमा जल थप्दा जल नै हुन्छ त्यस्तै गरी मन श्रीगणेशको ध्यानमा तन्मय भएका कारण वरेण्य पनि गजाननमय भए।।६०।।

**व्यासले भन्नुभयो** – 'हे चतुरानन ! हे देवदेव ! कृपया मलाई सबै प्रकारका अज्ञान नाश गरिदिने श्रीगणेशगीताको उपदेश गर्नुहोस् ।।६१।।

ॐ

**इति श्रीगणेशपुराणे क्रीडाखण्डे वरेण्योपदेशो नाम सप्तत्रिंशदधिकशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशद्वारा घोर सङ्ग्राममा सिन्दूरासुरको संहार र वरेण्यलाई गीताको उपदेश' शीर्षकान्वित एक सय सैंतीसौं अध्याय पूर्ण भयो ।।१३५।।

ॐ

# अष्टात्रिंशदुत्तरशततमोऽध्याय: { १३८ अध्याय }

**क उवाच**

एवमेव पुरा पृष्टः शौनकेन महात्मना ।
स सूतः कथयामास गीतां व्यासमुखाच्छ्रुताम् ।।१।।

**सूत उवाच**

अष्टादशपुराणोक्तममृतं प्राशितं मया ।
ततोऽतिरसवत् पातुमिच्छाम्यमृतमुत्तमम् ।।२।।

येनामृतमयो भूत्वा पुमान् ब्रह्मामृतं यतः ।
योगामृतं महाभाग ! तन्मे करुणया वद ।।३।।

**व्यास उवाच**

अथ गीतां प्रवक्ष्यामि योगमार्गप्रकाशिनीम् ।
निरुक्ता पृच्छते सूत राज्ञे गजमुखेन या ।।४।।

**वरेण्य उवाच**

विघ्नेश्वर ! महाबाहो ! सर्वविद्याविशारद !
सर्वशास्त्रार्थतत्त्वज्ञ ! योगं मे वक्तुमर्हसि ।।५।।

**गजानन उवाच**

सम्यग्व्यवसिता राजन् मतिस्तेऽनुग्रहान्मम ।
शृणु गीतां प्रवक्ष्यामि योगामृतमयीं नृप ।।६।।

न योगं योगमित्याहुर्योगो योगो न च श्रियः ।
न योगो विषयैर्योगो न च मात्रादिभिस्तथा ।।७।।

योगो यः पितृमात्रादेर्न स योगो नराधिप !
यो योगो बन्धुपित्रादेर्यश्चाष्टभूतिभिः सह ।।८।।

न स योगः स्त्रिया योगो जगदद्भुतरूपया ।
राज्ययोगश्च नो योगो न योगो गजवाजिभिः ।।९।।

योगो नेन्द्रपदस्यापि योगो योगार्थिनः प्रियः ।
योगो यः सत्यलोकस्य न स योगो मतो मम ।।१०।।

शैवस्य योगो नो योगो वैष्णवस्य पदस्य च ।
न योगो भूप ! सूर्यत्वं चन्द्रत्वं न कुबेरता ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - 'हे व्यास ! अहिले तिमीले मसँग जसरी प्रश्न गरिरहेका छौ त्यसैगरी पहिले महात्मा शौनकले सूतजीसँग प्रश्न गर्दा तिनले आफ्ना गुरु व्यासका मुखबाट आफूले सुनेको श्रीगणेशगीता शौनकलाई उपदेश गरेका थिए' ।।१।।

**सूतजीले भन्नुभयो** - 'हे भगवन् व्यासदेव ! हजुरले मलाई अठार पुराणहरूले बताएको अमृत पियाउनुभयो । त्योभन्दा पनि रसिलो र उत्तम अमृत पिउन चाहन्छु । जुन अमृतपान गर्नाले मानिस अमृतमय बन्दछ र ब्रह्मामृत एवं योगामृत पान गर्ने सौभाग्य प्राप्त गर्दछ । हे भाग्यशाली व्यासदेव ! कृपया मलाई त्यस्तो अमृतमय कथा सुनाउनुहोस्' ।।२-३।।

**व्यासले भन्नुभयो** - 'हे सूतजी ! म तिमीलाई योगमार्ग प्रकाशित गराउने श्रीगणेशगीताको उपदेश गर्दछु । जुन गीतालाई जिज्ञासु वरेण्य राजाका निमित्त भगवान् श्रीगणेशले सुनाउनुभएको थियो' ।।४।।

**वरेण्यले भने** - 'हे विघ्नेश्वर ! हे महाबाहो ! हे सर्वविद्या-विशारद ! सबै शास्त्रका अर्थको सारवेत्ता हे भगवन् ! मलाई योगशास्त्रको उपदेश गर्नुहोस्' ।।५।।

**श्रीगणेशले भन्नुभयो** - हे राजा ! मेरो अनुग्रहबाट तपाईं दृढ निश्चय गर्न सक्ने बुद्धिले सम्पन्न हुनुहुन्छ । म योगामृतले परिपूर्ण गीतातत्त्वको उपदेश गर्दछु सुन्नुहोस् ।।६।। अष्टाङ्गयोग योग होइन, श्रीसम्पत्तिको योग योग होइन, विषययोग योग होइन, रूप, रस, गन्ध आदि तन्मात्राहरूको योग योग होइन, माता, पिता, बन्धुहरूसँग हुने संयोग योग होइन र अणिमा आदि आठ विभूतिहरूका साथ हुने योग योग होइन ।।७-८।। जगत्मा अद्भुत मानिने सुन्दरी पत्नीका साथ हुने संयोग योग होइन, राज्यप्राप्ति योग होइन र हात्ती, घोडा आदिको प्राप्ति योग होइन।।९।। योगार्थीहरूका लागि इन्द्रपदको प्राप्ति प्रिय योग होइन र सत्यलोकको प्राप्ति योग होइन ।।१०।। कैलास लोकको सम्पर्क योग होइन र वैष्णवधाम वैकुण्ठको प्राप्ति योग होइन, सूर्यको रूपमा र चन्द्रमाको रूपमा प्राप्त हुनु योग होइन,

नानिलत्वं नानलत्वं नामरत्वं न कालता ।
न वारुण्यं न नैर्ऋत्यं योगो न सार्वभौमता ।।१२।।
योगं नानाविधं भूप ! युञ्जन्ति ज्ञानिनस्तु तम् ।
भवन्ति वितृषा लोके जिताहारा विरेतसः ।।१३।।
पावयन्त्यखिलाँल्लोकान् वशीकृतजगत्त्रयाः ।
करुणापूर्णहृदया बोधयन्ति च कांश्चन ।।१४।।
जीवन्मुक्ता ह्रदे मग्नाः परमानन्दरूपिणि ।
निमील्याक्षीणि पश्यन्तः परं ब्रह्म हृदि स्थितम् ।।१५।।
ध्यायन्तः परमं ब्रह्म चित्ते योगवशीकृतम् ।
भूतानि स्वात्मना तुल्यं सर्वाणि गणयन्ति ते ।।१६।।
येन केनचिदाच्छिन्ना येन केनचिदाहताः ।
येन केनचिदाकृष्टा येन केनचिदाशिताः ।।१७।।
करुणापूर्णहृदया भ्रमन्ति धरणीतले ।
अनुग्रहाय भूतानां जितक्रोधा जितेन्द्रियाः ।।१८।।
देहमात्रभृतो भूप ! समलोष्टाश्मकाञ्चनाः ।
एतादृशा महाभागाः स्युश्चक्षुर्गोचराः प्रिय ।।१९।।
तमिदानीमहं वक्ष्ये शृणु योगमनुत्तमम् ।
श्रुत्वा यं मुच्यते जन्तुः पापेभ्यो भवसागरात् ।।२०।।
शिवे विष्णौ च शक्तौ च सूर्ये मयि नराधिप !
याऽभेदबुद्धिर्योगः स सम्यग्योगो मतो मम ।।२१।।
अहमेव जगद् यस्मात् सृजामि पालयामि च ।
कृत्वा नानाविधं वेषं संहरामि स्वलीलया ।।२२।।
अहमेव महाविष्णुरहमेव सदाशिवः ।
अहमेव महाशक्तिरहमेवार्यमा प्रिय ।।२३।।
अहमेको नृणां नाथो जातः पञ्चविधः पुरा ।
अज्ञानान्मां न जानन्ति जगत्कारणकारणम् ।।२४।।
मत्तोऽग्निरापो धरणी मत्त आकाशमारुतौ ।
ब्रह्मा विष्णुश्च रुद्रश्च लोकपाला दिशो दश ।।२५।।
वसवो मनवो गावो मुनयः पशवोऽपि च ।
सरितः सागरा यक्षा वृक्षाः पक्षिगणा अपि ।।२६।।

वायुरूपता, कुबेररूपता, अग्निरूपता, देवरूपता, कालरूपता, वरुणरूपता, निर्ऋतिरूपता र सार्वभौम राजपदप्राप्ति पनि योग होइन ।।११-१२।। ज्ञानीहरूले अनेक आकारको यस योगलाई उपयोगमा ल्याउँछन् । योगको आनन्द प्राप्त गरेपछि ती निष्पाप ज्ञानीहरू भोक, प्यासबाट मुक्त हुन्छन् ।।१३।। ती ज्ञानीहरूले तीनै लोकलाई वशीभूत तुल्याउँछन् र संसारलाई पवित्र बनाउँछन्। करुणाकोमल हृदय भएका जीवन्मुक्त र परमानन्दसरोवरमा मग्न ती ज्ञानी पुरुषहरूले आँखा चिम्लिएर हृदयमा विराजमान परब्रह्मको दर्शन गर्दछन् ।।१४-१५।। तिनीहरूको चित्तमा योगद्वारा वशीकृत परब्रह्मको ध्यान गर्दै सबै प्राणीहरूलाई आफूसमान सम्झन्छन् । कसैद्वारा छेदन गरिएमा, कसैद्वारा आघात भएमा, कसैद्वारा आकृष्ट भएमा र कसैद्वारा आश्रित भएमा पनि ती समदृष्टि राखी हृदयलाई करुणामय बनाएर प्राणीहरूमा अनुग्रह गर्ने पृथिवीमा भ्रमण गर्दछन् । क्रोधमाथि विजय प्राप्त गर्ने, इन्द्रियलाई आफ्नो अधीनमा तुल्याउने, शरीरमात्र धारण गर्ने तर भौतिक पदार्थमा कत्ति पनि आसक्ति नलिने ती ज्ञानी पुरुषहरूले माटाको ढेला, ढुङ्गा र सुवर्णमा पनि केही विभेद देख्दैनन् । यस्ता भाग्यशाली पुरुष जीवनमा कहिलेकाहीं मात्र दृष्टिपथमा आउन सक्छन् ।।१६-१९।। ती महापुरुषहरूले अङ्गीकार गर्ने उत्तम योगका विषयमा म तपाईंलाई बताउनेछु। जसलाई श्रवण गरेपछि मानिस पापबाट र भवसागरबाट पनि मुक्त हुन्छ ।।२०।। श्रीगणेशले भन्नुभयो- हे राजा वरेण्य ! शिव, विष्णु, शक्ति, सूर्य र म श्रीगणेशमा अभेदबुद्धि हुनु नै सम्यक् योग हो । मैले नै जगत्को सृष्टि गर्दछु, मैले नै अनेक किसिमका रूप लिएर जगत्को पालन गर्दछु र मैले नै आफ्नो लीलाद्वारा जगत्को संहार पनि गर्दछु ।।२१-२२।। म नै महाविष्णु र शिव पनि हुँ, म नै शक्ति र सूर्य पनि हुँ, मानिसहरूको आराध्य ईश्वर म एउटै थिएँ र मानिसहरूको रुचि र प्रकृतिलाई ध्यान राखेर पाँच रूपमा परिणत भएको हुँ। अज्ञानका कारण धेरै मानिसले कारणका पनि कारण मलाई चिन्दैनन् ।।२३-२४।। मबाट अग्नि, जल, पृथिवी, आकाश र पवन उत्पन्न भएका हुन् । मबाट नै ब्रह्मा, विष्णु, रुद्र, लोकपाल, दश दिशा, वसु, मनु, मुनि, गाई, पशुवृन्द, नदी, सागर, यज्ञ, वृक्ष, पक्षिगण, एक्काईस प्रकारका

तथैकविंशतिस्वर्गा नागाः सप्तवनानि च ।
मनुष्याः पर्वताः साध्याः सिद्धा रक्षोगणास्तथा।।२७।।

अहं साक्षी जगच्चक्षुरलिप्तः सर्वकर्मभिः ।
अविकारोऽप्रमेयोऽहमव्यक्तो विश्वगोऽव्ययः ।।२८।।

अहमेव परं ब्रह्माव्ययानन्दात्मकं नृप ।
मोहयत्यखिलान् माया श्रेष्ठान् मम नरानमून् ।।२९।।

सर्वदा षड्विकारेषु तानियं योजयेद् भृशम् ।
छित्वाजापटलं जन्तुरनेकैर्जन्मभिः शनैः ।।३०।।

विरज्य बिन्दति ब्रह्म विषयेषु सुबोधतः ।
अच्छेद्यं शस्त्रसङ्घातैरदाह्यमनलेन च ।।३१।।

अक्लेद्यं पञ्च पवनैरशोष्यं मारुतेन च ।
अवध्यं वध्यमानेऽपि शरीरेऽस्मिन् नराधिप ।।३२।।

यामिमां पुष्पितां वाचं प्रशंसन्ति श्रुतीरिताम् ।
त्रयीवादरता मूढास्ततोऽन्यन्मन्वतेऽपि न ।।३३।।

कुर्वन्ति सततं कर्म जन्ममृत्युफलप्रदम् ।
स्वर्गैश्वर्यरताध्वस्तचेतना भोगबुद्धयः ।।३४।।

सम्पादयन्ति ते भूयः स्वात्मना निजबन्धनम् ।
संसारचक्रं युञ्जन्ति जडाः कर्मपरा नराः ।।३५।।

यस्य यद्विहितं कर्म तत्कर्तव्यं मदर्पणम् ।
ततोऽस्य कर्मबीजानामुच्छिन्नाः स्युर्महाङ्कुराः।।३६।।

चित्तशुद्धिश्च महती विज्ञानसाधिका भवेत् ।
विज्ञानेन हि विज्ञातं परं ब्रह्म मुनीश्वरैः ।।३७।।

तस्मात् कर्माणि कुर्वीत बुद्धियुक्तो नराधिपः ।
न [illegible] भवेत् कोऽपि स्वधर्मत्यागवाँस्तथा ।।३८।।

त्यजेद्यदि कर्माणि ततः सिद्धिं न बिन्दति ।
आदौ ज्ञाने नाधिकारः कर्मण्येव स युज्यते ।।३९।।

स्वर्ग, सर्प, सात प्रकारका अरण्य, मनुष्य, पर्वत, साध्य, सिद्ध र राक्षसगण पनि उत्पन्न भएका हुन् । म साक्षी हुँ, संसारको चक्षु पनि म नै हुँ र कुनै पनि कर्मबाट म लिप्त हुँदिन । म अविकारी, अप्रमेय, अव्यक्त, विश्वव्यापक र अविनाशी छु ।।२५-२८।। म अविनाशी आत्मतत्त्वले परिपूर्ण परब्रह्म हुँ । मेरो मायाले यी सबै मानिसलाई मोहित बनाइरहेको छ । मायाले सर्वदा सबैलाई जन्म, वृद्धि, ह्रास, विकार, रुग्णता र मृत्युजस्ता ६ दोषद्वारा जेलिरहेको छ । मानिसले शनै-शनै उत्तम कर्मद्वारा मायाको पटललाई भेदन गरी विषयहरूबाट विरक्त भएपछि ब्रह्मबोध गर्दछ । ब्रह्मलाई शस्त्रले छेदन गर्न सक्दैन, अग्निले पोल्न सक्दैन, पानीले चीसो बनाउन सक्दैन, हावाले सुकाउन सक्दैन र त्यो ब्रह्म पञ्चभूत इन्द्रिय आदिद्वारा बाँधिएको शरीरमा रहेर पनि कसैको बन्धनमा पर्दैन ।।२९-३२।। वेदवादमा रत मूर्खहरूले श्रुतिनिर्दिष्ट यज्ञ-यागका फलको अनुशंसा गर्ने, वाणीको प्रशंसा गर्दै ज्ञानभन्दा कर्मलाई महत्त्व दिन्छन् । तिनले कर्मभन्दा माथि केही जानेका हुँदैनन् । तिनले निरन्तर जन्म र मृत्युको फल दिने कर्ममात्र गरिरहन्छन् । तिनको लक्ष्य स्वर्गीय ऐश्वर्यको प्राप्तिमात्र हुन्छ । कर्मजडताका कारण तिनको चेतना ध्वस्त भएको हुन्छ र तिनमा भोगबुद्धिको प्रबलता हुन्छ ।।३३-३५।। हे राजा वरेण्य ! तिनले आफ्नो आत्मालाई आफै बन्धनमा पारेका हुन्छन् । कर्मपरायण जड मानिसहरू सधैं संसारचक्रमा जोतिएका हुन्छन् । शास्त्रले जसका निमित्त जुन कर्मको विधान गरेको हुन्छ त्यो कर्म सम्पन्न गरी साधकले मलाई अर्पण गर्नुपर्दछ । कर्मको फल अर्पण गरेपछि त्यस कर्मको बीजका महान् अङ्कुरहरू छिन्नभिन्न हुन्छन् । त्यसबाट ज्ञानलाई सिद्ध गर्न सघाउने चित्तशुद्धि हुन्छ । मुनीश्वरहरूले चित्तशुद्धिपछि उदाउने ज्ञानद्वारा ब्रह्मदर्शन गरेका हुन् ।।३६-३७।। हे राजन् ! तसर्थ आफ्नो कल्याण चाहनेले उत्तम बुद्धिसम्पन्न भई कर्म-सम्पादन गर्नुपर्दछ । कुनै पनि कल्याणाकाङ्क्षी मानिसले स्वधर्मको त्याग र स्वकर्मको त्याग गर्नुहुँदैन । ।।३८।। यदि कसैले विहित कर्मको परित्याग गर्दछ भने त्यसले सिद्धि प्राप्त गर्न सक्दैन । साधकको सर्वप्रथम ज्ञानमा अधिकार हुँदैन त्यसको प्रथमकोटिको अधिकार कर्मसम्पादनमा मात्र हुन्छ ।।३९।। कर्मद्वारा

कर्मणा शुद्धहृदयोऽभेदबुद्धिमुपैष्यति ।
स च योगः समाख्यातोऽमृतत्वाय हि कल्पते ।।४०।।

योगमन्यं प्रवक्ष्यामि शृणु भूप ! तमुत्तमम् ।
पशौ पुत्रे तथा मित्रे शत्रौ बन्धौ सुहृज्जने ।।४१।।

बहिर्दृष्ट्या च समया हृत्स्थया लोकयेत् पुमान् ।
सुखे दुःखे तथामर्षे हर्षे भीतौ समो भवेत् ।।४२।।

रोगाप्तौ चैव भोगाप्तौ जये वा विजयेऽपि च ।
श्रियोऽयोगे च योगे च लाभालाभे मृतावपि ।।४३।।

समो मां वस्तुजातेषु पश्यन्नन्तर्बहिः स्थितम् ।
सूर्ये सोमे जले वह्नौ शिवे शक्तौ तथाऽनिले ।।४४।।

द्विजे हृदे महानद्यां तीर्थे क्षेत्रेऽघनाशिनि ।
विष्णौ च सर्वदेवेषु तथा यक्षोरगेषु च ।।४५।।

गन्धर्वेषु मनुष्येषु तथा तिर्यग्भवेषु च ।
सततं मां हि यः पश्येत् सोऽयं योगविदुच्यते ।।४६।।

सम्परिहृत्य स्वार्थेभ्य इन्द्रियाणि विवेकतः ।
सर्वत्र समताबुद्धिः स योगो भूप ! मे मतः ।।४७।।

आत्मानात्मविवेकेन या बुद्धिर्दैवयोगतः ।
स्वधर्मासक्तचित्तस्य तद्योगो योग उच्यते ।।४८।।

धर्माधर्मौ जहातीह तया त्यक्त उभावपि ।
अतो योगाय युञ्जीत योगो वैधेषु कौशलम् ।।४९।।

धर्माधर्मफले त्यक्त्वा मनीषी विजितेन्द्रियः ।
जन्मबन्धविनिर्मुक्तः स्थानं संयात्यनामयम् ।।५०।।

यदा ह्यज्ञानकालुष्यं जन्तोर्बुद्धिः क्रमिष्यति ।
तदाऽसौ याति वैराग्यं वेदवाक्यादिषु क्रमात् ।।५१।।

त्रयीविप्रतिपन्नस्य स्थाणुत्वं यास्यते यदा ।
परात्मन्यचला बुद्धिस्तदा स योगमाप्नुयात् ।।५२।।

मानसानखिलान् कामान् यदा धीमाँस्त्यजेत्प्रिय !
स्वात्मनि स्वेन सन्तुष्टः स्थिरबुद्धिस्तदोच्यते ।।५३।।

हृदयलाई निर्मल तुल्याउने साधकका मनबाट भेदबुद्धि हट्दछ। त्यसलाई योग भनिएको छ । त्यो योग अमृतका रूपमा परिणत हुन्छ ।।४०।। हे वरेण्य ! मैले अर्को योग बताउँछु, त्यो सुन्नुहोस्- पशु, पुत्र, मित्र, शत्रु, बन्धु र अत्यन्त हित चिताउने आत्मीय जनमा आफ्नो हृदयमा स्थित आत्माको दर्शन गर्नुपर्दछ । सुख, दुःख, ईर्ष्या, हर्ष र भयमा समान चित्तवृत्ति धारण गर्नुपर्दछ । रोगप्राप्ति, भोगप्राप्ति, जय, विजय, लक्ष्मीको प्राप्ति र अप्राप्ति, लाभ र हानि, मृत्युमा समेत समान दृष्टि राखी सम्पूर्ण पदार्थहरूको भित्र र बाहिर समदृष्टिले मलाई हेर्नुपर्दछ । ब्राह्मण, चन्द्र, जल, अग्नि, शिव, शक्ति र वायुमा मेरो दर्शन गर्नुपर्दछ। ब्राह्मण, सरोवर, महानदी, तीर्थ, पापनाशक पुण्यचक्र, विष्णु, सबै देवी-देवता, यक्ष, सर्प, गन्धर्व, तिर्यक् जातिका प्राणीहरू र मानिसहरूमा समेत निरन्तर मेरो दर्शन गर्नुपर्दछ। यो समदर्शन पनि योग कहलाउँछ र समदर्शन गर्ने मानिस योगी कहलाउँछ ।।४१-४६।। हे राजन् ! विवेकपूर्वक इन्द्रियहरूलाई विषयहरूबाट खिँचेर सर्वत्र समताबुद्धि राख्नुलाई पनि मैले योग भनेको छु । स्वधर्मपालनमा नित्य लागिरहने साधकमा दैवको कृपाबाट आत्मा र अनात्माको विवेक गर्ने शक्ति पैदा हुन्छ । त्यसबाट जुन उत्तम बुद्धिको उदय हुन्छ त्यो योग कहलाउँछ ।।४७-४८।। त्यस्तो बुद्धि नमएको मानिसले यस संसारमा धर्म एवं अधर्मको परित्याग गर्दछ । त्यस कारण आत्म र अनात्मको विवेकमा तत्पर हुनुपर्दछ। विधिसम्मत कर्मको सम्पादनमा कुशलता पनि योग हो ।।४९।। इन्द्रियमाथि विजय गर्ने बुद्धिमान् साधक धर्म एवं अधर्मका फल परित्याग गरी जन्म-मृत्युको बन्धनबाट मुक्त हुन्छ र त्यो साधक निर्दोष, आधि-व्याधिविहीन स्थानमा प्राप्त हुन्छ ।।५०।। जब मानिसको बुद्धिले अज्ञानको अन्धकारलाई पार गर्दछ तब त्यो मानिस कर्मद्वारा कर्मतर्फ डोऱ्याउने वेदका वाक्यहरूबाट विरक्त हुन्छ ।।५१।। वेदवाक्यका कारण संशयात्मक बुद्धि भएको मानिसको कर्मजडता हटेपछि परमात्मामा निश्चल बुद्धिको उदय हुन्छ । त्यस बेला त्यसले सच्चा योग प्राप्त गर्दछ ।।५२।। हे प्रिय ! जुन बेला बुद्धिमान् पुरुषले मानसिक कामनाहरूको परित्याग गर्दछ र आफ्नो ज्ञानद्वारा आफैमा सन्तोष लिन्छ त्यस बेला त्यो मानिस स्थिरबुद्धि कहलाउँछ ।।५३।। सबै प्रकारका सुखदायक पदार्थहरूबाट

वितृष्ण: सर्वसौख्येषु नोद्विग्नो दु:खसङ्गमे ।
गतसाध्वसरुड्रागः स्थिरबुद्धिस्तदोच्यते ।।५४।।

यथाऽयं कमठोऽङ्गानि सङ्कोचयति सर्वतः ।
विषयेभ्यस्तथा खानि सङ्कर्षेद् योगतत्परः ।।५५।।

व्यावर्तन्तेऽस्य विषयास्त्यक्ताहारस्य वर्ष्मिणः ।
विना रागञ्च रागोऽपि दृष्ट्वा ब्रह्म विनश्यति ।।५६।।

विपश्चिद् यतते भूप ! स्थितिमास्थाय योगिनः ।
मन्थयित्वेन्द्रियाण्यस्य हरन्ति बलतो मनः ।।५७।।

युक्तस्तानि वशे कृत्वा सर्वदा मत्परो भवेत् ।
संयतानीन्द्रियाणीह यस्य स कृतधीर्मतः ।।५८।।

सञ्चिन्तयतो विषयान् सङ्गस्तेषूपजायते ।
कामः संवर्धते तस्मात् ततः क्रोधोऽभिवर्द्धते ।।५९।

क्रोधादज्ञानसम्भूतिर्विभ्रमस्तु ततः स्मृतेः ।
भ्रंशात् स्मृतेर्मतेर्ध्वंसस्तद्ध्वंसात् सोऽपि नश्यति ।।६०।।

विना द्वेषञ्च रागञ्च गोचरान् यस्तु खैश्चरेत् ।
स्वाधीनहृदयो वश्यैः सन्तोषं स समृच्छति ।।६१।।

त्रिविधस्यापि दु:खस्य सन्तोषे क्षेपणं भवेत् ।
प्रज्ञया संस्थितश्चायं प्रसन्नहृदयो भवेत् ।।६२।।

विना प्रसादं न मतिर्विना मत्या न भावना ।
विना तां न शमो भूप ! विना तेन कुतः सुखम् ।।६३।।

इन्द्रियाश्वान् विचरतो विषयाननुवर्तते ।
यन्मनस्तन्मतिं हन्यादश्वो नावं मरुद्यथा ।।६४।।

निवृत्त भएको, दु:ख प्राप्ति हुँदा उद्विग्न नहुने र भय-रोग एवं रागबाट निवृत्त भएको पुरुष स्थिरबुद्धि कहलाउँछ ।।५४।। जसरी कछुवाले चारैतिरबाट आफ्ना अङ्गहरूलाई सङ्कुचित बनाउँछ, त्यसैगरी योगसाधनामा तत्पर साधकले आफ्ना इन्द्रियहरूलाई विषयबाट खिंची संकुचित बनाउनुपर्दछ । क्रमिक रूपमा आहारलाई पनि परिहार गर्दै जाने र बुद्धिको कवच धारण गर्ने रागहीन साधक मनुष्यका विषयहरू आफै निवृत्त हुँदै जान्छन् ।।५५-५६।। त्यस्ता साधकको बाँकी-ताँकी राग-बीज पनि ब्रह्मदर्शनपछि नष्ट भएर जान्छ । हे राजन्! विद्वान् साधकले योगीको स्थितिमा रहेर योगसिद्धिका लागि प्रयत्न गर्दछ। इन्द्रियहरूले बलपूर्वक त्यसको मनलाई मन्थन गरेर तान्न खोज्दछन् । साधकले साधनामा तत्पर रहेर इन्द्रियलाई वशमा राखी परमात्माको ध्यान गर्नुपर्दछ। यस संसारमा जसले इन्द्रियलाई वशमा राख्दछ त्यसलाई बुद्धिमान् भन्नुपर्दछ ।।५७-५८।। जसले निरन्तर विषयचिन्तन गरिरहन्छ त्यसको विषयहरूमा आसक्ति भइरहन्छ । विषयसम्पर्कपछि त्यो आसक्ति तीव्र हुँदैजान्छ । विषयको प्राप्ति नहुँदा त्यसको मनमा रीस जागेर आउँछ । रीसबाट अज्ञान अथवा मूर्खता प्रकट हुन्छ । अज्ञानबाट भ्रान्ति उत्पन्न हुन्छ । त्यस भ्रान्तिबाट स्मरणशक्तिको विनाश हुन्छ । स्मरणशक्तिको विनाशपछि त्यो आफै नष्ट हुन्छ ।।५९-६०।। विनाराग र विनादोष जसले इन्द्रियहरूको माध्यमबाट पदार्थहरूको उपभोग गर्दछ त्यो स्वाधीन चित्त भएको साधक आफ्ना मन र इन्द्रिय वशीभूत भएका कारण सन्तोषी बन्दछ ।।६१।। सन्तोष-प्राप्त भएपछि आधिभौतिक, आधिदैविक र आध्यात्मिक दु:खहरूको विनाश हुन्छ। उत्तम बुद्धिद्वारा सम्पन्न साधकको हृदय प्रसन्न बन्दछ ।।६२।। प्रसन्नता नभएसम्म बुद्धि शुद्ध हुँदैन र बुद्धि शुद्ध नभएसम्म उत्तम भावना हुँदैन । भक्तिभावना अथवा अध्यात्मभावना नभएसम्म शान्ति प्राप्त हुँदैन । शान्तिविना सुख कसरी प्राप्त हुनसक्दछ अर्थात् प्राप्त हुँदैन ।।६३।। विषयहरूका पछि लाग्ने इन्द्रियरूप घोडाहरूको दौडमा मन पनि पछि-पछि लाग्दछ । त्यो घोडाजस्तो मनले बुद्धिको नाश गर्दछ । जस्तै पानीमा तैरिरहेको डुंगालाई हावाले यता-उति गराउँछ त्यसरी नै मनले पनि बुद्धिलाई विचलित बनाउँछ ।।६४।। सबै प्राणीहरूका लागि जुन रात्रि

या रात्रिः सर्वभूतानां तस्यां निद्राति नैव सः ।
न स्वपन्तीह ते यत्र सा रात्रिस्तस्य भूमिप ।।६५।।

सरितां पतिमायान्ति वनानि सर्वतो यथा ।
आयान्ति तं तथा कामाः स न शान्तिं सदा लभेत्।।६६।।

अतस्तानीह संरुद्ध्य सर्वतः खानि मानवः ।
स्वस्वार्थेभ्यः प्रधावन्ति बुद्धिरस्य स्थिरा तदा ।।६७।।

ममताऽहङ्कृती त्यक्त्वा सर्वान् कामांश्च यस्त्यजेत्।
नित्यं ज्ञानरतो भूयाज्ज्ञानान् मुक्तिं प्रयास्यति ।।६८।।

एनां ब्रह्मधियं भूप ! यो विजानाति दैवतः ।
तुरीयावस्थां प्राप्यापि शीलान्मुक्तिं स ऋच्छति ।।६९।।

हुन्छ त्यस रात्रिमा संयमी पुरुष निदाउँदैन । सर्वसाधारण मानिस जसलाई दिन मानेर व्यवहार गरिरहेका छन् त्यो समय संयमीका निमित्त स्वप्नसमान हुनाले रात्रिसरह हुन्छ । वास्तवमा ब्रह्ममा लागिरहनु दिन हो भने प्रपञ्चमा लागिरहनु रात हो । योगी ब्रह्ममा लागिरहन्छन् भने अरू मानिसहरू प्रपञ्चमा लाग्दछन् ।।६५।। समुद्रमा जसरी खोला-नाला-झरना-सरोवर र नदीका जल जम्मा हुनआउँछन् त्यसैगरी जुन मानिसका मनमा अनेक प्रकारका कामनाहरू जम्मा हुन आउँछन्। त्यस कामी पुरुषले शान्ति प्राप्त गर्दैन ।।६६।। आ-आफ्नो विषयभोग प्राप्त गर्न चञ्चल भएका इन्द्रियहरूलाई राम्ररी कसेर जसले व्यवहार गर्दछ त्यो मानिस बुद्धिमान् हो र त्यसको बुद्धिलाई स्थिर बुद्धि भन्नुपर्दछ ।।६७।। ममता र अहङ्कारको त्याग गर्दै जसले सबै कामनाहरूको त्याग गर्दछ त्यो साधक नित्य ज्ञानसम्पन्न हुन्छ र त्यसले त्यसै ज्ञानबाट मुक्ति प्राप्त गर्दछ ।।६८।। दैवयोगबाट जसले ब्रह्मविद्या जान्दछ त्यसले तुरीय अवस्थामा प्राप्त भएपछि आफ्नो ब्रह्मविद्याको अनुशीलनका कारण मुक्ति प्राप्त गर्दछ ।।६९।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे ( साङ्ख्ययोगसारार्थ ) योगो नाम प्रथमोऽध्यायः ।।१।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे साङ्ख्योपदेशो नामाष्टात्रिंशदधिकशततमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत साङ्ख्ययोगको उपदेश' शीर्षकान्वित एक सय अठतीसौँ अध्याय पूर्ण भयो ।।१३८।।

ॐ

## ऊनचत्वारिंशदुत्तरशततमोऽध्याय:　　{ १३९ अध्याय }

वरेण्य उवाच

ज्ञाननिष्ठा कर्मनिष्ठा द्वयं प्रोक्तं त्वया विभो ।
अवधार्य वदैकं मे निश्रेयसकरं नु किम् ।।१।।

गजानन उवाच

अस्मिँश्चराचरे स्थित्यै पुरोक्ते द्वे मया प्रिय !
साङ्ख्यानां बुद्धियोगेन वैधयोगेन कर्मणाम् ।।२।।

अनारम्भेण वैधानां निष्क्रिय: पुरुषो भवेत् ।
न सिद्धिं याति सन्त्यागात् केवलात् कर्मजान्नृप ।।३।।

कदाचिदक्रिय: कोऽपि क्षणं नैवावतिष्ठते ।
अस्वतन्त्र: प्रकृतिजैर्गुणै: कर्म च कार्यते ।।४।।

कर्मकारीन्द्रियग्रामं नियम्यास्ते स्मरन् पुमान् ।
तद्गोचरान्मन्दचित्तो धिगाचार: स भण्यते ।।५।।

तद्ग्रामं सन्नियम्यादौ मनसा कर्म चारभेत् ।
इन्द्रियै: कर्मयोगं यो वितृष्ण: स परो नृप ।।६।।

अकर्मण: श्रेष्ठतमं कर्मानिच्छाकृतं तु यत् ।
वर्ष्मण: स्थितिरप्यस्याकर्मणो नैव सेत्स्यति ।।७।।

असमर्प्य निबध्यन्ते कर्म तेन जना मयि ।
कुर्वीत सततं कर्माऽनाषङ्गी हि मदर्पणम् ।।८।।

मदर्थं यानि कर्माणि तानि बध्नन्ति न क्वचित् ।
सवासनमिदं कर्म बध्नाति देहिनं बलात् ।।९।।

**वरेण्यले भने** - हे अन्तर्यामी प्रभु ! हजुरले ज्ञाननिष्ठा र कर्मनिष्ठा दुबैको उपदेश गर्नुभएको छ । तीमध्ये कुन निष्ठा पारमार्थिकरूपमा कल्याणदायक छ ? मलाई निश्चयपूर्वक उपदेश गर्नुहोस् ।।१।।

**श्रीगणेशले भन्नुभयो** - यस चराचरात्मक विश्वमा आत्म-रूपको बोध गरी ब्रह्मरूपमा स्थिति लाभ गर्न मैले पहिले दुई उपाय बताएको छु । ती हुन् - साङ्ख्यशास्त्रका अनुयायीका लागि बुद्धियोग र कर्मयोगमा विश्वास गर्नेहरूका लागि कर्मयोग ।।२।। पुरुषले कर्मयोगको आरम्भ गर्दैन भने त्यो क्रियारहित यद्वा निष्क्रिय हुन्छ । हे राजन् ! त्यसले केवल कर्मत्यागबाट सिद्धि प्राप्त गर्न सक्दैन । कुनै पनि पुरुष कहिल्यै एकक्षणमात्र पनि क्रियारहित हुनसक्दैन । त्यो पुरुष प्रकृतिको वशमा रहेकाले स्वतन्त्र हुँदैन । त्यस कारण त्यसले नचाहँदा नचाहँदै पनि प्रकृतिका गुणहरूले कर्म गर्न लगाउँछन् ।।३-४।। कर्मशीलपुरुष इन्द्रियसमुदायलाई वशमा राखी ईश्वरको स्मरणमा तत्पर हुन्छ। ईश्वरमा इन्द्रियवृत्ति लाग्नाले त्यो उत्तम आचारसम्पन्न पुरुषका रूपमा परिचित हुन्छ । इन्द्रियगोचर पदार्थमा आसक्त र मन्दचित्त पुरुष अधमाचार कहलाउँछ । हे राजन् ! जुन पुरुषले सर्वप्रथम इन्द्रियसमूहलाई वशमा राखेर मनद्वारा कर्मप्रारम्भ गर्दछ र त्यसपछि इन्द्रियद्वारा ग्रहण गरिने पदार्थहरूमा तृष्णा नराखी कर्मयोगमा प्रवृत्त हुन्छ त्यो उत्तम कर्मयोगी साधक हो ।।५-६।। अकर्मभन्दा फलको कामना नराखी गरिएको कर्म उत्तम हुन्छ । जसले कर्म गर्दैन त्यसको शरीरयात्रा पनि चल्दैन । त्यस कारण कर्म गर्नु अनिवार्य नै हुन्छ । मानिसहरूले कर्म गरेपछि मलाई समर्पण गर्नुपर्दछ । मलाई समर्पण नगरी कर्म गर्दा फलाशा र फलप्राप्तिमा आफ्नो मात्र सम्बन्ध कायम गर्ने अहन्ता र ममताले जेलिएका मानिसहरू कर्मको बन्धनले जेलिन्छन्। त्यस कारण पुरुषहरूले निरन्तर कर्म गर्नुपर्दछ र त्यसमा अनासक्त भई त्यो कर्म मलाई अर्पण गर्नुपर्दछ ।।७-८।। मलाई समर्पण गरी जति कर्म गरिन्छन् तिनले कहिले पनि कर्म गर्ने साधकलाई बन्धनमा पार्दैनन् । ईश्वरमा अर्पण नगरी

वर्णान् सृष्ट्वाऽवदं चाहं सयज्ञाँस्तान् पुरा प्रिय !
यज्ञेन ऋध्यतामेष कामदः कल्पवृक्षवत् ।।१०।।

सुराँश्चानेन प्रीणध्वं सुरास्ते प्रीणयन्तु वः ।
लभध्वं परमं स्थानमन्योन्यप्रीणनात् स्थिरम् ।।११।।

इष्टा देवाः प्रदास्यन्ति भोगानिष्टान् सुतर्पिताः ।
तैर्दत्ताँस्तान्नरस्तेभ्योऽदत्त्वा भुङ्क्ते स तस्करः ।।१२।।

हुतावशिष्टभोक्तारो मुक्ताः स्युः सर्वपातकैः ।
अदन्त्येनो महापापा आत्महेतोः पचन्ति ये ।।१३।।

ऊर्जाद् भवन्ति भूतानि देवादन्नस्य सम्भवः ।
यज्ञाच्च देवसम्भूतिस्तदुत्पत्तिश्च वैधतः ।।१४।।

ब्रह्मणो वैधमुत्पन्नं मत्तो ब्रह्मसमुद्भवः ।
अतो यज्ञे च विश्वस्मिन् स्थितं मां विद्धि भूमिप ।।१५।।

संसृतीनां महाचक्रं क्रामितव्यं विचक्षणैः ।
स मुदा प्राणिति भूपेन्द्रियक्रीडोऽधमो जनः ।।१६।।

अन्तरात्मनि यः प्रीत आत्मारामोऽखिलप्रियः ।
आत्मतृप्तो नरो यः स्यात् तस्यार्थो नैव विद्यते ।।१७।।

कार्याकार्यकृतीनां स नैवाप्नोति शुभाशुभे ।
किञ्चिदस्य न साध्यं स्यात्सर्वजन्तुषु सर्वदा ।।१८।।

अतोऽसक्ततया भूप कर्तव्यं कर्म जन्तुभिः ।
सक्तोऽगतिमवाप्नोति मामवाप्नोति तादृशः ।।१९।।

आफ्नो वासनापूर्तिका लागि गरिने कर्मले पुरुषलाई बलपूर्वक बन्धनमा पार्दछ ।।९।। हे प्रिय राजा ! मैले सर्वप्रथम यज्ञसहित ब्राह्मण आदि वर्णको सृष्टि गर्दा भनेको थिएँ – तिमीहरूको यो कर्मयोग यज्ञद्वारा समृद्ध होस् र कल्पवृक्षसमान कामनापूरक बनोस् । यी यज्ञद्वारा तिमीहरूले देवताहरूलाई प्रसन्न तुल्याउनुपर्दछ। तिनीहरूले तिम्रो निमित्त प्रीतिजनक व्यवहार गर्नेछन् । मनुष्य र देवताले परस्परमा सद्भाव र प्रेम राखी व्यवहार गर्दा दुबैले उत्तम स्थान प्राप्त गर्नेछौ । अनुकूल र यज्ञद्वारा तृप्त भएका देवताहरूले आफूले चाहेका फल मनुष्यहरूलाई प्रदान गर्नेछन्। जुन मानिसले आफूले यज्ञ–याग कर्मद्वारा देवतालाई केही नदिएर देवताले दिएको फलमात्र भोग गर्दछ त्यो मानिस तस्कर हो।।१०–१२।। यज्ञमा हवन गरेपछि बाँकी रहेको पदार्थलाई प्रसादका रूपमा ग्रहण गर्ने मानिस पापहरूबाट मुक्त हुन्छन् । जसले घरमा आफ्नो तृप्तिका लागि मात्र अन्नपाक गर्दछन्, ती महापापीहरूले पापरूप भोजन खाइरहेका हुन्छन् ।।१३।। अन्नबाट प्राणीहरू पैदा हुन्छन्, मेघरूप देवताबाट अन्नको उत्पत्ति हुन्छ, यज्ञबाट मेघरूप देवताको उत्पत्ति हुन्छ । यज्ञ विधिमुखबाट प्रकाशित हुने वेदबाट उत्पन्न हुन्छ । वेदको उत्पत्ति विधिका चार मुखहरूबाट हुन्छ । विधिको उत्पत्ति मबाट हुन्छ । हे राजा! त्यस कारण तपाइँले मलाई विश्वमा व्याप्त यज्ञहरूमा विराजमान तत्त्वको रूपमा चिन्नुहोस् ।।१४–१५।। विद्वान् र बुद्धिमान् मानिसहरूले संसारको महाचक्रलाई नाघ्न सक्नु पर्दछ। इन्द्रियसँग क्रीडा गरिरहने अधम मानिस संसारको आवागमनलाई महत्त्व दिन्छ र त्यसमै रमाएर बस्छ ।।१६।। जुन मानिस अन्तरात्माको दर्शन गर्न लालायित हुन्छ र अन्तरात्मामा प्रीति राख्दछ त्यो सबैको प्यारो आत्माराम कहलाउँछ । जुन मानिस आत्मतत्त्वको दर्शन र अनुभव गरी तृप्त भएको हुन्छ त्यसको आवागमन चक्ररूप संसारसँग कुनै प्रयोजन बाँकी रहेको हुँदैन । त्यसले वेदविहित र अविहित कार्यद्वारा उत्पन्न शुभ र अशुभ परिणाम प्राप्त गर्दैन। त्यसका लागि सम्पूर्ण प्राणीहरूसँग सम्पर्क कायम गरी सिद्ध गर्नुपर्ने विषय कुनै पनि बाँकी रहँदैन ।।१७–१८।। हे राजन् ! त्यस कारण मानिसहरूले आसक्ति अथवा फलाशा नराखेर कर्म गर्नुपर्दछ । जसले आसक्ति राखेर कर्म गर्दछ त्यसले दुर्गति

परमां सिद्धिमापन्ना: पुरा राजर्षयो द्विजा: ।
सङ्ग्रहाय हि लोकानां तादृशं कर्म चारभेत् ।।२०।।

श्रेयान् यत् कुरुते कर्म तत् करोत्यखिलो जन: ।
मनुते यत् प्रमाणं स तदेवानुसरत्यसौ ।।२१।।

विष्टपे मे न साध्योऽस्ति कश्चिदर्थो नराधिप !
अनालब्धश्च लब्धव्य: कुर्वे कर्म तथाप्यहम् ।।२२।।

न कुर्वेऽहं यदा कर्म स्वतन्त्रोऽलसभावित: ।
करिष्यन्ति मम ध्यानं सर्वे वर्णा महामते ।।२३।।

भविष्यन्ति ततो लोका उच्छिन्ना: सम्प्रदायिन: ।
हन्ता स्यामस्य लोकस्य विधाता सङ्करस्य च ।।२४।।

कामिनो हि सदा कामैरज्ञानात् कर्मकारिण: ।
लोकानां सङ्ग्रहायैतद्विद्वान् कुर्यादसक्तधी: ।।२५।।

विभिन्नत्वमतिं जह्यादज्ञानां कर्मचारिणाम् ।
योगयुक्त: सर्वकर्माण्यर्पयेन्मयि कर्मकृत् ।।२६।।

अविद्यागुणसाचिव्यात् कुर्वन्कर्माण्यतन्द्रित: ।
अहङ्कारान्मन्दबुद्धिरहं कर्तेति योऽब्रवीत् ।।२७।।

यस्तु वेत्त्यात्मनस्तत्त्वं विभागाद् गुणकर्मणो: ।
करणं विषये वृत्तमिति मत्वा न सज्जते ।।२८।।

पाउँछ । जसले फलाशा नराखेर कर्म गर्दछ त्यसले मलाई प्राप्त गर्दछ ।।१९।। यसैगरी निष्काम कर्म गर्नाले पहिलेको समयमा राजर्षि र विद्वान् ब्राह्मणहरूले परम सिद्धि प्राप्त गरेका थिए । प्राणीहरूको हितका लागि ती राजर्षि र ब्रह्मर्षिहरूले जसरी अनासक्त भएर कर्म गरे त्यसैगरी अनासक्त भएर कर्म गर्नुपर्दछ ।।२०।। ठूला मानिसले जस्तो कर्म गर्दछन् त्यस्ता कर्मको सर्वसाधारणले अनुसरण गर्दछन् । जुन कुरालाई ठूला मानिसले प्रमाणका रूपमा लिन्छन् सर्वसाधारणले पनि तिनकै अनुसरण गरी त्यसलाई प्रमाण मान्दछन् ।।२१।। मैले श्रीगणेश-धाममा रहँदा फलप्राप्तिका लागि कुनै कर्म गर्नु आवश्यक छैन । मैले नपाएको विषय र पाउनुपर्ने विषय पनि केही छैन। त्यसो हो तापनि संसारलाई कर्मको मार्ग देखाउन म स्वयं कर्म गरिरहन्छु ।।२२।। जुन बेला म स्वतन्त्र र आलस्यपूर्ण भएर कर्म गर्ने छैन त्यस बेला सबै वर्णका मानिसहरूले मेरो गतिविधिलाई आधार मानेर कर्मत्याग गर्नेछन् ।।२३।। त्यस कर्मत्यागबाट विभिन्न सम्प्रदाय र जातजातिमा बाँडिएका ती कर्महीन मानिसहरू स्वत: समाप्त भएर जानेछन् । त्यस बेला त्यस परिस्थितिको कारणतत्त्व म लोकविघातक र वर्णसंकरको जनक पनि हुनेछु ।।२४।। कामनाका दास मानिसहरू अनेक इच्छाद्वारा युक्त भई अज्ञानबाट कर्म गर्दछन् । तर विद्वान् मानिसले अनासक्त बुद्धि लिएर लोकरक्षाका लागि मात्र कर्म गर्नुपर्दछ ।।२५।। अज्ञानी र कामनाका लागि कर्म गर्ने मानिसहरूमा हुने अथवा पाइने भेददृष्टिलाई हटाउनुपर्दछ । कर्म गर्ने मानिसले योगसम्पन्न भएर आफूले गरेका सम्पूर्ण कर्म मलाई अर्पण गर्नुपर्दछ ।।२६।। जसले परमात्मालाई बिर्सेर म कर्ता हुँ भन्ने अभिमान गर्दछ, त्यसको बुद्धि त्यसै अभिमानका कारण समाप्त भएको हुन्छ । त्यस्तो पुरुषले अविद्याका गुणलाई सहयोगी बनाएर निरालस्य भई स्वार्थकेन्द्रित कर्म गरिरहेको हुन्छ ।।२७।। जसले गुण र कर्मको विभाग गरी आत्मतत्त्वलाई जान्दछ, त्यसले इन्द्रियलाई विषयक्षेत्रमा आसक्त जान्दछ र इन्द्रियका व्यापार र फलमा आसक्त हुँदैन ।।२८।। सत्त्व, रज र तम यी तीन गुणद्वारा

कुर्वन्ति सकलं कर्म गुणैस्त्रिभिर्विमोहिताः
अविश्वज्ञाः स्वात्मद्रुहो विश्वविन्नैव लङ्घयेत् ।।२९।।

नित्यं नैमित्तिकं तस्मान्मयि कर्मार्पयेद् बुधः ।
त्यक्त्वाऽहं ममताबुद्धिं परां गतिमवाप्नुयात् ।।३०।।

अनीर्ष्यन्तो भक्तिमन्तो ये मयोक्तमिदं शुभम् ।
अनुतिष्ठन्ति ये सर्वे मुक्तास्तेऽखिलकर्मभिः ।।३१।।

ये चैव नानुतिष्ठन्ति अशुभा हतचेतसः ।
ईर्ष्यमाणान् महामूढान्नष्टाँस्तान् विद्धि मे रिपून् ।।३२।।

तुल्यं प्रकृत्या कुरुते कर्म यज्ज्ञानवानपि ।
अनुयाति च तामेव ग्रहस्तत्र मुधा मतः ।।३३।।

कामश्चैव तथा क्रोधः खानामर्थेषु जायते ।
नैतयोर्वश्यतां यायादस्य विध्वंसकौ यतः।।३४।।

शस्तोऽगुणो निजो धर्मः साङ्गादन्यस्य धर्मतः ।
निजे तस्मिन्मृतिः श्रेयः परत्र भयदः परः ।।३५।।

वरेण्य उवाच

पुमान् यत् कुरुते पापं स हि केन नियुज्यते ।
अकाङ्क्षन्नपि हेरम्ब ! प्रेरितः प्रबलादिव ।।३६।।

श्रीगजानन उवाच

कामक्रोधौ महापापौ गुणद्वयसमुद्भवौ ।
नयन्तौ वश्यतां लोकान् विद्ध्येतौ द्वेषिणौ वरौ।।३७।।

आवृणोति यथा माया जगद्बाष्पो जलं यथा ।
वर्षामेघो यथा भानुं तद्वत् कामोऽखिलाँश्च रुट् ।।३८।।

मोहित भएका मानिसहरू फलका लागि कर्म गर्दछन्। तिनले परमात्मामा विश्वास गर्दैनन् र आफ्नै आत्मासँग द्रोह गर्दछन् । विश्ववेत्ता परमात्माले कर्मअनुसार फल प्रदान गर्नुहुन्छ, त्यस कारण ती आत्मद्रोहीहरूको कर्ममा कुनै व्यवधान खडा गर्नु हुँदैन ।।२९।। बुद्धिमान् मानिसले नित्य कर्म र नैमित्तिक कर्म दुबै मलाई अर्पण गर्नुपर्दछ । त्यसपछि मेरो कृपाबाट अहन्ता र ममता परित्याग गरी त्यसले परमगति प्राप्त गर्दछ । जुन मानिस ईर्ष्यारहित भई ममा भक्ति गर्दछन् र जुन मानिसले मैले बताएको उपदेशको पालन गर्दछन्, ती सबै कर्मबाट मुक्त भई परम पदमा प्राप्त हुन्छन् ।।३०-३१।। अशुभ कर्मद्वारा चित्तलाई विक्षिप्त बनाएका मानिसले मेरो उपदेश पालन गर्दैनन्। ती ईर्ष्याग्रस्त र नष्ट-भ्रष्ट मूर्खहरूलाई तपाईंले मेरा शत्रु हुन् भनेर बुझ्नुपर्दछ । ज्ञानवान् मानिसले यदि प्रकृतिकै अनुकूल भएर काम गर्दछ भने त्यो ज्ञानवान् पनि प्रकृतिकै पछि लाग्दछ। त्यसलाई आत्मातर्फ उन्मुख गराउन गरिने आग्रह व्यर्थ हुन्छ ।।३२-३३।। इन्द्रियद्वारा भोग्य पदार्थको भोगका लागि मानिसहरूका मनमा तीव्र आसक्ति र क्रोध पैदा हुन्छन् । त्यस्ता क्रोध र कामको वशमा पर्नुहुँदैन किनकि यी दुबै तत्त्व आत्माका विघातक हुन् ।।३४।। अरूको धर्ममा सम्बन्ध राख्नुभन्दा गुणहीन भए पनि आफ्नो धर्म महान् हुन्छ र कल्याण चाहने मानिसले स्वधर्मकै अनुसरण गर्नुपर्दछ । आफ्नो धर्म पालन गर्दा मृत्यु नै भए पनि त्यो कल्याणकारक हुन्छ। परधर्म इहलोक र परलोक दुबैमा भयदायक हुन्छ।।३५।।

**वरेण्यले भने** - 'हे हेरम्ब ! मानिसहरूले नचाहँदा नचाहँदै पनि अरूद्वारा बलपूर्वक अभिप्रेरित भएर जुन पाप गर्दछ त्यसमा त्यसलाई कसले नियुक्त गराउँछ ?' ।।३६।।

**श्रीगणेशले भन्नुभयो** - काम र क्रोध ठूला पापी तत्त्वहरू हुन्। यी दुबै रजोगुण र तमोगुणबाट पैदा हुन्छन् । यिनले मानिसलाई आफ्नो वशवर्ती बनाउँछन् । तपाईंले यी काम र क्रोधलाई ठूला वैरी भनी जान्नुपर्दछ ।।३७।। पानीले पोखरीलाई ढाकेझैं, वर्षाकालको बादलले सूर्य र मायाले संसारलाई ढाकेझैं काम र क्रोधले समस्त ज्ञानलाई ढाकिदिन्छन् ।।३८।। त्यसपछि

प्रतिपत्तिमतो ज्ञानं छादितं सततं द्विषा ।
इच्छात्मकेन तरसा दुष्पूरेण च शुष्मिणा ।।३९।।

आश्रित्य बुद्धिमनसी हीन्द्रियाणि स तिष्ठति ।
तैरेवाच्छादितप्रज्ञो ज्ञानिनं मोहयत्यसौ ।।४०।।

तस्मान्नियम्य तान्यादौ स मनांसि नरो जयेत् ।
ज्ञानविज्ञानयोः शान्तिकरं पापं मनोभवम् ।।४१।।

अतस्तानि पराण्याहुस्तेभ्यश्च परमं मनः ।
ततोऽपि हि परा बुद्धिरात्मा बुद्धेः परो मतः ।।४२।।

बुद्ध्वैवमात्मनात्मानं संस्तभ्यात्मानमात्मना ।
हत्वा शत्रुं कामरूपं परं पदमवाप्नुयात् ।।४३।।

बलवान् एवं वेगवान् र कहिले पनि तृप्त गराउन नसकिने कामरूप शत्रुले अग्निको रूप लिएर सम्पूर्ण ज्ञानलाई ढाकिदिन्छ र त्यो बुद्धि, मन र इन्द्रियको आश्रयमा रही प्राणीहरूमा चिरस्थायी बन्दछ । त्यस कामतत्त्वले बुद्धि, इन्द्रिय र मनको माध्यमबाट शास्त्रको अध्ययनबाट उत्पन्न प्रज्ञालाई ढाकिदिएर ज्ञानीलाई पनि मोहित बनाउँछ ।।३९-४०।। त्यस कारण सर्वप्रथम इन्द्रियलाई वशमा गरी मानिसले आफ्नो मनलाई जित्नु पर्दछ । मनबाट पैदा हुने पापले ज्ञान र विज्ञानलाई पनि समाप्त गर्दछ ।।४१।। तसर्थ इन्द्रिय महत्त्वपूर्ण हुन्छन् । इन्द्रियभन्दा मन महत्त्वपूर्ण हुन्छ । मनभन्दा बुद्धि महत्त्वपूर्ण हुन्छ । बुद्धिभन्दा आत्मा महत्त्वपूर्ण हुन्छ ।।४२।। यसरी आफैले आफैलाई चिनेर आफ्नो आत्मालाई विषयपराङ्मुख र स्थिर तुल्याई कामतत्त्वरूप शत्रुलाई निर्मूल गरेपछि साधकले परमपद प्राप्त गर्दछ ।।४३।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे 'कर्मयोगो'नाम द्वितीयोऽध्यायः ।।२।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कर्मयोगोपदेशो नामैकोनचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत कर्मयोगको उपदेश' शीर्षकान्वित एक सय उनन्चालीसौँ अध्याय पूर्ण भयो ।।१३९।।

ॐ

## चत्वारिंशदुत्तरशततमोऽध्यायः　　{ १४० अध्याय }

श्रीगजानन उवाच

पुरा सर्गादिसमये त्रैगुण्यं त्रितनुरहम् ।
निर्माय चैनमवदं विष्णवे योगमुत्तमम् ।।१।।
अर्यम्णो सोऽब्रवीत् सोऽपि मनवे निजसूनवे ।
ततः परम्परायातं विदुरेनं महर्षयः ।।२।।
कालेन बहुना चायं नष्टः स्याच्चरमे युगे ।
अश्रद्धेये ह्यविश्वास्यो विगीतव्यश्च भूमिप ।।३।।
एनं पुराभवं योगं श्रुतवानसि मन्मुखात् ।
गुह्याद् गुह्यतमं वेदरहस्यं परमं शुभम् ।।४।।

वरेण्य उवाच

साम्प्रतं चावतीर्णोऽसि गर्भतस्त्वं गजानन !
प्रोक्तवान् कथमेनं त्वं विष्णवे योगमुत्तमम् ।।५।।

श्रीगजानन उवाच

अनेकानि च ते जन्मान्यतीतानि ममापि च।
संस्मरे तानि सर्वाणि न स्मृतिस्तव वर्तते ।।६।।
मत्त एव महाबाहो जाता विष्ण्वादयः सुराः।
मय्येव विलयं यान्ति प्रलयेषु युगे युगे ।।७।।
अहमेव परो ब्रह्मा महारुद्रोऽहमेव च
अहमेव जगत् सर्वं स्थावरं जङ्गमं च यत् ।।८।।
अजोऽव्ययोऽहं भूतात्माऽनादिरीश्वर एव च ।
आस्थाय त्रिगुणां मायां भवामि बहुयोनिषु ।।९।।
अधर्मोपचयो धर्मापचयो हि यदा भवेत् ।
साधून् संरक्षितुं दुष्टाँस्ताडितुं सम्भवाम्यहम् ।।१०।।
उच्छिद्याधर्मनिचयं धर्मं संस्थापयाम्यहम् ।
हन्मि दुष्टाँश्च दैत्याँश्च नानालीलाकरो मुदा ।।११।।
वर्णाश्रमान् मुनीन् साधून् पालये बहुरूपधृक् ।
एवं यो वेत्ति सम्भूतिं मम दिव्यां युगे युगे ।।१२।।
तत्तत्कर्म च वीर्यं च मम रूपं समासतः ।
त्यक्त्वाहं ममताबुद्धिं न पुनर्भूः स जायते ।।१३।।

**श्रीगणेशले भन्नुभयो-** प्राचीन समयमा सृष्टिको आरम्भ हुँदा सत्त्व, रज र तमोगुणबाट निर्मित शरीर धारण गरी मैले त्रिगुणमय विश्वको निर्माण गरेपछि विष्णुलाई उत्तम योगविद्याको उपदेश गरेको थिएँ ।।१।। विष्णुले अर्यमालाई र अर्यमाले आफ्ना पुत्र मनुलाई बताएका थिए । त्यसपछि परम्परागत रूपमा त्यस योगशास्त्रलाई महर्षिहरूले पनि जान्दछन् ।।२।। हे राजन्! धेरै कालपछि कलियुगमा यो योग नष्ट हुनेछ । त्यस बेला यो योगशास्त्र अश्रद्धेय, अविश्वसनीय र अप्रशंसनीय पनि हुनेछ ।।३।। प्राचीन-कालमा मैले विष्णुलाई उपदेश गरेको यो योगशास्त्र अहिले तपाईंले मेरा मुखबाट सुन्नुभएको छ । यो गोपनीय पदार्थहरूमध्ये पनि अत्यन्त गोपनीय योगशास्त्र मङ्गलमय वेदको निष्कर्ष हो ।।४।।

**वरेण्यले भने -** 'हे गजानन ! तपाईं भर्खरै गर्भबाट पैदा हुनुभएको छ । तपाईंले पहिले विष्णुलाई यो योगशास्त्रको उपदेश कसरी गर्नुभयो ?' ।।५।।

**श्रीगणेशले भन्नुभयो -** हे राजन् ! तपाईंका र मेरा अनेक जन्म बितिसकेका छन् । मैले ती सबै जन्मका घटना संझिरहेको छु तर तपाईंलाई तिनको संझना छैन।।६।। हे महाबाहु ! मबाट नै विष्णु आदि देवता उत्पन्न भएका हुन् । युग-युगमा प्रलय हुँदा ती ममा नै विलीन हुने गर्दछन् ।।७।। म नै उत्तम देवता ब्रह्मा र महारुद्र शिव पनि हुँ। म नै जडात्मक र चेतनात्मक सम्पूर्ण संसार हुँ ।।८।। म अज छु, अव्यय छु, भूतात्मा छु र ईश्वरको रूपमा पनि रहन्छु । तीनवटा गुणबाट युक्त मायाको आश्रय लिएर म अनेक योनिमा पैदा हुन्छु ।।९।। जब संसारमा अधर्मको वृद्धि र धर्मको नाश हुन्छ, त्यस बेला सज्जनको रक्षा र दुर्जनको नाश गर्न म प्रकट हुन्छु ।।१०।। त्यस समयमा हर्षपूर्वक अनेक लीला गर्दै अधर्मको राशिलाई निर्मूलन गरेर धर्मको स्थापना गर्दछु । दुष्ट एवं दैत्यहरूको संहार पनि गर्दछु। अनेक रूप लिएर मैले वर्ण, आश्रम, मुनि र सज्जनहरूको रक्षा गर्दछु । जसले यसरी युग-युगमा धर्मरक्षाका लागि हुने मेरा दिव्य अवतारहरूका विषयमा जान्दछ र ती ती अवतारका कर्म र पराक्रमलाई समेत समग्रतया अवगत गर्दछ त्यो मानिस अहन्ताबुद्धि र ममताबुद्धिलाई परिहार गरी जन्म र मृत्युको चक्रमा पर्दैन ।।११-१३।। मेरा ती

निरीहा निर्भयारोषा मत्परा मद्व्यपाश्रयाः ।
विज्ञानतपसा शुद्धा अनेके मामुपागताः ।।१४।।

येन येन हि भावेन संसेवन्ते नरोत्तमाः ।
तथा तथा फलं तेभ्यः प्रयच्छाम्यव्ययः स्फुटम्।।१५।।

जनाः स्युरितरे राजन् ! मम मार्गानुयायिनः ।
तथैव व्यवहारं ते स्वेषु चान्येषु कुर्वते ।।१६।।

कुर्वन्ति देवताप्रीतिं वाञ्छन्तः कर्मणां फलम्
प्राप्नुवन्तीह ते लोके शीघ्रं सिद्धिं हि कर्मजाम् ।।१७।।

चत्वारो हि मया वर्णा रजःसत्त्वतमोंऽशतः ।
कर्मांशतश्च संसृष्टा मृत्युलोके मया नृप ।।१८।।

कर्तारमपि मां तेषामकर्तारं विदुर्बुधाः।
अनादिमीश्वरं नित्यमलिप्तं कर्मजैर्गुणैः।।१९।।

निरीहं योऽभिजानाति कर्म बध्नाति नैव तम् ।
चक्रुः कर्माणि बुद्ध्वैवं पूर्वं पूर्वं मुमुक्षवः।२०।।

वासनासहितादाद्यात् संसारकारणाद् दृढात् ।
अज्ञानबन्धनाज्जन्तुर्बुद्ध्वायं मुच्यतेऽखिलात् ।।२१।।

तदकर्म च कर्मापि कथयाम्यधुना तव।
यत्र मौनं गता मोहादृषयो बुद्धिशालिनः ।।२२।।

तत्त्वं मुमुक्षुणा ज्ञेयं कर्माकर्मविकर्मणाम् ।
त्रिविधानीह कर्माणि सुनिम्नैषां गतिः प्रिय! ।।२३।।

क्रियायामक्रियाज्ञानमक्रियायां क्रियामतिः।
यस्य स्यात् स हि मर्त्येऽस्मिँल्लोके मुक्तोऽखिलार्थदृक्।।२४।।

कर्माङ्कुरवियोगेन यः कर्माण्यारभेन्नरः।
तत्त्वदर्शननिर्दग्धक्रियमाहुर्बुधा बुधम् ।।२५।।

फलतृष्णां विहाय स्यात् सदा तृप्तो विसाधनः
उद्युक्तोऽपि क्रियां कर्तुं किञ्चिन्नैव करोति सः ।।२६।।

ती अवतार हुँदा कुनै किसिमको इच्छा नभएका, निर्भय, क्रोधहीन, ममा समर्पित र मेरै आश्रयमा रहेका विज्ञानमय र तपस्याद्वारा पवित्र अनेक भक्तहरू ममा नै समाहित भएका थिए ।।१४।। उत्तम मानिसहरूले मलाई जुन-जुन भावनाद्वारा भज्दछन् अव्ययरूप सम्पन्न मैले पनि ती ती भावअनुसारका फल प्रदान गर्दछु ।।१५।। हे राजन् ! जुन मानिस मेरो मार्गको अनुसरण गर्दछन् तिनले पनि आफन्त र अरू मानिसहरूमा मेरो मार्गअनुसार व्यवहार गर्दछन् ।।१६।। तिनले कर्मका फलको कामना गर्दै देवताको भक्ति गर्दछन् । यस लोकमा तिनले अतिशीघ्र ती ती कर्मका सिद्धि पनि प्राप्त गर्दछन् ।।१७।। हे निष्पाप राजा ! मैले संसारमा सत्त्व, रज, तम र कर्मको अंशबाट चार प्रकारका वर्णहरूको सृष्टि गरेको छु । विद्वान्हरूले म अनादि ईश्वरलाई ती चार वर्णको कर्ताका रूपमा स्वीकार गरेता पनि अकर्ता भनेर पनि चिन्दछन् । किनकि म ती कर्मका गुणबाट लिप्त हुँदिनँ । वास्तवमा जसले मलाई कुनै वासना वा इच्छा नभएको निरीह रूपमा जान्दछ त्यसलाई कर्मले आफ्नो बन्धनमा पार्न सक्दैन । यसैगरी जानेर पहिले मोक्षको कामना गर्ने साधकहरूले कर्म गरेका थिए ।।१८-२०।। यो कुरा जानेपछि कुनै पनि मानिस वासनामय संसारको बलियो कारण अज्ञानको बन्धनबाट मुक्त हुन्छ । अहिले म तपाइँलाई अकर्म र कर्मको विषयमा बताउनेछु । कर्म र अकर्मलाई छुट्याउने सन्दर्भमा बुद्धिमान् ऋषिहरू पनि मोहित भएर मौन रहेका थिए ।।२१-२२।। मोक्षको कामना गर्ने साधकले कर्म, अकर्म र विकर्मको रहस्य बुझ्नुपर्दछ । यस संसारमा कर्म, अकर्म र विकर्म गरी कर्मका तीन भेद हुन्छन् । यी कर्महरूको गति गहन छ । जुन मानिसले कर्ममा अकर्मको ज्ञान गर्दछन् र अकर्ममा पनि कर्मको ज्ञान गर्दछन्, ती यस मर्त्यलोकमा रहेका पूर्णकाम महात्मा हुन् र मुक्त पनि हुन्छन् ।।२३-२४।। कर्मको अंकुर समाप्त पारेर सफा भएपछि जसले शरीरधर्मका लागि मात्र कर्म आरम्भ गर्दछ, त्यो ज्ञानको साक्षात्कारबाट कर्म निर्मूलनमा समर्थ उत्तम विद्वान् हो भनी मुनिहरूले बताएका छन् ।।२५।। फलको तृष्णा नराखेर सदा तृप्त र सन्तुष्ट अवस्थामा रहने र कुनै साधन-स्रोतको संग्रह नगर्ने उत्तम साधकले शरीरधर्मका लागि कुनै कर्म गरे पनि केही गरेको हुँदैन ।।२६।। ईच्छाशून्य, वश्यात्मा

निरीहो निगृहीतात्मा परित्यक्तपरिग्रहः ।
केवलं वै गृहे कर्माचरन्नायाति पातकम् ।।२७।।
अद्वन्द्वोऽमत्सरो भूत्वा सिद्ध्यसिद्ध्योः समश्च यः ।
यथाप्राप्त्येह संतुष्टः कुर्वन् कर्म न बध्यते ।।२८।।
अखिलैर्विषयैर्मुक्तो ज्ञानविज्ञानवानपि ।
यज्ञार्थं तस्य सकलं कृतं कर्म विलीयते ।।२९।।
अहमग्निर्हविर्होता हुतं यन्मयि चार्पितम् ।
ब्रह्माप्तव्यं च तेनाथ ब्रह्मण्येव यतो रतः।।३०।।
योगिनः केचिदपरे दिष्टं यज्ञं वदन्ति च ।
ब्रह्माग्निरेव यज्ञो वै चेति केचन मेनिरे ।।३१।।
संयमाग्नौ परे भूप ! इन्द्रियाण्युपजुह्वति ।
खाग्निष्वन्ये तद्विषयान् शव्दादीनुपजह्वति ।।३२।।
प्राणानामिन्द्रियाणां च परे कर्माणि कृत्स्नशः ।
निजात्मरतिरूपेऽग्नौ ज्ञानदीप्ते प्रजुह्वति ।।३३।।
द्रव्येण तपसा वापि स्वाध्यायेनापि केचन।
तीव्रव्रतेन यतिनो ज्ञानेनापि यजन्ति माम् ।।३४।।
प्राणेऽपानं तथा प्राणमपाने प्रक्षिपन्ति ये ।
रुद्ध्वा गतीश्चोभयोस्ते प्राणायामपरायणाः ।।३५।।
जित्वा प्राणान् प्राणगतीरुपजुह्वति तेषु च ।
एवं नानायज्ञरता यज्ञध्वंसितपातकाः ।।३६।।
नित्यं ब्रह्म प्रयान्त्येते यज्ञाशेषामृताशिनः ।
अयज्ञकारिणो लोको नायमन्यः कुतो भवेत् ।।३७।।
कायिकादित्रिधाभूतान् यज्ञान् वेदे प्रतिष्ठितान्।
ज्ञात्वा तानखिलान् भूप! मोक्ष्यसेऽखिलबन्धनात् ।।३८।।
सर्वेषां भूप ! यज्ञानां ज्ञानयज्ञः परो मतः।
अखिलं लीयते कर्म ज्ञाने मोक्षस्य साधने ।।३९।।

र परिग्रहशून्य साधक केवल शरीरधर्मका लागि गृहकर्म गर्दछ भने त्यसलाई कर्मजनित कुनै पनि पाप लाग्दैन।।२७।। द्वन्द्वरहित र ईर्ष्यारहित भएर सिद्धि एवं असिद्धिमा समान अवस्थामा रहने र प्राप्त पदार्थमा सन्तुष्ट रहने साधक कर्म गरेर पनि कर्मको बन्धनमा पर्दैन ।।२८।। सम्पूर्ण विषयहरूबाट विरक्त र ज्ञानविज्ञान सम्पन्न साधकले ईश्वरीय यज्ञसम्पादनका लागि कुनै कर्म गर्दछ भने पनि त्यस कर्मको फलबाट त्यो बन्धनमा पर्दैन। त्यो कर्म त्यत्तिकै विलीन हुन्छ।।२९।। ब्रह्मयज्ञमा त्यस साधकले प्रार्थना गर्दछ - हे ईश्वर ! म स्वयं अग्नि हुँ, हवि पनि म हुँ, यजमान पनि म हुँ, जुन कुरा मैले यस यज्ञमा हजुरलाई अर्पण गरें त्यसबाट मैले केही प्रतिफल चाहेको छैन अपितु ब्रह्मतत्त्वमात्र मेरो लक्ष्य हो । किनभने म ब्रह्ममा नै निरत रहेको छु ।।३०-३१।। केही योगीहरूले दैवलाई यज्ञ मानेका छन् अरू कसैले ब्रह्माग्नि नै यज्ञ हो भनेका छन्। हे राजन् ! कुनै साधकले संयमको अग्निमा इन्द्रियलाई चरु बनाएर हवन गर्दछन् ।।३२।। कसैले इन्द्रियरूप अग्निमा शब्द, रूप, रस, स्पर्श र गन्धरूप विषयको हवन गर्दछन् । अन्य साधकहरूले प्राण र इन्द्रियका कर्मलाई ज्ञानद्वारा देदीप्यमान आत्मभक्तिरूप यज्ञमा हवन गर्दछन्।।३३।। केही योगीहरूले द्रव्यद्वारा मेरो यज्ञ गर्दछन् र कसैले तपस्याद्वारा त्यो यज्ञ सम्पन्न गर्दछन् । कोही स्वाध्याय यज्ञ गरिरहेका हुन्छन्। कोही कठोर व्रत धारण गरी त्यो यज्ञ गर्दछन् र कसैले ज्ञानद्वारा मेरो यज्ञ गर्दछन् ।।३४।। जुन साधकले प्राणवायुमा अपान वायु र अपानवायुमा प्राणवायुको प्रवेश गराउँछन् । फेरि दुबै वायुको गति अवरुद्ध गरी प्राणायाममा लागिरहन्छन् तिनले प्राणमाथि विजय गरी प्राणका गतिहरूको हवन गर्दछन् ।।३५।। यसरी अनेक थरि यज्ञमा लागिरहने यज्ञद्वारा सम्पूर्ण पापध्वंस गरेका र यज्ञमा शेष रहेको पदार्थलाई अमृत मानेर भोजन गर्ने महात्माहरू नित्यब्रह्ममा प्राप्त हुन्छन्। जसले कुनै यज्ञ गर्दैन त्यसका लागि यही पृथिवी लोक पनि आफ्नो हुँदैन भने अरू लोकको प्राप्ति र अन्य विशिष्ट प्राप्तिको कुरा कसरी सम्भव छ ?।।३६-३७।। हे राजन् ! कायिक, वाचिक र मानसिक यज्ञ जसको विषयमा वेदमा व्यापक प्रतिष्ठा छ ती ज्ञेय विषय हुन्। ती सबैलाई राम्ररी जानेर तपाईं संसारबन्धनबाट मुक्त हुनुहुनेछ ।।३८।। हे राजन् ! सबै यज्ञहरूमा ज्ञानयज्ञ उत्तम मानिएको छ । मोक्षको साधन ज्ञानयज्ञमा सबै कर्महरू लीन हुन्छन्। हे पुरुषसिंह! त्यो ज्ञान नै जान्नुपर्ने विषय हो।

तज्ज्ञेयं पुरुषव्याघ्र ! प्रश्नेन नतितः सताम् ।
शुश्रूषया वदिष्यन्ति सन्तस्तत्त्वविशारदाः ।।४०।।

नानासङ्गान् जनः कुर्वन्नैकं साधुसमागमम् ।
करोति तेन संसारे बन्धनं समुपैति सः ।।४१।।

सत्सङ्गाद् गुणसम्भूतिरापदां लय एव च ।
स्वहितं प्राप्यते सर्वैरिहलोके परत्र च ।।४२।।

इतरत् सुलभं राजन् ! सत्सङ्गोऽतीव दुर्लभः ।
यज्ज्ञात्वा न पुनर्बन्धमेति ज्ञेयं ततो यतः ।।४३।।

ततः सर्वाणि भूतानि स्वात्मन्येवाभिपश्यति।
अतिपापरतो जन्तुस्ततस्तस्मात् प्रमुच्यते ।।४४।।

विविधान्यपि कर्माणि ज्ञानाग्निर्दहति क्षणात् ।
प्रसिद्धोऽग्निर्यथा सर्वं भस्मतां नयति क्षणात् ।।४५।।

न ज्ञानसमतामेति पवित्रमितरन्नृप !
आत्मन्येवावगच्छन्ति योगात् कालेन योगिनः।।४६।।

भक्तिमानिन्द्रियजयी तत्परो ज्ञानमाप्नुयात् ।
लब्ध्वा तत्परमं मोक्षं स्वल्पकालेन यात्यसौ ।।४७।।

भक्तिहीनोऽश्रद्दधानः सर्वत्र संशयी तु यः।
तस्य शं नापि विज्ञातमिह लोके न चापरे ।।४८।।

आत्मज्ञानरतं ज्ञाननाशिताखिलसंशयम् ।
योगास्ताखिलकर्माणं बध्नन्ति भूप ! तानि न ।।४९।।

ज्ञानखड्गप्रहारेण सम्भूतामज्ञतां बलात् ।
छित्त्वाऽन्तःसंशयं तस्माद् योगयुक्तो भवेन्नरः ।।५०।।

सज्जनहरूसँग प्रश्न गरेर सज्जनहरूलाई प्रणाम गरेर र सज्जनहरूको सेवा गरेर मात्र त्यो ज्ञान प्राप्त हुनसक्छ । प्रश्न, वन्दना र सेवा गरेपछि तपाईंलाई तत्त्ववेत्ता ज्ञानी पुरुषहरूले त्यही ज्ञानको उपदेश गर्नेछन् ।।३९-४०।। कुनै मानिसले जीवनमा विभिन्न प्रकृतिका मानिसहरूको सङ्गति गर्दछ तर सज्जनको सङ्गति गर्दैन भने त्यो मानिस संसारमा बन्धनमा प्राप्त हुन्छ ।।४१।। यो लोक र परलोकमा सत्सङ्गबाट गुणको वृद्धि हुन्छ, आपत्तिको विनाश हुन्छ र सबैले आफ्नो हित हुने अभीष्ट प्राप्त गर्दछन् । संसारमा अरू विषय सुलभ हुन्छन् तर सत्सङ्ग अत्यन्त दुर्लभ हुन्छ । सत्सङ्गबाट ज्ञान प्राप्त गरेपछि मानिस फेरि बन्धनमा पर्दैन । त्यसपछि फेरि जान्नुपर्ने परब्रह्म परमात्माको निकटमा प्राप्त हुन्छ ।।४२-४३।। परमात्माको सामीप्यबाट सम्पूर्ण प्राणीहरूलाई यसले आफैंभित्र दर्शन गर्दछ । यस आत्मज्ञानबाट महापापी प्राणी पनि पापमुक्त बन्दछन् ।।४४।। लौकिक अग्निले एकै छिनमा सम्पूर्ण काठ आदि पदार्थलाई खरानी बनाएझैं ज्ञानाग्निले पनि पापराशिलाई एकै छिनमा भस्म गर्दछ ।।४५।। हे राजन् ! संसारमा ज्ञानसमान पवित्र वस्तु केही पनि छैन । योगीहरूले दीर्घकालसम्म साधना गरेर आफूभित्र नै ज्ञानोदय भएको अनुभव गर्दछन् ।।४६।। परमेश्वरमा भक्ति गर्ने, इन्द्रियमाथि विजय गर्ने र ज्ञानप्राप्तिका लागि नित्य प्रयत्नशील रहने साधकले अवश्य ज्ञान प्राप्त गर्दछ । पवित्र ज्ञान पाएपछि त्यो साधक छिटै परम मोक्षमा प्राप्त हुन्छ।।४७।। भक्तिहीन, श्रद्धाहीन र संशयात्मा मानिसले इहलोक र परलोकमा पनि सुख एवं विज्ञानको अमृत पनि पाउँदैन ।।४८।। आत्मज्ञानमा निरत, ज्ञानद्वारा सम्पूर्ण संशय नाश गर्ने, योगद्वारा सम्पूर्ण कर्म ध्वस्त गर्ने मानिसलाई कुनै पनि कर्मले बन्धनमा पार्दैन ।।४९।। त्यस कारण साधकले ज्ञानको तरबार नचाउँदै बलपूर्वक अज्ञानमाथि प्रहार गर्नुपर्दछ र त्यसबाट भित्री सन्देहलाई काटेर योगसम्पन्न बन्नुपर्दछ ।।५०।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीगदादिश्रीगन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे ब्रह्मार्पणयोगो नाम तृतीयोध्यायः ।।३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे ब्रह्मार्पणयोगोपदेशो नाम चत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनुदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत ब्रह्मार्पणयोगको उपदेश' शीर्षकान्वित एक सय चालीसौं अध्याय पूर्ण भयो ।।१४०।।

ॐ

## एकचत्वारिंशदुत्तरशततमोऽध्यायः { १४१ अध्याय }

वरेण्य उवाच

संन्यस्तिश्चैव योगश्च कर्मणां वर्ण्यते त्वया ।
उभयोर्निश्चितं त्वेकं श्रेयो यद् वद मे प्रभो ।।१।।

श्रीगजानन उवाच

क्रियायोगो वियोगश्चाप्युभौ मोक्षस्य साधने ।
तयोर्मध्ये क्रियायोगस्त्यागात्तस्य विशिष्यते ।।२।।
द्वन्द्वदुःखसहोऽद्वेष्टा यो न काङ्क्षति किञ्चन ।
मुच्यते बन्धनात् सद्यो नित्यं संन्यासवान् सुखम् ।।३।।
वदन्ति भिन्नफलकौ कर्मणस्त्यागसङ्ग्रहौ ।
मूढाल्पज्ञास्तयोरेकं संयुञ्जीत विचक्षणः ।।४।।
यदेव प्राप्यते त्यागात् तदेव योगतः फलम् ।
सङ्ग्रहं कर्मणो योगं यो विन्दति स विन्दति ।।५।।
केवलं कर्मणां न्यासं संन्यासं न विदुर्बुधाः ।
कुर्वन्ननिच्छया कर्म योगी ब्रह्मैव जायते ।।६।।
निर्मलो यतचित्तात्मा जितखो योगतत्परः ।
आत्मानं सर्वभूतस्थं पश्यन् कुर्वन् न लिप्यते ।।७।।
तत्त्वविद् योगयुक्तात्मा करोमीति न मन्यते ।
एकादशानीन्द्रियाणि कुर्वन्ति कर्मसङ्ख्यया ।।८।।
तत्सर्वमर्पयेद् ब्रह्मण्यपि कर्म करोति यः ।
न लिप्यते पुण्यपापैरभ्रैर्भानुर्यथाभ्रगः ।।९।।
कायिकं वाचिकं बौद्धमैन्द्रियं मानसं तथा ।
त्यक्त्वाशां कर्म कुर्वन्ति योगज्ञाश्चित्तशुद्धये ।।१०।।
योगहीनो नरः कर्म फलेहया करोत्यलम् ।
बद्ध्यते कर्मबीजैः स ततो दुःखं समश्नुते ।।११।।

**वरेण्यले भने** – हे प्रभो ! कर्मयोग र कर्मसंन्यास दुबैको हजुरले वर्णन गर्नुभएको छ । ती दुबैमध्ये कुन श्रेयस्कर हुन्छ ? उपदेश गर्नुहोस् ।।१।।

**श्रीगणेशले भन्नुभयो** – कर्मयोग र कर्मवियोग दुबै मोक्षका साधन हुन् । तीमध्ये कर्मयोग नै कर्मवियोगभन्दा उत्तम मानिन्छ। द्वन्द्व र दुःखलाई सहने, द्वेष नगर्ने, कुनै पनि वस्तुको कामना नगर्ने, नित्य-संन्याससम्पन्न साधक छिट्टै आनन्दपूर्वक बन्धनबाट मुक्त हुन्छ ।।२-३।। मूढहरू नै अल्पज्ञानका कारण बन्धनमा पर्दछन् । कर्मयोग र कर्मसंन्यासका भिन्दाभिन्दै फल हुन्छन् भन्ने भनाइ मूर्खहरूको रहेको छ तर विद्वान् एवं बुद्धिमानले ती दुईमध्ये एउटा अँगालेर साधना गर्दछन् ।।४।। त्यस साधनाको फल एउटै हुन्छ । जुन फल कर्मसंन्यासबाट प्राप्त हुन्छ त्यही फल कर्मयोगबाट पनि प्राप्त हुन्छ । कर्महरूको संग्राहक कर्मयोगको रहस्य जसले बुझेको हुन्छ त्यसले परब्रह्मलाई प्राप्त गर्दछ ।।५।। केवल कर्मको त्यागरूप संन्यासलाई संन्यास भनिंदैन अपितु कर्मयोग पनि संन्यास नै कहलाउँछ। अनिच्छापूर्वक कर्म सम्पादन गर्ने कर्मयोगी ब्रह्मरूप नै हुन्छ ।।६।। निर्मल चित्त भएका, आत्मालाई वशमा राख्ने, इन्द्रियजयी, योगसाधनामा तत्पर रहने र सम्पूर्ण प्राणीहरूमा आत्माको दर्शन गर्ने साधक कर्म गरेर पनि कर्ममा लिप्त हुँदैन ।।७।। तत्त्ववेत्ताले अर्थात् आत्मालाई योगमा लगाउने साधकले कर्म गरेर पनि म गर्दछु भन्दैन । क्रमशः एघार इन्द्रियहरूले कर्म गर्दछन्, म तीभन्दा अलग छु भन्ने भावना राखेर साधकले आफूले गरेका सम्पूर्ण कर्मलाई ब्रह्ममा अर्पण गर्दछ भने त्यो साधक बादलका बीचमा रहेको सूर्य बादलले लिप्त नभएझैं पुण्य र पापद्वारा लिप्त हुँदैन ।।८-९।। योगका ज्ञाताहरू चित्तको शुद्धिका लागि फलाशापरित्याग गरेर शरीर, मन, वाणी, बुद्धि र इन्द्रियका कर्म गर्दछन् ।।१०।। योगहीन मानिस फलको आशा राखेर कर्म गर्दछ । योग नभएका कारण त्यसले कर्मका बीजहरूबाट बन्धनमा परी दुःखभोग गर्दछ ।।११।।

मनसा सकलं कर्म त्यक्त्वा योगी सुखं वसेत् ।
न कुर्वन् कारयन् वापि नन्दन् स्वभ्रे सुपत्तने ।।१२।।

न क्रिया न च कर्तृत्वं कस्यचित् सृज्यते मया ।
न क्रियाबीजसम्पर्कः शक्त्या तत् क्रियतेऽखिलम् ।।१३।।

कस्यचित् पुण्यपापानि न स्पृशामि विभुर्नृप !
ज्ञानमूढा विमुह्यन्ति मोहेनावृतबुद्धयः ।।१४।।

विवेकेनात्मनो ज्ञानं येषां नाशितमात्मना ।
तेषां विकाशमायाति ज्ञानमादित्यवत्परम् ।।१५।।

मन्निष्ठा मद्धियोऽत्यन्तं मच्चित्ता मयि तत्पराः ।
अपुनर्भवमायान्ति विज्ञाननाशितैनसः ।।१६।।

ज्ञानविज्ञानसम्पन्ने द्विजे गवि गजादिषु ।
समेक्षणा महात्मानः पण्डिताः श्वपचे शुनि ।।१७।।

वश्यः स्वर्गो जगत् तेषां जीवन्मुक्ताः समेक्षणाः ।
यतोऽदोषं ब्रह्मसमं तस्मात् तैस्तद्वशीकृतम् ।।१८।।

प्रियाप्रिये प्राप्य हर्षद्वेषौ ये प्राप्नुवन्ति न ।
ब्रह्माश्रिता असम्मूढा ब्रह्मज्ञाः समबुद्धयः ।।१९।।

वरेण्य उवाच

किं सुखं त्रिषु लोकेषु देवगन्धर्वयोनिषु ।
भगवन् ! कृपया तन्मे वद विद्याविशारद ।।२०।।

गणेश उवाच

आनन्दमश्नुते सक्तः स्वात्मारामो निजात्मनि ।
अविनाश्यं सुखं तद्धि न सुखं विषयादिषु ।।२१।।

विषयोत्थानि सौख्यानि दुःखानां तानि हेतवः ।
उत्पत्तिनाशयुक्तानि तत्रासक्तो न तत्त्ववित् ।।२२।।

कारणे सति कामस्य क्रोधस्य सहते च यः ।
तौ जेतुं वर्ष्मविरहात् स सुखं चिरमश्नुते ।।२३।।

योगीले भने मनबाट सम्पूर्ण कर्मलाई परित्याग गरी सुखानुभूति गर्दछ। त्यसले निर्मल आवास अथवा नगरमा बसी न कर्म गर्छ, न त कर्म गर्न अभिप्रेरित गर्छ अपितु तटस्थ भावमा रही आत्मानन्दमा रमाउँछ ।।१२।। हे राजन् ! म अन्तर्यामी छु र मैले कसैका पुण्य र पापको स्पर्श गर्दिन । मोहद्वारा बुद्धि ढाकिएका अज्ञानी मूढहरू मेरो स्वरूप निर्णय गर्ने सम्बन्धमा मोहित हुन्छन् र आफ्नो मनअनुसार वर्णन गर्दछन्।।१३-१४।। आत्माको अनुसन्धान गर्ने क्रममा आफ्नै विवेकद्वारा जसले आत्मामा रहेको अज्ञान नाश गरेका छन् त्यस्ता साधकहरूको ज्ञान सूर्यझैं विकसित र ज्योतिर्मय हुन्छ । कर्मयोगद्वारा पाप नाश गरेका, ममा श्रद्धा राख्ने, ममा बुद्धि अर्पित गर्ने, ममा चित्त लगाउने र मेरै कार्य-सम्पादनमा तत्पर रहने योगीहरूले फेरि जन्म लिंदैनन्।।१५-१६।। ज्ञान र योगले सम्पन्न ब्राह्मण, गाई, हात्ती आदि विशालकाय प्राणी, चाण्डाल र कुकुरमा समेत समदृष्टि राख्ने महात्माहरू पण्डित कहलाउँछन् ।।१७।। ती समदृष्टि भएका विद्वान्हरू जीवन्मुक्त मानिन्छन् र जगत् एवं स्वर्ग दुवैलाई आफ्नो वशमा पार्दछन् ।।१८।। ब्रह्मजस्तो निर्दुष्ट तत्त्वमा अधिकार प्राप्त गरेका, ब्रह्ममा आश्रित, मोहहीन र समबुद्धिसम्पन्न ब्रह्मज्ञहरूले प्रिय र अप्रियको उपलब्धिमा हर्ष र विषादको अनुभव गर्दैनन् ।।१९।।

**वरेण्यले भने** - विद्याविशारद हे प्रभु ! स्वर्ग-मर्त्य र पातालका देव, गन्धर्व, मनुष्य, नाग आदि योनिहरूमा कस्तो सुख अनुभूतिको विषय बन्दछ ? कृपया उपदेश गर्नुहोस् ।।२०।।

**श्रीगणेशले भन्नुभयो** - आफ्नो आत्मामा रमाउने, आत्माराम योगीले जुन अविनाशी सुख प्राप्त गर्दछन् त्यो सुख विषयभोगबाट प्राप्त हुँदैन । विषयभोगबाट प्राप्त हुने सुख दुःखका कारण बन्दछन् । ती विषयसुख उत्पत्ति र विनाशले युक्त हुन्छन् । तिनमा आसक्त हुने मानिसले तत्त्वज्ञान गर्न सक्दैन ।।२१-२२।। क्रोध र कामका कारण उत्पन्न भएका अमूर्त प्रहारलाई शारीरिक दृष्टिबाट परास्त गर्न सकिंदैन। काम र क्रोधका प्रहारलाई सहनुबाहेक अथवा तदनुसार व्यवहार गर्नु बाहेक अर्को उपाय हुँदैन । जसले काम र क्रोधलाई सहन गर्दछ, त्यस मानिसले चिरसुख प्राप्त गर्दछ । त्यो साधक आफ्नै

अन्तर्निष्ठोऽन्त:प्रकाशोऽन्त:सुखोऽन्तोरतिर्लभेत् ।
असन्दिग्धोऽक्षयं ब्रह्म सर्वभूतहितार्थकृत् ।।२४।।

जेतार: षड्रीणां ये शमिनो दमिनस्तथा ।
तेषां शमं ततो ब्रह्म स्वात्मज्ञानां विभात्यहो ।।२५।।

आसनेषु समासीनस्त्यक्त्वेमान् विषयान् बहि: ।
संस्तभ्य भृकुटीमास्ते प्राणायामपरायण: ।।२६।।

प्राणायामं तु संरोधं प्राणापानसमुद्भवम् ।
वदन्ति मुनयस्तं च त्रिधाभूतं विपश्चित: ।।२७।।

प्रमाणं भेदतो विद्धि लघु मध्यममुत्तमम् ।
दशभिर्द्व्यधिकैर्वर्णै: प्राणायामो लघु: स्मृत: ।।२८।।

चतुर्विंशत्यक्षरो यो मध्यम: स उदाहृत: ।
षट्त्रिंशल्लघुवर्णो य उत्तम: सोऽभिधीयते ।।२९।।

सिंहं शार्दूलकं वापि मत्तेभं मृदुतां यथा ।
नयन्ति प्राणिनस्तद्वत् प्राणापानौ सुसाधयेत् ।।३०।।

पीडयन्ति मृगाँस्ते न लोकान् वश्यं गता नृप !
दहत्येनस्तथा वायु: संस्तब्धो न च तत्तनुम् ।।३१।।

यथा यथा नर: कश्चित्सोपानावलिमाक्रमेत् ।
तथा तथा वशीकुर्यात् प्राणापानौ हि योगवित् ।।३२।।

पूरकं कुम्भकं चैव रेचकं च ततोऽभ्यसेत् ।
अतीतानागतज्ञानी तत: स्याज्जगतीतले ।।३३।।

प्राणायामैर्द्वादशभिरुत्तमैर्धारणा मता ।
योगस्तु धारणे द्वे स्याद् योगीशस्तु सदाऽभ्यसेत्।।३४।।

आत्मामा आसक्त हुन्छ र आत्माको प्रकाशद्वारा प्रकाशित हुन्छ। त्यसले आत्माको अनन्त सुख प्राप्त गर्दछ। आफै आफ्नो आत्मतत्त्वलाई भज्दछ । यसमा कुनै सन्देह छैन । सबै प्राणीको हितमा समर्पित हुने त्यस साधकले अविनाशी ब्रह्मको परम सुख प्राप्त गर्दछ ।।२३-२४।। काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यनामक ६ प्रकारका शत्रुहरूका विजेता, शम-दमसम्पन्न ब्रह्मज्ञानीहरूका चारैतिर ब्रह्मतत्त्वमात्र शोभायमान हुन्छ ।।२५।। आसनहरूमा आसीन योगी विषयलाई बाहिर फ्याँकिर भृकुटी निश्चल गराई प्राणायाममा समर्पित हुन्छ ।।२६।। प्राणायामको अर्थ प्राणवायु र अपानवायुको निरोध नै हो । विद्वान् मुनिहरूले प्राणायामलाई तीन भेदमा वर्गीकरण गरेका छन् - लघुप्राणायाम, मध्यमप्राणायाम र उत्तमप्राणायाम । बाह्र अक्षरको उच्चारणमा लाग्ने जुन समय हो त्यस समयसम्म रहने प्राणायामलाई लघु-प्राणायाम भनिन्छ ।।२७-२८।। चौबीस अक्षरको उच्चारणमा लाग्ने समय बराबरको प्राणायामलाई मध्यमप्राणायाम भनिन्छ र छत्तीस वर्णको उच्चारणमा लाग्ने समय बराबरको प्राणायाम उत्तम प्राणायाम कहलाउँछ ।।२९।। जसरी मानिसहरूले सिंह, बाघ र मत्ता हात्तीलाई पनि युक्तिबाट पगालेर बशमा ल्याउँछन्। त्यसरी प्राण र अपानलाई वशमा ल्याउन साधकले निरन्तर अभ्यास गर्नुपर्दछ ।।३०।। युक्तिबाट वशमा आएका ती सिंह, हात्ती आदि प्राणीले मृग र अरू प्राणीहरूलाई जसरी सताउँदैनन् त्यसरी नै प्राणायाम साधनाबाट वशीभूत भएका प्राण र अपानले साधकलाई सताउँदैनन् । त्यसकारण साधकले प्राण र अपानलाई वशीभूत तुल्याउनुपर्दछ । प्राणायाम गर्दा रोकिने प्राणवायुले पापलाई डढाउँछ तर शरीरलाई केही पनि गर्दैन ।।३१।। जसरी मानिसहरू घर अथवा मन्दिर कतै आरोहण गर्दा क्रमश: सिंढीमा पाइला राख्दै अगाडि बढ्छन् । त्यसैगरी योगीले पनि प्राण र अपानलाई क्रमश: वशीभूत गर्नुपर्दछ ।।३२।। प्राण र अपानलाई वशीभूत गरेपछि पूरक, कुम्भक र रेचकको अभ्यास गर्नुपर्दछ। प्राणायाममा सफल भएपछि त्यो साधक जगत्मा भूत र भविष्यको ज्ञाताको रूपमा विख्यात हुन्छ ।।३३।। बाह्र उत्तम प्राणायाममा जुन समय लाग्दछ त्यो बराबरको समय लाग्ने योगको अङ्गलाई धारणा भनिन्छ। दुई धारणा बराबरको समयलाई योग भनिन्छ।

एवं यः कुरुते राजँस्त्रिकालज्ञः स जायते ।
अनायासेन तस्य स्याद् वश्यं लोकत्रयं नृप ।।३५।।

ब्रह्मरूपं जगत्सर्वं पश्यति स्वान्तरात्मनि ।
एवं योगश्च संन्यासः समानफलदायिनौ ।।३६।।

जन्तूनां हितकर्तारं कर्मणां फलदायिनम् ।
मां ज्ञात्वा मुक्तिमाप्नोति त्रैलोक्यस्येश्वरं विभुम्।।३७।।

योगीले नित्य धारणा गर्नुपर्दछ ।।३४।। जसले यसरी योगको अभ्यास गर्छ त्यो भूत, भविष्य र वर्तमानको वेत्ता बन्दछ । त्यसले सहजरूपमा नै स्वर्ग, मर्त्य र पाताललाई वशवर्ती बनाउँछ ।।३५।। त्यसले आफ्नै आत्मामा ब्रह्मरूप जगत्को दर्शन गर्दछ । यसरी हेर्दा कर्मयोग र कर्मसंन्यास दुबै फलदायक सिद्ध हुन्छन् ।।३६।। योगसाधकले योगसाधना गर्दै प्राणीमात्रको हितकर्ता, कर्मको फलदाता र त्रिलोकीको स्वामी म श्रीगणेशरूप परमात्मालाई जानेर मुक्ति पद प्राप्त गर्दछ ।।३७।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे कर्मसंन्यासयोगो नाम चतुर्थोऽध्यायः ।।४।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कर्मसंन्यासयोगोपदेशो नामैकचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत कर्मसंन्यासयोगको उपदेश' शीर्षकान्वित एक सय एकचालीसौं अध्याय पूर्ण भयो ।।१४१।।

ॐ

## द्विचत्वारिंशदुत्तरशततमोऽध्यायः　　{ १४२ अध्याय }

**श्री गजानन उवाच**

श्रौतस्मार्तानि कर्माणि फलं नेच्छन् समाचरेत् ।
शस्तः स योगी राजेन्द्र ! अक्रियाद् योगमाश्रितात्।।१।।

योगप्राप्त्यै महाबाहो ! हेतुः कर्मैव मे मतम् ।
सिद्धयोगस्य संसिद्ध्यै हेतू शमदमौ मतौ ।।२।।

इन्द्रियार्थांश्च सङ्कल्प्य कुर्वन् स्वस्य रिपुर्भवेत् ।
एताननिच्छन् यः कुर्वन् सिद्धिं योगी स सिद्ध्यति।।३।।

सुहृत्त्वे च रिपुत्वे च उद्धारे चैव बन्धने ।
आत्मनैवात्मनो ह्यात्माऽनात्मा भवति कश्चन ।।४।।

मानेऽपमाने दुःखे च सुखे सुहृदि साधुषु ।
मित्रेऽमित्रेऽप्युदासीने द्वेष्ये लोष्टे च काञ्चने ।।५।।

समो जितात्मा विज्ञानी ज्ञानीन्द्रियजयावहः ।
अभ्यसेत् सततं योगं तदा युक्ततमो हि सः ।।६।।

तप्तः श्रान्तो व्याकुलो वा क्षुधितो व्यग्रचित्तकः ।
कालेऽतिशीतेऽत्युष्णे वाऽनिलाग्न्यम्बुसमाकुले ।।७।।

सध्वनावतिजीर्णे गोस्थाने साग्नौ जलान्तिके ।
कूपकूले श्मशाने च नद्यां भित्तौ च मर्मरे ।।८।।

चैत्ये सवल्मीके देशे पिशाचादिसमावृते ।
नाभ्यसेद् योगविद् योगं योगी ध्यानपरायणः ।।९।।

स्मृतिलोपश्च मूकत्वं बाधिर्यमन्धता ज्वरः।
जडता जायते सद्यो दोषाज्ञानाद्धि योगिनः ।।१०।।

एते दोषाः परित्याज्या योगाभ्यसनशालिना ।
अनादरे हि चैतेषां स्मृतिलोपादयो ध्रुवम् ।।११।।

**श्रीगणेशले भन्नुभयो** – साधकले फलको इच्छा परित्याग गरी वेदसम्मत र धर्मशास्त्रसम्मत कर्म गर्नुपर्दछ । कर्मयोगमा संलग्न योगी क्रियाहीन संन्यासी अथवा योगीभन्दा उत्तम मानिन्छ ।।१।। हे राजन् ! योगप्राप्तिका लागि उत्तम कारण कर्मयोग नै हो । योगको सिद्धिका लागि शम र दमलाई कारण मानिएको छ ।।२।। इन्द्रियभोगको परिकल्पना गरी कर्म गर्ने मानिस आफ्नै लागि आफै शत्रु बन्दछ । इन्द्रियका विषयको कामना नगरी जसले कर्म गर्दछ, त्यो योगी सिद्धयोगी कहलाउँछ ।।३।। मित्रता, शत्रुता, उद्धार, बन्धन आदिमा आफ्नै आत्माद्वारा आत्मतत्त्वलाई चिन्नुपर्दछ । कुनै पनि प्राणी आत्माभन्दा भिन्न हुँदैन ।।४।। मान–अपमान, सुख–दुःख, आत्मीयजन, सज्जन, मित्र, शत्रु, तटस्थ, द्वेषी, सुवर्ण र ढेलामा समान व्यवहार गरी आफ्नो आत्मालाई वशमा राख्दै योगसम्पन्न ज्ञानी र इन्द्रियविजयी भई योगाभ्यास गर्ने साधक युक्तरूप योगी कहलाउँछ ।।५–६।। चिन्ताले सन्तप्त, परिश्रान्त, व्याकुल, भोकले पीडित, व्यग्रचित्त मानिसले योगाभ्यास गर्नु हुँदैन । धेरै चिसो भएको समयमा र धेरै गर्मी भएको समयमा पनि योगाभ्यास गर्नुहुँदैन । हावा, अग्नि र पानीको उग्रता भएको समयमा पनि योगाभ्यास गर्नु हुँदैन ।।७।। शब्द आइरहने ठाउँ, पुरानो गोठ, अग्नि भएको ठाउँ, जलको नजिकमा रहेको ठाउँ, कुवाको छेउ, मसानघाट, नदीको तीर, पुरानो भित्ताको आड, सुकेका पातको मर्मर ध्वनि भइरहने अशान्त स्थल, चैत्य, धमिराले माटो उठाएको ठाउँ र पिशाचबहुल क्षेत्रमा योग एवं ध्यानमा समर्पित योगवेत्ताले योगाभ्यास गर्नु हुँदैन । ती ठाउँमा अभ्यास गर्नाले स्मृतिनाश, लाटोपन, बहिरोपन, सुस्त मनस्थिति, ज्वर र जडताजस्ता दोष पैदा हुनसक्छन् । यी ठाउँमा सम्भावित दोषहरूको पहिचान नगरी अभ्यास गर्नाले साधकको साधनामा विघ्न आइलाग्छ । योगाभ्यासमा मन लगाउने योगीले उक्त दोषहरूको त्याग गरेरमात्र अभ्यास गर्नुपर्दछ । दोषको बेवास्ता गरी कसैले अभ्यास गर्दछ भने माथि बताएका स्मृतिनाशजस्ता दुष्परिणाम आइलाग्न

नातिभुञ्जन् सदा योगी नाभुञ्जन्नातिनिद्रितः ।
नातिजाग्रत् सिद्धिमेति भूप ! योगं सदाऽभ्यसन्।।१२।।

सङ्कल्पजाँस्त्यजेत् कामान् नियताहारजागरः ।
नियम्य खगणं बुद्ध्या विरमेत शनैः शनैः ।।१३।।

ततस्ततः कृषेदेतद् यत्र यत्रानुगच्छति ।
धृत्यात्मवशगं कुर्याच्चित्तं चञ्चलमादृतः ।।१४।।

एवं कुर्वन् सदा योगी परां निर्वृतिमृच्छति ।
विश्वस्मिन् निजमात्मानं विश्वञ्च स्वात्मनीक्षते ।।१५।।

योगेन यो मामुपैति तमुपैम्यहमादरात् ।
मोचयामि न मुञ्चामि तमहं मां स न त्यजेत् ।।१६।।

सुखे दुःखेतरे द्वेषे क्षुधि तोषे समस्तृषि ।
आत्मसाम्येन भूतानि सर्वगं मां च वेत्ति यः ।।१७।।

जीवन्मुक्तः स योगीन्द्रः केवलं मयि सङ्गतः ।
ब्रह्मादीनाञ्च देवानां स वन्द्यः स्याज्जगत्त्रये ।।१८।।

वरेण्य उवाच

द्विविधोऽपि हि योगोऽयमसम्भाव्यो हि मे मतः।
यतोऽन्तःकरणं दुष्टं चञ्चलं दुर्ग्रहं विभो ।।१९।।

श्री गजानन उवाच

यो निग्रहं दुर्ग्रहस्य मनसा सम्प्रकल्पयेत् ।
घटीयन्त्रसमादस्मान्मुक्तः संसृतिचक्रकात्।।२०।।

विषयैः क्रकचैरेतत् संसृष्टं चक्रकं दृढम् ।
जनश्छेत्तुं न शक्नोति कर्मकीलैः सुसंवृतम् ।।२१।।

अतिदुःखं च वैराग्यं भोगाद् वैतृष्ण्यमेव च ।
गुरुप्रसादः सत्सङ्ग उपायास्तज्जये अमी ।।२२।।

सक्छन् ।।८-११।। हे राजन् ! योगाभ्यास गर्ने योगीले धेरै खानु हुँदैन, खँदै नखाई बस्नु पनि हुँदैन, अति निद्रा लिनु हुँदैन, अनिँदो रहनु हुँदैन र अति जागा पनि हुनुहुँदैन। ती ती अवस्थामा योगाभ्यास गर्दा सिद्धि प्राप्त हुँदैन ।।१२।। योगीले सङ्कल्पबाट जन्मिने कामनाहरूलाई मनबाट हटाउनु पर्दछ । निश्चित आहार र निश्चित जागरण गरी इन्द्रियलाई आफ्नो वशमा ल्याएर बुद्धिपूर्वक शनै शनै विश्राम गर्दै मन जहाँ जहाँ जान्छ त्यसलाई त्यहाँबाट खिंचेर आफ्नो ठाउँमा ल्याउनुपर्दछ । अत्यन्त सावधान भएर रहने योगीले चञ्चल मनलाई आफ्नो काबुमा ल्याउन सक्दछ ।।१३-१४।। यसरी साधना गर्ने योगीले परम आनन्द प्राप्त गर्दछ । त्यसले संसारमा आफ्नो आत्मालाई र आफ्नो आत्मामा संसारलाई देख्दछ ।।१५।। जुन साधक योगबाट मेरो समीपमा आउँछन्, तिनलाई म आदरपूर्वक भेट्ने गर्दछु । मैले तिनलाई आफूबाट टाढा गराउँदिनँ र कहिले पनि छोड्दिनँ । त्यस्ता साधकले पनि मलाई छोड्नु हुँदैन ।।१६।। सुख, दुःख, द्वेष, भोक, तिर्खा, सन्तोष आदिमा आफूसमान सबैसँग समान व्यवहार गर्दै जसले सर्वत्र मेरो दर्शन गर्दछ त्यो जीवन्मुक्त योगी हो । जीवन्मुक्त योगी ममामात्र आश्रित हुन्छ र तीन लोकमा ब्रह्मा आदि देवताहरूबाट पनि वन्दनीय हुन्छ ।।१७-१८।।

**वरेण्यले भने** - 'अन्तर्यामी हे प्रभु ! मलाई हजुरले दुई प्रकारका योगको विषयमा उपदेश गर्नुभयो । मैले भने दुबै योगको साधना असम्भव ठानेको छु किनकि मन दुष्ट, चञ्चल र ग्रहण गर्न कठिन पनि छ' ।।१९।।

**श्रीगणेशले भन्नुभयो**- जुन साधकले ग्रहण गर्न कठिन मनलाई घडीयन्त्रझैं घुमिरहने संसारचक्रबाट हटाएर आफू नजिक ल्याउन सक्छन् तिनले मुक्तिलाभ गर्न सक्दछन् ।।२०।। कर्मका कीलाले जेलिएको यो संसारचक्र विषयरूप आराले काटिरहँदा झन दृढ भएको हुन्छ त्यसलाई साधारण मानिसले काट्न सक्दैनन् ।।२१।। वैराग्य लिनु साधारण कुरा होइन । त्यो त अत्यन्त कष्टदायक विषय हो । भोगबाट तृष्णा हटाउने काम पनि सजिलो छैन । त्यस कारण मनको निग्रह, वैराग्यको प्राप्ति र तृष्णाको निवृत्तिका लागि गुरुको कृपा र सत्सङ्ग मुख्य

अभ्यासाद् वा वशीकुर्यान्मनो योगस्य सिद्धये ।
वरेण्य ! दुर्लभो योगो विनाऽस्य मनसो जयात् ।।२३।।

वरेण्य उवाच

योगभ्रष्टस्य को लोकः का गतिः किं फलं भवेत् ।
विभो ! सर्वज्ञ ! मे छिन्धि संशयं बुद्धिचक्रभृत्।।२४।।

श्री गजानन उवाच

दिव्यदेहधरो योगाद् भ्रष्टः स्वर्भोगमुत्तमम् ।
भुक्त्वा योगिकुले जन्म लभेद् बुद्धिमतां कुले ।।२५।।

पुनर्योगी भवत्येष संस्कारात् पूर्वजन्मजात् ।
न हि पुण्यकृतां कश्चिन्नरकं प्रतिपद्यते ।।२६।।

ज्ञाननिष्ठः तपोनिष्ठः कर्मनिष्ठो नराधिप !
श्रेष्ठो योगी श्रेष्ठतमो भक्तिमान् मयि तेषु यः ।।२७।।

उपाय हुनसक्दछन् । अथवा साधकले योगको सिद्धिका लागि अभ्यासबाट मनलाई वशमा ल्याउनुपर्दछ । हे राजन् ! मनमाथि विजय नगरेसम्म योगसिद्धि दुर्लभ हुन्छ ।।२२-२३।।

**वरेण्यले भने** – हे सर्वज्ञ प्रभु ! योगबाट भ्रष्ट हुने साधक कुन लोकमा जान्छ ? त्यसको कस्तो गति हुन्छ र त्यसले कस्ता फल प्राप्त गर्दछ ? मेरो बुद्धिचक्रमा रहेको यस संशयलाई काटिदिनुहोस् ।।२४।।

**श्रीगणेशले भन्नुभयो** – योगभ्रष्ट साधक दिव्य देह धारण गरी स्वर्गमा प्राप्त हुन्छ । स्वर्गको भोग सकेपछि पवित्र योगी एवं साधकहरूको कुलमा जन्म लिन्छ । त्यो योगी पूर्व कर्मका संस्कारले फेरि योगी नै हुन्छ। पुण्य गर्ने मानिस कहिले पनि नरकमा जाँदैन। ज्ञाननिष्ठ, तपोनिष्ठ र कर्मनिष्ठ साधकहरूभन्दा योगी श्रेष्ठ हुन्छ । योगीहरूमा पनि जुन योगीले मेरो भक्ति गर्दछ त्यो योगी उत्तम योगी कहलाउँदछ ।।२५-२७।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे योगावृत्तिप्रशंसनयोगो नाम पञ्चमोध्यायः ।।५।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे योगावृत्तिप्रशंसनयोगो नाम द्विचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत योगावृत्ति प्रशंसा' शीर्षकान्वित एक सय बयालीसौं अध्याय पूर्ण भयो ।।१४२।।

ॐ

## त्रिचत्वारिंशदुत्तरशततमोऽध्याय: { १४३ अध्याय }

श्रीगजानन उवाच

ईदृशं विद्धि मे तत्त्वं मद्गतेनाऽन्तरात्मना ।
यज्ज्ञात्वा मामसन्दिग्धं वेत्सि मोक्ष्यसि सर्वगम् ।।१।।

तत्तेऽहं शृणु वक्ष्यामि लोकानां हितकाम्यया ।
अस्ति ज्ञेयं यतो नान्यन्मुक्तेश्च साधनं नृप ।।२।।

ज्ञेया मत्प्रकृति: पूर्वं तत: स्याज्ज्ञानगोचर: ।
ततो विज्ञानसम्पत्तिर्मयि ज्ञाते नृणां भवेत् ।।३।।

क्ष्वनलौ खमहङ्कार: कं चित्तं धी: समीरण: ।
रवीन्दू यागकृच्चैकादशधा प्रकृतिर्मम ।।४।।

अन्यां मत्प्रकृतिं वृद्धां मुनय: सङ्गिरन्ति च ।
तया त्रिविष्टपं व्याप्तं जीवत्वं गतयाऽनया ।।५।।

आभ्यामुत्पाद्यते सर्वं चराचरमयं जगत् ।
सङ्गाद्विश्वस्य संभूति: परित्राणं लयोऽप्यहम् ।।६।।

तत्त्वमेतन्निबोद्धुं मे यतते कश्चिदेव हि ।
वर्णाश्रमवतां पुसां पुरा चीर्णेन कर्मणा ।।७।।

क्षितौ सुगन्धरूपेण तेजोरूपेण चाग्निषु ।
प्रभारूपेण पूष्णयब्जे रसरूपेण चाप्सु च ।।९।।

धीतपोबलिनां चाहं धीस्तपो बलमेव च ।
त्रिविधेषु विकारेषु मदुत्पन्नेष्वहं स्थित: ।।१०।।

न मां विन्दन्ति पापिष्ठा मायामोहितचेतस: ।
त्रिविकारा मोहयति प्रकृतिर्मे जगत्त्रयम् ।।११।।

यो मे तत्त्वं विजानाति मोहं त्यजति सोऽखिलम् ।
अनेकैर्जन्मभिश्चैवं ज्ञात्वा मां मुच्यते तत: ।।१२।।

**श्रीगणेशले भन्नुभयो** - हे राजन् ! तपाईंले आफ्नो अन्तरात्मालाई ममा लगाएर मैले बताएको यो तत्त्वलाई हृदयङ्गम गर्नुहोस् । जुन तत्त्वको ज्ञान गरेपछि सन्देह हटाएर शुद्ध रूपमा रही तपाईंले मेरो ज्ञान गर्नुहुनेछ । मेरो ज्ञान गरेपछि तपाईं संसारबाट मुक्त हुनुहुनेछ ।।१।। संसारको र तपाईंको कल्याण चिताएर जुन ज्ञान विना मुक्ति पाउन सकिंदैन म त्यसको उपदेश गर्दछु । वास्तवमा ज्ञान नै मुक्तिको साधन हो । त्यो नै जान्नुपर्ने विषय हो। ज्ञानलाई प्राप्त गर्न साधकले सर्वप्रथम मेरो प्रकृतिको ज्ञान गर्नुपर्दछ । मेरो ज्ञान भएपछि सम्पूर्ण योगसम्पत्ति आफै प्रकाशित हुन्छन्।।२-३।। पृथिवी, अग्नि, जल, चित्त, आकाश, अहङ्कार, बुद्धि, वायु, सूर्य-चन्द्र र यजमान प्रकृतिका यी दश भेद छन्। केही मुनिहरूले मेरो अर्को प्रकृतिलाई पनि प्रकृतिको रूपमा लिएका छन् । हरेक प्राणीमा रहने त्यस प्रकृतिले जगत्‌लाई ढाकेको छ। दश प्रकारको प्रकृति र एक प्रकारको यो प्रकृति मिलेर जड र चेतनले भरिभराउ संसारको उत्पत्ति हुन्छ । यी प्रकृतिको सान्निध्यमा रहेर विश्वको उत्पत्ति, रक्षा र विलय गराउने काम म गर्दछु ।।४-६।। मेरो तत्त्वबोध गर्न कुनै कुनै साधकले मात्र प्रयत्न गर्दछ । वर्ण र आश्रमका धर्मको पालन गर्न निरन्तर लागिरहने पुरुषहरूमध्ये कुनैले मात्र पूर्वजन्ममा गरेको उत्तम कर्मद्वारा मेरो साक्षात्कार गर्दछ ।।७।। त्यस भाग्यशाली साधकले संसारमा मभन्दा बाहेक अरू केही देख्दैन। त्यसले ममा नै सबै कुराको दर्शन गर्दछ । पृथिवीमा सुगन्धको रूपमा, अग्निमा तेजको रूपमा, सूर्य र चन्द्रमामा प्रभाको रूपमा, जलमा रसको रूपमा र बुद्धिमान् व्यक्तिहरूमा बुद्धिको रूपमा त्यसले मेरो साक्षात्कार गर्दछ । बुद्धि, तपस्या र बलका रूपमा समेत त्यसले मेरो सर्वत्र दर्शन गर्दछ । मबाट उत्पन्न हुने सत्त्वगुण, रजोगुण र तमोगुणका विकारहरूमा पनि म नै रहेको हुन्छु ।।८-१०।। मायाले चित्तलाई मोहित बनाएका पापीहरूले मलाई चिन्न सक्दैनन् । सत्त्व, रज र तमको विकारले सम्पन्न जुन प्रकृति छ त्यसले तीनै लोकलाई मोहित बनाएको छ ।।११।। जसले मेरो तत्त्व जान्दछ र त्यसमा विश्वास गर्दछ त्यस मानिसले संसारका विकारले परिपूर्ण पदार्थहरू प्रति हुने मोहलाई त्याग गर्दछ। त्यसले अनेक जन्म लिएर भए पनि मेरो ज्ञान गरेर मात्र मुक्ति प्राप्त गर्दछ।।१२।। मबाहेक

अन्ये नानाविधान् देवान् भजन्ते तान् व्रजन्ति ते ।
यथा यथा मतिं कृत्वा भजते मां जनोऽखिलः ।।१३।।

तथा तथाऽस्य तं भावं पूरयाम्यहमेव तम् ।
अहं सर्वं विजानामि मां न कश्चिद्धि बुध्यते ।।१४।।

अव्यक्तं व्यक्तिमापन्नं न विदुः काममोहिताः ।
नाहं प्रकाशतां यामि ह्यज्ञानां पापकर्मणाम् ।।१५।।

यः स्मृत्वा त्यजति प्राणानन्ते मां श्रद्धयान्वितः ।
स यात्यपुनरावृत्तिं प्रसादान्मम भूभुज ।।१६।।

यं यं देवं स्मरन् भक्त्या त्यजति स्वं कलेवरम् ।
तत्तत्सालोक्यमायाति तत्तद्भक्त्या नराधिप ।।१७।।

अतश्चाहर्निशं भूप ! स्मर्तव्योऽनेकरूपवान् ।
सर्वेषामप्यहं गम्यः स्रोतसामर्णवो यथा ।।१८।।

ब्रह्मविष्णुशिवेन्द्राद्याँल्लोकान् प्राप्य पुनः पतेत् ।
यो मामुपैत्यसन्दिग्धः पतनं तस्य न क्वचित् ।।१९।।

अनन्यशरणो यो मां भक्त्या भजति भूमिप !
योगक्षेमौ च तस्याहं सर्वदा प्रतिपादये ।।२०।।

द्विविधा गतिरुद्दिष्टा शुक्ला कृष्णा तथा नृप ।
एकया परमं ब्रह्म परया याति संसृतिम् ।।२१।।

अरू जुन देवताहरू छन् तिनीहरूको उपासना गर्ने मानिस ती ती देवताको समीपमा प्राप्त हुन्छन् । भक्तले जस्तो बुद्धि लिएर मेरो भजन गर्दछ, मैले त्यस साधकका बुद्धिमा प्रतिबिम्बित भई त्यसकै विचारअनुसार अथवा त्यसले चाहेको रूप लिएर त्यसका इच्छा पूर्ण गर्दछु । मैले सबै जानेको छु तर कसैले पनि मेरो विषयमा जान्दैनन् ।।१३-१४।। मेरा अव्यक्त, निर्गुण रूप र व्यक्त सगुण रूपलाई कामनाद्वारा मोहित भएका मानिसहरूले चिन्न सक्दैनन् । म कहिल्यै पनि मूर्ख र पापीहरूको दृष्टिमा आउँदिनँ ।।१५।। हे राजन् ! जुन साधकले जीवनको अन्त्यमा श्रद्धापूर्वक मलाई संझेर प्राणत्याग गर्दछ त्यो साधक मेरो कृपाबाट जन्म-मृत्युको चक्रमा पर्दैन ।।१६।। हे राजन् ! साधकले अन्तमा जुन देवताको भक्तिपूर्वक संझना गर्दै शरीरत्याग गर्दछ त्यो साधक देवताको भक्तिका कारण देवलोकमा प्राप्त हुन्छ ।।१७।। हे राजन् ! आत्मकल्याण चाहने भक्तले निरन्तर अनेक रूप धारण गर्ने म परमेश्वरको भजन गर्नुपर्दछ । नदीहरूको अन्तिम लक्ष्य सागर भएझैं सबै प्राणीहरूको अन्तिम लक्ष्य म नै हुँ ।।१८।। साधकहरू शिव, विष्णु, ब्रह्मा, इन्द्र आदि देवताहरूका लोकका पुगेर पुण्यअनुसार अनेक भोग गर्दछन् । पुण्य सकिएपछि फेरि धर्तीमा जन्म लिन्छन् । तर जुन साधक श्रद्धापूर्वक सन्देह हटाएर मेरो शरणमा आउँछन् ती साधक मेरो धाममा पुगेपछि त्यहाँबाट फर्कंदैनन् ।।१९।। हे राजन् ! जुन साधकले अरू देवतालाई छाडेर अनन्यभावले मेरो शरण लिन्छन् र मेरो भक्ति गर्छन्, मैले तिनलाई योग र क्षेम दुबै कुरा प्रदान गर्दछु ।।२०।। हे राजन् ! मानिसहरूका सेता र काला अर्थात् शुक्ल र कृष्ण दुई प्रकारका गति हुन्छन् भनेर शास्त्रहरूमा बताइएको छ । शुक्लमार्गबाट जाने साधकहरू परब्रह्ममा प्राप्त हुन्छन् भने कृष्णमार्गबाट जाने साधकहरू संसारचक्रमा घुमिरहन्छन् ।।२१।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे योगावृत्तिबुद्धियोगो नाम षष्ठोऽध्यायः ।।६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे बुद्धियोगोपदेशो नाम त्रिचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनुदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत बुद्धियोगको उपदेश' शीर्षकान्वित एक सय त्रिचालीसौं अध्याय पूर्ण भयो ।।१४३।।

ॐ

## चतुश्चत्वारिंशदुत्तरशततमोऽध्यायः { १४४ अध्याय }

वरेण्य उवाच

का शुक्ला गतिरुद्दिष्टा का च कृष्णा गजानन !
किं ब्रह्म संसृतिः का मे वक्तुमर्हस्यनुग्रहात् ।।१।।

गजानन उवाच

अग्निर्ज्योतिरहःशुक्लकर्मार्हमयनं गतिः ।
चान्द्रं ज्योतिस्तथा धूमो रात्रिश्च दक्षिणायनम् ।।२।।

कृष्णैते ब्रह्मसंसृत्योरवाप्तेः कारणं गतिः ।
दृश्यादृश्यमिदं सर्वं ब्रह्मैवेत्यवधारय ।।३।।

क्षरं पञ्चात्मकं विद्धि तदन्तरक्षरं स्मृतम् ।
उभाभ्यां यदतिक्रान्तं शुद्धं विद्धि सनातनम् ।।४।।

अनेकजन्मसम्भूतिः संसृतिः परिकीर्तिता ।
संसृतिं प्राप्नुवन्त्येते ये तु मां गणयन्ति न ।।५।।

ये मां सम्यगुपासन्ते परं ब्रह्म प्रयान्ति ते ।
ध्यानाद्यैरुपचारैर्मां तथा पञ्चामृतादिभिः ।।६।।

स्नानवस्त्राद्यलङ्कारसुगन्धधूपदीपकैः ।
नैवेद्यैः फलताम्बूलैर्दक्षिणाभिश्च योऽर्चयेत् ।।७।।

भक्त्यैकचेतसा चैव तस्येष्टं पूरयाम्यहम् ।
एवं प्रतिदिनं भक्त्या मद्भक्तो मां समर्पयेत् ।।८।।

अथवा मानसीं पूजां कुर्वीत स्थिरचेतसा ।
अथवा फलपत्राद्यैः पुष्पमूलजलादिभिः।
पूजयेन्मां प्रयत्नेन तत्तदिष्टफलं लभेत् ।।९।।

त्रिविधास्वपि पूजासु श्रेयसी मानसी मता।
साप्युत्तमा मता पूजाऽनिच्छया या कृता मम ।।१०।।

**वरेण्यले भने** - हे गजानन ! कसलाई शुक्ल गति भनिएको छ र कसलाई कृष्णगति ? ब्रह्म के हो ? र संसार के हो? यी प्रश्नहरूको विषयमा मलाई उपदेश गर्नुहोस् ।।१।।

**श्रीगणेशले भन्नुभयो** - अग्निको ज्योति दिन र शुक्ल कर्मको उपयोगी उत्तरायणलाई शुक्ल गति भनिन्छ । चन्द्रमाको ज्योति, धूँवा र रात्रिलाई कृष्णकर्मको उपयोगी दक्षिणायनलाई कृष्णगति भनिन्छ । यी दुवै गतिमध्ये एउटा गति ब्रह्मप्राप्तिको कारण हो भने अर्को जन्म-मृत्युको कारण । दृश्य पदार्थ र अदृश्य पदार्थ जति छन् ती सबै ब्रह्म नै हुन् भनी निश्चो गर्नुहोस्।।२-३।। पृथिवी, जल, तेज, वायु र आकाशबाट निर्माण गरिएको दृश्यलाई क्षर भनिन्छ । ती सबै तत्त्वभित्र रहने तत्त्वलाई अक्षर भनिन्छ। क्षर र अक्षरदेखि पर रहेको तत्त्वलाई सनातन शुद्ध तत्त्व भनी जान्नुपर्दछ ।।४।। जीवहरूको अनेक योनिहरूमा उत्पत्ति हुने प्रक्रियालाई संसृति भनिन्छ। हे वरेण्य! जसले मेरो वास्ता गर्दैनन् ती संसृतिमा प्राप्त हुन्छन्।।५।। जसले मेरो राम्ररी उपासना गर्दछन् ती परब्रह्ममा प्राप्त हुन्छन्। जुन साधकले भक्तिभावले भरिएको चित्तद्वारा पञ्चामृत, स्नान, सुगन्ध, धूप, दीप, फल, ताम्बूल, नैवेद्य, दक्षिणा, ध्यान आदि उपचारबाट मेरो अर्चना गर्दछ त्यसले चिताएको इच्छालाई मैले पुऱ्याउँछु । मेरो भक्त साधकले दिनदिनै आफ्नो शक्तिअनुसार माथि बताएका वस्तुहरू समर्पण गरी मेरो पूजा गर्नुपर्दछ, अथवा त्यसले स्थिर चित्त भई मानस पूजा गर्नुपर्दछ, अथवा पत्र; पुष्प; फल; कन्दमूल र जल आदि जुन कुरा सुलभ हुन्छ त्यसलाई समर्पण गरेर प्रयत्नपूर्वक मेरो पूजा गर्नुपर्दछ । भक्तले यसरी पूजा गर्दछ भने आफ्नो अभीष्ट फल प्राप्त गर्दछ ।।६-९।। शरीर, वाणी र मनले गरिने शारीरी पूजा, वाचिकी पूजा र मानसी पूजाहरूमध्ये मानसी पूजालाई मैले अत्यन्त मन पराउँछु । जुन साधकले कुनै इच्छा नराखीकन मेरी मानसी पूजा गर्दछ त्यसले गरेको पूजा पनि उत्तम पूजा मानिन्छ ।।१०।। ब्रह्मचारी, गृहस्थ,

ब्रह्मचारी गृहस्थो वा वानप्रस्थो यतिश्च यः ।
एकां पूजां प्रकुर्वाणोप्यन्यो वा सिद्धिमृच्छति ।।११।।

मदन्यं देवं यो भक्त्या द्विषन्मामन्यदेवताम् ।
सोऽपि मामेव यजते परं त्वविधितो नृप ।।१२।।

यो ह्यन्यदेवतां मां च द्विषन्नन्यां समर्चयेत् ।
याति कल्पसहस्रं स निरयान्दुःखभाक् सदा ।।१३।।

भूतशुद्धिं विधायादौ प्राणानां स्थापनं तथा।
आकृष्य चेतसो वृत्तिं ततो न्यासमुपक्रमेत् ।।१४।।

कृत्वान्तर्मातृकान्यासं बहिश्चाथ षडङ्गकम् ।
न्यासं च मूलमन्त्रस्य ततो ध्यात्वा जपेन्मनुम् ।।१५।।

स्थिरचित्तो जपेन्मन्त्रं यथा गुरुमुखोद्गतम् ।
जपं निवेद्य देवाय स्तुत्वा स्तोत्रैरनेकधा ।।१६।।

एवं मां य उपासीत स लभेन्मोक्षमव्ययम् ।
य उपासनया हीनो धिङ्नरो व्यर्थजन्मभाक् ।।१७।।

यज्ञोऽहमौषधं मन्त्रोऽग्नी राज्यं च हविर्हुतम् ।
ध्यानं ध्येयः स्तुतिः स्तोत्रं नतिर्भक्तिरुपासना ।।१८।।

त्रयी ज्ञेयं पवित्रञ्च पिता च प्रपितामहः।
ओङ्कारः पावनः साक्षी प्रभुर्मित्रं गतिर्लयः ।।१९।।

उत्पत्तिः पोषको बीजं शरणं वास एव च।
असन्मृत्युः सदमृतमात्मा ब्रह्माहमेव च ।।२०।।

दानं होमस्तपो भक्तिर्जपः स्वाध्याय एव च ।
यद्यत्करोति तत्सर्वं स मे मयि निवेदयेत् ।।२१।।

योषितोऽथ दुराचाराः पापास्त्रैवर्णिकास्तथा ।
मदाश्रया विमुच्यन्ते किं मद्भक्त्या द्विजादयः ।।२२।।

वानप्रस्थ, संन्यास आश्रमका अनुयायी व्यक्तिहरू र अरू जोसुकैले पनि श्रद्धापूर्वक एक पटक पूजा गर्दामात्र सिद्धि प्राप्त गर्दछ ।।११।। जुन साधकले मसँग द्वेष गरी अरू कुनै देव अथवा देवीको भक्तिपूर्वक पूजा गर्दछ भने त्यसले पनि मेरो नै पूजा गरिरहेको हुन्छ । जसले अरू देवता र मसँग द्वेष गर्दछ त्यो कल्प - कल्पसम्म दुःखी भएर नरकमा बास गर्दछ।।१२-१३।। पूजामा सर्वप्रथम भूतशुद्धि गरेर प्राणप्रतिष्ठा गर्नुपर्दछ । त्यसपछि चित्तलाई विषयबाट खिंचेर न्यास आरम्भ गर्नुपर्दछ ।।१४।। अन्तर्मातृकान्यास र बहिर्मातृकान्यास गरी छ प्रकारका न्यास गरेर भगवान्को ध्यान गरी मूल मन्त्र जप्नु पर्दछ ।।१५।। जसरी गुरुबाट प्राप्त गरिएको छ त्यसैगरी नै त्यस मन्त्रलाई उच्चारण गरी जप गर्नुपर्दछ । जप सकेपछि आफ्ना आराध्य देवतालाई जप निवेदन गरी अनेक स्तोत्रहरूद्वारा स्तुति गर्नुपर्दछ ।।१६।। यसरी दिनदिनै जसले मेरो उपासना गर्दछ त्यसले अविनाशी मोक्षपद प्राप्त गर्दछ । जुन मानिस उपासनाविहीन छ त्यस मानिसको जन्म व्यर्थ छ र त्यसलाई धिक्कार पनि छ ।।१७।। म यज्ञ, औषधि, मन्त्र, अग्नि, राज्य, हवि र हवन-क्रिया पनि हुँ । ध्यान, ध्येय र ध्याता पनि म नै हुँ । स्तोत्र, नमस्कार, भक्ति र उपासना पनि म नै हुँ ।।१८।। वेद, ज्ञान, पिता र पितामह पनि म नै हुँ । म ॐकार स्वरूप हुँ, मैले जगत्लाई पवित्र बनाउँछु । म सबैका घट-घटमा रहने अन्तर्यामी हुँ । मलाई स्वामी, मित्र, गति र लय पनि मान्नुपर्दछ ।।१९।। म उत्पत्ति हुँ र सबैलाई पोषण गर्ने पोषणतत्त्व पनि म नै हुँ। म संसारको बीज हुँ र संसारको शरण एवं आधार पनि म नै हुँ । असत्-सत्, मृत्यु-जीवन र आत्मा-ब्रह्म पनि म नै हुँ ।।२०।। दान, होम, तपस्या, भक्ति, जप र स्वाध्याय पनि मेरै रूप हुन् । भक्तले जुन जुन कर्म गर्दछ ती कर्म पनि मेरा हुन् र त्यसले ती सबै कर्म मलाई अर्पण गर्नुपर्दछ ।।२१।। दुराचार गर्ने नारीहरू र पापलिप्त क्षत्रिय, वैश्य र शूद्रहरू पनि मेरो आश्रय लिएपछि पापमुक्त हुन्छन् । जसले निरन्तर ॐकारको ध्वनि जगाउँदै उच्चतम आचारमा रहेर वैदिक विधिबाट मेरो आराधना गर्दछन् तिनीहरूले पाउने

न विनश्यति मद्भक्तो ज्ञात्वेमा मद्विभूतय:।
प्रभवं मे विभूतीश्च न देवा ऋषयो विदु:।।२३।।

नानाविभूतिभिरहं व्याप्य विश्वं प्रतिष्ठित: ।
यद्यच्छ्रेष्ठतमं लोके सा विभूतिर्निबोध मे ।।२४।।

फलको त सीमा नै छैन ।।२२।। मेरा विभूतिहरूको परिज्ञान गर्ने भक्त कहिले पनि नष्ट हुँदैन । मेरो उत्पत्ति र मेरा विभूतिहरूलाई देवता एवं ऋषिहरूले पनि राम्ररी जान्दैनन् ।।२३।। म आफ्ना अनेक थरि विचित्र विभूतिहरूद्वारा संसारलाई व्याप्त गरेर प्रतिष्ठित रहेको छु । संसारमा जे-जति कुरा राम्रा र सुन्दर देखिन्छन् ती सबै मेरा विभूति हुन् । हे राजा वरेण्य ! तपाइँले यसरी बुझेर मेरो र मेरा विभूतिहरूको परिज्ञान गर्नुपर्दछ ।।२४।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे उपासनायोगो नाम सप्तमोध्याय: ।।७।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे उपासनायोगोपदेशो नाम चतुश्चत्वारिंशदधिकशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत उपासनायोगको उपदेश' शीर्षकान्वित एक सय चवालीसौं अध्याय पूर्ण भयो ।।१४४।।

ॐ

## पञ्चचत्वारिंशदुत्तरशततमोऽध्यायः　　{ १४५ अध्याय }

वरेण्य उवाच

भगवन्नारदो मह्यं तव नानाविभूतयः।
उक्तवांस्ता अहं वेद न सर्वाः सोऽपि वेत्ति ताः ।।१।।

त्वमेव तत्त्वतः सर्वा वेत्सि ता द्विरदानन !
निजं रूपमिदानीं मे व्यापकं चारु दर्शय ।।२।।

श्रीगजानन उवाच

एकस्मिन्मयि पश्य त्वं विश्वमेतच्चराचरम् ।
नानाश्चर्याणि दिव्यानि पुरा दृष्टानि केनचित् ।।३।।

ज्ञानचक्षुरहं तेऽद्य सृजामि स्वप्रभावतः ।
चर्मचक्षुः कथं पश्येन्मां विभुमजमव्ययम् ।।४।।

व्यास उवाच

ततो राजा वरेण्यः स दिव्यचक्षुरवैक्षत।
ईशितुः परमं रूपं गजास्यस्य महाद्भुतम् ।।५।।

असङ्ख्यवक्त्रं ललितमसङ्ख्याङ्घ्रिकरं महत् ।
अनुलिप्तं सुगन्धेन दिव्यभूषाम्बरस्रजम् ।।६।।

असङ्ख्यनयनं कोटिसूर्यरश्मिधृतायुधम् ।
तद्वर्ष्मणि त्रयो लोका दृष्टास्तेन पृथग्विधाः।।७।।

दृष्ट्वैश्वरं परं रूपं प्रणम्य स नृपोऽब्रवीत् ।

वरेण्य उवाच

वीक्षेऽहं तव देहेऽस्मिन् देवानृषिगणान्पितृन् ।।८।।

पातालानां समुद्राणां द्वीपानां चैव भूभृताम् ।
महर्षीणां सप्तकं च नानार्थसङ्कुलं विभो ।।९।।

**वरेण्यले भने** – हे श्रीगणेश प्रभु ! एकदिन मलाई नारदजीले हजुरका अनेक थरि विभूतिहरूको विषयमा बताउनुभएको थियो । सम्पूर्ण विभूतिहरूको विषयमा म जान्दिनँ र स्वयं नारदजीलाई पनि थाहा छैन । ती विभूतिहरूको पूर्ण रहस्य त हजुरलाई मात्र थाहा छ । अब म हजुरको विराट् रूप हेर्ने इच्छाले प्रार्थना गरिरहेको छु । त्यस कारण त्यो दुर्लभ विराट् रूपको दर्शन गराउनुहोस् ।।१-२।।

**श्रीगणेशले भन्नुभयो** – म एउटै श्रीगणेशमा तपाईँले सम्पूर्ण जड र चेतन तत्त्वले भरिएको विश्वको दर्शन गर्नुहोस् । त्यहाँ दिव्य र आश्चर्यजनक रहस्य तपाईँले पाउनुहुनेछ । कुनै कुनै भाग्यशाली मानिसहरूले योभन्दा पहिले पनि मेरो विश्वरूपको दर्शन पाएका थिए।।३।। म अहिले आफ्नो प्रभावबाट विश्वरूप हेर्नसक्ने ज्ञानचक्षु तपाईँलाई प्रदान गर्दछु । छालाका आँखा भएको मानिसले मेरो विश्वव्यापी, अन्तर्यामी र अव्यय स्वरूपको दर्शन गर्न सक्दैन ।।४।।

**व्यासले भन्नुभयो** – राजा वरेण्यले भगवान् श्रीगणेशबाट ज्ञानचक्षु प्राप्त गरेपछि त्यस दिव्य चक्षुबाट जगत्का स्वामी भगवान् श्रीगणेशको अद्‌भुत, सहस्रमुख, सहस्रपाद, सहस्र शिरले सम्पन्न, सुगन्धमय, दिव्य वस्त्रले विभूषित, दिव्य विभूषणद्वारा अलङ्कृत, दिव्य मालाधारी, असंख्य आँखा भएको र करोडौं सूर्यका प्रकाशले सुहाएको विश्वरूप दर्शन गरे । वरेण्यले श्रीगणेशको विराट् शरीरमा स्वर्ग, मर्त्य र पातालको दर्शन गरे ।।५-७।। त्यसपछि परम रूपको दर्शन गरेर प्रसन्न भएका राजाले भगवान्सँग बिन्ती गरे ।

**वरेण्यले भने** – हे प्रभु ! मैले हजुरको यो विराट शरीरमा देवता, ऋषि, पितृ, पातालका दृश्यावली, सातै समुद्र, सात द्वीप, विश्वका विशाल पर्वत र सप्तऋषि यी सबैलाई हेरिरहेको छु । पृथिवी, अन्तरिक्ष र एक्काइस प्रकारका स्वर्गहरूको पनि दर्शन गरिरहेको छु । मानिस, सर्प, राक्षसहरू पनि त्यहाँ रहेको देखिरहेको छु । हजुरको विशाल शरीरमा ब्रह्मा, विष्णु, शिव, इन्द्र आदि देवताहरू पनि रहेका छन् । तीनै लोकमा पाइने

भुवोऽन्तरिक्षं स्वर्गांश्च मनुष्योरगराक्षसान् ।
ब्रह्मविष्णुमहेशेन्द्रान् देवान् जन्तूननेकधा ।।१०।।

अनाद्यनन्तं लोकादिमनन्तभुजशीर्षकम् ।
प्रदीप्तानलसङ्काशमप्रमेयं पुरातनम् ।।११।।

किरीटकुण्डलधरं दुर्निरीक्ष्यं मुदावहम् ।
एतादृशं च वीक्षे त्वां विशालवक्षसं प्रभुम् ।।१२।।

सुरविद्याधरैर्यक्षैः किन्नरैर्मुनिमानुषैः ।
नृत्यद्भिरप्सरोभिश्च गन्धर्वैर्गानतत्परैः ।।१३।।

वसुरुद्रादित्यगणैः सिद्धैः साध्यैर्मुदा युतैः।
सेव्यमानं महाभक्त्या वीक्ष्यमाणं सुविस्मितैः ।।१४।।

वेत्तारमक्षरं वेद्यं धर्मगोप्तारमीश्वरम्।
पातालानि दिशः स्वर्गान् भुवं व्याप्याखिलं स्थितम्।।१५।।

भीता लोकास्तथा चाहमेवं त्वां वीक्ष्य रूपिणम् ।
नानादंष्ट्राकरालं च नानाविद्याविशारदम् ।।१६।।

प्रलयानलदीप्तास्यं जटिलं च नभःस्पृशम् ।
दृष्ट्वा गणेश ! ते रूपमहं भ्रान्त इवाभवम् ।।१७।।

देवा मनुष्या नागाद्याः खिलास्त्वदुदरेशयाः।
नानायोनिभुजश्चान्ते त्वय्येव प्रविशन्ति च ।।१८।।

अब्धेरुत्पद्यमानास्ते यथा जीमूतबिन्दवः।
त्वमिन्द्रोऽग्निर्यमश्चैव निर्ऋतिर्वरुणो मरुत् ।।१९।।

गुह्यकेशस्तथेशानः सोमः सूर्योऽखिलं जगत् ।
नमामि त्वामतः स्वामिन् ! प्रसादं कुरु मेऽधुना ।।२०।।

दर्शयस्व निजं रूपं सौम्यं यत्पूर्वमीक्षितम् ।
को वेद लीलास्ते भूमन् ! क्रियमाणा निजेच्छया।।२१।।

अनुग्रहान्मया दृष्टमैश्वरं रूपमीदृशम् ।
ज्ञानचक्षुर्यतो दत्तं प्रसन्नेन त्वया मम ।।२२।।

अनेक जन्तुहरूलाई पनि हजुरको विराट शरीरभित्र हेरिरहेको छु ।।८-१०।। हजुरको यो स्वरूप अनादि, अनन्त, अनन्तबाहु, अनन्तशिरले सम्पन्न, अग्निको ज्वालाझैं देदीप्यमान, वर्णन गरेर नसकिने गुण र महिमा भएको, किरीट एवं कुण्डल धारण गर्ने र सामान्य दृष्टिबाट हेर्न नसकिने विशाल वक्षस्थलले सुहाएको छ । म त्यस रूपको दर्शन गरिरहेको छु ।।११-१२।। देवता, विद्याधर, यक्ष, किन्नर, ऋषि-मुनि र मनुष्यहरूका साथ नृत्य गरिरहेका अप्सरा, गाना गाइरहेका गन्धर्व, वसुगण, सूर्यगण, साध्यगण र सिद्धगणद्वारा प्रसन्नतापूर्वक सेवा गरिएका विश्वरूपको म दर्शन गरिरहेको छु ।।१३-१४।। ती सबैले चकित भई हजुरको सर्वज्ञ, अक्षर, वेद्य, धर्मरक्षक र सर्वशक्तिसम्पन्न विश्वरूपको दर्शन गरिरहेका छन्। हजुरको यस विश्वरूपमा सात पाताल, सम्पूर्ण दिशा र विशाल पृथिवी अटाएका छन् ।।१५।। नानाथरि रूप देखाउने विद्यामा कुशल हजुरको यस विशाल स्वरूपलाई देखेर संसारका प्राणीहरू भयभीत भएका छन् किनभने हजुरको यो रूप लामा-लामा दाह्राले सम्पन्न छ, प्रलयकालको अग्निझैं चहकिलो अनुहारले युक्त छ र यसमा पर्वताकार एवं आकाशस्पर्शी गर्ने जटा पनि सुहाएको छ । हजुरको यो रूप देखेर म पनि भ्रान्तिमा परिरहेको छु ।।१६-१७।। देवता, मनुष्य, सर्प आदि हजुरको गर्भभित्र रहेका राम्रा र नराम्रा योनिका प्राणीहरू हजुरबाट नै पैदा हुन्छन् र अन्तमा हजुरमा नै विलीन हुन्छन् ।।१८।। जसरी समुद्रबाट मेघका थोपाहरू पैदा हुन्छन् त्यसैगरी हजुरबाट इन्द्र, अग्नि, यम, निर्ऋति, वरुण, वायु, कुबेर, ईशान, सूर्य र सम्पूर्ण लोक पैदा हुन्छन् । हे प्रभु ! म हजुरलाई प्रणाम गर्दछु, मप्रति दया गर्नुहोस् ।।१९-२०।। अब हजुरले मलाई पूर्वकालमा मैले दर्शन गरेको र दर्शन गर्न सकिने बालक रूप देखाउनुहोस् । हजुरले आफ्नो इच्छाले गर्नुभएका लीलाको रहस्य कसले बुझ्न सक्छ ? ।।२१।। ममाथि कृपा गरेर आज हजुरले मलाई ईश्वरीय गुणसम्पन्न विश्वरूपको दर्शन गराउनुभयो। मप्रति खुसी हुनुभएका हजुरले विश्वरूपको दर्शन गराउन मलाई दिव्य चक्षु पनि प्रदान गर्नुभयो ।।२२।।

श्रीगजानन उवाच

नेदं रूपं महाबाहो ! मम पश्यन्त्ययोगिनः।
सनकाद्या नारदाद्याः पश्यन्ति मदनुग्रहात् ।।२३।।

चतुर्वेदार्थतत्त्वज्ञाश्चतुःशास्त्रविशारदाः ।
यज्ञदानतपोनिष्ठा न मे रूपं विदन्ति ते ।।२४।।

शक्योऽहं वीक्षितुं ज्ञातुं प्रवेष्टुं भक्तिभावतः।
त्यज भीतिं च मोहं च पश्य मां सौम्यरूपिणम् ।।२५।।

मद्भक्तो मत्परः सर्वसङ्गहीनो मदर्थकृत् ।
निष्क्रोधः सर्वभूतेषु समो मामेति भूभुज ।।२६।।

**श्रीगणेशले भन्नुभयो-** हे महाबाहु वरेण्य! मैले जुन रूपको दर्शन तपाईँलाई गराएँ त्यो रूपको योगीहरूले पनि दर्शन गर्न पाउँदैनन् । मेरो कृपा भयो भने सनक आदि ब्रह्मज्ञानी ऋषि र नारायणका भक्त नारद आदि ऋषिहरूले मात्र यस रूपको दर्शन गर्न पाउँछन् ।।२३।। चार वेदको अर्थ जान्ने, चारै शास्त्रका ज्ञाता, यज्ञ दान एवं तपस्या गर्ने र मप्रति आस्था राख्ने साधकले पनि मेरा यस रूपको दर्शन पाउँदैनन् ।।२४।। मेरो भक्ति गर्ने मानिसले मात्र जुनसुकै अवस्थामा र जुनसुकै रूपमा पनि दर्शन गर्न पाउँछ । हे राजन् ! तपाईँले डर र मोह पन्छाउनुहोस् । तपाईँका लागि अब म दर्शन गर्न योग्य सानो रूप लिएर प्रकट भएको छु । यस सौम्य रूपको दर्शन गर्नुहोस्।।२५।। हे राजन् ! मलाई नै सर्वस्व ठान्ने, दुष्टहरूको सङ्गत नगर्ने, मेरा निमित्त आफ्नो महत्त्वपूर्ण समय सुम्पने, क्रोध नभएको, मेरा लागि जस्तोसुकै कर्म गर्न पनि तयार हुने र सबै प्राणीहरूमा समान दृष्टि राख्ने मेरो भक्त अन्तमा ममा नै विलीन हुन्छ ।।२६।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे विश्वरूपवीक्षणं नाम अष्टमोध्यायः ।।८।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे विश्वरूपवीक्षणं नाम पञ्चचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत विश्वरूप दर्शन' शीर्षकान्वित एक सय पैंतालीसौं अध्याय पूर्ण भयो ।।१४५।।

ॐ

# षट्चत्वारिंशदुत्तरशततमोऽध्यायः { १४६ अध्याय }

### वरेण्य उवाच

अनन्यभावस्त्वां सम्यङ्मूर्तिमन्तमुपासते ।
योऽक्षरं परमं व्यक्तं तयोः कस्ते मतोऽधिकः ।।१।।

असि त्वं सर्ववित् साक्षी भूतभावन ईश्वरः।
अतस्त्वां परिपृच्छामि वद मे कृपया विभो ।।२।।

### श्रीगजानन उवाच

यो मां मूर्तिधरं भक्त्या मद्भक्तः परिसेवते ।
स मे मान्योऽनन्यभक्तिर्नियुज्य हृदयं मयि ।।३।।

खगणं स्ववशं कृत्वाऽखिलभूतहितार्थकृत् ।
ध्येयमक्षरमव्यक्तं सर्वगं कूटगं स्थिरम् ।।४।।

सोऽपि मामेत्य निर्देश्यं मत्परो य उपासते ।
संसारसागरादस्मादुद्धरामि तमप्यहम् ।।५।।

अव्यक्तोपासनादुःखमधिकं तेन लभ्यते ।
व्यक्तस्योपासनासाध्यं तदेवाव्यक्तभक्तितः ।।६।।

भक्तिश्चैवादरश्चात्र कारणं परमं मम ।
सर्वेषां विदुषां श्रेष्ठो ह्यकिञ्चिज्ज्ञोऽपि भक्तिमान्।।७।।

भजन् भक्त्या विहीनो यः स चाण्डालोऽभिधीयते ।
चाण्डालोऽपि भजन् भक्त्या ब्राह्मणेभ्योऽधिको मतः।।८।।

शुकाद्याः सनकाद्याश्च पुरा मुक्ता हि भक्तितः ।
भक्त्यैव मामनुप्राप्ता नारदाद्याश्चिरायुषः ।।९।।

अतो भक्त्या मयि मनो निधेहि बुद्धिमेव च।
भक्त्या यजस्व मां राजँस्ततो मामेव यास्यसि ।।१०।।

असमर्थोऽर्पितुं स्वान्तं ध्रुवं मयि नराधिप !
अभ्यासेन च योगेन ततो गन्तुं यजस्व माम्।।११।।

**वरेण्यले भने** - केही भक्तहरू तपाईँप्रति समर्पित भएर साकार अथवा मूर्तिमान् हजुरको उपासना गर्दछन् । कसैले निराकार र अक्षर तपाईँको आराधना गर्दछन् । ती दुबैथरिका साधकहरूमध्ये कुन साधक हजुरलाई मन पर्छ ? हजुर सर्वज्ञ, सबैका साक्षी र सबै प्राणीहरूमाथि करुणा गर्ने ईश्वर हुनुहुन्छ, त्यसै भएर म हजुरसँग नम्रतापूर्वक जिज्ञासा गर्दैछु । हे प्रभु ! मेरो जिज्ञासाको समाधान गर्नुहोस् ।।१-२।।

**श्रीगणेशले भन्नुभयो** – जुन मेरो भक्तले परम भक्तिका साथ मूर्तिधारी मेरो स्वरूपको सेवा गर्छ त्यो मलाई मान्य हुन्छ किनकि त्यसले ममा हृदय सुम्पेर आफ्नो सर्वस्व पनि सुम्पेको हुन्छ ।।३।। आफ्ना इन्द्रियहरूलाई वशमा राखेर सम्पूर्ण प्राणीको हितका लागि काम गर्ने अक्षर, अव्यक्त, सर्वव्यापक, अन्तर्यामी, स्थिर, निर्गुण, ध्यान गर्न योग्य, परमात्माको उपासना गर्ने साधक पनि मेरो समीपमा प्राप्त हुन्छ । यसरी मप्रति समर्पित भएर जसले उपासना गर्छ, त्यो साधक निर्गुण साधक होस् अथवा सगुण साधक त्यसको मैले उद्धार गर्छु ।।४-५।। अव्यक्तको उपासना व्यक्त अथवा साकार ईश्वरको उपासनाभन्दा कष्टकर हुन्छ । निर्गुणको साधना अथवा सगुणको साधना दुबैको लक्ष्य एउटै हो । जसमा भक्ति धेरै हुन्छ, त्यो भक्त मलाई प्यारो हुन्छ । त्यो निर्गुण साधक होस् अथवा सगुण साधक त्यसले मलाई कुनै प्रभाव पार्दैन । केही नजानेको मानिस पनि भक्तिभावनाले अनुप्राणित छ भने त्यो विद्वान्हरूभन्दा पनि श्रेष्ठ हुन्छ ।।६-७।। भक्तिहीन भई भजन गर्ने साधकलाई विद्वान् भए पनि चाण्डाल भन्नुपर्दछ । चाण्डाल जातिको मानिसले पनि भक्तिपूर्वक मेरो आराधना गर्छ भने त्यो ब्राह्मणभन्दा पनि उत्तम मानिन्छ ।।८।। प्राचीन समयमा उत्तम भक्ति गरेका कारण सनक आदि ब्रह्मर्षि र र शुकदेव आदि ज्ञानी पुरुष संसारसागरबाट मुक्त भएका थिए । दीर्घायु भएर बाँच्ने नारद आदि देवर्षिहरूले पनि भक्तिले नै मलाई प्राप्त गरेका हुन् ।।९।। त्यस कारण हे राजन् ! तपाईँले भक्तिपूर्वक ममा मन लगाउनुहोस् र बुद्धि पनि । भक्तिपूर्वक मेरा निमित्त यज्ञयाग गर्नुहोस् त्यसपछि तपाईँ ममा नै मिल्न आउनुहुनेछ ।।१०।। हे राजन् ! तपाईँ यदि निश्चित रूपमा आफ्नो मन मलाई अर्पण गर्न असमर्थ हुनुहुन्छ भने अभ्यास र

तत्रापि त्वमशक्तश्चेत् कुरु कर्म मदर्पणम् ।
ममानुग्रहतश्चैव परां निर्वृतिमेष्यसि ।।१२।।

अथैवमप्यनुष्ठातुं न शक्नोषि तदा कुरु।
प्रयत्नतः फलत्यागं त्रिविधानां हि कर्मणाम् ।।१३।।

श्रेयसी बुद्धिरावृत्तेस्ततो ध्यानं वरं मतम् ।
ततोऽखिलपरित्यागस्ततः शान्तिर्गरीयसी ।।१४।।

निरहंममताबुद्धिरद्वेषः करुणः समः।
लाभालाभे सुखे दुःखे मानामाने स मे प्रियः ।।१५।।

यं वीक्ष्य न भयं याति जनस्तस्मान्न च स्वयम् ।
उद्वेगभीकोपमुद्भी रहितो यः स मे प्रियः।।१६।।

रिपौ मित्रेऽथ गर्हायां स्तुतौ शोके समः समुत् ।
मौनी निश्चलधीर्भक्तो ह्यसङ्गः स च मे प्रियः ।।१७।।

संशीलयति यश्चैनमुपदेशं मया कृतम् ।
स वन्द्यः सर्वलोकेषु मुक्तात्मा मे प्रियः सदा ।।१८।।

अनिष्टाप्तौ च न द्वेष्टीष्टप्राप्तौ न च तुष्यति ।
क्षेत्रतज्ज्ञौ च यो वेत्ति स मे प्रियतरो भवेत् ।।१९।।

वरेण्य उवाच

किं क्षेत्रं कश्च तद्वेत्ति किं तज्ज्ञानं गजानन !
एतदाचक्ष्व मह्यं त्वं पृच्छते करुणाम्बुधे ।।२०।।

श्रीगजानन उवाच

पञ्चभूतानि तन्मात्राः पञ्चकर्मेन्द्रियाणि च ।
अहङ्कारो मनो बुद्धिः पञ्चज्ञानेन्द्रियाणि च
इच्छाऽव्यक्तं धृतिद्वेषौ सुखदुःखे तथैव च।।२१।।

योगद्वारा मलाई प्राप्त गर्न यजनशील हुनुहोस् ।।११।। योग र अभ्यास पनि गर्न सक्नुहुन्न भने तपाईंले आफूले मन, वचन र शरीरले गरेका कर्महरू मलाई अर्पण गर्नुहोस्। यसो गर्नुभयो भने तपाईंमाथि मेरो कृपा हुनेछ । त्यस कृपाबाट तपाईंले परम कल्याण र आनन्द प्राप्त गर्नुहुनेछ ।।१२।। हे वरेण्य! तपाईंले मलाई आफूले गरेका कर्महरूको अर्पण गर्न पनि सक्नुहुन्न भने तपाईंले गरेका शरीरका कर्म, मनका कर्म र वचनका कर्महरूको फलमा आशा नगर्नुहोस् । यसरी फलत्याग गर्दा पनि मेरो आराधना हुन्छ । मनको वृत्तिभन्दा बुद्धिवृत्ति उत्तम हुन्छ र बुद्धिवृत्तिभन्दा ध्यान उत्तम हुन्छ । ध्यानभन्दा कर्महरूको त्याग उत्तम हुन्छ। कर्महरूको त्यागबाट ठूलो शान्ति प्राप्त हुन्छ ।।१३-१४।। जुन भक्तको मनमा अहङ्कार हुँदैन, ममता रहँदैन, जुन भक्तले कसैसँग द्वेष गर्दैन र सबैको उपकार गर्दै दया-भावनाको विस्तार गर्छ, लाभ र हानिमा, सुख र दुःखमा एवं मान र अपमानमा एउटै भावना लिएर स्थिर रहन्छ त्यो भक्त पनि मेरो प्यारो हुन्छ।।१५।। जुन भक्तलाई देखेर कुनै मानिस पनि डराउँदैन, जुन भक्त अरू कसैसँग पनि डराउँदैन। आवेग, डर, रीस, हर्ष नभएको शान्त मनोवृत्तिको साधक पनि मलाई प्यारो लाग्छ ।।१६।। शत्रुमा, मित्रमा, निन्दामा, स्तुतिमा र शोकमा आनन्दपूर्वक समान मनोवृत्ति लिएर स्थिर रहने भक्त मलाई प्यारो लाग्छ । धेरैजसो मौन भएर रहने, बुद्धि स्थिर गराउने र नराम्रा मानिसको सङ्गत नगर्ने जुन साधक छ त्यो पनि मलाई प्यारो लाग्छ ।।१७।। जसले मैले गरेका यी उपदेशहरूको अभ्यास गर्दछ त्यो साधक संसारमा वन्दनीय हुन्छ, मुक्तात्मा बन्दछ र मेरो प्यारो भक्तको रूपमा प्रख्यात हुन्छ ।।१८।। जुन साधक आफूमाथि आपत्ति आइलाग्दा आत्तिदैन, द्वेष गर्दैन र सम्पत्ति प्राप्त हुँदा गर्व गर्दैन, अत्यन्त उत्फुल्ल भएर मात्तिने काम पनि गर्दैन, शरीर र आत्माको अन्तर जान्दछ, त्यो साधक पनि मलाई अत्यन्त प्यारो लाग्छ।।१९।।

**वरेण्यले भने** - हे करुणासागर प्रभु ! क्षेत्र केलाई भन्दछन्? कसले त्यस क्षेत्रलाई जान्दछ ? ज्ञानको स्वरूप के हो ? मलाई आज्ञा होस् ।।२०।।

**श्रीगणेशले भन्नुभयो** - पृथिवी, जल, तेज, वायु, आकाश यी पञ्चमहाभूत; रूप, रस, गन्ध, शब्द, स्पर्श यी पाँच तन्मात्रा; पाँच कर्मेन्द्रिय; पाँच ज्ञानेन्द्रिय; अहङ्कार; मन; बुद्धि; इच्छा; चेतनासहित अव्यक्त; धैर्य; द्वेष; सुख र दुःखको समूहलाई क्षेत्र

चेतनासहितश्चायं समूहः क्षेत्रमुच्यते ।
तज्ज्ञं त्वं विद्धि मां भूप ! सर्वान्तर्यामिणं विभुम् ।।२२।।

अयं समूहोऽहं चापि यज्ज्ञानविषयौ नृप ।
आर्जवं गुरुशुश्रूषा विरक्तिश्चेन्द्रियार्थतः ।।२३

शौचं क्षान्तिरदम्भश्च जात्यादिदोषवीक्षणम् ।
समदृष्टिर्दृढा भक्तिरेकान्तित्वं शमो दमः ।।२४।।

एतैर्यच्च युतं ज्ञानं तज्ज्ञानं विद्धि बाहुज ।
तज्ज्ञानाऽथयं राजन् ! ब्रवीमि त्वं शृणुष्व मे ।।२५।।

यज्ज्ञात्वैति च निर्वाणं मुक्त्वा संसृतिसागरम् ।
यदनादीन्द्रियैर्हीनं गुणभुग्गुणवर्जितम् ।।२६।।

अव्यक्तं सदसद्भिन्नमिन्द्रियार्थावभासकम् ।
विश्वभृच्चाखिलव्यापि एकं नानेव भासते ।।२७।।

बाह्याभ्यन्तरतः पूर्णमसङ्गं तमसः परम् ।
दुर्ज्ञेयं चातिसूक्ष्मत्वाद् दीप्तीनामपि भासकम् ।।२८।।

ज्ञेयमेतादृशं विद्धि ज्ञानगम्यं पुरातनम् ।
एतदेव परं ब्रह्म ज्ञेयमात्मा परोऽव्ययः ।।२९।।

गुणान् प्रकृतिजान् भुङ्क्ते पुरुषः प्रकृतेः परः ।
गुणैस्त्रिभिरियं देहे बध्नाति पूरुषं दृढम् ।।३०।।

यदा प्रकाशः क्षान्तिश्च बुद्धेः सत्त्वं तदाऽधिकम् ।
लोभोऽशमः स्पृहारम्भः कर्मणां रजसो गुणः ।।३१।।

मोहोऽप्रवृत्तिश्चाज्ञानं प्रमादस्तमसो गुणः ।
सत्त्वाधिकः सुखं ज्ञानं कर्मसङ्गो रजोधिकः ।।३२।।

भनिन्छ ।।२१।। हे राजन् ! तपाईँले मलाई क्षेत्रको ज्ञाता क्षेत्रज्ञको रूपमा जान्नुहोस् किनकि म सर्वव्यापक र अन्तर्यामी पनि छु । माथि बताएको विषयसमूह र म यी दुबै तत्त्व संसारमा जान्नुपर्ने विषय हुन् र विश्लेषण गर्नुपर्ने विषय हुन् । सरलता, गुरुको सेवा, विषयबाट वैराग्य, पवित्रता, क्षमा, पाखण्डहीनता, जन्म र मृत्युमा दोषदर्शन, सर्वत्र समान दृष्टि, भगवान्मा दृढ भक्ति, एकान्तसेवन, शम र दम यी गुणहरूले सम्पन्न भएको ज्ञानलाई मात्र ज्ञान भनिन्छ । ती ज्ञानका विषय पनि म तपाईँलाई बताउँछु, तपाईँ सुन्नुहोस् ।।२२-२५।। जुन ज्ञानलाई जानेर साधक संसारसागरलाई पार गरी मुक्तिधाममा प्राप्त हुन्छ । अनादि, इन्द्रिय र मनद्वारा जान्न नसकिने, अति सूक्ष्म, गुणभोक्ता, गुणवर्जित, अव्यक्त, सत्य र असत्यबाट भिन्न, इन्द्रियको प्रकाशक, विश्वको भर्ता, सर्वव्यापक एउटा परमात्मा आफ्नो इच्छाले अनेक रूपमा संसारमा रहनुहुन्छ । उहाँ बाहिर र भित्र दुबै दृष्टिकोणबाट परिपूर्ण हुनुहुन्छ । संसारलाई धारण गरेर पनि संसारदेखि पर हुनुहुन्छ । संसारको र विषयको सङ्ग गरेर पनि उहाँ असङ्ग हुनुहुन्छ । उहाँ अन्धकारभन्दा पर प्रकाशको राज्यमा विराजमान हुनुहुन्छ । अत्यन्त सूक्ष्म स्वरूपका हुनुभएकाले उहाँ अज्ञेय हुनुहुन्छ । सूर्य, चन्द्र र अग्नि आदि प्रकाश तत्त्वका पनि प्रकाशक हुनुहुन्छ । यस्ता ज्ञानगम्य सबैभन्दा प्राचीन ईश्वर सबैको ज्ञानद्वारा जानिने एकमात्र ज्ञेय विषय हुनुहुन्छ । उहाँलाई नै परब्रह्म, आत्मा, परात्पर र अव्यय भनिन्छ ।।२६-२९।। प्रकृतिदेखि पर रहेका पुरुष परमात्माले प्रकृतिका गुणहरूको भोग गर्नुहुन्छ । उहाँले सत्त्व, रज, तमनामक गुणहरूद्वारा जीवहरूलाई शरीरको बन्धनमा राखिदिनुहुन्छ ।।३०।। जब सत्त्वगुणको वृद्धि हुन्छ त्यस बेला मानिसको हृदयमा क्षमा, निर्मलता र प्रकाश पनि हुन्छ । रजोगुणको वृद्धि हुँदा लोभ, अशान्ति र कर्मका इच्छाका कारण जन्मिने छटपटीजस्ता गुणहरूको विकास हुन्छ । जुन बेला तमोगुणको वृद्धि हुन्छ; त्यहाँ मोह, आलस्य, अज्ञान र प्रमादजस्ता दुर्बलताहरू प्रकट हुन्छन् । जुन मानिसमा सत्त्वगुणको अधिकता हुन्छ; त्यहाँ सुख र ज्ञानका साथै सत्कर्ममा प्रवृत्ति पनि हुन्छन् । रजोगुणको अधिकता भएको मानिसमा कर्ममा प्रवृत्ति र अहङ्कार आदि विषय रहन्छन् । जुन मानिसमा तमोगुण धेरै हुन्छ, त्यो

तमोधिकश्च लभते निद्रालभ्यं सुखेतरत् ।
एषु त्रिषु प्रवृद्धेषु मुक्तिसंसृतिदुर्गती: ।।३३।।

प्रयान्ति मानवा राजँस्तस्मात् सत्त्वयुतो भव ।
ततश्च सर्वभावेन भज त्वं मां नरेश्वर ! ।।३४।।

भक्त्या चाव्यभिचारिण्या सर्वत्रैव च संस्थितम्।
अग्नौ सूर्ये तथा सोमे यच्च तारासु संस्थितम् ।।३५।।

विदुषि ब्राह्मणे तेजो विद्धि तन्मामकं नृप ।
अहमेवाखिलं विश्वं सृजामि विसृजामि च ।।३६।।

ओषधीस्तेजसा सर्वा विश्वं चाप्याययाम्यहम् ।
सर्वेन्द्रियाण्यधिष्ठाय जाठरञ्च धनञ्जयम् ।।३७।।

भुनज्मि चाखिलान् भोगान् पुण्यपापविवर्जित:।
अहं विष्णुश्च रुद्रश्च ब्रह्मा गौरी गुणेश्वर: ।।३८।।

इन्द्राद्या लोकपालाश्च ममैवांशसमुद्भवा: ।
येन येन हि रूपेण जनो मां पर्युपासते ।।३९।।

तथा तथा दर्शयामि तस्मै रूपं सुभक्तित: ।
इति क्षेत्रं तथा ज्ञाता ज्ञानं ज्ञेयं मयेरितम् ।।४०।।

अखिलं भूपते ! सम्यगुपपन्नाय पृच्छते ।।४१।।

दु:ख, निद्रा र आलस्यद्वारा जेलिएको हुन्छ । यी तीन गुणहरूको वृद्धि हुँदा क्रमश: तीन प्रकारका फल प्राप्त हुन्छन् । सत्त्वगुणको वृद्धि हुँदा मुक्ति प्राप्त हुन्छ; रजोगुणको वृद्धि हुँदा जन्म र मृत्युको चक्रमा परिन्छ र तमोगुणको वृद्धि हुँदा नरक आदि भोगको कारण दुर्गति प्राप्त हुन्छ ।।३१-३३।। त्यस कारण आफ्नो स्वभावअनुसार मानिसले मुक्ति, संसारमा प्रवृत्ति र दुर्गतिजस्ता फलहरू प्राप्त गर्छन् । हे राजा वरेण्य! तपाईँ आत्मकल्याण चाहनुहुन्छ भने तपाईँले सत्त्वगुणको विकास गर्नुहोस्। त्यसपछि सबै कुरा समर्पण गरेर मेरो भजन गर्नुहोस् !)३४(। मेरो भजन गर्ने क्रममा सर्वत्र मेरो अस्तित्वदर्शन गर्दै अग्नि, सूर्य, चन्द्रमा र ताराहरूमा चम्किरहेको प्रकाशरूपमा मलाई जान्दै विद्वान् र ब्रह्मज्ञानीमा तेजको रूपमा रहेको मेरो दर्शन गर्दै तपाईँ अखण्ड भक्तिद्वारा मेरो आराधना गर्नुहोस् । हे राजा वरेण्य! मैले नै सम्पूर्ण संसारको रचना र संहार गर्दछु, मैले नै तेज र औषधिहरूको विस्तार गरेर सम्पूर्ण संसारलाई आनन्दित पनि तुल्याउँछु । सबै मानिसहरूका इन्द्रियहरूमा रहेर पेटमा रहेको धनञ्जयनाम अग्निको सहायता लिई प्राणीहरूले खाएका भोजनहरूलाई पचाउने काम पनि मैले गर्दछु तर संसारका भोगहरूमा रहे पनि म पुण्य र पापसँग लिप्त हुँदिनँ । म विष्णु, रुद्र, ब्रह्मा, गौरी र श्रीगणेशका रूपमा रहन्छु।।३४-३८।। इन्द्र आदि लोकपालहरू पनि मेरै अंशबाट पैदा भएका हुन् । जुन मानिसले जस्तो रूप चिताएर मेरो ध्यान गर्छ, मैले त्यसलाई त्यस्तै रूपबाट दर्शन दिने गर्छु । तपाईँले मेरो शरणमा आएर नम्रतापूर्वक प्रश्न गर्नुभएकाले मैले तपाईँलाई क्षेत्र, क्षेत्रज्ञ, ज्ञाता र ज्ञेय पदार्थको विषयमा संक्षेपमा सबै कुरा बताएँ । किनभने नम्र शिष्यले नै गुरुबाट धेरै ज्ञान प्राप्त गर्न सक्छ ।।३९-४१।।

ॐ

ॐ तत्सदिति श्रीमद्‌गणेशगीतासूपनिषपर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे क्षेत्रक्षेत्रज्ञविवेकयोगो नाम नवमोध्याय: ।।९।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे क्षेत्रक्षेत्रज्ञविवेकयोगोपदेशो नाम षट्चत्वारिंशदधिकशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत क्षेत्रक्षेत्रज्ञविवेक योगको उपदेश' शीर्षकाङ्कित एक सय छयालीसौँ अध्याय पूर्ण भयो ।।१४६।।

ॐ

## सप्तचत्वारिंशदुत्तरशततमोऽध्यायः { १४७ अध्याय }

श्रीगजानन उवाच

दैव्यासुरी राक्षसी च प्रकृतिस्त्रिविधा नृणाम् ।
तासां फलानि चिह्नानि संक्षेपात् तेऽधुना ब्रुवे ।।१।।

आद्या संसाधयेन्मुक्तिं द्वे परे बन्धनं नृप !
चिह्नं ब्रवीमि चाद्यायास्तन्मे निगदतः शृणु ।।२।।

अपैशुन्यं दयाऽक्रोधाऽचापल्यं धृतिरार्जवम् ।
तेजोऽभयमहिंसा च क्षमा शौचममानिता ।।३।।

इत्यादिचिह्नमाद्याया आसुर्याः शृणु साम्प्रतम् ।
अतिवादोऽभिमानश्च दर्पोऽज्ञानं सकोपता ।।४।।

आसुर्या एवमाद्यानि चिह्नानि प्रकृतेर्नृप !
निष्ठुरत्वं मदो मोहोऽहङ्कारो गर्व एव च ।।५।।

द्वेषो हिंसा दया क्रोध औद्धत्यं दुर्विनीतता ।
आभिचारिककर्तृत्वं क्रूरकर्मरतिस्तथा ।।६।।

अविश्वासः सतां वाक्येऽशुचित्वं कर्महीनता ।
निन्दकत्वं च वेदानां भक्तानामसुरद्विषाम् ।।७।।

मुनिश्रोत्रियविप्राणां तथा स्मृतिपुराणयोः ।
पाखण्डवाक्ये विश्वासः सङ्गतिर्मलिनात्मनाम् ।।८।।

सदम्भकर्मकर्तृत्वं स्पृहा च परवस्तुषु ।
अनेककामनावत्त्वं सर्वदाऽनृतभाषणम् ।।९।।

परोत्कर्षासहिष्णुत्वं परकृत्यपराहतिः ।
इत्याद्या बहवश्चान्ये राक्षस्याः प्रकृतेर्गुणाः ।।१०।।

पृथिव्यां स्वर्गलोके च परिवृत्य वसन्ति ते ।
मद्भक्तिरहिता लोका राक्षसीं प्रकृतिं श्रिताः ।।११।।

तामसीं ये श्रिता राजन् ! यान्ति ते रौरवं ध्रुवम् ।
अनिर्वाच्यं च ते दुःखं भुञ्जते तत्र संस्थिताः ।।१२।।

दैवान्निःसृत्य नरकाज्जायन्ते भुवि कुब्जकाः ।
जात्यन्धाः पङ्गवो दीना हीनजातिषु ते नृप ।।१३।।

**श्रीगणेशले भन्नुभयो** - मानिसहरूका दैवी, आसुरी र राक्षसी गरी तीन प्रकारका प्रकृति हुन्छन् । तिनका फल र चिह्नहरूको विषयमा म तपाईँलाई संक्षेपमा बताउँछु ।।१।। दैवी प्रकृतिले मानिसहरूलाई मुक्ति प्रदान गर्दछ भने आसुरी र राक्षसी प्रकृतिले मानिसलाई बन्धनमा पार्दछन् । हे राजन् ! म तपाईँलाई सर्वप्रथम दैवी प्रकृतिको लक्षण बताउँछु, तपाईँ सुन्नुहोस्।।२।। अपैशुन्य (चुक्ली नगर्ने काम), दया, अक्रोध, (रीस नगर्नु), अचपलता (चञ्चलताको अभाव), धैर्य, सरलता, तेज, निर्भयता, अहिंसा, क्षमा, पवित्रता र अहङ्कारविहीनता यी गुण दैवी प्रकृतिका हुन् । अब तपाईँले आसुरी प्रकृतिका लक्षण सुन्नुहोस् - बढाइचढाई गरी कुरा गर्ने बानी, अभिमान, दर्प, अज्ञान, क्रोध इत्यादि आसुरी प्रकृतिका लक्षण हुन् । अब म तपाईँलाई राक्षसी प्रवृत्तिका लक्षण बताउँछु - निष्ठुरता, मद, मोह, अहङ्कार, गर्व, द्वेष, हिंसा, निष्ठुरता, क्रोध, उद्दण्डता, अविनय, मारण; मोहन; वशीकरण; उच्चाटन एवं स्तम्भन आदि अभिचारमा प्रवृत्ति, क्रूर कर्ममा प्रीति, सज्जनका वाक्यहरूमा अविश्वास, अपवित्रता, कर्महीनता, वेद; ईश्वरका भक्त; देवता; मुनि; वेदका ज्ञाता ब्राह्मण; स्मृति र पुराणको निन्दा, पाखण्डवाक्यमा विश्वास, दुर्जनहरूको सङ्गति, अहङ्कारपूर्वक काम गर्ने बानी, अरूका पदार्थहरूमा लोभ, मनमा अनेक तृष्णा, असत्यभाषण, अरूको उन्नति नसहने बानी, अरूले गरेको उन्नतिबाट आफू हारेको संझने मनोवृत्ति इत्यादि अनेक राक्षसी प्रकृतिका गुणहरू रहेका छन् ।।३-१०।। यी प्रवृत्तिहरू पृथिवीमा र स्वर्गमा पनि पाइन्छन् । जसले मेरो भक्ति गर्दैनन् त्यस्ता मानिसहरू राक्षसी प्रवृत्तिको अधीनमा रहेका हुन्छन् ।।११।। यिनैलाई तामस प्राणी भनिन्छ र यस्ता प्रवृत्ति भएका मानिसहरू निश्चय नै रौरव नरकमा जान्छन् । त्यहाँ रहेर तिनीहरूले भन्नै नसकिने कष्टहरूको भोग गर्छन् ।।१२।। दैवको इच्छाले नरकबाट मुक्त भएपछि ती प्राणीहरू पृथिवीमा कुँजा, अन्धा, लङ्गडा, दीन-दुःखी, हीनजातिमा उत्पन्न मानिसका रूपमा देखापर्छन् । यस्तो परिस्थितिमा रहँदा पनि तिनलाई फेरि पापमात्र गर्न मनलाग्छ । त्यस कारण तिनले मेरो भक्ति गर्दैनन्।

पुनः पापसमाचारा मय्यभक्ताः पतन्ति ते ।
उत्पतन्ति हि मद्भक्ता यां काञ्चिद् योनिमाश्रिताः ।।१४।।

लभन्ते स्वर्गतिं यज्ञैरन्यैर्धर्मैश्च भूमिप !
सुलभा सा सकामानां मयि भक्तिः सुदुर्लभा ।।१५।।

विमूढा मोहजालेन बद्धाः स्वेन च कर्मणा ।
अहं हर्ता अहं कर्ता अहं भोक्तेति वादिनः ।।१६।।

अहमेवेश्वरः शास्ता अहं वेत्ता अहं सुखी ।
एतादृशी मतिर्नृणामधः पातयतीह तान् ।।१७।।

तस्मादेतत् समुत्सृज्य दैवीं प्रकृतिमाश्रय ।
भक्तिं कुरु मदीयां त्वमनिशं दृढचेतसा ।।१८।।

सापि भक्तिस्त्रिधा राजन् ! सात्त्विकी राजसीतरा ।
यद्देवान् भजते भक्त्या सात्त्विकी सा मता शुभा।।१९।।

राजसी सा तु विज्ञेया भक्तिर्जन्ममृतिप्रदा ।
यद्यक्षाँश्चैव रक्षांसि यजन्ते सर्वभावतः ।।२०।।

वेदनाविहितं क्रूरं साहङ्कारं सदम्भकम् ।
भजन्ते प्रेतभूतादीन् कर्म कुर्वन्ति कामुकम् ।।२१।।

शोषयन्तो निजं देहमन्तस्थं मां दृढाग्रहाः ।
तामस्येतादृशी भक्तिर्नृणां सा निरयप्रदा ।।२२।।

कामो लोभस्तथा क्रोधो दम्भश्चत्वार इत्यमी ।
महाद्वाराणि वीचीनां तस्मादेताँस्तु वर्जयेत् ।।२३।।

मेरो भक्ति नगर्नाले फेरि रौरव आदि नरकमा पर्छन् । तर मेरा भक्तहरू भने जस्तोसुकै परिस्थितिमा पनि, जस्तोसुकै योनिमा जन्म लिए तापनि मेरो भक्तिका कारण ती दुःख, कष्ट र नरकबाट मुक्त भई यज्ञ र अन्य धार्मिक कर्महरू गरेर स्वर्गमा प्राप्त हुन्छन्। यसरी मेरो भक्ति गर्ने मानिसहरूले दुर्लभ कामनालाई पनि सुलभ तुल्याउँछन् ।।१३-१५।। मोहमा परेर किंकर्तव्यमूढ भएका मानिसहरू आफ्नै कर्मले समाप्त हुन्छन् । म कर्ता हुँ, म भोक्ता हुँ, म हन्ता हुँ भन्ने भावना लिने; म नै ईश्वर हुँ, म नै शासक हुँ, म नै ज्ञानी हुँ, म नै सुखी हुँ भन्ने मानिसहरूको बुद्धि भयो भने यस बुद्धिले ती मानिसहरूलाई नरकमा पुऱ्याउँछ ।।१६-१७।। हे राजा वरेण्य ! तपाईंले राक्षसी र आसुरी प्रकृतिका तामसी गुणहरूलाई पन्छाएर सात्त्विक प्रकृति अँगाल्नुहोस्, ममा निरन्तर आफ्नो मन दृढ गराएर भक्ति गर्नुहोस् ।।१८।। हे राजा वरेण्य! त्यो भक्ति पनि तीन प्रकारको छ - सात्त्विकी, राजसी र तामसी भक्ति । जुन भक्तिद्वारा श्रद्धापूर्वक देवताहरूको आराधना गरिन्छ त्यो भक्तिलाई सात्त्विकी भक्ति भन्दछन् । त्यो उत्तम भक्ति मानिन्छ । राजसी भक्ति भनेको जन्म र मृत्यु दिने भक्ति हो । यस्तो भक्तिलाई यक्ष र राक्षसले अँगालेका हुन्छन् । तिनले वेदले नगर्न भनेका काम गर्दछन् । क्रूरता, अहङ्कार, दम्भ अँगालेर तिनले भूत र प्रेतको आराधना गर्दछन् र आफूले केही पाउने आशाले मात्र आफ्ना आराध्यहरूको सेवा गर्दछन् ।।१९-२१।। कामना प्राप्तिका लागि तिनले शरीरलाई सुकाउँछन् । आफूभित्र रहेका म परमात्माको पनि बेवास्ता गर्छन् । अर्को भक्तिको नाम हो -तामसी । त्यसले मानिसहरूलाई नरक प्रदान गर्दछ ।।२२।। त्यसका साधक चार तत्त्व छन्- काम, क्रोध, लोभ र दम्भ । यी चारै तत्त्व संसारसागरका ढोका हुन् । त्यस कारण यिनलाई हटाउनु पर्दछ ।।२३।।

ॐ

ॐ तत्सदिति श्रीमद्गणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे उपदेशयोगो नाम दशमोऽध्यायः ।।१०।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे उपदेशयोगो नाम सप्तचत्वारिंशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत उपदेशयोग' शीर्षकान्वित एक सय सतचालीसौं अध्याय पूर्ण भयो ।।१४७।।

ॐ

# अष्टचत्वारिंशदुत्तरशततमोऽध्याय: { १४८ अध्याय }

श्रीगजाननउवाच

तपोऽपि त्रिविधं राजन् कायिकादिप्रभेदत: ।
ऋजुतार्जवशौचानि ब्रह्मचर्यमहिंसनम् ।।१।।

गुरुविज्ञद्विजातीनां पूजनं चासुरद्विषाम् ।
स्वधर्मपालनं नित्यं कायिकं तप ईदृशम् ।।२।।

मर्मास्पृक्च प्रियं वाक्यमनुद्वेगं हितमृतम् ।
अधीतिर्वेदशास्त्राणां वाचिकं तप ईदृशम् ।।३।।

अन्त:प्रसाद: शान्तत्वं मौनमिन्द्रियनिग्रह: ।
निर्मलाशयता नित्यं मानसं तप ईदृशम् ।।४।।

अकामत: श्रद्धया च यत्तप: सात्त्विकं तु तत् ।
विधिवाक्यप्रमाणार्थं सदम्भं राजसं तप: ।।५।।

तदस्थिरं जन्ममृती प्रयच्छति न संशय: ।
परात्मपीडकं यच्च तपस्तामसमुच्यते ।।६।।

विधिवाक्यप्रमाणार्थं सत्पात्रे देशकालत: ।
श्रद्धया दीयमानं यद् दानं तत् सात्त्विकं मतम् ।।७।।

उपकारं फलं वापि काङ्क्षद्भिर्दीयते नरै: ।
क्लेशतो दीयमानं वा भक्त्या राजसमुच्यते ।।८।।

अकालदेशतोऽपात्रेऽवज्ञया दीयते तु यत् ।
असत्काराच्च यद् दत्तं तद् दानं तामसं स्मृतम् ।।९।।

ज्ञानं च त्रिविधं राजन् ! शृणुष्व स्थिरचेतसा।
त्रिधा कर्म च कर्तारं ब्रवीमि ते प्रसङ्गत: ।।१०।।

नानाविधेषु भूतेषु मामेकं वीक्षते तु य: ।
नाशवत्सु च नित्यं मां तज्ज्ञानं सात्त्विकं नृप ।।११।।

नेषु वेत्ति पृथग्भूतं विविधं भावमाश्रित: ।
मामव्ययं च तज्ज्ञानं राजसं परिकीर्तितम् ।।१२।।

श्रीगणेशले भन्नुभयो - हे राजा वरेण्य ! कायिक, वाचिक र मानसिक भेदले तपस्या तीन प्रकारको मानिएको छ। सरलता, विनम्रता, पवित्रता, ब्रह्मचर्यधारण, अहिंसा, गुरुको, विद्वान्‌को, ब्राह्मणको र देवताहरूको अर्चना एवं नित्य स्वधर्मको पालन गर्नु यी शारीरिक तपस्याका लक्षण हुन् ।।१-२।। मर्ममा नबिझाउने, सुन्दा प्यारो लाग्ने, उद्वेगरहित, हितकारी, मधुर एवं सत्यवचन तथा वेद एवं शास्त्रहरूको अध्ययन यी वाचिक तपस्याका परिचायक हुन्।।३।। हृदयमा प्रसन्नता, शान्ति, मौन, इन्द्रियवशीकरण र हृदयमा नित्य निर्मलता यी मानसिक तपस्याका लक्षण हुन् ।।४।। निष्काम भावले श्रद्धाका साथ जुन तपस्या गरिन्छ त्यो सात्त्विक तपस्या कहलाउँछ । अरूको सत्कार गरेर आफ्नो नाम चलाउनका लागि दम्भपूर्वक गरिने तपस्यालाई राजस तपस्या भनिन्छ । यो राजस तपस्या अस्थिर, विनाशशील हुन्छ र मृत्युदायक हुन्छ । अरूको आत्मामा पीडा उत्पन्न गर्ने तपस्यालाई तामस तपस्या भनिन्छ ।।५-६।। वेदका विधिवाक्यलाई प्रमाण मानेर उत्तम पात्र, उत्तम देश र उत्तम कालमा श्रद्धापूर्वक दिइने दानलाई सात्त्विक दान भनिन्छ । उपकारका दृष्टिले अथवा फलको आकाङ्क्षा राखेर क्लेश सहन गर्दै दिइने दान राजस दान कहलाउँछ। अकालमा विधान नगरिएको देशमा र अपात्रमा अवज्ञापूर्वक एवं असत्कारपूर्वक दिइने दान तामस दान कहलाउँछ ।।७-९।। हे राजन् ! ज्ञान र कर्म पनि तीन तीन प्रकारका हुन्छन् । तपाईँले आफ्नो चित्त स्थिर गराएर सुन्नुहोस्। प्रसङ्गअनुसार मैले तीन प्रकारका कर्ताहरूको विषयमा पनि बताउनेछु । जसले अनेक प्राणीहरूमा एउटा मेरो मात्र दर्शन गर्दछ र नाशवान् पदार्थहरूमा पनि नित्य अविनाशी रूपमा रहने मलाई चिन्दछ त्यस व्यक्तिको ज्ञानलाई सात्त्विक ज्ञान भनिन्छ ।।१०-११।। जसले भेदभावना मनमा राखी अनेक प्राणीहरूभन्दा अलग रहेको ईश्वरतत्त्व हो भनी भिन्नै रूपमा मेरो दर्शन गर्दछ त्यसको भेदसहितको ज्ञानलाई राजस ज्ञान भनिन्छ ।।१२।। कारणरहित, अनित्य, शरीरमा

हेतुहीनमसत्यं च देहात्मविषयञ्च यत् ।
असदल्पार्थविषयं तामसं ज्ञानमुच्यते ।।१३।।

भेदतस्त्रिविधं कर्म विद्धि राजन् ! मयेरितम् ।
कामनाद्वेषदम्भैर्यद्रहितं नित्यकर्म यत् ।।१४।।

कृतं विना फलेच्छां यत् कर्म सात्त्विकमुच्यते ।
यद् बहुक्लेशतः कर्म कृतं यच्च फलेच्छया ।।१५।।

क्रियमाणं नृभिर्दम्भात् कर्म राजसमुच्यते ।
अनपेक्ष्य स्वशक्तिं यदर्थक्षयकरं च यत् ।।१६।।

अज्ञानात् क्रियमाणं यत् कर्म तामसमीरितम् ।
कर्तारं त्रिविधं विद्धि कथ्यमानं मया नृप ।।१७।।

धैर्योत्साही समोऽसिद्धौ सिद्धौ चाविक्रियस्तु यः ।
अहङ्कारविमुक्तो यः स कर्ता सात्त्विको नृप ।।१८।।

कुर्वन् हर्षञ्च शोकञ्च हिंसाफलस्पृहाञ्च यः ।
अशुचिर्लुब्धको यस्तु राजसोऽसौ निगद्यते ।।१९।।

प्रमादाज्ञानसहितः परोच्छेदपरः शठः ।
अलसस्तर्कवान् यस्तु कर्ताऽसौ तामसो मतः ।।२०।।

सुखञ्च त्रिविधं राजन् ! दुःखञ्च क्रमतः शृणु ।
सात्त्विकं राजसं चैव तामसञ्च मयोच्यते ।।२१।।

विषवद् भासते पूर्वं दुःखस्यान्तकरञ्च यत् ।
इच्छ्यमानं तथा वृत्त्या यदन्तेऽमृतवद् भवेत् ।।२२।।

प्रसादात् स्वस्य बुद्धेर्यत् सात्त्विकं सुखमीरितम् ।
विषयाणां तु यो भोगो भासतेऽमृतवत् पुरा ।।२३।।

हालाहालमिवान्ते यद् राजसं सुखमीरितम् ।
तन्द्रिप्रमादसम्भूतमालस्यप्रभवञ्च यत् ।।२४।।

सर्वदा मोहकं स्वस्य सुखं तामसमीदृशम् ।
न तदस्ति यदेतैर्यन्मुक्तं स्यात् त्रिविधैर्गुणैः ।।२५।।

राजन् ! ब्रह्मापि त्रिविधमों तत्सदिति भेदतः ।।
त्रिलोकेषु त्रिधाभूतमखिलं भूप ! वर्तते ।।२६।।

आत्माको अवलोकन गर्ने र असत् एवं अल्पप्रयोजनमा आश्रित ज्ञानलाई तामस ज्ञान भनिन्छ ।।१३।। हे राजा ! तपाईंले तीन प्रकारका कर्मको विषयमा पनि सुन्नुहोस् - कामना, द्वेष एवं दम्भ नभएको र फलको आशा नराखी गरिएको कर्मलाई सात्त्विक कर्म भनिन्छ। जुन कर्म गर्दा अनेक कष्टहरूको सहन गरिन्छ र जुन कर्म फलको इच्छा राखेर दम्भपूर्वक गरिन्छ त्यस कर्मलाई राजस कर्म भनिन्छ। जुन कर्म आफ्नो शक्ति नहेरी गरिन्छ, जुन कर्म गर्दा धेरै धनको व्यय गरिन्छ र जुन कर्म अज्ञानपूर्वक गरिन्छ त्यसलाई तामस कर्म भनिन्छ । हे राजा वरेण्य! कर्मका साधक कर्ता पनि तीन प्रकारका हुन्छन् । तिनको विषयमा म बताउनेछु ।।१४-१७।। हे राजन्! जुन कर्ताले धैर्यपूर्वक उत्साहका साथ कर्म गर्दछ र जुन कर्ता समदृष्टिले सम्पन्न हुन्छ, जुन कर्ताको मनमा सफलता वा असफलताका कारण कुनै विकार पैदा हुँदैन, जुन कर्ता अहङ्काररहित हुन्छ त्यस कर्तालाई सात्त्विक कर्ता भन्नुपर्दछ ।।१८।। अपवित्र, लोभलालसाले युक्त, हर्ष र शोकले सम्पन्न, हिंसाबाट प्राप्त हुने फलको कामना गर्ने कर्तालाई राजस कर्ता भनिन्छ ।।१९।। प्रमाद र अज्ञानको पुञ्ज, अरूको वृत्ति व्यवस्था र सम्पत्ति हरण गर्ने, दुर्जन, अल्छी र धेरै तर्क गर्ने कर्तालाई तामस कर्ता भनिन्छ ।।२०।। सुख तीन प्रकारको हुन्छ र दुःख पनि तीन प्रकारको नै हुन्छ । म दुबैको विषयमा क्रमैले बताउनेछु, तपाईं सुन्नुहोस् । पहिले विषसमान लाग्ने तर पछि गएर दुःखको नाश गराउने उत्तम कर्म गरेका कर्ताहरूद्वारा चाहना गरिने र प्राप्त गरेपछि आफ्नो बुद्धिको निर्मलताका कारण अमृतझैं लाग्ने सुखलाई सात्त्विक सुख भनिन्छ।।२१-२२।। पहिले विषयभोगका समयमा अमृतझैं लाग्ने र अन्तमा विषसमान प्रतीत हुने सुखलाई राजस सुख भनिन्छ । तन्द्रा, प्रमाद, आलस्यबाट पैदा हुने र आफूलाई सधैं मूढ अवस्थामा राख्ने सुखलाई तामस सुख भनिन्छ। संसारमा तीन गुणबाट मुक्त कोही पनि छैन ।।२३-२५।। ॐकाररूप ब्रह्म, ईश्वररूप ब्रह्म र जीवरूप ब्रह्म गरी ब्रह्म पनि तीन प्रकारको हुन्छ । हे राजन्! त्यो ब्रह्म तीन लोकमा नै तीन रूपमा व्याप्त भएर रहेको छ।।२६।। स्वभावैले ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र

ब्रह्मक्षत्रियविट्शूद्राः स्वभावाद् भिन्नधर्मिणः ।
तानि तेषां तु कर्माणि संक्षेपात् तेऽधुना वदे ।।२७।।

अन्तर्बाह्येन्द्रियाणाञ्च वश्यत्वमार्जवं क्षमा ।
नानातपांसि शौचञ्च द्विविधं ज्ञानमात्मनः ।।२८।।

वेदशास्त्रपुराणानां स्मृतीनां ज्ञानमेव च ।
अनुष्ठानं तदर्थानां कर्म ब्राह्ममुदाहृतम् ।।२९।।

दार्ढ्यं शौर्यञ्च दाक्ष्यञ्च युद्धे पृष्ठाप्रदर्शनम् ।
शरण्यपालनं दानं धृतिस्तेजःस्वभावजम् ।।३०।।

प्रभुता मनऔन्नत्यं सुनीतिर्लोकपालनम् ।
पञ्चकर्माधिकारत्वं क्षत्रकर्म समीरितम् ।।३१।।

नानावस्तुक्रयो भूमेः कर्षणं रक्षणं गवाम् ।
त्रिधा कर्माधिकारित्वं वैश्यकर्म समीरितम् ।।३२।।

दानं द्विजानां शुश्रूषा सर्वदा शिवसेवनम् ।
एतादृशं नरव्याघ्र ! कर्म शौद्रमुदीरितम् ।।३३।।

स्वस्वकर्मरता एते मय्यर्प्याखिलकारिणः ।
मत्प्रसादात् स्थिरं स्थानं यान्ति ते परमं नृप ।।३४।।

इति ते कथितो राजन् ! प्रसादाद् योग उत्तमः।
साङ्गोपाङ्गः सविस्तारोऽनादिसिद्धो मया प्रिय ।।३५।।

युङ्क्ष्व योगं मयाख्यातं नाख्यातं कस्यचिन्नृप ।
गोपयैनं ततः सिद्धिं परां यास्यस्यनुत्तमाम् ।।३६।।

वर्णहरू भिन्नभिन्न कर्मका अधिकारी मानिएका छन् । ती ती वर्णहरूका लागि निर्धारित कर्महरूको विषयमा म तपाईँलाई अहिले संक्षेपमा बताउँछु।।२७।। इन्द्रियहरूलाई बाहिरी विषय र भावनाप्रधान आभ्यन्तर विषयहरूमा आसक्त हुन नदिनु, ऋजुता अवलम्बन गर्नु, क्षमा धारण गर्नु, अनेक थरि तपस्या गर्नु, आत्मालाई सर्वत्र दर्शन गर्नु तथा आफैभित्र पनि दर्शन गर्नु वेद, शास्त्र, पुराण र धर्मशास्त्रको ध्यान गर्नु, वेद, पुराण, शास्त्र र धर्मशास्त्रहरूले बताएका कर्महरूको पालन गर्नु यी ब्राह्मणहरूका कर्म भनी निर्धारण गरिएका विषय हुन्।।२८-२९।। दृढता, शूरता, चतुरता, युद्धमा पिठ्यूँ नफर्काई वीरता प्रदर्शन गर्नु, शरणागतको रक्षा गर्नु, दान गर्नु, धैर्यधारण गर्नु, क्षत्रिय स्वभाव-अनुसारको प्रताप धारण गर्नु, स्वामित्व वा ऐश्वर्य कायम गर्नु, विशाल मनको अधिपति हुनु, उत्तम नीति कायम गर्नु, जनताको सर्वतोभावेन रक्षा गर्नु र भूतयज्ञ, पितृयज्ञ, देवयज्ञ, ब्रह्मयज्ञ एवं मनुष्ययज्ञजस्ता पञ्चकर्महरूको साधिकार अनुष्ठान गर्नुजस्ता कर्म क्षत्रियका लागि निर्धारित छन् ।।३०-३१।। अनेक थरि वस्तुहरूको आयात गर्नु, खेती गर्नु, गोपालन गर्नु र यी तीनै कर्मको अधिष्ठाता भई राष्ट्रमा अरूलाई पनि त्यसतर्फ अभिप्रेरित गर्नुजस्ता वैश्यका कर्म भनी निर्धारित विषय हुन्।।३२।। हे राजन्! दान गर्नु, ब्राह्मण, क्षत्रिय र वैश्यका लागि आवश्यक वस्तुहरूको निर्माण गरी सेवा पुऱ्याउनु, शिवजीको आराधना गर्नुजस्ता कर्म शूद्रवर्णका लागि विधान गरिएका छन् ।।३३।। यी सबै वर्णहरू आ-आफ्नो धर्ममा निरत भई आफूले गरेका कर्म मलाई अर्पेर सबैको सेवा गरेका कारण मेरो कृपा प्राप्त गरी शाश्वत र परम धाममा प्राप्त हुन्छन् ।।३४।। हे राजन्! यसरी मैले तपाईँलाई अनादि परम्पराबाट प्राप्त उत्तम योगशास्त्र साङ्गोपाङ्ग रूपमा विस्तारपूर्वक बताएँ । हे राजा ! मैले बताएको योगशास्त्रमा आफूलाई प्रवृत्त गराउनुहोस् । मैले यस योगको उपदेश आजभन्दा अघि कसैलाई पनि गरेको छैन । यो गोपनीय विद्या हो । तपाईँले पनि यसलाई गोप्य बनाएर धारण गर्नुहोस्। यसबाट परम सिद्धि प्राप्त गर्नुहुनेछ।।३५-३६।।

क उवाच

इति तस्य वचः श्रुत्वा प्रसन्नस्य महात्मनः ।
गणेशस्य वरेण्यः स चकार च यथोदितम् ।।३७।।

त्यक्त्वा राज्यं कुटुम्बञ्च कान्तारं प्रययौ रयात् ।
उपदिष्टं यथायोगमास्थाय मुक्तिमाप्तवान् ।
इमं योगोत्तमं योगं शृणोति श्रद्धया तु यः ।।३८।।

सोऽपि कैवल्यमाप्नोति यथा योगी तथैव सः ।
य इमं श्रावयेद् योगं कृत्वाऽस्यार्थं सुबुद्धिमान् ।।३९।।

यथा योगी तथा सोऽपि परं निर्वाणमृच्छति ।
यो गीतां सम्यगभ्यस्य ज्ञात्वा चार्थं गुरोर्मुखाद् ।।४०।।

कृत्वा पूजां गणेशस्य प्रत्यहं पठते तु यः ।
एककालं द्विकालं वा त्रिकालं वापि यः पठेत् ।।४१।।

ब्रह्मीभूतस्य तस्यापि दर्शनान्मुच्यते नरः ।
न यज्ञैर्न व्रतैर्दानैर्नाग्निहोत्रैर्महाधनैः ।।४२।।

न वेदैः सम्यगभ्यस्तैः सम्यग्ज्ञातैः सहाङ्गकैः ।
पुराणश्रवणैर्नैव न शास्त्रैः साधुचिन्तनैः ।।४३।।

प्राप्यते ब्रह्म परममनया प्राप्यते नरैः ।
ब्रह्मघ्नो मद्यपः स्तेनो गुरुतल्पगमोऽपि यः ।।४४।।

चतुर्णां यस्तु संसर्गी महापातककारिणाम् ।
स्त्रीहिंसा गोवधादीनां कर्तारो ये च पापिनः ।।४५।।

ते सर्वे प्रतिमुच्यन्ते गीतामेतां पठन्ति चेत् ।
यः पठेत् प्रयतो नित्यं स गणेशो न संशयः ।।४६।।

चतुर्थ्यां यः पठेद् भक्त्या सोऽपि मोक्षाय कल्पते।
तत्तत् क्षेत्रं समासाद्य स्नात्वाऽभ्यर्च्य गजाननम्।।४७।।

सकृद् गीतां पठेद् भक्त्या ब्रह्मभूयाय कल्पते ।
भाद्रे मासे सिते पक्षे चतुर्थ्यां भक्तिमान् नरः ।।४८।।

**ब्रह्माजीले भन्नुभयो** - प्रसन्न हुनुभएका परमात्मा श्रीगणेशका वचन सुनेर वरेण्यले भगवान्ले आज्ञा गर्नु भएअनुसार योगशास्त्र धारण गरी अनुष्ठान गरे । त्यसपछि तिनले कुटुम्ब र राज्यसमेत परित्याग गरी वन जान तीव्र गतिमा प्रस्थान गरे । उपदेश गरिएको योगशास्त्रलाई धारण र प्रयोग गरी मुक्तिपद पनि प्राप्त गरे । योगशास्त्रहरूमा उत्तम यस योगशास्त्रलाई जसले श्रद्धापूर्वक श्रवण गर्दछ त्यसले योगीले झैं कैवल्यमुक्ति प्राप्त गर्दछ । जुन बुद्धिमान् मानिसले यसको अध्ययन गरी भक्तहरूलाई अर्थ सुनाउँछ त्यसले पनि योगीले झैं कैवल्यमुक्ति प्राप्त गर्दछ । जसले यस गीताको राम्ररी अभ्यास गरी गुरुबाट अर्थबोध गरेर दिनदिनै अध्ययन गर्दछ, दिनदिनै श्रीगणेशको पूजा गरी श्रीगणेशगीताको पाठ गर्दछ अथवा जसले दिनदिनै एक पटक, दुई पटक अथवा, तीन पटकसम्म पाठ गर्दछ त्यो ब्रह्मरूप हुन्छ । यस्ता ब्रह्मरूप पुरुषको दर्शन गर्ने मानिस पनि संसारको बन्धनबाट मुक्त हुन्छन् । मानिसहरूले श्रीगणेशगीताको अध्ययनद्वारा जुन परब्रह्मको साक्षात्कार गर्दछन् त्यो यज्ञद्वारा प्राप्त हुँदैन; दानबाट प्राप्त हुँदैन; अग्निहोत्रबाट प्राप्त हुँदैन; असंख्य धनराशि खर्च गरेर प्राप्त हुँदैन; वेद-वेदाङ्गको राम्रो अध्ययनबाट प्राप्त हुँदैन; पुराणश्रवणबाट पनि प्राप्त हुँदैन र शास्त्रहरूको गम्भीर अनुशीलनबाट पनि प्राप्त हुँदैन।।३७-४३।। श्रीगणेशगीताको राम्ररी अध्ययन गर्नाले ब्रह्महत्या गर्ने, मदिरापान गर्ने, चोरी गर्ने, आफ्नी गुरुकी पत्नीसँग व्यभिचार गर्ने र उक्त चार प्रकारका पापीहरूसँग बसउठ गर्ने समेत गरी यी पाँच प्रकारका महापातकीहरू यिनका साथै स्त्रीजातिको हत्या गर्ने र गोवध गर्ने पातकी पनि पापबाट मुक्त हुन्छन् ।।४४-४५।। जसले दिनदिनै श्रीगणेशगीताको पाठ गर्दछ त्यो ब्रह्म नै हो । जसले संयमित र शान्त भई दिनदिनै श्रीगणेशगीताको पाठ गर्दछ त्यो श्रीगणेश नै हो । यसमा कुनै सन्देह छैन ।।४६।। जसले चतुर्थी तिथिमा भक्तिपूर्वक श्रीगणेश-गीताको पाठ गर्दछ, त्यो मानिस पनि मोक्षधाममा प्राप्त हुन्छ। जुन श्रीगणेशभक्तले श्रीगणेशका विभिन्न तीर्थहरूमा गई स्नान र श्रीगणेशपूजा गरेर भक्तिपूर्वक एक पटकमात्र भए पनि श्रीगणेशगीताको पाठ गर्दछ

कृत्वा महीमयीं मूर्तिं गणेशस्य चतुर्भुजाम् ।
सवाहनां सायुधाञ्च समभ्यर्च्य यथाविधि ।।४९।।

यः पठेत् सप्तकृत्वस्तु गीतामेतां प्रयत्नतः ।
ददाति तस्य तुष्टोऽसौ गणेशो भोगमुत्तमम् ।।५०।।

पुत्रान् पौत्रान् धनं धान्यं पशुरत्नादिसम्पदः ।
विद्यार्थिनो भवेद् विद्या सुखार्थी सुखमाप्नुयात् ।।५१।।

कामानन्याँल्लभेत् कामी मुक्तिमन्ते प्रयान्ति ते ।।५२।।

भने त्यो पनि ब्रह्मस्वरूप बन्दछ । भाद्र मासको शुक्लपक्षको चतुर्थी तिथिका दिन भक्तिमान् मानिसले भगवान् श्रीगणेशको चतुर्बाहु, सवाहन, सायुध, पार्थिव मूर्ति तयार गरी विधिपूर्वक प्रतिष्ठा र पूजा गरेर सात पटकसम्म श्रीगणेशगीताको मनोयोगले पाठ गर्दछ भने त्यसमाथि भगवान् श्रीगणेश प्रसन्न भई त्यसलाई उत्तम भोग प्रदान गर्नुहुन्छ ।।४७-५०।। उहाँले पुत्र, पौत्र, धनधान्य, पशु, रत्न आदि सम्पत्ति पनि प्रदान गर्नुहुन्छ । भक्त विद्यार्थी भए त्यसले विद्या प्राप्त गर्दछ । सुखार्थी भए सुख प्राप्त गर्दछ । कामार्थी भए नाना थरि भोग प्राप्त गर्दछ । अन्तमा ती सबै थरि साधकहरूले मुक्ति प्राप्त गर्दछन् ।।५१-५२।।

ॐ

ॐ तत्सदिति श्रीमणेशगीतासूपनिषदर्थगर्भासु योगामृतार्थशास्त्रे श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे क्रीडाखण्डे बालचरिते श्रीगजाननवरेण्यसंवादे गुणत्रयकृतियोगो नामैकादशोध्यायः ।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे गुणत्रयकृतियोगो नाम अष्टचत्वारिंशदधिकशततमोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि बकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव बकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशगीताअन्तर्गत गुणत्रयकृति योग' शीर्षकान्वित एक सय अठचालीसौं अध्याय पूर्ण भयो ।।१४८।।

ॐ

## ऊनपञ्चाशदुत्तरशततमोऽध्यायः { १४९ अध्याय }

क उवाच

एवं पूजां संप्रगृह्य तत्रैव न्यवसद् विभुः ।
भक्तानां पूरयन् कामान् सदने राजपूजिते ।।१।।

मुनिरुवाच

विनायकस्य माहात्म्ये कथा भिन्ना निरूपिताः ।
अवतीर्य वरेण्यस्य गृहे विघ्नासुरो हतः ।।२।।

गजासुरमुखप्राप्तिर्वर्णिता चतुरानन !
अत्रैव पार्वतीगर्भादाविर्भावो निरूपितः ।।३।।

गजाननतया देव ! संशयोऽतो ममाभवत् ।
त्वदन्यः संशयच्छेत्ता नास्त्येव भुवनत्रये ।।४।।

क उवाच

न कार्यः संशयो व्यास ! नानाशक्तियुते विभौ ।
निजेच्छावशतोऽनेकरूपकः कल्पभेदतः ।।५।।

शम्भुवक्त्राच्च क्रोधाच्च प्रादुर्भूतो गजाननः ।
गौर्याश्च तेजसो जात उदराच्च क्वचिन्मुने ।।६।।

क्वचिद् गौरीमलाच्चापि द्विमुखो द्विकरः क्वचित् ।
क्वचित् पञ्चमुखः क्वापि षण्मुखो दशबाहुकः ।।७।।

क्वचिद् द्वादशहस्तश्च सहस्रभुजमण्डितः ।
आगमेषु समस्तेषु नानाध्यानानि सन्ति हि ।।८।।

न चात्र संशयः कार्यो विस्मयो वा मुने ! प्रभौ ।
शिवाद् ब्रह्मा च विष्णुश्च लैङ्गे जातौ निरूपितौ ।।९।।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! यसरी वरेण्यको राजभवनमा रहनुभएका प्रभु श्रीगणेश वरेण्यलाई योगशास्त्रको उपदेश गरेपछि राजपूजित भई त्यहीं राजभवनमा भक्तहरूद्वारा गरिएको पूजा ग्रहण गर्दै र तिनका कामनाहरू परिपूर्ण तुल्याउँदै निवास गर्नुभयो ।।१।।

**व्यासले भन्नुभयो** - हे विधाता ! हजुरले विनायक भगवान्‌को माहात्म्य संझाउन अनेक कथा सुनाउनुभयो । भगवान् विनायकले वरेण्यको घरमा अवतीर्ण भई विघ्नासुरको हत्या गर्नुभयो र भगवान् श्रीगणेशले गजासुरको हत्या गरी गजमुख धारण गरेको कथा पनि सुनाउनु भयो । फेरि वरेण्यको घरमा जानुभन्दा पहिले भगवान् श्रीगणेश पार्वतीको गर्भबाट गजाननका रूपमा अवतरित हुनुभएको कथा पनि हजुरले नै सुनाउनुभयो। श्रीगणेश पार्वतीका छोरा हुन् कि वरेण्यका ? मलाई ठूलो संशय भयो । स्वर्ग, मर्त्य र पातालमा हजुरभन्दा अर्को संशयछेदन गर्ने विद्वान् छैन । तसर्थ मेरो संशयछेदन गर्नुहोस्।।२-४।।

**ब्रह्माजीले भन्नुभयो**- हे व्यास! सर्वशक्तिसम्पन्न, अन्तर्यामी भगवान् श्रीगणेशका विषयमा तिमीले संशय नगर । उहाँले आफ्नो इच्छाले जतिबेला पनि र जहाँ पनि आफूलाई अनेक रूपमा प्रकट गराउन सक्नुहुन्छ । कल्पभेदले पनि कथाहरूमा फरक-फरक घटनाहरू देखाइएका हुन्छन् ।।५।। कहीं भगवान् गजाननलाई रिसाउनु भएका भगवान् शङ्करको मुखबाट पैदा हुनुभएको भनी वर्णन गरिएको छ, कहीं गौरीको तेजबाट प्रकट हुनुभएको कुरा लेखिएको छ, कहीं गौरीकै गर्भमा बास गरेर पैदा हुनुभएको भनिएको छ र कहीं गौरीको मयलबाट भगवान्‌को अवतरण भएको कुरा बताइएको छ ।।६।। कहीं उहाँलाई दुई मुख र दुई हात धारण गर्नुहुने भनिएको छ, कहीं उहाँलाई ६ मुख र १२ हात धारण गर्ने देवताका रूपमा वर्णन गरिएको छ, कहीं हजारौं मुख र हजारौं हात धारण गरी अवतरित हुनुभएको भन्ने बताइएको छ । यी सबै कुराका स्रोतका रूपमा निगम र आगम रहेका छन् ।।७-८।। हे व्यास! सर्वैश्वर्यसम्पन्न श्रीगणेश प्रभुका विषयमा तिमीले सन्देह र विस्मय पनि नगर । लिङ्गपुराणमा शिवजीबाट ब्रह्मा र विष्णु उत्पन्न

स्कान्दे विधातुर्नेत्राच्च शिवोत्पत्तिर्निरूपिता ।
विष्णुः शिवं ध्यायति च शिवोऽपि विष्णुमेव च।।१०।।

पञ्चाक्षरं समन्त्रं च तारकं वदति प्रभुः ।
शतकोटिमितं रामचरितं च त्रिधाकृतम् ।।११।।

मर्त्यलोके तारकं स स्थापयामास शङ्करः ।
क्वचिच्छिवात् सृष्टिरुक्ता ब्रह्मणश्च क्वचिद्धरेः।।१२।।

भगवत्याः क्वचित् प्रोक्ता क्वचित् सूर्याद् गजाननात्।
क्वचिच्च ब्रह्मणः प्रोक्ता सर्वं तच्छास्त्रसम्मतम्।।१३।।

संशयं कुरुते यस्तु स याति नरकं ध्रुवम् ।

क उवाच

एवं त्रेतायुगकथा प्रोक्ता सर्वा मुने तव ।।१४।।

इदानीमभिधास्यामि कथां कलियुगाश्रिताम् ।
कलिप्रान्ते मुने ! लोका भ्रष्टाचारास्तथानृताः ।।१५।।

ब्राह्मणा वेदरहिताः स्नानसन्ध्याविवर्जिताः ।
यजनं याजनं दानं न करिष्यन्ति कर्हिचित् ।।१६।।

प्रतिग्रहं च दुष्टानां करिष्यन्ति सुदुर्लभम् ।
परापवादं तन्निन्दां परस्त्रीधर्षणं तथा ।।१७ ।।

करिष्यन्ति जनाः सर्वे विधिलोपञ्च सर्वशः ।
विश्वासघातं सर्वत्र कुर्वन्ति च जना ध्रुवम्।।१८।।

विधिलोपे च शपथं करिष्यन्ति धरातले ।
न करिष्यन्ति मेघाश्च वृष्टिं क्वापि मुनीश्वर ।।१९।।

महानदीतीरदेशे करिष्यन्ति कृषिं जनाः ।
यो बली सोप्यबलिनो हरिष्यति धनं बलात् ।।२०।।

हरिष्यतस्ततो द्वौ च त्रयस्ताभ्यां बलात् पुनः ।
शूद्रा वेदं पठिष्यन्ति ब्राह्मणाः शूद्रकर्मिणः ।।२१।।

भएको वर्णन गरिएको छ । स्कन्दपुराणमा शिवजीका आँखाबाट ब्रह्माजीको उत्पत्तिका साथै शिवजीले विष्णुको ध्यान गरेको प्रसङ्ग रहेको छ । शिवजीले पाँच अक्षर भएको तारकमन्त्र सुनाउने कुरा पनि त्यहाँ लेखिएको छ। एक सय करोड पद्यमा लेखिएको रामायणलाई तीन भागमा विभाजित गरेर तीन लोकमा प्रचार गरिएको कुरा पनि त्यहाँ रहेको छ । पुराणहरूका अनेक प्रसङ्गमा शिवजीबाट सृष्टि गरिएको बताइएको छ भने कहीं ब्रह्माजीबाट सृष्टि हुने कुरा लेखिएको छ। कहीं नारायणबाट सृष्टि गरिएको वर्णन पनि छ । कहीं भगवतीबाट सृष्टि गरिएको बयान छ भने कहीं श्रीगणेशबाट सृष्टि भएको वर्णन पनि छ । कहीं सूर्यलाई सृष्टिकर्ताको रूपमा देखाइएको छ, कहीं ब्रह्माजीबाट नै सृष्टि आदि सबै कुरा हुने खुलाइएको छ। यी भिन्न भिन्न तथ्य हुन् तापनि शास्त्रद्वारा अनुमोदित छन् । जसले सन्देह गर्दछ त्यो निश्चित रूपमा नरकमा पर्दछ ।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! यसरी मैले तपाईंलाई त्रेतायुगका सबै कथा सुनाएँ ।।९-१४।। अब म कलियुगसँग सम्बद्ध कथा बताउनेछु । हे मुनि ! कलियुगमा मानिसहरू असत्यवादी र भ्रष्टाचारी हुनेछन् ।।१५।। ब्राह्मणहरू वेदहीन र स्नान, सन्ध्या आदि कर्मरहित हुनेछन् । तिनले कहिल्यै पनि शास्त्रसम्मत यज्ञ गर्ने, गराउने एवं दान दिने र दान लिने काम गर्ने छैनन् ।।१६।। तिनले दुष्ट एवं भ्रष्टाचारीहरूका हातबाट दुर्लभ दान लिन पनि सङ्कोच मात्रै छैनन् । कलियुगमा सबै मानिसले अरूलाई आरोप लगाउने, अरूको निन्दा गर्ने र परस्त्रीको धर्म लुट्ने काम पनि गर्नेछन् ।।१७।। जहाँसुकै शास्त्रका विधिविधानको लोप देखिनेछ । निश्चित रूपमा मानिसहरूले आफ्नो स्वार्थका लागि इमानजमान बिर्सेर विश्वासघात गर्ने काम पनि गर्नेछन् ।।१८।। पृथिवीमा शास्त्रको विधिलोप गराउन शपथ खानेछन् । हे व्यास ! मानिसहरूले गरेका यस्तै अनेक थरि पापका कारण बादलले पानी बर्साउने छैनन् र मानिसहरूले ठूला-ठूला नदीका तीरमा गई खेती गर्न थाल्नेछन् । जुन मानिस बलवान् छ त्यसले निर्बल मानिसका धन-सम्पत्ति बलजफती लुट्नेछ।।१९-२०।। लुटेका धन-सम्पत्तिलाई पनि अरू लुटेरा-हरूलाई धपाएर बलिया दुई जना लुटेराले मात्र हस्तगत गर्नेछन्।) (पछि ती दुई बलिया लुटेरालाई जित्नसक्ने तीन जना लुटेराहरूले त्यस सम्पत्तिको भोग गर्नेछन् । शूद्रले वेदाध्ययन गर्नेछन् र

क्षत्रिया वैश्यकर्माणो वैश्याश्च शूद्रकर्मिणः।
प्रतिग्रहं करिष्यन्ति चाण्डालस्य द्विजातयः।।२२।।

दरिद्राश्च भविष्यन्ति हाहाभूता विचेतसः।
वदिष्यन्ति च न मया गृहीतं धनमण्वपि ।।२३।।

गृहीत्वापि च कृत्याय याचितारो धनं परात् ।
उत्कोचञ्च गृहीत्वैव वृथा साक्ष्यं ब्रुवन्ति च ।।२४।।

सतां निन्दां करिष्यन्ति मैत्रीं चासद्भिरेव च।
वृथा मांसस्य भक्ष्यञ्च करिष्यन्ति द्विजातयः ।।२५।।

उच्छेदः सज्जनानां स्यादितरेषां च वैभवम् ।
हित्वा देवान् भविष्यन्ति जनाः सर्वे तथैन्द्रियाः।।२६।।

भूतप्रेतपिशाचानां भजने सक्तमानसाः ।
वेषान्नानाविधान् कृत्वा भक्षयिष्यन्ति वाडवाः ।।२७।।

केचिच्च क्षत्रिया भिक्षां चरिष्यन्त्यकुलोचिताम् ।
व्रतानि नियमाँश्चापि नाचरिष्यन्ति कर्हिचित् ।।२८।।

वर्णसङ्करकारीणि कर्ता कर्माणि भूजनः।
पतिव्रता भ्रष्टव्रता भविष्यन्ति कलौ युगे ।।२९।।

म्लेच्छप्रायाः सर्वलोकाः परद्रव्यापहारिणः।
निर्दयाः कुपथासक्ताः सर्वदा सत्यवर्जिताः ।।३०।।

धरित्री सस्यहीना च रसहीना महीरुहाः।
पञ्चमे वाऽथ षष्ठे वा वर्षे कन्या प्रसूयते ।।३१।।

षोडशाब्दपरं चायुर्भविष्यति तदा युगे।
तीर्थानि गुप्तरूपाणि देवतायतनानि च ।।३२।

एवं पापे प्रवृद्धे तु धर्मो विश्वार्थमात्रकः।
भविष्यन्ति तदा देवा उपवासपरायणाः ।।३३।।

ब्राह्मणहरूले शूद्रका व्यवसाय र धन्दा अँगालेर जीविका चलाउनेछन् ।।२१।। क्षत्रियले वैश्यका काम गर्नेछन् र वैश्यले शूद्रका काम गर्नेछन् । ब्राह्मणहरूले चाण्डालहरूका घरमा गएर कर्मकाण्ड गराई दान लिने काम गर्नेछन् ।।२२।। गरीबहरू हाहाकार गर्दै शिक्षादीक्षाविहीन मूढ भएर रहनेछन् । सधैं दुःखी र सधैं उपेक्षित ती गरीबले अरूको धन लिएर पनि मैले कत्ति पनि धन लिएको छैन भनेर ढाँट्ने छन् । केही काम गर्न पर्यो भने अरूसँग धन लिएर मात्र गर्नेछन् । धेरै मानिसहरूले आफ्नो व्यवहार चलाउन घूसको लेनदन गर्नेछन्। पैसाका लागि मुद्दामामिलामा झुट्टा साक्षी बनेर आत्मा बेच्नेछन् ।।२३-२४।। धेरैजसो मानिसहरूले सज्जनको निन्दा गरी दुर्जनसँग मित्रता कायम गर्नेछन्। ब्राह्मण, क्षत्रिय र वैश्यले यज्ञबाहेकका अवसरमा स्वादका लागि जीवहत्या गरी मासु खानेछन् ।।२५।। सज्जनहरू क्रमशः दरिद्र हुँदै जानेछन् र तिनको उठिवास हुनेछ । दुर्जनहरूले प्रचुर ऐश्वर्य अर्जित गर्नेछन् । मानिसहरू देवताहरूको पूजाआजा छाडेर इन्द्रियको तृप्तिमा मात्र ध्यान दिनेछन् ।।२६।। धेरैजसो मानिसहरूले विभिन्न भाकल गरी भूत, प्रेत र पिशाचको आराधनामा मन लगाउनेछन् । ब्राह्मणहरूले ब्राह्मणको आचार-विचार परित्याग गरी अनेक थरि वेष बनाएर जे मनपरी खानेछन् र जे मनपरी गर्नेछन् ।।२७।। केही क्षत्रियहरूले कुलको मर्यादाविपरीत वृत्ति अँगालेर जीवन निर्वाह गर्नेछन् । तिनले कहीं पनि व्रत र नियमको परिपालन गर्ने छैनन् ।।२८।। पृथिवीमा छाडा यौनसम्बन्ध राख्ने मानिसहरूले वर्णसङ्करमात्र जन्माउनेछन् । कलियुगमा आफूलाई पतिव्रता भन्न चाहने नारीहरू पनि भ्रष्ट हुनेछन् ।।२९।। सबै मानिस म्लेच्छसमान हुनेछन् । तिनले परधनको अपहरण गर्नेछन् । ती निर्दय र कुमार्गगामी मानिसहरू सत्यको आचरणबाट रहित हुनेछन् ।।३०।। पृथिवी अन्नहीन हुनेछिन् । वृक्ष रसविहीन हुनेछन्। पाँच अथवा छ वर्षकी कन्याले गर्भधारण गर्नेछिन् । कलिको मध्य र उत्तरार्धमा मानिसको परम आयु १६ वर्षको हुनेछ । तीर्थ र देवमन्दिरका तत्त्वहरू गुप्त भएर रहनेछन् ।।३१-३२।। यसरी पापवृद्धि भएपछि संसारमा धर्मको नाममात्र शेष रहनेछ । त्यस बेला स्वाहा, स्वधा र वषट्कारका क्रिया नजान्ने मानिसहरूको

स्वधास्वाहावषट्कारैर्वर्जिता भयविह्वलाः।
यास्यन्ति शरणं देवं गजाननमनामयम् ।।३४।।

स्तुतिं नानाविधां तस्य करिष्यन्ति नतिं बहु।
प्रार्थयिष्यन्ति देवेशं सर्वविघ्नविनाशनम् ।।३५।।

एवं सर्वं विचार्याऽसावाविर्भावं करिष्यति।
गजाननः शूर्पकर्णो धूम्रवर्णोऽपि नामतः।।३६।।

नीलमश्वं समारुह्य खड्गहस्तो रुषा ज्वलन् ।
कल्पयिष्यति सेनां स नानारूपां निजेच्छया ३७।।

शस्त्राणि च महास्त्राणि कल्पयिष्यत्ययत्नतः।
वधिष्यति महाम्लेच्छान् सेनया स्वेन तेजसा।।३८।।

म्लेच्छभूतांस्तथा लोकान् वधिष्यति तदाऽखिलान् ।
लीनान् कन्दरदेशेषु ब्राह्मणान् वन्यभक्षिणः ।।३९।।

समानाय्य प्रपूज्यैतान् भूमिं दास्यति देवराट् ।
सत्कर्मकारिणः सर्वान् विधास्यति च सज्जनान्।।४०।।

तदा धर्ममयं विश्वं भविष्यति कृते युगे ।
एवं कृत्वा धूम्रवर्णस्ततोऽन्तर्द्धानमेष्यति ।।४१।।

एवं चतुर्युगे व्यास ! विघ्नेशस्य महात्मनः।
कथितानि च नामाणि रूपाणि च तवानघ ।।४२।।

कर्माण्यद्भुतरूपाणि तस्य चोक्तानि सर्वशः।
येषां श्रवणमात्रेण मुच्यन्ते सर्वजन्तवः।।४३।।

अन्यान्यस्यापि रूपाणि न वक्तुं शक्तिरस्ति मे ।
यत्र वेदाश्च चत्वारो विकुण्ठास्तत्र का कथा ।।४४।।

मम वा मद्विधस्यापि महिम्नस्तस्य वर्णने ।
अनुष्ठानाय गच्छ त्वं व्यवसायं करोम्यहम् ।।४५।।

बाहुल्यका कारण निराश भएका देवताहरू भयभीत भई भोकै बस्नेछन् । त्यसपछि असह्य पीडा पाएका देवताहरू भगवान् श्रीगणेशको शरणमा जानेछन् ।।३३-३४।। त्यहाँ गई तिनले अनेक थरि स्तुति गरी वन्दना गर्नेछन् । सबै प्रकारका विघ्नहरूको विनाश गर्ने भगवान् श्रीगणेशको आर्तभावले पुकार गर्नेछन् ।।३५।। कलिका दोषलाई जान्नुहुने भगवान् श्रीगणेशले देवताको प्रार्थनालाई विचार गरी आफूलाई प्रकट गराउनुहुनेछ । हात्तीको जस्तो मुखमण्डलले सुहाउनुभएका, नाङ्लोझैं फैलिएका कान धारण गर्नुहुने, धूँवाको जस्तो वर्ण धारण गर्नुहुने र धूम्रवर्णका नामबाट प्रसिद्ध श्रीगणेशका हातमा तरबार रहनेछ । उहाँ हातमा तरबार लिई नीलो वर्णको घोडामा सवार भई अनेक थरि सेना पैदा गरेर तिनका बीचमा सुहाउनुहुनेछ । उहाँ इच्छानुसार आफूले पैदा गरेका सेनाहरूका साथ युद्धका लागि तयार हुनुहुँदा उहाँकै शक्तिबाट शस्त्र र महाअस्त्र पैदा हुनेछन् । यसरी युद्धका सम्पूर्ण आवश्यक अङ्गहरू परिपूर्ण भएपछि उहाँले आफ्नो तेज र सेनाद्वारा म्लेच्छहरूको वध गर्नुहुनेछ । त्यसैगरी म्लेच्छको जस्तो आचरण गर्ने दुर्जनहरूको पनि वध गर्नुहुनेछ। त्यस बेला श्रीगणेश भगवान्ले पर्वतका गुफामा गई लुकेका र वनका कन्दमूल खाएर शरीर धारण गरिरहेका ब्राह्मणहरूलाई फर्काएर ल्याई स-सम्मान भूमिदान गर्नुहुनेछ। त्यसपछि उहाँले सबै सज्जनलाई सत्कर्ममा प्रवृत्त गराउनुहुनेछ ।।३६-४०।। त्यस बेला संसारमा सत्ययुगको आरम्भ हुनेछ । सत्ययुगको आरम्भ भएपछि संसार धर्म र त्यसको प्रकाशबाट प्रकाशित हुनेछ । पृथिवीमा सत्यको स्थापना गर्नुभएपछि भगवान् श्रीगणेश अन्तर्धान हुनुहुनेछ ।।४१।। हे व्यास! मैले तिमीलाई भगवान् श्रीगणेशका चारै युगका स्वरूप र नाम पनि बताएँ साथै उहाँका अद्भुत महिमाको पनि वर्णन गरे। जुन कर्मको श्रवणमात्रले सबै प्राणी मुक्त हुन्छन् ।।४२-४३।। भगवान् श्रीगणेशका अनन्त रूप र लीलालाई बताउन मेरो शक्ति छैन । जुन श्रीगणेशको महिमा बताउने सम्बन्धमा चारै प्रकारका वेद कुण्ठित हुन्छन् त्यस्ता भगवान्का गुणकर्मको महिमा वर्णन गर्न म र मजस्ता मानिसहरूको के सामर्थ्य हुन्छ ? हे व्यास ! तिमी अब भगवान् श्रीगणेशको आराधना गर्न जाऊ र म पनि आफ्नो कर्तव्यतर्फ लाग्दछु ।।४४-४५।।

भृगुरुवाच

एवं श्रुत्वा सोमकान्त ! व्यासो ब्रह्ममुखात् कथाम् ।
अतिप्रीतमनाः प्राह सर्वपापप्रणाशिनीम् ।।४६।।

मुनिरुवाच

न तृप्तिमधिगच्छामि श्रुत्वाख्यानं महाद्भुतम् ।
धन्योऽस्म्यनुगृहीतोऽस्मि यत्त्वया सर्वसंशयाः ।।४७।।

दूरीकृताः कथासङ्गाद् गणेशचरिताश्रयात् ।
अमृतस्येव मे तृप्तिः श्रुत्वा श्रुत्वा न जायते ।।४८।।

अस्य श्रवणमात्रेण जन्मजन्मान्तरार्जितम् ।
वृजिनं नाशमायाति सर्वे कामा भवन्ति च ।।४९।।

पूर्वपुण्यबलादस्य श्रवणं जायते नृणाम् ।
न श्राव्यं दुर्जनायेदं पुराणं सर्वसिद्धिदम् ।।५०।।

एवमुक्त्वा नमस्कृत्य परिक्रम्य स्वयम्भुवम् ।
गृहीत्वाज्ञां ययौ व्यासस्तपसे वनमुत्तमम् ।।५१।।

यत्र कन्दफलान्यासन्नुत्तमानि जलानि च ।
न वायुः प्रबलो यत्र नातपो नाग्निरेव च ।।५२।।

उपविश्यैकनिष्ठश्च जपन्नेकाक्षरं मनुम् ।
व्यतीयुर्द्वादशाब्दानि मुनेस्तस्य तपस्यतः ।।
ततः प्रादुरभूत्तस्य पुरतस्तु गजाननः ।।५३।।

**भृगुले भन्नुभयो** - हे सोमकान्त राजा ! व्यासले यसरी ब्रह्माजीबाट श्रीगणेशका कथा सुन्नुभयो र अत्यन्त प्रसन्न भएर ब्रह्माजीलाई निवेदन गर्नुभयो ।।४६।।

**व्यासले भन्नुभयो**- हे ब्रह्माजी ! अद्‌भुत श्रीगणेशको उपाख्यान सुनेर म तृप्त भएको छैन । म धन्य र अनुगृहीत छु। किनकि हजुरले श्रीगणेशका पावन चरित्रसँग सम्बद्ध कथाको आश्रय लिएर मेरा सबै सन्देह हटाइदिनुभएको छ ।।४७।। जति कथा सुने पनि अमृतपान गर्दा तृप्त नभई फेरि पिउन मन लागेझैं मलाई पनि पटक-पटक कथा सुन्ने उत्कण्ठा भइरहेको छ। यस कथाको श्रवणमात्रले जन्म-जन्मका पाप नष्ट हुन्छन् र सबै कामना परिपूर्ण हुन्छन् ।।४८-४९।। पूर्वजहरूको यो कथा पुण्यका कारण श्रवण गर्न पाइन्छ। यो सिद्धि दिने श्रीगणेशपुराणलाई जो कोहीसमक्ष सुनाउन हुँदैन । यसरी भावनिवेदन गरी ब्रह्माजीको वन्दना र प्रदक्षिणासमेत गरेर आज्ञा लिई व्यास तपस्या गर्न वनतर्फ गए। व्यास त्यस वनमा गए जहाँ उत्तम फलफूल, कन्दमूल र जल सुलभ थिए, मन्दवायुको सञ्चार थियो, सूर्य समशीतोष्ण थिए र अग्निको पनि मन्दतापले सम्पन्न थिए । अद्वैतमूर्ति गजाननरूप परब्रह्ममा निष्ठा राखी एकान्तमा मन्त्र जप्दै तप गरिरहेका व्यासका १२ वर्ष बिते । त्यसपछि तिनका सामु भगवान् श्रीगणेश प्रकट हुनुभयो ।।५०-५३।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे कलिदोषनिरूपण-मुनिविसर्जनं नामैकोनपञ्चाशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'कलिदोष निरूपण, मुनि विसर्जन र भावी धूम्रकेतु अवतारको शंसन' शीर्षकान्वित एक सय उनन्चासौं अध्याय पूर्ण भयो ।।१४९।।

ॐ

## पञ्चाशदुत्तरशततमोऽध्याय: { १५० अध्याय }

**सोमकान्त उवाच**

कथं प्रादुरभूद् देव:पुरस्तस्य महात्मन: ।
भृगो ! तत् सर्वमाख्याहि श्रुत्वा पापक्षयो यत: ।।१।।

**भृगुरुवाच**

यथा तत्पुरत: प्रादुरासीद् देवो गजानन: ।
तत्सर्वं कथयिष्येऽहं सादरं शृणु भूमिप ।।२।।

रक्तमाल्याम्बरधरो रक्तगन्धानुलेपन: ।
गजाननोऽब्जनयन: सिन्दूरारुणमस्तक: ।।३।।

अनेकसूर्यसंकाशो दिव्यकुण्डलमण्डित: ।
अङ्गदे मुकुटं बिभ्रत् कङ्कणे शेषमेव च ।।४।।

मुनिरित्थं निरीक्ष्यैनं निमील्य नयने पुन: ।
चकम्पे भयसंत्रस्त: स्मृत्वा मन्त्रं मुमूर्च्छ च ।।५।।

ततोऽब्रवीन्नागमुखो मा भैस्त्वं मुनिसत्तम !
यं ध्यायसि दिवारात्रौ सोऽहं त्वां समुपागत: ।।६।।

ब्रह्मादीनामगम्यो यो वरं दातुं मुने ! तव ।

**भृगुरुवाच**

श्रुत्वेत्थं मधुरां वाणीं जहर्ष मुनिपुङ्गव: ।।७।।

मूर्द्धानं न्यस्य तत्पादे धन्योऽहं पितरौ तप: ।
धन्योऽहं धरणी वृक्षा: पुन: पुनरवीवदत् ।।८।।

**सोमकान्तले भने** - हे भृगु महर्षि ! ती महात्मा वेदव्यासका सामु भगवान् गजानन कसरी प्रकट हुनुभयो ? मलाई बताउनुहोस् । भगवान् गजाननको प्रादुर्भावको कथा सुनेर अवश्य पनि पापको नाश हुनेछ ।।१।।

**भृगुले भन्नुभयो** - हे राजा ! तपाईंले आदरपूर्वक सुन्नुहोस्। म तपाईंलाई कसरी भगवान् श्रीगणेश व्यासका सामु प्रकट हुनुभयो? ती सबै कुरा बताउनेछु ।।२।। जुन बेला भगवान् प्रकट हुनुभयो त्यस बेला उहाँले रातो वर्णको माला धारण गर्नुभएको थियो । रातै वस्त्र लगाउनुभएको थियो । शरीरका अङ्ग-प्रत्यङ्गमा रातो चन्दनको लेपन गर्नुभएको थियो । उहाँ हात्तीजस्तो अत्यन्त आकर्षक मुखमण्डलले सुहाउनुभएको थियो। उहाँका आँखा कमलजस्ता राम्रा देखिन्थे । मस्तक सिन्दूरझैं रातो थियो ।।३।। असंख्य सूर्यको झैं दिव्य प्रभाले प्रकाशित हुनुहुन्थ्यो। उहाँका कानमा सुन्दर कुण्डल झुण्डिरहेका थिए । दुई भुजामा केयूर टल्किएका थिए । मस्तकमा मुकुट थियो र हातमा शेषनाग बाला बनेर बेरिएका थिए । हे राजन् ! त्यस बेला वेदव्यासले भगवान् श्रीगणेशको यस्तो ज्योतिर्मय, दिव्य र भव्य रूप हेर्न सकेनन् र आँखा चिम्लिए । उनी भयले थर्थर काँप्न थाले र भगवान्को मन्त्र संझी संझी जप्न थाले। तिनलाई के गरूँ के गरूँ भयो र मूर्च्छामा परेजस्ता देखिए । व्यासको यस्तो अवस्था देखेर भगवान् श्रीगणेशले भन्नुभयो - हे व्यास! नडराउनुहोस् । तपाईंले रातदिन जसको ध्यान गरिरहनु भएको थियो त्यो तपाईंको ध्येय पुरुष गजानन श्रीगणेश म तपाईंलाई दर्शन दिन आएको छु ।।४-६।। ब्रह्मा आदि देवताहरूका लागि पनि म अगम्य छु तर तपाईंको तपस्याबाट प्रसन्न भई वर दिन यहाँ प्रकट भएको छु ।

**भृगुले भन्नुभयो** - भगवान् गजाननको मधुर वाणी सुनेर उत्तम ऋषि वेदव्यास साह्रै प्रसन्न हुनुभयो र गजाननका चरणमा शिर राखेर बिन्ती गर्नुभयो - हे प्रभु! म धन्य भएँ, मेरा माता-पिता धन्य हुनुभयो, मेरो तपस्या धन्य भयो, म फेरि पनि धन्य भएँ, पृथिवी धन्य भइन्, तपोवनका यी वृक्ष र

यतो दृष्टः सर्वरूपो गुणातीतोऽखिलाश्रयः।
चिदानन्दघनोऽनन्तोऽखिलकारणकारणम् ।।९।।

एवं स्तुत्वा प्रार्थयन् स वरदं तं गजाननम्

मुनिरुवाच

निरस्य भ्रान्तिं सर्वां मे यच्छ भक्तिं दृढां त्वयि ।।१०।।

अष्टादशपुराणानां यथा स्यां करणे क्षमः ।
तवापि स्तवने शक्तिः स्याद् यथा तत् कुरुष्व भोः ।।११।।

हृदये वस देवेश ! प्रसन्नश्चेन्ममानघ ।

गजानन उवाच

त्वया यत्प्रार्थितं वत्स ! सर्वमद्य भविष्यति ।।१२।।

सर्वमान्यो व्यासनामा सर्वपावनपावनः ।
अपरोक्षज्ञानवाँश्च भविष्यसि गुरोर्गुरुः ।।१३।।

नारायणपरः ख्यात्या गुणैः कीर्त्या श्रियापि च ।
अष्टादशपुराणानां कर्ता त्वं हि भविष्यसि ।।१४।।

तथैवोपपुराणानां तावतां च मुनीश्वर !
त्वया पूर्वं दम्भवशान्न कृतं मम पूजनम् ।।१५।।

स्मरणं वा ततः स्तम्भो जातो वाण्या महाद्भुतः ।
धातुर्मुखाच्छ्रुतो यस्मान्महिमा तेन मेऽनघ ।।१६।।

विलीनं सर्वमधुना प्रविशामि तवोदरम् ।

भृगुरुवाच

एवमुक्त्वा प्राविशत् स तन्मुनेरुदरं विभुः ।।१७।।

प्रकाशमतुलं लेभे सूर्यकोटिसमं मुनिः ।
दीपयामास ककुभस्ततो मूर्तिं विधाय सः ।।१८।।

गजाननस्य महतीं प्रासादेऽस्थापयच्च सः ।
पूजयामास विविधैरुपचारैः पृथक् पृथक् ।।१९।।

लहरा पनि धन्य भए । किनकि मैले विश्वरूप, गुणातीत, सच्चिदानन्दघन र सकल कारणका पनि कारण भगवान् गजाननको दर्शन पाएँ ।।७-९।। यसरी स्तुति गरेर वेदव्यासले वरदायक श्रीगणेशको प्रार्थना गर्नुभयो।

**व्यासले भन्नुभयो** - हे भगवन् ! मेरा सबै प्रकारका भ्रान्ति हटाई मलाई हजुरको अचल भक्ति दिनुहोस् । म अठार पुराणको रचना गर्न समर्थ कसरी हुन्छु ? हजुरको स्तुति गर्न पनि कसरी समर्थ हुन्छु ? त्यो शक्ति प्रदान गर्नुहोस् ।।१०-११।। हे देवताहरूका स्वामी प्रभु ! हजुर मप्रति प्रसन्न हुनुहुन्छ भने मेरो हृदयमा वास गर्नुहोस्।

**श्रीगणेशले भन्नुभयो** - हे व्यास ! तपाईंले जुन जुन कुराको प्रार्थना गर्नुभएको छ ती सबैका फल पाउनुहुनेछ ।।१२।। तपाईँ गुरुका पनि गुरु, सर्वमान्य, सबै पवित्रतम पदार्थहरूभन्दा पनि अति पवित्र र प्रत्यक्ष ज्ञानसम्पन्न विद्वान् हुनुहुनेछ ।।१३।। ख्याति, गुण, नीति, शोभा र सम्पत्तिद्वारा नारायणको आराधनामा तत्पर हुनुहुनेछ । फेरि तपाईँ निश्चय नै अठार पुराणका रचयिता पुराणकार वेदव्यासका रूपमा पनि प्रख्यात हुनुहुनेछ ।।१४।। अठार पुराणको रचनापछि त्यस्तै र त्यति संख्यामा नै उपपुराणहरूको पनि रचना गर्नुहुनेछ । तपाईंले पहिले अहङ्कारका कारण मेरो पूजा र स्मरण गर्नुभएन ।।१५।। त्यसैले तपाईंको वाणीमा अद्भुत अवरोध भयो । हे निष्पाप वेदव्यास ! तपाईंले ब्रह्माजीको मुखबाट मेरो महिमा सुन्नुभएको छ । अब तपाईंका सबै पाप विलीन भएर गएका छन् । यो संवादपछि म तपाईंको उदरभित्र प्रवेश गर्नेछु ।

**भृगुले भन्नुभयो** - हे राजा सोमकान्त ! भगवान् श्रीगणेशले व्यासलाई यसरी वरदान दिएपछि उहाँ व्यासको पेटभित्र प्रवेश गर्नुभयो ।।१६-१७।। श्रीगणेश भगवान् हृदयमा बस्नुभएपछि वेदव्यासले करोडौं सूर्यसमान र कसैसँग दाँज्न नसकिने प्रकाश अथवा ज्योति प्राप्त गरे । व्यासको शरीरको प्रभाबाट चारै दिशा ज्योतिर्मय भए । त्यसपछि व्यासले गजानन प्रभुको मूर्ति निर्माण गरे । त्यो विशाल मूर्तिलाई तिनले मन्दिर बनाई प्रतिष्ठा गरे । त्यसपछि तिनले नाना थरि उपचारबाट पृथक्-पृथक् पूजा गरे।।१८-१९।। यो ठाउँ संसारका

सिद्धिक्षेत्रमिदं सर्वलोकानां पावनं दृशो: ।
अनुष्ठानवतां मन्त्रनानासिद्धिप्रदं शुभम् ।।२०।।

एवमुक्त्वाप्यनुज्ञाप्य व्यासो नारायणस्तदा ।
पुराणं तद्गणेशस्य यच्छ्रुतं ब्रह्मणो मुखात् ।।२१।।

प्राह वैशम्पायनाय ततस्तद् भुवि पप्रथे ।
एतदखिलं तेऽद्य मयापि कथितं नृप ।।२२।।

नानेन सदृशं किञ्चित् पावनं त्रिषु विद्यते ।
लोकेषु परमानन्ददायकं नृपसत्तम ।।२३।।

सोमकान्त ! न चाख्येयमिदं दुष्टजने त्वया ।
विनीतेषु च भक्तेषु त्वयाख्येयं प्रयत्नत: ।।२४।।

मया निरन्तरमिदं जप्यते स्मर्यतेऽपि च ।
तवापि करुणायोगात् कथितं राजसत्तम ।।२५।।

गजाननध्यानपरो नित्यं जपपरो भव ।।२६।।

मानिसहरूको आँखालाई पवित्र गर्ने सिद्धिक्षेत्रका नामबाट प्रसिद्ध र जपानुष्ठान गर्नेहरूलाई अनेक थरि मन्त्रसिद्धि प्रदान गर्ने सिद्धिदायक तीर्थ हुनेछ भनी सबैसँग आज्ञा लिएर नारायणस्वरूप व्यासमुनि आफ्नो आश्रमतर्फ लागे । व्यासले ब्रह्माजीको मुखबाट जुन श्रीगणेश पुराण सुनेका थिए, त्यो उनले आफ्ना शिष्य वैशम्पायनलाई सुनाए । त्यसपछि श्रीगणेशपुराण पृथिवीमा फैलियो । हे सोमकान्त! यी सबै विषय मैले तपाईंलाई सुनाएँ। तीनै लोकमा योभन्दा पवित्र, पावन र परम आनन्द दिने विषय अरू केही पनि छैन ।।२०-२३।। हे सोमकान्त ! तपाईंले यो पुराण दुष्ट प्राणीलाई सुनाउनु हुँदैन । तर तपाईंले नम्र स्वभावका श्रीगणेशभक्तहरूलाई भने प्रयत्नपूर्वक सुनाउनु पर्नेछ । हे सोमकान्त! मैले फेरि गएर श्रीगणेशको मन्त्र जप गर्छु र श्रीगणेशपुराणको पनि पाठ गर्छु । करुणा जागेका कारण मैले तपाईंलाई सुनाएको हुँ । हे सोमकान्त! तपाईं नित्य श्रीगणेश प्रभुको ध्यानमा लीन हुनुहोस् र नित्य गजानन भगवान्को नामजपमा तत्पर हुनुहोस् ।।२४-२६।।

ॐ

इति श्रीगणेशपुराणे क्रीडाखण्डे व्यासानुग्रहसिद्धिक्षेत्रवर्णनं नाम पञ्चाशदुत्तरशततमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'श्रीगणेशको वेदव्यासमाथि अनुग्रह र सिद्धिक्षेत्रको वर्णन' शीर्षकान्वित एक सय पचासौं अध्याय पूर्ण भयो ।।१५०।।

ॐ

## एकपञ्चाशदुत्तरशततमोऽध्यायः　　{ १५१ अध्याय }

सूत उवाच

एवं श्रुत्वा कथां नित्यं सोमकान्तो मुनीश्वरात् ।
शुष्काम्रमूले तत्पुण्यं न्यक्षिपज्जलतो नृपः ।।१।।

गते संवत्सरे चूतः पल्लवैः कुसुमैः फलैः ।
शुशुभेऽतीवरुचिरः पुराणश्रुतिपुण्यतः ।।२।।

सोमकान्तो दिव्यकान्तिस्त्यक्त्वा कुष्ठभवां रुजम् ।
अक्षतश्चाभवत् पूतिगन्धं त्यक्त्वा सुगन्धवान् ।।३।।

निःखेदः सुरभेर्गन्धाद् दशदिक्षु प्रसारिणः ।
दिव्यदेहं सूर्यकान्तिं कोटिचन्द्रनिभं नृपम् ।।४।।

दृष्ट्वा विसिस्मिरे लोकाः कथमीदृक् च तादृशः ।
गणेशाख्यपुराणस्य महिम्ना दोषहारिणा ।।५।।

भृगुरुवाच

सिद्धिस्ते नृपशार्दूल ! पुराणश्रवणादभूत् ।
व्रजेदानी निजं पुत्रं सामात्यं जनमेव च ।।६।।

चिरोत्कण्ठं वर्षमध्ये दृष्ट्वा हर्षमवाप्स्यसि ।

सूत उवाच

एवमाकर्ण्य तद्वाक्यं पादयोर्न्यपतन्मुनेः ।।७।।

आनन्दार्णवमग्नः स सोमकान्तोऽवदद् भृगुम् ।

राजोवाच

अद्‌भुतस्तपसस्तेऽद्य महिमैक्षि मया मुने ।।८।।

पुराणश्रवणस्यापि येनाहं पतितोऽपि च ।
गलत्कुष्ठो दिव्यदेहो जातो माता पिता मम ।।९।।

**सूतजीले भन्नुभयो** - हे शौनक आदि ऋषिसमूह ! यसरी दिनदिनै भृगु मुनिबाट पवित्र कथा सुनेर प्रसन्न भएका सोमकान्तले सुकेको आँपको फेंदमा जल चढाउँदै आफूले कमाएको पुण्य समर्पण गरे।।१।। एक वर्ष बितेपछि राजा सोमकान्तले श्रीगणेशपुराण श्रवण गरेको पुण्यबाट त्यो सुकेको आँपको वृक्ष अत्यन्त रमणीय रूपमा सबैका दृष्टिपथमा चमत्कार-जनक बनेर सुहाएको थियो ।।२।। त्यस पुण्यका कारण सोमकान्त पनि कुष्ठरोगलाई निराकरण गरी दिव्य कान्तिद्वारा शोभायमान भए। तिनका शरीरबाट प्रवाहित हुने दुर्गन्ध हरायो र सुगन्धको प्रसार हुनथाल्यो ।।३।। तिनको शरीरबाट प्रवाहित र दसै दिशामा प्रसारित सुगन्धबाट मानिसहरू र प्राणीहरू आनन्दित भए । त्यस्ता रोगी दुर्गन्धित एवं घृणित राजा सोमकान्तलाई करोडौं चन्द्रसमान सुन्दर र सूर्यसमान तेजस्वी एवं दिव्य देहले सम्पन्न देखेर मानिसहरू अचम्म परे । श्रीगणेशपुराणको पापनाशक महिमाकै प्रतापबाट आज सोमकान्त राजा यति भव्य र दिव्य देखिएका हुन् भन्ने अनुमान गरे ।।४-५।।

**भृगुले भन्नुभयो** - हे सोमकान्त ! हे उत्तम राजा ! तपाईंले श्रीगणेशपुराण श्रवण गरेका कारण सिद्धि प्राप्त गर्नुभएको छ । अब तपाईं आफ्ना मन्त्रीहरू र परिवारिक मानिसहरूका साथ रहेका छोरासामु जानुहोस् ।।६।। ती छोरा तपाईंको दर्शनका लागि अत्यन्त उत्कण्ठित छन् । तिनको दर्शन गरेर तपाईंले पनि हर्ष र आनन्द प्राप्त गर्नुहुनेछ ।

**सूतजीले भन्नुभयो** - सोमकान्तले भृगु ऋषिका उक्त वचन सुनेर अत्यन्त हर्षित भई आनन्दको सागरमा गोता लगाउँदै मुनिको पाउमा प्रणाम गरी हात जोडेर कृतज्ञता व्यक्त गरे ।

**सोमकान्तले भने** - हे ऋषिवर ! आज मैले हजुरको तपस्याको अद्‌भुत महिमा देख्ने अवसर पाएँ ।।७-८।। मैले श्रीगणेशपुराणको विचित्र महिमा पनि अनुभव गरें । मजस्तो पतितको पनि पुराणश्रवणबाट उद्धार भएको छ । मेरो शरीरमा कुष्ठरोग थियो, म दुर्गन्धित थिएँ, आज म दिव्य शरीरले शोभायमान भएको छु । हजुर नै आज मेरा लागि माता-पिता हुनुभएको छ । किनकि यस दिव्य शरीरको निर्माता हजुर नै

अस्य देहस्य निर्माता त्वमेव मुनिसत्तम ।
नीरसश्चूतवृक्षोऽपि फलपुष्पयुतोऽभवत् ।।१०।।

त्यक्तुं नेच्छाम्यतोऽहं त्वां किं मे पुत्रजनैर्भवेत् ।
एवं निशम्य तद्वाक्यं भृगुः पुनरथाऽब्रवीत् ।।११।।

भृगुरुवाच

जन्मान्तरीयपुण्येन पुराणश्रवणं तव ।
सञ्जातं मन्मुखाद् धन्यं दुरितं येन तेऽनशत् ।।१२।।

गणेशस्य पुराणस्य महिमा केन वर्ण्यते ।
न मां विस्मर गच्छ त्वं जनेश ! नगरं निजम् ।।१३।।

एवं तयोः संवदतोस्तेजसा ज्वलदद्भुतम् ।
विमानं ददृशे ताभ्यां सूर्यकोटिनिभं महत् ।।१४।।

भृगुरुवाच

त्वदर्थं यानमायातमिदं नृप ! महाद्भुतम् ।
इदमारुह्य गच्छ त्वं गणनाथस्य सन्निधिम् ।।१५।।

न प्राप्नुवन्त्यनुष्ठानाद् विमानं यन्मुनीश्वराः ।
तत्पुराणश्रवाद् राजँस्त्वया प्राप्तं गणेश्वरात् ।।१६।।

विमानं वदतोरेवं भूमण्डलमगात् क्षणात् ।
विनायकगणैर्युक्तं चतुर्बाहुविराजितैः ।।१७।।

मुकुटाङ्गदहारादिभूषणैरुपशोभितैः ।
दिव्यचन्दनवस्त्रादिपद्मपरशुशोभिभिः ।।१८।।

नृत्यत्किन्नरकन्याभिर्मृदङ्गतालपाणिभिः ।
किन्नरैर्गायनैर्युक्तं दृष्ट्वा राजाऽब्रवीत्पुनः ।।१९।।

राजोवाच

श्रुतासीद् बहुधा वार्ता विमानानां मुनीश्वर !
तद् दृष्टं पुरतो ब्रह्मन् ! तपोवीर्यबलात् तव ।।२०।।

हुनुहुन्छ । हजुरको कृपाबाट श्रीगणेशपुराण श्रवण गरी पुण्यदान गर्दा आज सुकेको आँपको रूख हरियो भएको छ । त्यसमा सुन्दर पालुवा, फूल र फल लागेका छन् । मलाई नरकबाट उद्धार गरी यस रूपमा ल्याउनुहुने हजुरलाई छोडेर म कहाँ जाऊँ ? म हजुरको पाउको आश्रय छोड्न चाहन्नँ । मेरा छोरा, मित्र र सेवकबाट मैले के पाउन सक्छु र ? राजाका यी कुरा सुनेर मुनि भृगुले भन्नुभयो ।।९-११।।

**भृगुले भन्नुभयो** - हे राजन्! जन्म-जन्मान्तरका पुण्यले गर्दा तपाईँले आज मेरा मुखबाट श्रीगणेशपुराण श्रवणको अवसर पाउनुभएको हो। श्रीगणेशपुराण धन्य छ र तपाईँ पनि धन्य हुनुभएको छ । किनभने पुराणश्रवणबाट तपाईँका पापराशि डढेर खरानी भएका छन् ।।१२।। श्रीगणेशको महिमा र श्रीगणेशपुराणको महिमा कसले बयान गरेर सक्छ ? हे राजा! तपाईँले मलाई नबिर्सनु होला । तपाईँ त अरू मुनिहरूको कल्याणका लागि आफ्नो नगरमा जानुपर्छ । यसरी भृगु ऋषि र सोमकान्तको बीचमा संवाद भइरहेको बेला एउटा तेजोमय र करोडौँ सूर्यको कान्ति भएको विमान आइरहेको ती दुवै महानुभावले देखे ।।१३-१४।।

**भृगुले भन्नुभयो** - हे राजा ! तपाईँका लागि अद्भुत विमान आइसकेको छ । तपाईँ त्यसमा सवार भएर भगवान् श्रीगणेशको धाममा जानुहोस् । ठूला-ठूला ऋषिमुनिहरूले हजारौँ वर्षसम्म तपस्या गरेर पनि जुन विमानको दर्शन पाउँदैनन् त्यसको दर्शन तपाईँले श्रीगणेशपुराण श्रवणको पुण्यबाट पाउनुभएको छ । यसरी कुरा गरिरहेकै समयमा ती दुवैका सामु विमान आई भुइँमा ओर्लियो । चतुर्बाहु, मुकुट, केयूर आदि अलङ्कारद्वारा अलङ्कृत, दिव्य चन्दन, वस्त्र, कमल आदि सुन्दर पदार्थहरूद्वारा सुशोभित; हातमा मादल एवं ताल धारण गर्ने, सुन्दरीहरूको नृत्यले आह्लादक; किन्नरहरूको गायनद्वारा मनोहर र श्रीगणेशका गणहरूद्वारा सञ्चालित विमानलाई देखेर सोमकान्तले जिज्ञासा व्यक्त गरे ।।१५-१९।।

**सोमकान्तले भने** - हे मुनिश्रेष्ठ ! विमानहरूका विषयमा धेरै पटक कुरा सुनेको थिएँ । अहिले हजुरको तपस्याको शक्तिबाट आफ्नैसामु विमान हेर्न पाएँ । धेरैपटक धेरैका मुखबाट

महिमा श्रूयते कर्णैर्बहुधा बहुवक्त्रतः ।
अनुभूतो मया सोऽपि पुराणश्रवणात् तव ।।२१।।

एवं ब्रुवति भूपे तु दूता उत्तीर्य यानतः ।
प्रणिपत्याखिलाः प्रोचुः सोमकान्तं नृपं तदा ।।२२।।

परात्परेण देवेन तव पुण्यात् स्मृतिः कृता ।
गजाननेन शुद्धात्मन् ! पुराणश्रवणादिना ।।२३।।

वयं दूता आज्ञयाऽस्य विमानेन समागताः ।
नेतुं त्वां पुण्यकीर्तिञ्च याहि लोकमनुत्तमम् ।।२४।।

तद्दर्शनाज्जन्ममृतेर्मुक्तस्तत्सन्निधिं गतः ।
सुखमात्यन्तिकं तत्र प्राप्स्यसे तत्प्रसादतः ।।२५।।

निशम्य दूतवाक्यं तद् देहातीत इवाभवत् ।
रोमाञ्चाञ्चितसर्वाङ्गः प्राह गद्गदया गिरा ।।२६।।

परात्परेण देवेन चराचरकृताऽमुना ।
निर्गुणेन गुणक्षोभकारिणा विश्वयोनिना ।।२७।।

दीननाथेन भो दूताः स्मृतोऽहं कृपयाऽनघाः ।
ब्रह्माद्या न विदुर्यं हि ध्यात्वा च सनकादयः ।।२८।।

अनन्तगुणपूर्णः सोऽप्रेषयद् यानमुत्तमम् ।
नानावतारवान् नानारूपी परममायिकः ।।२९।।

तेन मे स्मरणं कस्मात् कृतमाश्चर्यकारकम् ।
एवमुक्त्वा नमस्कृत्य भृगुं तं प्राह भूमिपः ।।३०।।

आज्ञया ते गमिष्यामि दूतैः सह विमानगः ।
प्रसादात् ते च देवस्य न मां विस्मर्तुमर्हसि ।।३१।।

विमानको महिमा सुनिन्छ । तपाईंका मुखबाट पुराण सुनेपछि मैले भगवान् श्रीगणेश, उहाँका गण र ती गणद्वारा सञ्चालित विमानलाई प्रत्यक्ष अनुभव गर्न पाएँ ।।२०-२१।। यसरी राजाले भनिरहेकै समयमा दूतहरू विमानबाट ओर्लेर तिनीहरू भएको ठाउँमा आई नमस्कार गरेर सोमकान्त राजालाई भने- हे राजा! परब्रह्मस्वरूप भगवान् श्रीगणेशले तपाईंले गरेको पुण्यका कारण तपाईंलाई संझनु भएको छ किनकि तपाईंले श्रीगणेशपुराणको विधिपूर्वक श्रवण गर्नुभएको छ । हामी त भगवान् श्रीगणेशका दूत हौं। उहाँको आज्ञाले विमान लिएर तपाईंका समीपमा आएका छौं । हाम्रो आगमनको उद्देश्य पुण्यकीर्ति बन्नुभएका तपाईंलाई विमानमा सवार गराई सर्वोत्तम श्रीगणेशधाममा पुऱ्याउनु हो । अब हिंड्नुहोस् र विमानमा सवार हुनुहोस् ।।२२-२४।। त्यसबाट तपाईं पवित्र श्रीगणेशधाममा पुग्नुहुनेछ । भगवान् श्रीगणेशको दर्शन पाएपछि तपाईं जन्म र मृत्युको चक्रबाट मुक्त हुनुहुनेछ। उहाँको नित्य दर्शन र कृपाका कारण तपाईंले संसारमा कहीं नपाइने अत्यन्त उत्तम आत्माको सुख पाउनुहुनेछ ।।२५।। दूतहरूका ती कुरा सुनेर सम्पूर्ण शरीरमा रोमाञ्च अनुभव गर्ने राजा भावावेशमा पुगे र आफैलाई बिर्सेजस्ता भए । प्रसन्नताले सीमा नाघ्यो । केही होशमा आएर उनले गद्गद वाणीबाट भने- हे निष्पाप दूतगण ! सम्पूर्ण चराचरका सृष्टिकर्ता, निर्गुण, गुणहरूमा क्षोभ उत्पन्न गर्ने, विश्वयोनि, दीन-दुःखीहरूका स्वामी, परब्रह्मस्वरूप भगवान् श्रीगणेशले आज मलाई संझनुभयो । ब्रह्मा आदि देवता र सनक आदि महर्षिहरूले दीर्घकालसम्म ध्यान गर्दा पनि जसको दर्शन पाउन सक्दैनन् त्यस्ता अनन्त गुणका खानी भगवान् श्रीगणेशले आज मेरा लागि उत्तम यान पठाउनुभयो । भगवान् श्रीगणेश अनेक अवतार लिन सक्नुहुन्छ, अनेक थरि रूप धारण गर्नुहुन्छ र मायालाई वशमा राख्ने ठूला मायावी हुनुहुन्छ । त्यस्ता देवताले पनि मजस्तो साधारण मानिसलाई कसरी संझिनुभयो? मलाई अचम्म लागिरहेको छ। यसरी आफ्ना मनका भावनाहरू पोखेर भृगु ऋषिलाई प्रणाम गर्दै राजा सोमकान्तले निवेदन गरे- हे गुरुदेव! हजुरले आज्ञा दिनुहोस् म अब दूतहरूका साथमा विमानमा सवार भई श्रीगणेशधाम जानेछु। यसो हुनुमा हजुरको र भगवान् श्रीगणेशको समान रूपमा कृपा र आशीर्वाद भएको छ । हे गुरुदेव ! मलाई नबिर्सनुहुनेछ)।२६-३१।।

सूत उवाच

निशम्य गदितं तस्य भृगुः सम्भ्रमविह्वलः ।
आनन्दाश्रुः सरोमाञ्चः कण्ठे धृत्वा नृपस्य सः ।।३२।।

प्राहाहं नृपते ! विप्रो भाग्यवाँस्त्वं महाफलः ।
गणेशपुरगो भूत्वा न मां विस्मर कर्हिचित् ।।३३।।

एवमुक्त्वा बहिर्यातौ धृत्वा हस्तावुभावपि ।
नमस्कृत्य विमानं तन्नृपो मुनिवरञ्च तम् ।।३४।।

आरुहत् परमप्रीतो दूतवाक्यात् त्वरान्वितः ।
द्वावमात्यौ सुधर्मा च रुरुहुर्यानमुत्तमम् ।।३५।।

ततो दूताश्च वाद्यानां घोषैर्व्याप्तं दिगन्तरम् ।
विमानशोभां वीक्ष्यैव सोमकान्तो ननन्द ह ।।३६।।

जन्मान्तरीयपुण्येन प्राप्तमेतदमन्यत ।
ततोऽस्मिन् पश्यति भृगौ विमानं यातमम्बरे ।।३७।।

सर्वोत्तमपदं प्राप्तं मर्त्यदेहेन वीक्ष्य च ।
विस्मयं परमं प्राप नत्वा दूतान् ययौ पदम् ।।३८।।

(सूतजीले भन्नुभयो – राजा सोमकान्तले भनेको सुनेर भृगु ऋषिलाई कस्तो कस्तो लाग्यो । विरहको क्षण संझिंदा विह्वल हुनुभयो । एउटा मानिसको उद्धार गर्न पाउँदा हर्ष पनि भयो। हर्षका आँसु बगे र शरीरमा रोमाञ्च छुट्यो । राजालाई अङ्कमाल गर्दै उहाँले भन्नुभयो – हे राजा ! आज मैले आफूलाई भाग्यशाली ब्राह्मणको रूपमा पाएको छु । तपाइँले पनि ठूलो फल प्राप्त गर्नुभएको छ । श्रीगणेशको धाममा पुगेपछि कहिल्यै पनि मलाई नबिर्सनुहोला । यसरी आपसमा कुरा गर्दै ती दुबै आश्रमदेखि बाहिर आए । दुबै एक-अर्काका हात समातेर उँभिए। त्यसपछि राजा सोमकान्तले विमानलाई र मुनिलाई पनि प्रणाम गरे । श्रीगणेशका दूतहरूको आज्ञा पाएर सोमकान्त प्रसन्न भई शीघ्रतापूर्वक विमानमा सवार भए । सोमकान्त आफ्नी रानी सुधर्मा र २ मन्त्रीसमेत विमानमा सवार भए ।।३२-३५।। त्यसपछि श्रीगणेशका दूतहरू पनि सवार भए । त्यस बेला वाद्यघोष भयो। त्यसले चारै दिशा ढाक्यो । विमानको विचित्र शोभा देखेर सोमकान्त अत्यन्त खुसी भए । मैले जन्मजन्मान्तरका पुण्यबाट यो विमानमा आरोहण गर्ने अवसर प्राप्त गरें भन्ने विचार गरे । त्यसपछि भृगु ऋषिले हेर्दाहेर्दै त्यो विमान आकाशमा उड्न थाल्यो ।।३६-३७।। मानिसकै शरीरबाट पनि यसरी श्रीगणेशको कृपा भई विमानमा आरोहण गरेर श्रीगणेशधाम जानसकिंदो रहेछ भन्ने कुरा प्रत्यक्ष दर्शन गर्नका पाएका भृगुले ठूलो आश्चर्य माने । त्यसपछि भृगु ऋषि ती दूतहरूलाई नमस्कार गरी आफ्नो आश्रमभित्र प्रवेश गरे ।।३८।।

ॐ

इति श्रीगणेशपुराणे उत्तरखण्डे सोमकान्तविमानप्राप्तिवर्णनं नाम एकपञ्चाशदधिकशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सोमकान्तको विमानारोहण' शीर्षकान्वित एक सय एकाउन्नौं अध्याय पूर्ण भयो ।।१५१।।

ॐ

## द्विपञ्चाशदुत्तरशततमोऽध्यायः { १५२ अध्याय }

सूत उवाच

उपरिष्टाद् ददर्शाऽथ नृपो दैवपुरं निजम् ।
जहर्ष गोपुराट्टालशोभां दृष्ट्वाथ काञ्चनीम् ।।१।।

ततः सुधर्मा सस्मार सभां रम्यां समीक्ष्य ह ।
निजं पुत्रं स्नेहवशात् प्राह गद्गदभाषिणी ।।२।।

हेमकण्ठो मम सुतो भद्रासनगतो भवेत् ।
पित्रोर्मार्गं प्रतीक्षन् स जाते संवत्सरेऽधुना ।।३।।

स्वामिन् ! कृपानिधे ! तस्य दर्शनं दातुमर्हसि ।
स्त्रियो वाक्यं निशम्यैवं शुशोच नृपतिस्तदा ।।४।।

नृप उवाच

हेमकण्ठो मम सुतो जीवन् स्याद् वा मृतो भवेत् ।
उक्तमासीन्मया चास्मै वत्सराद् दर्शनं भवेत् ।।५।।

अनृतात् कुत्र गच्छेयं नोक्तमासीत् कदाचन ।
न तत्र गन्तुं नो हातुं शक्तोऽहं परमं पदम् ।।६।।

विरुद्धं कथमेतद्धि घटेतेत्यरुदद् भृशम् ।
दृष्ट्वा दूतास्तयोः शोकमब्रुवन् राजसत्तमम् ।।७।।

युवयो रोदनं श्रुत्वा कृपा नः समुपागता ।
क्षणमुत्तारयामोऽत्र दृष्ट्वा तं यात सत्वरम् ।।८।।

**सूतजीले भन्नुभयो** – विमानमा सवार भएका राजा सोमकान्तले आकाशबाट तल आफ्नो राजधानी र त्यहाँका वरिपरिका प्यारा दृश्यहरू नजर गरे । आफ्नो राजधानीको सौन्दर्य, त्यहाँ बनेका सुवर्णमय दरबार, भवनहरू र गोपुरहरूको शोभा देखेर ती अत्यन्त प्रसन्न भए।।१।। रानी सुधर्माले पनि आफ्नो राजधानीको बीचमा रहेको राजभवन देखेपछि आफ्ना पुत्र हेमकण्ठलाई याद गरिन्। स्नेहले व्याकुल भएर गद्गद स्वरमा भनिन् – 'हे राजन् ! मेरा प्यारा छोरा हेमकण्ठ अहिले सिंहासनमा बसिरहेका होलान् । वनबाट मेरा माता–पिता कहिले फर्कनुहुन्छ भनेर हाम्रो बाटो हेरिरहेका होलान् । हामीले राजधानी छाडेको पनि एक वर्ष पूरा भयो । वर्ष दिनपछि भेट हुने हामीले कुरा गरेका थियौं । हामी त्यहाँ गएनौं भने उनीहरूले पीर मान्नेछन् ।।२–३।। हे दयालु राजा! मलाई मेरा छोरासँग भेट गराउने व्यवस्था मिलाउनुहोस् ।' आफ्नी प्यारी रानीका यी कुरा सुनेर राजा चिन्तामा परे ।।४।।

**सोमकान्तले भने** – 'मेरा छोरा हेमकण्ठ जिउँदै छन् कि अथवा दिवङ्गत भइसके । मैले तिनलाई एक वर्षपछि हाम्रो भेट हुन्छ भनेको थिएँ । अहिले श्रीगणेशका गणहरू आएपछि तिनको संझना नगरी हामी श्रीगणेशधामतर्फ जान भनी प्रस्थान गऱ्यौं । वचन दिएको कुरा बिर्सेजस्तो भयो । अहिलेसम्म झुट्टा व्यवहार कहिले पनि गरेको छैन । छोरालाई भेट गर्न खोज्ने हो भने श्रीगणेशका गण रिसाउलान् भेट नगरौं भने छोरालाई दिएको वचन असत्य हुनेभयो । के गरूँ के नगरूँ भएँ । न म श्रीगणेशधाम छोड्न सक्छु न छोरासँग जान सक्छु । यस्तो बीचको परिस्थितिमा परें । कसरी मेरो जीवनमा यो विरुद्ध घटना आइलाग्यो ।' यसरी चिन्तामा परेर राजा आँखाबाट आँसुका धारा बगाउन थाले । श्रीगणेशका दूतहरूले राजा र रानीको चिन्तित मुद्रा र आँखाका आँसु देखेर भने ।।५–७।। 'हे राजन्! हे रानी ! तपाईंहरू दुबैको आँखामा आँसु देखेर एवं तपाईंहरूको क्रन्दन सुनेर हामीलाई दया लागेको छ । तपाईंहरूको काम पूरा गर्नका लागि हामीले केही बेर विमान भुइँमा ओह्राल्छौं ।

जाते भवत्समाधाने सन्तोषो नः परो भवेत् ।
तत उत्तारयामासुर्दूता देवपुरादुदक् ।।९।।

विमानं तद् गणेशस्य पुराणश्रवणागतम् ।
नगरं प्रभया व्याप्तं वाद्यघोषैश्च नादितम् ।।१०।।

सुबलो ज्ञानगम्यश्च नमस्कृत्य नृपं गणान् ।
ईयतुर्हेमकण्ठं तं सर्ववृत्तान्तमीरितुम् ।।११।।

क्षणाद् भद्रासनगतं हेमकण्ठमपश्यताम् ।
सन्नद्धैर्वीरमुख्यैश्च परिवीतं महाबलैः ।।१२।।

अमात्यनागरैर्युक्तमीक्षन्तं नृत्यमुत्तमम् ।
तदमात्यौ ज्ञानगम्यं सुबलं समपश्यताम् ।।१३।।

उत्तस्थुः सर्ववीराश्च सामात्यो हेमकण्ठकः ।
आलिङ्गनाय ते सर्वे तयोः प्रापुः सुसम्भ्रमम् ।।१४।।

तेषामालिङ्गने जाते ततो नृपसुतो ययौ ।
हर्षेण महता युक्तः सरोमाञ्चोऽब्रवीच्च तौ ।।१५।।

मम माता पिताऽमात्यौ क्षेमयुक्तौ न वा क्वचित् ।
त्यक्त्वा तौ पितरौ यातौ युवामेकाकिनौ कथम्।।१६।।

एवमुक्त्वा स्वासने तावुपवेश्य प्रपूज्य च ।
वस्त्रचन्दनभूषादिफलताम्बूलकाञ्चनैः ।।१७।।

तयोर्विना मम प्राणाः कण्ठमात्रावलम्बिनः ।
अहर्निशं तयोर्ध्यानं नान्यस्य मम मानसे ।।१८।।

पिता मे प्रावदत् पूर्वमेकदा दर्शनं पुनः ।
दास्यामीति कथं तच्चानृतं वाक्यं करिष्यति ।।१९।।

तावूचतुः

मा कुरुष्व वृथा चिन्तां पित्रोस्ते कुशलं नृप !
तयोः पुण्यप्रभावं को जानाति भुवनत्रये ।।२०।।

तपाईँहरूले आफ्ना छोरासँग भेट गर्नुहोस् । त्यसपछि तुरुन्तै हामी श्रीगणेशधाम जानेछौं ।।८।। तपाईँहरूले छोराको दर्शन पाएपछि हामीलाई पनि ठूलो सन्तोष लाग्नेछ ।' यसो भनेर श्रीगणेशका दूतहरूले देवपुरदेखि उत्तरपट्टि लगेर विमानलाई भुइँमा ओह्राले ।।९।। श्रीगणेशपुराणका श्रवणका कारण सोमकान्तलाई लिन आएको त्यो विमान सोमकान्ताको राजधानीमा ओर्लियो। त्यो राजधानी विमानको कान्तिले चहकिलो भयो । विमानभित्र बजेका वाद्यघोषले राजधानी पनि शब्दायमान भयो । त्यसपछि सुबल र ज्ञानगम्यनामक दुईजना सोमकान्तका साथमा रहेका मन्त्रीहरू तुरुन्तै राजा हेमकण्ठलाई भेट्न दरबारमा गई वनमा घटेको र विमानमा सवार भई श्रीगणेशधाम जान लागेको समाचार सुनाउन तत्पर भए ।।१०-११।। तिनले सिंहासनमा बसेका हेमकण्ठको दर्शन गरे। ती हेमकण्ठ महाबली वीरहरूद्वारा घेरिएका थिए। तिनका वरिपरि उत्तम नागरिक र अमात्यहरू थिए । हेमकण्ठले ती सबैका साथ बसेर राजकीय नृत्य हेरिरहेका थिए । ज्ञानगम्य र सुबलले त्यहाँ पुगेर राजाको दर्शन गरे । ती मन्त्रीहरूलाई आएको देखेर हेमकण्ठ र तिनका साथमा रहेका वीरहरू स्वागत गर्न उभिए । सबैले परस्परमा अङ्कमाल गरे ।।१२-१४।। अङ्कमाल गरेपछि अत्यन्त हर्षित भएका हेमकण्ठले आफ्ना माता-पिताको विषयमा सोधे । त्यसपछि तिनले भने- हे मन्त्रीहरू! तपाईँहरूले मेरा माता-पितालाई एक्लै किन छाड्नुभयो ? त्यसपछि तिनले आएका मन्त्रीहरूको सम्मान गरे, आफ्नै आसनमा राखे । वस्त्र, चन्दन, फल, पान, सुवर्ण टक्र्याए । मन्त्रीहरूलाई सम्बोधन गर्दै भने - हे मन्त्रीहरू ! माता-पिताबिना मेरा प्राण घाँटीघाँटीमा आएर अडिएका छन्। रातदिन म माता-पिताको ध्यान गरिरहन्छु अरू कुरा मेरो मनमा केही पनि रहँदैन । मेरा पिताले भन्नुभएको थियो म एक पटक तिमीलाई दर्शन दिनेछु तर दर्शन दिनुभएन । के मेरा सम्मान्य पिताले आफ्नो वचन झुट्टा गराउनुहुनेछ ? ।।१५-१९।।

**मन्त्रीहरूले भने-** हे राजन्! तपाईंले आफ्ना माता-पिताको विषयमा व्यर्थ चिन्ता नगर्नुहोस् । तपाईंका माता-पिताको पुण्यको प्रभाव स्वर्ग, मर्त्य, पाताल तीनै लोकमा कसैले पनि जान्दैन।।२०।। तपाईंसँग आज्ञा लिएर हामी नगरदेखि

अनुज्ञां भवतो गृह्य निर्गता नगराद् वयम् ।
चत्वारोऽपि पितुस्तेऽभूत् सौकुमार्यादिकं महत् ।।२१।।

क्षुधया पीडितोऽत्यन्तं रक्तस्त्रावि पदाम्बुजम् ।
कन्दमूलैः फलैस्तृप्तिर्न चासीत् तस्य भूपतेः ।।२२।।

मातुस्तेऽपि यथावस्था चेलतुर्न पदं तदा ।
भ्रमद्भिर्बहुधा पश्चाद् दृष्टं चारु सरो महत् ।।२३।।

शीतलं वृक्षवल्लीभिस्तत्र सुष्वाप भूमिपः ।
सुधर्मा पादसंवाहं चकार श्रमकर्षिता ।।२४।।

आवां तु कन्दमूलार्थे यातस्तत्रायथौ मुनिः ।
च्यवनो मुनिशार्दूलो जलार्थे तौ ददर्श ह ।।२५।।

तयोर्हार्दं स गृह्यैव निजमाश्रममाययौ ।
तत आवां समायातौ गृह्य मूलफलं बहु ।।२६।।

सर्वे तदाश्रमे याता मुनिना पूजिता भृशम् ।
भोजिताः षड्रसैश्चात्रैर्विश्रान्तिं परमां गताः ।।२७।।

ततः कथाप्रसङ्गोऽभून्मुनिना च नृपेण च ।
सर्वं चाकथयद्राजा वृत्तान्तं मुनये तदा ।।२८।।

ततो मुनिर्ध्यानबलात् सर्वं जन्मास्य सञ्जगौ ।
दुरितं तच्छमोपायमब्रवीत् करुणायुतः ।।२९।।

दुरितश्रवणे चास्य सन्त्रासो नौ नृपाभवत् ।
स सन्दिग्धमना यावत् तावद् देहाद् विनिर्गताः ।।३०।।

प्रस्थान गरेका थियौं । वनमा गई हामीले धेरै दुःख पायौं । हामी भोकले व्याकुल भयौं । हिंड्दा हिंड्दा हाम्रा खुट्टाबाट रगतका धारा बग्न थाले। तपाईंका पिता कुष्ठरोगले अत्यन्त घृणित अवस्थामा हुनुहुन्थ्यो। कन्दमूल र फल खाएर पनि उहाँलाई कहिल्यै तृप्ति भएन। दुःख नगरेकी तपाईंकी माताले पनि साह्रै पीडा व्यहोर्नुपर्‍यो । हिंड्ने बानी नभएकी तपाईंकी आमालाई जङ्गलमा हिंड्दा थकाइ लाग्यो, खुट्टा दुखे। एक दिन उहाँ थाकेर एक पाइला पनि हिंड्न नसक्ने स्थितिमा पुग्नुभयो । यस्ता दुःखका दिन हामीले धेरै देख्यौं, धेरै व्यहोर्‍यौं । एक दिन भगवान्को कृपा भयो र घुम्दाघुम्दा हामीले एउटा सुन्दर सरोबर देख्यौं ।।२१-२३।। त्यो सरोबर रूख र लहराले ढाकिएको थियो । अत्यन्त शीतल थियो । त्यहाँ शान्ति अनुभव गर्दै तपाईंका पिता सोमकान्ता राजा जिउको वास्ता नगरी भुइँमा सुत्नुभयो । त्यस अवस्थामा पनि कत्ति घृणा नमानी तपाईंकी आमाले आफू थाकेकी भए तापनि आफ्ना पति सोमकान्तको पाउ दबाएर सेवा गर्नुभयो ।।२४।। तपाईंकी आमाले राजा सोमकान्तको पाउ दबाइरहँदा हामी दुईजना मन्त्रीहरू कन्दमूल खोज्न भनी जङ्गलतर्फ लाग्यौं । त्यस बेला एकजना ऋषि त्यहाँ आइपुगे । ती उत्तम ऋषिको नाम च्यवन थियो । पानीका निमित्त ती आएका थिए । तिनले तपाईंका माता-पितालाई भेटेर भलाकुसारी गरे। राजा-रानीको प्रेम र श्रद्धा अनुभव गरी ती ऋषि आफ्नो आश्रममा फर्के । त्यसै बेला हामी दुईजना मन्त्रीहरू पनि वनमा भेटाएका कन्दमूल लिएर त्यहाँ फर्क्यौं।।२५-२६।। त्यसपछि च्यवन ऋषिको आग्रहबाट राजा-रानी र हामीहरू दुवै ऋषिको आश्रममा पुग्यौं। ऋषिले हाम्रो स्वागत गर्नुभयो । ६ प्रकारका रसले युक्त भोजन एवं व्यञ्जन टक्र्याउनुभयो । हामीले त्यहाँ परम आनन्दपूर्वक भोजन गरेपछि केही बेर आराम गर्‍यौं ।।२७।। आरामपछि राजा र मुनिको आपसमा संवाद भयो । राजाले मुनिका सामु आफ्ना सबै कुरा राख्नुभयो । त्यसपछि मुनिले ध्यान गर्दै आँखा चिम्लनुभयो । आँखा खोलेपछि मुनिले भन्नुभयो- हे राजन् ! मैले ध्यानदृष्टिबाट तपाईंको भूत र वर्तमान सबै हेरें। तपाईंबाट पूर्वजन्ममा ठूलो पाप भएको रहेछ । राजाको पूर्वजन्मको पापका विषयमा सुनेर हामी भयभीत भयौं । राजाको मनमा भने पूर्वजन्मका घटना सुनेर सन्देह पैदा भयो । त्यसपछि

पक्षिणः श्वेतवर्णास्तमारब्धा भक्षितुं नृपम् ।
तेषां चञ्चुप्रहारेण विह्वलः पतितो नृपः ।।३१।।

रक्ष रक्षेति कारुण्यात् प्रोक्तः प्रार्थनया मुनिः ।
तस्य प्रेक्षणमात्रेण पक्षिणोऽन्तर्दधुः क्षणात् ।।३२।।

स तु हस्तयुगं बद्ध्वा तस्थौ मुनिमुखो नृपः ।
महज्ज्ञात्वा नृपैनः स श्रावयामास भक्तितः ।।३३।।

गणेशस्य पुराणं यद् वर्षमात्रं कृपानिधिः ।
अष्टोत्तरशतेनादौ देवनाम्ना प्रसिच्य च ।।३४।।

तदङ्गात् पुरुषं घोरं निष्कास्य तपसो बलात् ।
व्योमकेशो ललज्जिह्वो व्याकुलः क्षुधया भृशम् ।।३५।।

भक्ष्यं ययाचे स भृगुं सोऽवदत् तं पुरस्थितम् ।
भक्षयस्वाम्रवृक्षं त्वं महान्तं शुष्कमेव च ।।३६।।

तेन स्पृष्ट आम्रवृक्षो भस्मसादभवत् क्षणात् ।
ततस्तं धीवरं प्राह भक्षयस्वेत्यसौ मुनिः ।।३७।।

ततो नृपं मुनिः प्राह पुराणश्रवणं महत् ।
श्रेयो निक्षिप नित्यं त्वमस्मिन् भस्मनि भूमिप ।।३८।।

यावच्चूतस्य वृक्षोऽत्र भवेदन्यो यथा पुरा ।
ततस्त्वमपि राजेन्द्र ! दिव्यदेहो भविष्यसि ।।३९।।

तथैव स नृपश्चक्रे स्नात्वा श्रुत्वा कथां बहु ।
न्यक्षिपत् प्रत्यहं श्रेयस्तस्मिन् भस्मनि भक्तितः ।।४०।।

संवत्सरान्ते वृक्षोऽसावभून्नृप ! यथा पुरा ।
गणेशस्य पुराणे तु समाप्ते फलपुष्पवान् ।।४१।।

सेतो रङ्गका चराहरू त्यहाँ आए । तिनले राजाको रोगी शरीरबाट रगत र पीप बगेको देखे । त्यो देखेर आफ्नो ठूँडले शरीरमा प्रहार गरी मासु लुछ्न थाले । यसरी चराको प्रहारबाट घाइते भएका राजा बस्न नसकेर भुइँमा लड्नुभयो । उहाँले मुनिलाई सम्बोधन गर्दै भन्नुभयो – हे मुनिवर ! म विपत्तिमा परें, कृपा गरी मेरो रक्षा गर्नुहोस् । मुनिले हेर्नासाथ राजाको शरीरमा प्रहार गरिरहेका ती सेता चराहरू तत्कालै अन्तर्धान भए ।।२८-३२।। यताउति कहीं पनि देखिएनन् । राजाले हात जोडेर मुनिको मुखमा हेरिरहनुभएको थियो । मुनिले पनि राजाले पूर्वजन्ममा गरेको ठूलो पाप थाहा पाएर राजालाई अवगत गराए । त्यसपछि उनले एक वर्षसम्म भक्तिपूर्वक राजालाई श्रीगणेशपुराण सुनाए ।।३३।। मुनिले आफ्नो तपस्याको बलबाट शुरुमा १०८ श्रीगणेश नामको जप गरी जलले अभिमन्त्रित गरेर राजाको शरीरबाट डरलाग्दो पापपुरुषलाई बाहिर निकाले । बाहिर आएको पापपुरुष आकाश छोलाजस्तो अग्लो थियो । त्यसको लामो जिब्रो बाहिर निस्केको थियो । त्यो साह्रै भोकले व्याकुल अवस्थामा थियो । त्यसले भृगु ऋषिलाई हात जोडेर भन्यो– मलाई खानेकुरा दिनुहोस् । ऋषिले भने हे पापपुरुष ! तैंले आश्रम नजिकै एउटा सुकेको आँपको रूख छ त्यसलाई खाएर आफ्नो भोक निवारण गर । त्यसपछि पापपुरुषले गएर आँपको रूखलाई छोयो । छुनासाथ त्यो रूख डढ्यो र खरानीमा परिणत भयो । त्यसपछि पापपुरुषलाई त्यही खरानी खान मुनिले अह्राउनुभयो ।।३४-३७।। राजालाई सम्बोधन गर्दै मुनिले भन्नुभयो– हे राजा ! तपाईंले एक वर्षसम्म श्रीगणेशको पुराण सुन्नुभएको छ । त्यसबाट तपाईंले ठूलो पुण्य कमाउनुभएको छ । त्यो पुण्य तपाईंले खरानी भएको आँपको वृक्षका निमित्त दान गर्नुहोस् । त्यसबाट त्यहाँ एउटा आँपको वृक्ष तुरुन्तै पैदा हुनेछ र तपाईंको रोगले जीर्ण र घृणित शरीर दिव्य शरीरका रूपमा परिणत हुनेछ ।।३८-३९।। मुनिको आज्ञा पाएर तपाईंका पिता सोमकान्तले त्यसै गर्नुभयो । उहाँले स्नान गर्नुभयो, कथा सुन्नुभयो, दिनदिनै पुराण श्रवण गरी त्यसको पुण्य भक्तिपूर्वक खरानीमा अर्पण गर्नुभयो ।।४०।। एक वर्ष बितेपछि त्यसै खरानीबाट एउटा विशाल वृक्ष खडा भयो । श्रीगणेशपुराणको साङ्गता गरेपछि त्यो वृक्ष फलफूलले लटरम्म भयो । यता राजा पनि चन्द्रमा र सूर्यझैं कान्तिसम्पन्न

नृपोऽपि दिव्यकान्तिः स शशिसूर्यनिभोऽभवत् ।
यावन्नृपो मुनिं स्तौति विमानं तावदागतम् ।।४२।।

नृत्यगीतसमायुक्तं वाद्यघोषनिनादितम् ।
गणेशदूतसंयुक्तमाश्रमान्तिकमास्थितम् ।।४३।।

यच्छोभां पश्यतोर्नाथ ! दृशो नौ सफलाः किल ।
अतिपुण्यात् पितुस्ते ते दूता देवाज्ञया नृपम् ।।४४।।

न्यक्षिपन् यानमध्ये नौ नृपेक्षणप्रणोदिताः ।
सुधर्मा च मुनेराज्ञां गृह्य याता विमानगा ।।४५।।

दृष्टं देवपुरं यावत् तावत् त्वत्स्मृतिरागता ।
अत उत्तारितं यानमुत्तरे नगरान्नृप ।।४६।।

दिदृक्षया पितृभ्यां ते तौ यातौ त्वां निवेदितुम् ।
तयोः शीघ्रं दर्शनाय याहि नो चेद् गमिष्यति ।।४७।।

तयोर्वाक्यं निशम्येत्थं हेमकण्ठस्त्वरान्वितः ।
रोमाञ्चाश्रुसमायुक्तो धावमानः श्रुताखिलः ।।४८।।

ययौ तद्दर्शनौत्सुक्यात् पुरस्कृत्य तदा तु तौ ।
विशीर्णभूषणगणो नागरैः सेवकैर्वृतः ।।४९।।

गलदश्रुः क्षणात् प्राप विमानं गणसङ्कुलम् ।।५०।।

हुनुभयो । यसरी आफ्नो शरीरमा आएको परिवर्तन र मनमा आएको प्रसन्नताबाट प्रभावित भएका तपाईँका पिता सोमकान्तले मुनिको स्तुति गर्नुभयो । त्यसै बेला श्रीगणेशधामबाट त्यो आश्रममा एउटा विमान आइपुग्यो ।।४१-४२।। विमानभित्र स्वर्गीय नृत्य र गान चलेको थियो, स्वर्गका बाजा बजेका थिए। त्यसमा श्रीगणेशका गणहरू विराजमान थिए । त्यो विमान आश्रमको नजिकमा उभिएको थियो । त्यसको शोभा हेरेर हामी दुवै मन्त्रीहरू पनि छक्क परेका थियौं । हाम्रा आँखाले त्यस्तो दृश्य कहिल्यै पनि देखेका थिएन। तपाईँका पिताको पुण्यका प्रतापले त्यो विचित्रको घटना घट्यो। ती श्रीगणेशका दूतले तपाईँको पितालाई विमानमा सवार हुन अनुरोध गरे । त्यसपछि हामी सबै विमानमा आरोहण गर्‍यौं । तपाईँकी माता सुधर्मा पनि मुनिहरूबाट आज्ञा प्राप्त गरी त्यसमा सवार हुनुभयो ।।४३-४५।। जुन बेला विमान तपाईँको राजधानी माथि आकाशमा उड्दै थियो त्यस बेला तपाईँकी आमाले यहाँको दृश्य देखेर तपाईँको संझना गर्नुभयो। श्रीगणेशका दूतहरूको कृपाबाट त्यो विमानलाई एकछिनका निमित्त देवपुरको उत्तरमा ओह्रालिएको छ।।४६।। हजुरका माता-पिताद्वारा हजुरको दर्शन गर्ने तीव्र इच्छा व्यक्त गरिएपछि उहाँहरूका मन्त्री हामी हजुरका समक्ष निवेदन गर्न आएका छौं । छिटै उहाँहरूको दर्शनार्थ प्रस्थान गर्नुहोस्, अन्यथा उहाँ गइसक्नुहुनेछ ।।४७।। तिनका यी कुरा सुनेर हेमकण्ठ पनि हतार गर्दै रोमाञ्चित भएर हर्षका आँसुका बगाउँदै माता-पिताको दर्शन गर्ने उत्सुकताका साथ गहना र वस्त्रको पनि ख्याल नगरी आफ्ना नगरवासी भद्र नागरिक र विश्वासपात्र सेवकहरूलाई साथमा लिएर माता-पिताको सामुमा पुगे। त्यहाँ गएर तिनले श्रीगणेशका गणले भरिएको सुन्दर विमान नजर गरे ।।४८-५०।।

ॐ

**इति श्रीगणेशपुराणे उत्तरखण्डे हेमकण्ठदर्शनं नाम द्विपञ्चाशदुत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'हेमकण्ठदर्शन' शीर्षकान्वित एक सय बाउन्नौं अध्याय पूर्ण भयो ।।१५२।।

ॐ

## त्रिपञ्चाशदुत्तरशततमोऽध्याय:	{ १५३ अध्याय }

सूत उवाच

तदमात्याश्च चत्वार: सोमकान्तं पुरो ययु: ।
प्रणिपत्याखिलान् प्रोचुरागतस्ते सुतो नृप ।।१।।

सर्ववीरैर्नागरिकैरिन्द्र: सुरगणैरिव ।
वृतो हर्षेण शोकेन दृष्ट्वा नृयानमेव च ।।२।।

एवं निवेदितोऽमात्यै: सोऽपि शीघ्रं समागत: ।
आबालवनितावृद्धै: सेवकैश्च समन्वित: ।।३।।

दृष्ट्वा शोभां विमानस्य सर्व आनन्दनिर्भरा: ।
तन्मध्ये सोमकान्तं ते दृष्ट्वा नेमुर्धरातले ।।४।।

युक्तं दूतैर्गणेशस्य कान्तयाप्यतिकान्तया ।
तत उत्तीर्य यानात् स आलिलिङ्ग सुतं मुदा ।।५।।

आनन्दाश्रूणि मुञ्चन्तौ सरोमाञ्चावुभावपि ।
विदेहाविव सञ्जातौ न किञ्चिदूचतु: क्षणम् ।।६।।

{ तत ऊचे पिता पुत्रं स्नेहेन वत्सरागतम् ।
त्वामेव नित्यं ध्यायामि सत्पुत्रं वंशभूषणम् ।।
न त्वया सदृशं पश्ये पुत्रेषु जनवर्तिषु ।
तत: सुधर्मा स्नेहेन धावमाना सुतं ययौ ।।
आलिलिङ्ग मुदा युक्ता गलदश्रू उभावपि ।
तत ऊचे सुतं माता चिरदृष्टोऽसि बालक: ।।
न मे सुखं किञ्चिदभूत् त्वदुत्कण्ठितचेतस: ।
इदानीं ते मुखं दृष्ट्वा सानन्दं मे मनोऽभवत् ।।
वियोगेन च ते देहो मम जात: कृशो भृशम् ।
तत आलिङ्गनं चक्रुर्नागरा नामधारका: ।।

**सूतजीले भन्नुभयो** - यसरी राजा हेमकण्ठ आफ्ना पिताको दर्शन गर्न जाँदा तिनका चारजना मन्त्रीहरू पनि सँगै गएका थिए। त्यहाँ मानिसहरूले राजा सोमकान्तलाई भने- हे राजन्! हजुरका छोरा हजुरलाई भेट्न आउनुभएको छ। आफ्ना साथमा वीरजन र नागरिकहरू पनि लिएर आउनुभएको छ। देवताहरूलाई लिएर इन्द्र जसरी कहीं जान्छन् त्यसैगरी तपाईंका छोरा पनि आफन्तहरूका साथ यहाँ आउनुभएको छ । उहाँले हर्ष र शोकपूर्वक तपाईँ बस्नुभएको विमानको दर्शन गरिसक्नुभएको छ ।।१-२।। यसरी मानिसहरूबाट सुनेपछि राजा सोमकान्त र रानी सुधर्मा दुवै प्रसन्न भए । हेमकण्ठ पनि तुरुन्तै नर-नारीहरूका माता-पिताका सामु हाजिर भए । ती सबैले विमानको शोभा देखेर ठूलो आनन्दको अनुभव गरे । विमानको बीचमा रहेका आफ्ना पिता सोमकान्तको दर्शन पाएर हेमकण्ठलगायत सबै आगन्तुकहरूले भूइँमा उभिई शिर झुकाएर वन्दना गरे ।।३-४।। आफ्ना छोराले आएर वन्दना गरेपछि विमानबाट ओर्लेर सोमकान्तले पनि तिनलाई आलिङ्गन गरे । आलिङ्गनपाशमा आबद्ध दुवै बाबुछोराले आनन्दका आँसु खसालिरहेका थिए, रोमाञ्चित थिए र भावावेशका कारण शरीरलाई बिर्सेर आत्माको आनन्दमा निमग्न थिए । ती दुवै केही बोल्न सकेका थिएनन् ।।५-६।। त्यसपछि पिता सोमकान्तले पुत्र हेमकण्ठलाई भने - बाबु ! म एक वर्षपछि यहाँ आइपुगें । बाह्र महिनामा प्रत्येक रातमा मैले तिमीलाई सम्झिरहन्थें । तिमी मेरो कुलका गहना हौ । धेरै मानिसका छोराहरू हुन्छन् तर तिमीजस्ता बाबु-आमाको सेवा गर्ने र बाबु-आमाप्रति श्रद्धा गर्ने छोरा कमै हुन्छन् । त्यसपछि आमा सुधर्मा आफ्ना छोरासामु आइपुगिन् । तिनले पनि आँखाबाट आँसुका धारा बगाउँदै छोरालाई आलिङ्गन गरिन् । केहीबेर दुवै आमा-छोरा रोइरहे । त्यसपछि आमाले भनिन् - बाबु ! मैले धेरै दिनमा तिमीलाई देख्न पाएँ । एक वर्षसम्म तिम्रो सम्झनाले गर्दा मैले सुखशान्ति कहिल्यै पनि पाइनँ। अहिले तिम्रो अनुहार देख्न पाउँदा मेरो मन अत्यन्त आनन्दित भएको छ। हेर त तिम्रो वियोगका कारण म कति दुर्बल भएकी छु । आमा-छोराको कुराकानीपछि ती राजा र रानीले त्यहाँ भेला भएका प्रत्येक नगरवासीको नाम पुकारेर प्रत्येकसँग भलाकुसारी गरे । खुसी भएका केही नागरिकहरूले राजारानीको प्रदक्षिणा गरे। कसैले पाउ छोए, केही दर्शन गरेर धन्य भयौं भन्दै

केचित् प्रदक्षिणां चक्रुः केचित् पादौ तदाऽस्पृशन् ।
केचिच्च दर्शनादेव प्रतियाताः पुरं प्रति ।।}

तत ऊचे नृपः सर्वान् भृगुणाऽनुग्रहान्मम ।
गणेशस्य पुराणं यच्छ्रावितं पापनाशनम् ।।७।।

अभवं तेन निष्पापो दिव्यदेहो विमानगः ।
सर्वेषां दर्शनं जातं पुनर्यास्यामि यानगः ।।८।।

कृपावता गणेशेन यानं मे प्रेषितं भुवि ।
राज्यञ्च परिभुक्तं मे स्वेच्छया सम्पदः सुत ।।९।।

धाम यास्यामि परमं प्रसादाद् भृगुसम्भवात् ।
एवं ते शुश्रुवुर्वाणीं सोमकान्तसमीरिताम् ।।१०।।

रुरुदुः सुस्वरं सर्वे पतिता भुवि केचन ।
श्रेणीमुख्यास्ततः प्रोचुः सोमकान्तं कृपानिधिम्।।११।।

नो विना जगतीपाल ! कथं यास्यसि धाम तत् ।
प्राणाँस्त्यक्त्वा वयं सर्वे यास्यामोऽप्यनु ते नृप ।।१२।।

हत्या त्वन्मस्तके राजन् ! सर्वेषां नो भविष्यति ।
न नः पुण्यं तथा येन द्रक्ष्यामस्तं गुणेश्वरम् ।।१३।।

तव प्रसादाद् देवस्य यास्यामो लोकमुत्तमम् ।
न संसारे सुखं किञ्चिदायुर्नाशो वृथाऽत्र हि ।।१४।।

अस्माकं न भवेत् किञ्चित् साधनं धामसाधनम् ।
ततोऽवदद् हेमकण्ठो जनकं वाक्यमादृतः ।।१५।।

कथं त्यक्त्वाऽर्भकं तात ! यासि द्रष्टुं गजाननम् ।
मम राज्येन को हेतुराज्ञया तव वत्सरम् ।।१६।।

पालितं राज्यमखिलं नेच्छेदानीं ममापि च ।
शपथस्ते तथा राजन्नतो नेतुं ममार्हसि ।।१७।।

नगरतर्फ फर्के । त्यहाँ रहेका जनतालाई सम्बोधन गर्दै राजा सोमकान्तले भने- हे प्यारा प्रजाहरू! ममाथि भृगु ऋषिको ठूलो कृपा भयो। उहाँकै कृपाबाट मैले पापनाशक श्रीगणेशपुराण सुन्ने अवसर पाएँ ।।७।। एक वर्षसम्म श्रीगणेशपुराणको श्रवणबाट म निष्पाप भएँ र दिव्य शरीर पनि प्राप्त गरें । अहिले म त्यसै दिव्यशरीरमा रहेर विमानमा बसी तिमीहरूका समीपमा आएको छु । भगवान्‌को कृपाले छोरा, मन्त्री, सेवक र नर-नारीहरू सबैसँग भेट भयो । अब म छिट्टै विमानमा सवार भई जानेछु।।८।। कृपालु भगवान् श्रीगणेशले मेरा निमित्त विमान पठाउनुभएको छ । मैले राज्यसुख पनि पाइसकेको छु, सम्पत्तिको सुख पनि भोगिसकेको छु र अब मेरो कुनै कुरामा इच्छा छैन । मुनिवर भृगुको कृपाबाट श्रीगणेशपुराणको श्रवण गरी संसारका स्वामी श्रीगणेशको पनि ठूलो कृपा पाएँ । अब म श्रीगणेशधाम जानेछु। राजा सोमकान्तले भनेका यी कुरालाई त्यहाँ रहेका सबैले श्रद्धापूर्वक सुने ।।९-१०।। राजा-रानी श्रीगणेशधाम जाने कुरा थाहा पाएपछि भोलिको वियोगको कल्पना गरेर तिनीहरू चिच्याउँदै रुन थाले । कोही बेहोश भएर भुईंमा लडे, केही जनप्रतिनिधिहरूले कृपालु राजालाई निवेदन गरे - हे संसारका स्वामी! प्रजाका पालक! तपाईं हामी सबैलाई छाडेर श्रीगणेशधाम जान चाहनुहुन्छ ? हामी त प्राणत्याग गरेर पनि तपाईंका पछि लाग्नेछौं ।।११-१२।। यसरी अकालमा आफैले प्राणत्याग गर्‍यौं भने त्यो हत्याको दोष तपाईंलाई लाग्नेछ । हामीले त्यस्तो कुनै पुण्य नगरेका कारण हामीलाई भगवान् श्रीगणेशले लैजानु हुँदैन। तपाईंको कृपा भएमा मात्र हामी पनि तपाईंका साथ श्रीगणेशधाम जान सक्छौं । संसारमा के सुख छ र ? सुखका लागि मान्छेले दुःख नै गरिरहेको छ परन्तु मा सुख कसैले पनि पाउँदैन । यहाँ त बाँच्नु र आयुको नाश गर्नु यही त काम हो ।।१३-१४।। त्यस कारण हामीलाई संसारप्रति कुनै आसक्ति र माया छैन । तर पुण्य नभएकाले श्रीगणेशधाम जाने उपाय पनि छैन । त्यसपछि हेमकण्ठले आफ्ना पितालाई सम्बोधन गर्दै भने- हे पिताजी ! आफ्नो बालकलाई यसै छाडेर हजुर भगवान् श्रीगणेशको दर्शन गर्न जानुहुन्छ ? मलाई त राज्यमा कुनै माया-मोह छैन । मैले त हजुरको आज्ञा पालन गर्न मात्र एक वर्षका लागि यो राज्य जिम्मा लिएको थिएँ। एक वर्ष हजुरको आज्ञाले सम्पूर्ण राज्यको शासन सञ्चालन गरें । अब मलाई राज्य सञ्चालन गर्ने इच्छा छैन । मैले शपथ खाएर भन्छु- अब म राज्य गर्न चाहन्नँ। तसर्थ मलाई पनि सँगै लिएर जानुहोस् ।।१५-१७।।

सोमकान्त उवाच

सर्वेषामेव संद्रष्टुमिच्छा देवपदाम्बुजम् ।
अहञ्च परवानत्र कथं कार्यं मया जना: ।।१८।।

भवत्स्नेहेन शोचामि पुत्रस्नेहाद् विशेषत: ।
अत एवोर्ध्वगं यानमुत्तार्य द्रष्टुमागत: ।।१९।।

सूत उवाच

तत: शोचत्सु लोकेषु सोमकान्ते रुदत्यपि ।
पुत्रे च देवदूतानां दया प्रादुरभूत् तदा ।।२०।।

ते ऊचु: सोमकान्तं तं धन्यो राजन् ! यतो जना: ।
त्वयि सङ्कल्पितप्राणा यथा त्वं जगदीश्वरे ।।२१।।

अत: सर्वान् गृहीत्वैव याम: शीघ्रं गजाननम् ।

राजोवाच

यदि सर्वा पुरी नीता तदा कीर्तिर्दृढा मम ।।२२।।

भविष्यति रसायां मे नान्यथा तु भविष्यति ।

सूत उवाच

एवमुक्त्वा पुराणस्य गणेशस्य श्रवोद्भवम् ।।२३।।

पुण्यं हस्ते जलेनैषां ददौ राजा तदाज्ञया ।
तोये हस्ते गते लोका निष्पापा: पुण्यमूर्तय: ।।२४।।

आबालवनितावृद्धा रुरुहुर्यानमुत्तमम् ।
गणेशस्य तु ये दूतास्ततोऽगुरूर्ध्वमार्गत: ।।२५।।

तत: केचिन्नरा: पापा यैर्नापि च जलं करे ।
ते पुनर्नगरे याता: शशंसु: शेषितं जनम् ।।२६।।

ततो ददृशिरे सर्वे उर्ध्वगं नगरं बहु ।
ऊचु: परस्परं शेषा द्रव्यलाभेन तोषिण: ।।२७।।

**सोमकान्तले भने –** तिमीहरू सबैको भगवान् श्रीगणेशका पाउको दर्शन गर्ने तीव्र इच्छा रहेछ । म पराधीन छु । तिमीहरूप्रति र विशेषगरी छोराका प्रति स्नेहका कारण म चिन्तित छु । त्यस कारण आकाशमा उडिरहेको यानलाई यहाँ ओरालेर जनता र छोरासँग भेट गर्न भनी आएको हुँ ।।१८-१९।।

**सूतजीले भन्नुभयो –** यो कुरा सुनेर त्यहाँका सबै श्रोताहरू जिल्ल परे । सोमकान्त आफ्ना प्रजाका लागि केही गर्न नसकेका कारण रुन थाले ।(छोरा हेमकण्ठ पनि बाबुआमाको वियोगको कल्पना गरेर क्रन्दन गर्न थाले । त्यस बेला भगवान् श्रीगणेशका दूतहरूको हृदयमा करुणा जाग्यो । तिनले सोमकान्तलाई सम्बोधन गर्दै भने – हे राजा ! तपाईं धन्य हुनुहुन्छ । हेर्नुहोस् त तपाईंका प्रजाहरू तपाईंमै प्राण अड्याएर बसेका रहेछन् । जसरी भगवान्का भक्तले आफ्ना प्राण भगवान्लाई नै अर्पित गरेका हुन्छन् त्यसैगरी तपाईंका प्रजा, परिवार र मन्त्रीगणको पनि तपाईंप्रति ठूलो भक्ति रहेछ ।।२०-२१।। त्यस कारण हामी तपाईंहरू सबैलाई लिएर भगवान् श्रीगणेशधाममा जानेछौं।

**राजाले भने –** हे भगवन् श्रीगणेशका गणहरू ! यदि तपाईंहरूले कृपा गरेर मेरो सम्पूर्ण राजधानीलाई श्रीगणेशधाममा पुर्‍याउनुहुन्छ भने मेरो ठूलो कीर्ति हुनेछ अन्यथा म दु:खी हुनेछु।

**सूतजीले भन्नुभयो –** यसरी निवेदन गरेपछि राजा सोमकान्तले आफूले श्रीगणेशपुराणको श्रवणबाट प्राप्त सम्पूर्ण पुण्य चिताएर हातमा जल लिए । त्यसपछि तिनले सङ्कल्प गर्दै भने – मैले श्रीगणेशपुराण सुनेको पुण्य यी सबै प्रजा, परिवार र सेवकहरूलाई श्रीगणेशधाम पुर्‍याउनका निमित्त दान गर्दछु । राजाको हातबाट सङ्कल्पको जल आ-आफ्नो हातमा परेपछि ती सबै उनका आफन्तहरू निष्पाप र पुण्यमूर्ति बने ।।२२-२४।। त्यसपछि बालक-बालिका, युवक-युवती, प्रौढ-प्रौढा, वृद्ध-वृद्धा सबै श्रीगणेशका दूतहरू रहेको यानमा सवार भए । श्रीगणेशका दूतहरूले सबै त्यहाँ सवार भएपछि विमानलाई भुईंबाट आकाशतर्फ उडाउन थाले । सङ्कल्पको जल हात पार्न नपाएका केही अत्यन्त उग्र पापी मानिसहरू मात्र विमानमा आरोहण गर्न पाएनन् । फर्केर नगरमा आएका मानिसहरूले नगरमा रहेका अरू मानिसहरूसँग यस घटनाको बयान गरे । बयान गर्ने र बयान सुन्ने क्रममा ती सबैले त्यो विमानलाई धर्ती छाडेर आकाशतर्फ उडेको देखे । नगरमा बाँकी रहेका नर-नारीहरूले पनि राजाको पुण्यका कारण प्रशस्त द्रव्य प्राप्ति हुँदा सन्तोषको

नानाव्यवसायरता बभूवुर्हृष्टमानसाः ।
काँश्चित् पलायनपरान् दूता दण्डप्रहारिणः ।।२८।।

बलाद् गृहीत्वा प्राक्षिपन् यानमध्येति कौतुकात् ।
नानामिषेण जग्मुर्ये ताँस्तथैव निचिक्षिपुः ।।२९।।

उपविष्टा मध्यदेशे राजपत्नीसुतादयः ।
अमात्याः परितो लोका नागरा विविशुः सुखम् ।।३०।।

मयूरेश ! मयूरेश ! जय त्वमिति घोषिणः ।
वाद्यत्सु देववाद्येषु नृत्यत्यप्सरसां गणे ।।३१।।

प्रतिनादेन गर्जन्ति मण्डलानि दिशामपि ।
अतिवेगेन ते प्राप्ता गणेशस्य पदं शुभम् ।।३२।।

सुषमां परिपश्यन्तो विस्मयेनाब्रुवन्निति ।
अहो महत् पुण्यमस्य येन दृष्टो गजाननः ।।३३।।

समीपतां ययुः सर्वे राजा सायुज्यमाप च ।

सूत उवाच

एवं वः कथिता विप्रा गणेशस्य पुराणजा ।।३४।।

कथा सर्वजनस्यापि श्रवणात् पापनाशिनी ।
शृणुध्वं देवदूतेभ्यो विमाने पृष्टवान् नृपः ।
तत्सर्वं भवतां विप्राः कथयामि कथानकम् ।।३५।।

अनुभव गरे । विभिन्न व्यवसायमा लागेका मानिसहरू पनि व्यवसायमा उन्नतिका कारण प्रसन्न देखिन्थे। उता, यानमा सवार भएका नर–नारीहरूमध्ये केही विमानबाट भाग्न खोज्दै थिए । तिनलाई श्रीगणेशका दूतहरूले लौरो हानेर बलपूर्वक विमानको बीचमा लगेर राखिदिए । अरू पनि अनेक निहुँ गरी विमानबाट बाहिर जान खोज्ने नर–नारीहरूलाई श्रीगणेशका दूतहरूले यथा स्थानमा ल्याई बसाउने काम गरे । त्यस विमानको मध्य भागमा राजा, रानी, राजपुत्र र अमात्यगण विराजमान थिए। तिनीहरूका वरिपरि सामान्य नर–नारीहरू सुखपूर्वक बसेका थिए।।२५–३०।। ती सबैले त्यहाँ एक स्वरले भनिरहेका थिए – भगवान् मयूरेश श्रीगणेशको जय होस् । त्यस जयजयकारबाट त्रिलोकी घन्किएको थियो । देवताहरूका बाजा बजेका थिए । त्यस बेला अप्सरा नाचिरहेका थिए । सङ्गीत, वाद्यवादन र नृत्यको ध्वनिबाट दिशा र आकाश निनादित भए । ती सबै अत्यन्त छिटो भगवान् श्रीगणेशको धाममा प्राप्त भए । त्यहाँको दिव्य शोभाको दर्शन गरेर चकित भई भन्न थाले – अहा! राजा सोमकान्त कति पुण्यवान् रहेछन्, कति भाग्यशाली रहेछन् आज भगवान् श्रीगणेशको दर्शन पाउने राजा सोमकान्त कति पुण्यवान् र कति भाग्यशाली रहेछन् । तिनले आफैले मात्र दर्शन पाएनन् अपितु आफ्ना धेरै प्रजालाई पनि भगवान्को दर्शन गराए।।३१–३३।। यसरी श्रीगणेशका नजिकमा पुगेका प्रजाहरू खुसी भए भने राजा सोमकान्त आफ्नो पुण्यप्रतापका कारण भगवान् श्रीगणेशमै मिल्न गई श्रीगणेशस्वरूप भए।

**सूतजीले भन्नुभयो–** हे शौनक आदि ऋषिगण! मैले तपाईंहरूलाई श्रीगणेशपुराणको यो दिव्य कथा सुनाएँ ।।३४।। यस कथाले श्रवणमात्र बाट पनि ठूलाठूला पापलाई नाश गरिदिन्छ । राजा सोमकान्तले विमानमा सवार भई श्रीगणेशधाम जाने समयमा श्रीगणेशका दूतहरूले प्रश्न गर्दा विमानभित्र नै भगवान् श्रीगणेशको कथा सुनाएका थिए । मैले तपाईंहरूलाई ती ती कथाहरू पनि सुनाउनेछु ।।३५।।

ॐ

**इति श्रीगणेशपुराणे उत्तरखण्डे सोमकान्तस्य देवपदप्राप्तिवर्णनं नाम त्रिपञ्चाशदुत्तरशततमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'सोमकान्तको देवपद प्राप्ति वर्णन' शीर्षकान्वित एक सय त्रिपन्नौं अध्याय पूर्ण भयो ।।१५३।।

ॐ

## चतुःपञ्चाशदुत्तरशततमोऽध्यायः { १५४ अध्याय }

ऋषय ऊचुः

किं पृष्टं सोमकान्तेन विमानवर्तिनाऽनघ ।
तद् वयं श्रोतुमिच्छामो वद सर्वमशेषतः ।।१।।

सूत उवाच

गच्छता व्योममार्गेण पृष्टा दूता महात्मना ।
वाराणसीस्थितानां तु गणेशानां महात्मनाम् ।।२।।
नामानि परिवाराणां तानि नः शृणुतानघाः ।

राजोवाच

दूता वदन्तु कृपया विश्वेशपरिवारगान् ।।३।।
गणेशान् मम कार्त्स्न्येन स्मरणात् सर्वसिद्धिदान् ।

दूता ऊचुः

कथयामः समासेन विश्वेशावरणे गतान् ।।४।।
गणेशान् क्रमशो राजन् ! शृणु सर्वभयापहान् ।
दुर्गविनायकोऽथार्कभीमचण्डविनायकौ ।।५।।
देहलीगणपश्चाथ तथोद्दण्डविनायकः ।
पाशपाणिः सर्वविघ्नहरणोऽथ विनायकः ।।६।।
प्रथमावरणे सिद्धसिद्धिरूपो विनायकः ।
लम्बोदरः कूटदन्तः शालटङ्कविनायकः ।।७।।
कूष्माण्डाख्यश्चतुर्थश्च पञ्चमो मुण्डसंज्ञकः ।
विकटद्विजसंज्ञस्तु राजपुत्रविनायकः ।।८।।
प्रणवाख्योऽथापरश्च द्वितीयावरणे स्थिताः ।
वक्रतुण्ड एकदन्तस्त्रिमुखश्च विनायकः ।।९।।
विघ्नराजश्चतुर्थोऽथ वरदश्च विनायकः ।
पञ्चास्यश्चापरश्चात्र हेरम्बश्च विनायकः ।।१०।।
मोदकप्रिय इत्येव तृतीयावरणे स्थिताः ।
विनायकोऽभयप्रदः सिंहतुण्डविनायकः ।।११।।
कूणिताक्षश्चापरश्च क्षिप्रप्रसादसंज्ञकः ।
चिन्तामणिरिति ख्यातो दन्तहस्तविनायकः ।।१२।।

**ऋषिहरूले भने**– विमानमा रहेका सोमकान्तले श्रीगणेशका दूतहरूसँग कस्तो प्रश्न गरे ? त्यो हामी सुन्न चाहन्छौं ती सबै कुरा सुनाउनुहोस् ।।१।।

**सूतजीले भन्नुभयो** – आकाशमार्गबाट गइरहेका महात्मा सोमकान्तले सोधेपछि श्रीगणेशका दूतहरूले वाराणसी पुरीमा विश्वनाथको परिवारका रूपमा रहेका प्रभावशाली श्रीगणेशहरूको विषयमा बताएका थिए। हे निष्पाप ऋषि हो! म त्यसबारे तपाइँहरूलाई सुनाउँछु।।२।।

**राजाले भने** – हे श्रीगणेशका दूतहरू ! काशी विश्वनाथका परिवारमा रहेका र ध्यान गर्नासाथ सबैथरिका सिद्धि प्रदान गर्ने श्रीगणेशहरूको विषयमा मलाई सुनाउनुहोस् ।

**दूतहरूले भने** – हे राजा सोमकान्त! भगवान् विश्वनाथको आवरणमा रहेका काशीका विभिन्न स्थानहरूमा प्रतिष्ठित सबै प्रकारका भयनाश गर्ने श्रीगणेशहरूको विषयमा क्रमशः हामी बताउँछौं तपाइँ सुन्नुहोस् । दुर्गविनायक, अर्कविनायक, भीमचण्डविनायक, देहलीविनायक, उद्दण्डविनायक, पाशपाणिविनायक, सर्वविघ्नहरविनायक र सिद्धसिद्धिविनायक गरी ८ विनायक भगवान् विश्वनाथको प्रथम आवरणमा रहेका छन् । लम्बोदरविनायक, कूटदन्तविनायक, शालटङ्कविनायक, कूष्माण्डविनायक, मुण्डविनायक, विकटदन्तविनायक, राजपुत्रविनायक र प्रणवविनायक गरी ८ विनायक भगवान् विश्वनाथको द्वितीय आवरणमा रहेका छन् । वक्रतुण्डविनायक, एकदन्तविनायक, त्रिमुखविनायक, विघ्नराजविनायक, वरद-विनायक, पञ्चास्यविनायक, हेरम्बविनायक र मोदकप्रियविनायक गरी ८ विनायक भगवान् विश्वनाथको तृतीय आवरणमा रहेका छन् । अभयप्रदविनायक, सिंहतुण्डविनायक, कूणिताक्षविनायक, क्षिप्रप्रसादविनायक, चिन्तामणिविनायक, दन्तहस्तविनायक, प्रचण्डविनायक र उद्दण्डमुण्डविनायक गरी ८ विनायक भगवान् विश्वनाथको चतुर्थ आवरणमा रहेका छन् । स्थूलदन्तविनायक, कलिप्रियविनायक, चतुर्दन्तविनायक, द्वितुण्डविनायक, ज्येष्ठविनायक, गजविनायक, कालविनायक र नागेशविनायक गरी ८ विनायक भगवान् विश्वनाथका पाँचौं आवरणमा रहेका छन् ।

प्रचण्डश्चाप्यपरश्चोद्दण्डमुण्डविनायकः ।
चतुर्थावरणे ज्ञेया अष्टावेते विनायकाः ।।१३।।
स्थूलदन्तो द्वितीयस्तु कलिप्रियविनायकः ।
चतुर्दन्तो द्वितुण्डश्च ज्येष्ठो गजविनायकः ।।१४।।
कालाख्यश्च तथा ज्ञेयो नागेशाख्योऽपरोऽपि च ।
पञ्चमावरणे ज्ञेया अष्टावेते विनायकाः ।।१५।।
मणिकर्णविनायक आशासृष्टिविनायकौ ।
यक्षाख्यो गजकर्णाख्यश्चित्रघण्टविनायकः ।।१६।।
सुमङ्गलश्च मित्राख्य एते षष्ठे विनायकाः ।
मोदः प्रमोदः सुमुखो दुर्मुखश्च विनायकः ।।१७।।
गणपाख्योऽथापरश्च तथा ज्ञानविनायकः ।
सप्तमावरणे ज्ञेयास्तथा द्वारविनायकः ।।१८।।
अविमुक्तोऽष्टमो यत्र मोक्षदोऽथ विनायकः ।
अन्यो भगीरथाख्यो हि हरिश्चन्द्रविनायकः ।।१९।।
कपर्दीति परो ज्ञेयस्तथा बिन्दुविनायकः ।
एतेषां स्मरणं नित्यं सर्वकामफलप्रदम् ।।२०।।
प्रातरुत्थाय यश्चैतान् पठते शुद्धमानसः ।
न तस्य विघ्ना विघ्नं हि कुर्वन्ति सर्वकर्मसु ।।२१।।
एकैकनाम्ना राजेन्द्र ! दूर्वाभिस्तण्डुलैरपि ।
तिलैः शमीदलैश्चैतान् पूजयेद् भक्तिमान् नरः ।।२२।।
असाध्यं साधयेत् कार्यं सर्वत्र विजयी भवेत् ।
आयुष्यं पुष्टिमारोग्यं प्राप्नुयाद्धनमुत्तमम् ।।२३।।
इदं ते कथितं सर्वं यद्धि पृष्टं त्वया नृप !
तूष्णीं ययुर्देवदूतास्ततो धाम निजं मुदा ।।२४।।

**सूत उवाच**

इदं तत् कथितं विप्रा विश्वेशावरणं मया ।
इदानीं कथयिष्यामि पुराणस्य फलश्रुतिम् ।।२५।।

मणिकर्णविनायक, आशाविनायक, सृष्टिविनायक, यक्षविनायक, गजकर्णविनायक, चित्रघण्टविनायक, सुमङ्गलविनायक र मित्रविनायक गरी ८ विनायक विश्वनाथको छैठौं आवरणमा रहेका छन्। मोदविनायक, प्रमोदविनायक, सुमुखविनायक, दुर्मुखविनायक, गणपविनायक, ज्ञानविनायक, द्वारविनायक र मुक्तिदाता अविमुक्तविनायक गरी ८ विनायक विश्वनाथका सातौं आवरणमा रहेका छन् । यसरी काशीमा विश्वनाथका आवरणका रूपमा ५६ विनायकहरूको अवस्थिति छ। आवरणमा रहेका विनायकहरूका अतिरिक्त काशीमा भगीरथविनायक, हरिश्चन्द्रविनायक, कपर्दि-विनायक र बिन्दुविनायक पनि रहेका छन् । यी सबै विनायकहरूको स्मरणबाट साधकले सम्पूर्ण चिताएका कुरा प्राप्त गर्दछ।।३-२०।। जुन मानिसले बिहान जाग्नेबित्तिकै आफ्नो मनलाई शुद्ध बनाएर यी विनायकहरूको नामस्मरण गर्दछ त्यसको कुनै पनि कार्यमा विघ्न आइलाग्दैन । हे राजन् ! भक्तिमान् मानिसले दूबो, अक्षता, तिल र शमीका पात हातमा लिएर यी विनायकहरूका प्रत्येक नामको जप गर्दै ती पदार्थहरूले पूजा गर्दछ भने त्यसका असम्भव कार्य पनि सिद्ध हुन्छन् र त्यसले जहाँसुकै सफलता प्राप्त गर्दछ। त्यस भक्तको आयु वृद्धि हुन्छ र शरीर एवं मनमा पुष्टि हुन्छ । आजीवन त्यो स्वस्थ, निरोगी रहन्छ र आवश्यकता-अनुसार उत्तम धनसम्पत्ति प्राप्त गर्दछ।।२१-२३।। हे राजा सोमकान्त ! तपाईंले जसरी सोध्नुभएको थियो त्यसरी नै हामीले बतायौं ।

**सूतजीले भन्नुभयो** - हे शौनकादि ऋषिवृन्द ! ती दूतहरूले वाराणसीका विनायकहरूको नाम र तिनको महिमा बताएपछि तिनका साथ राजा सोमकान्त श्रीगणेशधाममा प्राप्त भए । मैले तपाईंहरूलाई श्रीगणेशका दूतहरू र सोमकान्तको संवादको माध्यमबाट भगवान् विश्वनाथको आवरणमा रहेका विनायकहरूको विषयमा बताएँ। अब मैले आगामी अध्यायमा तपाईंहरूलाई श्रीगणेशपुराणश्रवणको महिमा सुनाउनेछु ।।२४-२५।।

ॐ

इति श्रीगणेशपुराणे उत्तरखण्डे षट्पञ्चाशद्विनायकवर्णनं नाम चतुःपञ्चाशदुत्तरशततमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको '५६ विनायकहरूको वर्णन' शीर्षकान्वित एक सय चौवन्नौं अध्याय पूर्ण भयो ।।१५४।।

ॐ

## पञ्चपञ्चाशदुत्तरशततमोऽध्यायः { १५५ अध्याय }

सूत उवाच

जन्ममृती न च स्यातां पुराणस्यास्य संश्रयात् ।
एकशो बहुशश्चेत् स्याद् यद्यस्य श्रवणं द्विजाः ।।१।।
न शक्नुतामलं वक्तुं शेषपद्मासनावपि ।
यो ददाति कुरुक्षेत्रे सोमसूर्यग्रहे नरः ।।२।।
हेमभारसहस्राणि विप्रेभ्यो भक्तिभावतः ।
तदस्य श्रवणात् पुण्यं प्राप्नुयाद् भक्तिमान् नरः ।।३।।
यज्ञानां साङ्गजातानां सर्वेषां दक्षिणावताम् ।
फलं कस्तुलयामास पुराणश्रवणस्य च ।।४।।
पुराणश्रवणस्यास्य पुण्यं तस्माद् विशेषवत् ।
व्रतानां जलदानानां तत्र का गणना मता ।।५।।
कोटिकन्याप्रदानानां गोदानानां सहस्रशः ।
तत्पुण्यं कोटिगुणितं श्रवणादस्य जायते ।।६।।
चतुर्णामपि वेदानां साङ्गानां पठनात् सदा ।
शास्त्राणां व्याकृतेर्वापि सदा सत्सेवनादपि ।।७।।
तत्पुण्यं कोटिगुणितं तदस्य श्रवणाद् भवेत् ।
भारतस्य पुराणस्य सम्पूर्णस्य श्रवादपि ।
यत् पुण्यं कोटिगुणितं तदस्य श्रवणाद् भवेत् ।।८।।
यस्य गेहे गणेशस्य पुराणं लिखितं भवेत् ।
न तत्र राक्षसा भूताः प्रेताश्च पूतनादयः ।।९।।
ग्रहा बालग्रहा नैव पीडां कुर्वन्ति कर्हिचित् ।
तद् गृहं हि गणेशेन रक्ष्यते सर्वदा स्वयम् ।।१०।।
इदं पुराणं शृणुयात् पूजयेद् वा समाहितः ।
तस्य दर्शनतः पूता भवन्ति पतिता नराः ।।११।।
ब्रह्मादीनां मुनीनां स मान्यो भवति मानवः ।
क्रुद्धो दहेत् स भुवनं तुष्टो दद्यान्महत् पदम् ।।१२।।

**सूतजीले भन्नुभयो** – हे शौनक आदि ऋषिवृन्द ! श्रीगणेशपुराणको आश्रय लिने साधकको फेरि जन्म र मृत्यु हुँदैन । एक पटक र अनेक पटक श्रीगणेशपुराणको श्रवण गर्ने साधकको महिमा बताउन शेषनाग र ब्रह्माजी पनि समर्थ हुँदैनन्। जसले कुरुक्षेत्रमा गई चन्द्रग्रहण र सूर्यग्रहणका अवसरमा ब्राह्मणहरूलाई भक्ति-पूर्वक एक हजार भारी सुनदान गर्दछ त्यसले प्राप्त गर्ने पुण्य श्रीगणेशपुराणको श्रवणबाट साधकले प्राप्त गर्न सक्दछ ।।१-३।। दक्षिणा आदिसहित साङ्गोपाङ्ग यज्ञ सम्पन्न गर्दा प्राप्त हुने फल र श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुने फलसँगै राखेर एक दिन ब्रह्माजीले तुलामा जोख्ने काम गर्नुभयो । त्यस बेला श्रीगणेशपुराण सुनेको फल भारी भएको थियो । व्रतसम्पादन र जलदानबाट प्राप्त हुने फलको श्रीगणेशपुराणको श्रवणको फलसँग दाँजिने सम्भावना नै छैन अर्थात् तिनको कुनै गणना नै हुँदैन। कोटि-कन्यादान गरेको जुन फल र हजार गाई दान गरेको जुन फल हुन्छ त्यसको कोटिगुना फल श्रीगणेशपुराणको श्रवण गर्दा प्राप्त हुन्छ।।४-६।। अङ्गसहित चारै वेदको निरन्तर पाठ, अध्ययन र व्याख्याको फल एवं सदा सत्सङ्ग गर्दा प्राप्त हुने फलभन्दा पनि करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ। महाभारत र सम्पूर्ण पुराणहरूको श्रवण गर्नाले जुन पुण्य प्राप्त हुन्छ त्योभन्दा करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ ।।७-८।। जसका घरमा श्रीगणेशपुराणका पाण्डुलिपि अथवा पुस्तक रहेका हुन्छन् त्यहाँ राक्षस, भूत, प्रेत, पूतना आदि बालघाती ग्रह र बालग्रहले कुनै समयमा पनि पीडा दिँदैनन् । वास्तवमा श्रीगणेशले त्यस घरको स्वयं रक्षा गर्नुहुन्छ । सावधान, धीर, संयमित र अचल भएर जसले श्रीगणेशपुराणको श्रवण गर्दछ त्यस मानिसको दर्शनबाट पतित मानिसहरू पनि पवित्र हुन आउँछन् ।।९-११।। श्रीगणेशपुराणको श्रवण गर्ने श्रोता ब्रह्मा आदि देवता र मुनिहरूको पनि आदरणीय पुरुष बन्दछ । श्रीगणेशपुराणको पुण्यवान् श्रोता रिसाएमा त्यसले सम्पूर्ण भुवनहरूमा आगो लगाउन सक्छ। त्यो प्रसन्न भयो भने इन्द्र आदि पद पनि प्रदान गर्नसक्छ।।१२।।

अष्टसिद्धीः समाप्नोति श्रवणात् प्रत्यहं नरः ।
न दारिद्र्यं समाप्नोति न सङ्कष्टं नरः क्वचित् ।।१३।।

ईप्सितं समवाप्नोति पद्मादींश्च निधीनपि ।
कल्पद्रुमः कामधेनुर्निधिश्चिन्तामणिस्तथा ।।१४।।

तस्य वश्यत्वमभ्येति सोऽपि वन्द्यो भवत्यपि ।
जारणं मारणं स्तम्भ उच्चाटनमथापि च ।।१५।।

अस्य स्मरणमात्रेण निरस्तं स्यात् क्षणेन ह ।
गणेशनिकटे स्थित्वा पुराणं शृणुयान् नरः ।।१६।।

महापापाद् विनिर्मुक्तः स्त्रीबालहत्ययापि च ।
सान्निध्यमाप्नुयादन्ते गणेशस्य न संशयः ।।१७।।

शूद्रोऽपि मध्ये संस्थाप्य ब्राह्मणान् शृणुयादिदम् ।
क्रमेण लभते वर्णान् वैश्यक्षत्रद्विजाह्वयान् ।।१८।।

नित्यनैमित्तकर्मभ्यश्च्युतो यः शृणुयादिदम् ।
कर्मसाद्गुण्यमाप्नोति गणेशस्य प्रसादतः ।।१९।।

भाद्रशुक्लचतुर्थ्यां यः कृत्वा मूर्तिं महीमयीम् ।
मण्डपे तोरणे रम्ये सम्पूज्य परमादरात् ।।२०।।

पुराणं शृणुयात् सद्यस्तस्य तुष्टो विनायकः ।
ददाति निखिलान् कामानन्ते मोक्षञ्च विघ्नपः ।।२१।।

स्तोत्राण्यत्र च यावन्ति तावन्ति प्रत्यहं नरः ।
पठते यदि यो भक्त्या स सिद्धः स्यान्न संशयः ।।२२।।

असाध्यमपि यत् किञ्चित् तेषां पाठाल्लभेन्नरः ।
अनुष्ठानविधानेन मासमात्रं जपेत् तु यः ।।२३।।

ब्राह्मणान् भोजयेद् भक्त्या सोऽपि तन्मयतामियात्।

मानिसले दिनदिनै श्रद्धापूर्वक श्रीगणेशपुराणको श्रवण गर्दछ भने त्यसले अणिमा, महिमा, गरिमा आदि आठ प्रकारका सिद्धि प्राप्त गर्न सक्छ । त्यस मानिसले दरिद्रता भोग्नुपर्दैन र कहीं पनि त्यसले सङ्कट व्यहोर्नु पर्दैन ।।१३।। त्यसले मनले चिताएको विषयभोग र पद्म आदि निधि पनि प्राप्त गर्दछ । कल्पवृक्ष, कामधेनु र चिन्तामणिजस्ता चिताएका फल दिने र पुऱ्याउने तत्त्व त्यसका वशमा आउँछन् र त्यो आफै पनि सबैको वन्दनीय बन्दछ । श्रीगणेशपुराणको श्रवण गर्नाले अग्निदाह, मृत्यु, स्तम्भन, उच्चाटन-जस्ता विपत्तिहरू एक क्षणमा नाश भएर जान्छन् । भगवान् श्रीगणेशको मन्दिर र प्रतिमाको नजिकै रहेर श्रीगणेशपुराण श्रवण गर्ने मानिस महापाप, स्त्रीहत्या एवं बालहत्याको पापबाट पनि मुक्त हुन्छ। अन्तमा त्यसले भगवान् श्रीगणेशको सान्निध्यमा बस्ने सौभाग्य प्राप्त गर्दछ । यसमा कुनै सन्देह छैन ।।१४-१७।। शूद्र जातिको मानिसले पनि माझमा ब्राह्मणहरूलाई राखी श्रीगणेशपुराणको श्रवण गरोस्। यसो गर्दा त्यसले क्रमैसँग वैश्य, क्षत्रिय एवं ब्राह्मणवर्णमा जन्म लिने सौभाग्य प्राप्त गर्दछ । नित्य कर्म र नैमित्तिक कर्मबाट चुकेको मानिसले यदि श्रीगणेशपुराण श्रवण गर्दछ भने त्यसले श्रीगणेशको कृपाद्वारा उत्तम फलभोग गर्न पाउँछ र कर्मच्युतिबाट भएको दोषलाई पन्छाउँछ ।।१८-१९।। भाद्र महिनाको शुक्लपक्षको चतुर्थी तिथिमा जसले भगवान् श्रीगणेशको पार्थिव प्रतिमा तयार गरी मण्डप र रमणीय द्वारमा समेत परम आदरका साथ पूजा गरी पुराण श्रवण गर्दछ, भगवान् श्रीगणेश त्यसमाथि तुरुन्तै प्रसन्न हुनुहुन्छ । प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले त्यस भक्तका सम्पूर्ण इच्छाहरू परिपूर्ण तुल्याइदिनुहुन्छ । अन्तमा भगवान् श्रीगणेशले त्यसलाई मोक्षको धाम पनि प्रदान गर्नुहुन्छ । श्रीगणेशपुराणभित्र जति स्तोत्रहरू छन् ती सबैको दिनदिनै पाठ गर्ने साधक सिद्धपुरुष बन्दछ । यसमा कुनै सन्देह छैन ।।२०-२२।। संसारमा असाध्य मानिएको जुनसुकै विषय पनि श्रीगणेशका स्तोत्रहरूको पाठबाट प्राप्त हुन्छ । अनुष्ठानविधि अँगालेर जसले एक महिनासम्म श्रीगणेशका स्तोत्रहरूको पाठ एवं श्रीगणेशका मन्त्रहरूको जप गर्दछन् र भक्तिपूर्वक ब्रह्मभोज गराउँछन् ती साधकहरू पनि श्रीगणेशमा तन्मय हुन्छन् अर्थात् श्रीगणेशमय बन्दछन् ।

ऋषय ऊचुः

कथमस्य श्रवात् पुण्यं केन प्राप्तं पुराऽनघ ।।२४।।

तत्रः शंस महाभाग ! पृच्छतां सूतनन्दन !

सूत उवाच

शृण्वन्तु मुनयः पूर्वं कश्चिन्मूकोऽभवन्मुनिः ।।२५।।

ब्रह्मलोकं गतोऽकस्माल्लोमशोऽपि यदृच्छया ।
नमस्कृत्य च लोकेशमुपविष्टस्तदाज्ञया ।।२६।।

पूजितः परया भक्त्या लोमशोऽथाऽब्रवीद् विधिम् ।

लोमश उवाच

व्यासाय कथितं देव ! पुराणं पुण्यवर्द्धनम् ।।२७।।
गणेशस्य महाभाग ! तन्मे वक्तुमिहार्हसि ।

ब्रह्मोवाच

शृणु लोमश ! यत्नेन सर्वपापहरं शुभम् ।।२८।।

पुराणं हि गणेशस्य काममोक्षप्रदं नृणाम् ।

सूत उवाच

ततः स कथयामास ब्रह्मा स्वीयेन यामतः ।।२९।।

लोमशाय गणेशस्य पुराणं काममोक्षदम् ।
मूकेन नादलुब्धेन श्रुतं भक्त्याऽखिलं तु तत् ।।३०।।

ततः स वागीश्वरवत् प्रोवाच भारतीं मुनिः ।
अधीत्य पाठतः कृत्वा श्रावयामास चेतरान् ।।३१।।

भुक्त्वा भोगान् यथाकामान् पुत्रान् पौत्रानवाप्य च ।
अन्ते जगाम परमं धाम गाणेश्वरं शुभम् ।।३२।।

पुनः शृण्वन्तु मुनय इतिहासं पुरातनम् ।
इक्ष्वाकुकुलसम्भूतो राजा शुद्धात्मकः शुचिः ।।३३।।

**शौनक आदि ऋषिहरूले भने** – हे निष्पाप महाभाग! श्रीगणेशपुराणको श्रवणबाट के कस्ता पुण्य प्राप्त हुन्छन् र ती पुण्य क-कसले प्राप्त गरे ? हाम्रा प्रश्नहरूको उत्तर दिनुहोस् ? हामी श्रद्धापूर्वक श्रवण गरिरहेका छौं ।

**सूतजीले भन्नुभयो** – हे शौनक आदि ऋषिवृन्द ! प्राचीन समयमा कुनै एक मूकनामक लाटा मुनि थिए ।।२३-२५।। एक दिन ती अकस्मात् ब्रह्माजीको दर्शन गर्न ब्रह्मलोकमा पुगेका थिए। ती त्यहाँ गएको बेला घुम्दैघुम्दै लोमश ऋषि पनि ब्रह्माजीको धाममा आइपुगे । लोमश ऋषिले ब्रह्माजीलाई प्रणाम गरेपछि ब्रह्माजीको आज्ञाअनुसार ती ब्रह्माजीका सामु आसनमा बसे ।।२६।। ब्रह्माजीले भक्तिका साथ लोमशको सम्मान गर्नुभयो । लोमशले ब्रह्माजीसँग निवेदन गरे ।

**लोमशले भने-** हे पितामह ! हजुरले महामुनि व्यासलाई जुन श्रीगणेशपुराण सुनाउनुभयो त्यो पुराण कृपया मलाई पनि सुनाउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - हे लोमश ! सम्पूर्ण पापनाशक, मङ्गलदायक, काम र मोक्ष प्रदान गर्ने श्रीगणेशपुराण प्रयत्नपूर्वक तिमीले श्रवण गर ।

**सूतजीले भन्नुभयो-** त्यसपछि ब्रह्माजीले आफ्नो प्रहरार्धमा लोमश ऋषिलाई काम र मोक्ष प्रदान गर्ने श्रीगणेशपुराण सुनाउनुभयो । त्यस बेला त्यहीं बसिरहेका लाटा मुनि मूकले पुराणको कथा नबुझे पनि श्लोक उच्चारण गरेको ध्वनि कानमा पर्दा अत्यन्त आनन्दित हुँदै भक्तिपूर्वक श्रीगणेशपुराण श्रवण गरे ।।२७-३०।। श्रीगणेशपुराणको श्रवण गरेको पुण्यले ती लाटा ऋषि बृहस्पतिझैं बोल्नसक्ने वाणीका स्वामी बने । तिनले आफै श्रीगणेशपुराण पढे र कण्ठस्थ गराए । पछिबाट आफूले पढेको र कण्ठस्थ गराएको श्रीगणेशपुराणलाई आँखा चिम्लेर जस्ताको तस्तै अरूलाई सुनाउन सक्ने पनि भए ।।३१।। त्यसपछि आफ्नो इच्छाअनुसार संसारका सुख भोगेर छोरा एवं नाति प्राप्त गरी अन्तमा ती मूक ऋषि श्रीगणेशको मङ्गलमय धाममा प्राप्त भए ।।३२।। हे ऋषिहरू ! यस सम्बन्धमा अर्को पनि प्रसिद्ध इतिहास छ, त्यो सुनुहोस् । इक्ष्वाकुकुलमा उत्पन्न, पवित्र, शुद्धात्मा, यज्ञशील, दानपरायण, नित्य स्वाध्यायसम्पन्न, शत्रुहन्ता, सबै धर्मका

यज्वा दानप्रदो नित्यं स्वाध्यायपरमोऽरिहा ।
आख्याता सर्वधर्माणां प्रजानां पालने रतः ।
षष्ठांशभागी लोकानां मान्यः प्रियतरोऽपि च ।।३४।।

विख्यातस्त्रिषु लोकेषु गोप्ता संवरणाभिधः ।
अनपत्यः स पुत्रार्थे पुत्रीयामिष्टिमाहरत् ।।३५।।

साङ्गां सदक्षिणामन्नदानैः सुविहितां ततः ।
न लेभे सन्ततिं राजा हरिवंशमथाशृणोत् ।।३६।।

पूजयित्वा द्विजानन्ते वाचकं परितोष्य च ।
वस्त्रधेनुहिरण्याद्यै रत्नमूलफलादिभिः ।।३७।।

ततोऽपि नाभवत् पुत्रो दैवान्मूकस्तु तद्गृहम् ।
समायातस्तु विख्यातो गणेशाख्यपुराणवित् ।।३८।।

स्थापितः प्रार्थयित्वा च राज्ञा संवरणेन सः ।
श्रुत्वा पुराणं तद्वक्त्राद् गणेशाख्यं मुदा नृपः ।।३९।।

तदन्ते तोषयामास मूकं तं द्विजपुङ्गवम् ।
रत्नमुक्ताफलैर्वस्त्रैर्भूषणैर्हेमनिर्मितैः ।।४०।।

लेभे ततः कुमारं स गणेशे तत्परोऽभवत् ।
भुक्त्वानेकसुखान् प्राप गाणेशं पदमुत्तमम् ।।४१।।

भगिनी तस्य बन्ध्यासीत् त्रिंशद्वर्षा रजस्वला ।
यथाकालं भवत्येव श्रुत्वा तस्याथ सन्ततिम् ।।४२।।

गणेशाख्यपुराणस्य श्रवाज्जाताञ्च तं मुनिम् ।
आकार्य परिशुश्राव पुराणं तन्मुखाच्छुभम् ।।४३।।

लेभे पुत्रं महाशूरं गणेशभजने रता ।
पुत्रान् पौत्रान् समावाप्य भुक्त्वा भोगान् मनोहरान् ।।४४।।

जगाम सा गणेशस्य निजधामावसानतः ।
सगरस्य तु पुत्राणामेकः पङ्गुरभूत् सुतः ।।४५।।

तेनापीदं श्रुतं पुण्यं पुराणं लोमशात् पुरा ।
भक्त्या द्वादशवर्षेण विनीतेनाथ भक्तितः ।।४६।।

व्याख्याता, प्रजापालनमा तत्पर, जनताबाट आम्दानीको ६ प्रतिशत कर लिएर जनताको पालन गर्ने, सबैका मान्य, सबैका प्यारा, तीनै लोकमा विख्यात र सबैका रक्षक संवरण राजा भए । दैवसंयोगले तिनलाई छोरा भएनन् । पुत्रप्राप्तिका लागि तिनले अङ्ग पुऱ्याएर पुत्रेष्टि गरे ।।३३-३५।। त्यसमा दक्षिणाका साथै प्रचुर मात्रामा अन्नदान पनि गरे । त्यसो गर्दा पनि तिनलाई पुत्र प्राप्त भएन । त्यसपछि राजा संवरणले पुत्रप्राप्तिका लागि हरिवंशपुराण श्रवण गरी ब्राह्मणपूजन गरे । वस्त्र, गाई, सुवर्ण, रत्न, कन्दमूल, फल आदि दिएर पुराणका वक्तालाई सन्तुष्ट बनाए। त्यति गर्दा पनि पुत्रलाभ भएन । त्यसपछि कुनै दिन दैवसंयोग श्रीगणेशपुराणका वक्ताका रूपमा संसारमा विख्यात मूकनामक उत्तम ऋषि आइपुगे ।।३६-३८।। राजा संवरणले मूक ब्राह्मणसँग प्रार्थना गरी तिनलाई वाचक बनिदिन प्रार्थना गरी तिनका मुखबाट सहर्ष श्रीगणेशपुराण श्रवण गरे । पुराणको साङ्गताको दिन मूक ब्राह्मणलाई रत्न, वस्त्र, मोती र सुवर्णले बनेका गहना दान गरेर सन्तुष्ट तुल्याए । त्यसपछि तुरुन्तै राजा संवरणले पुत्रलाभ गरेका थिए । त्यसपछि ती राजा श्रीगणेशका परम भक्त भई श्रीगणेशको आराधनामा तत्पर भए । यस संसारका थरिथरि सुखभोग गरी अन्तमा तिनले उत्तम श्रीगणेशधाम प्राप्त गरे ।।३९-४१।। राजा संवरणकी ३० वर्षको उमेरमा लागेकी एउटी बहिनी थिइन् । समयअनुसार रजस्वला पनि हुने गर्थिन् तर कत्ति उपाय गर्दा पनि तिनलाई सन्तान भएनन् । तिनले आफ्ना दाजु संवरणले श्रीगणेशपुराण सुनेर पुत्र प्राप्त गरेको विषयमा थाहा पाइन्। त्यसपछि तिनले पनि मूक ऋषिलाई बोलाएर तिनका मुखबाट मङ्गलमय श्रीगणेशपुराणको श्रवण गरिन् ।।४२-४३।। श्रीगणेशको आराधनामा निरत ती भक्तिमती नारीले श्रीगणेशपुराणको श्रवण र आराधनाजनित पुण्यबाट पराक्रमी पुत्र प्राप्त गरिन् । त्यसपछि अनेक पुत्र-पौत्र प्राप्त गरी मनोहर र मङ्गलमय संसारका सुख भोगेर अन्तमा श्रीगणेशको धाममा प्राप्त भइन् ।।४४-४५।। सगर राजाका धेरै पुत्रहरूमध्ये एउटा पुत्र लंगडा थिए । तिनले पनि भक्तिपूर्वक लोमश ऋषिका मुखबाट श्रीगणेशपुराणको श्रवण गरे । १२ वर्षसम्म विनम्रता र पवित्रताका साथ अखण्ड रूपमा श्रीगणेशको भक्तिमा डुबेर तिनले श्रीगणेशपुराणको श्रवण गरेका थिए । पुराण श्रवणपछि अनेक द्रव्य अर्पण गरी तिनले लोमश ऋषिलाई सन्तुष्ट बनाए।

सन्तोष्य लोमशं द्रव्यैस्ततोऽङ्घ्रिं समवाप स: ।
विजयं पुष्टिमायुष्यं प्राणान्ते धामतत्पर: ।।४७।।

अष्टादशपुराणानां श्रवणे यत् फलं लभेत् ।
तदेकस्य पुराणस्य गणेशस्य श्रुतेर्भवेत् ।।४८।।

काकबन्ध्या बहुसुता श्रवणादस्य जायते ।
स्रवद्गर्भा भवेद् विप्रा दृढगर्भा भवत्यपि ।।४९।।

मूको वागीशतां याति श्रवणान्मुनिपुङ्गवा: ।
वेदाध्ययनसम्पन्नो मान्योऽपि द्विजपुङ्गव: ।।५०।।

शूद्रो वैश्यत्वमाप्नोति वैश्य: क्षत्रियतामियात् ।
क्षत्रियो द्विजतां याति स्मरणादप्यमुष्य हि ।।५१।।

कन्या तु लभते चास्याप्येकाध्यायस्य संश्रवात् ।
गुणवन्तं कुलीनञ्च पतिं साधुं धनान्वितम् ।।५२।।

जात्यन्धो लभते दृष्टिं पुराणस्यास्य संश्रयात् ।
सर्वतीर्थेषु य: स्नायाद् दद्याद् दानानि सर्वश: ।।५३।।

तत्फलं समवाप्नोति भक्त्या य: शृणुयादिदम् ।
पञ्चाग्निसाधनं ग्रीष्मे हेमन्ते जलवासनम् ।।५४।।

वर्षास्वाकाशवासं य: कुरुते बहुवत्सरम् ।
तत् फलं प्राप्नुयान्मर्त्य: संश्रुतेऽध्यायपञ्चके ।।५५।।

अग्निहोत्रं सदा यस्तु सेवते भक्तिमान् नर: ।
तत् फलं हि पुराणस्य श्रवणादस्य जायते ।।५६।।

एकाङ्गुष्ठेन यस्तिष्ठेद् वर्षाणामयुतं नर: ।
दशाध्यायश्रुतेरस्य पुराणस्य तथा फलम् ।।५७।।

श्रीगणेशपुराणको पुण्यबाट ती लङ्गडा ती सगरपुत्रले खुट्टा प्राप्त गरेका थिए। त्यतिमात्र होइन, तिनले विजय, पुष्टि र आयुसमेत पनि प्राप्त गरे । अन्तमा श्रीगणेशको साधनामा तत्पर हुँदै ती पनि श्रीगणेशधाममा गए।।४६-४७।। अठार महापुराणहरूको श्रवणबाट जुन फल प्राप्त गर्न सकिन्छ त्यो फल एउटै श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ ।।४८।। एक पटकमात्र सन्तान जन्माउने काकबन्ध्या नारीले यो पुराण श्रवण गरेमा ती पनि अनेक पुत्रकी आमा बन्न सक्दछिन् । पटक-पटक गर्भस्रावको कारण दु:खी भएकी नारी पनि यस पुराणको श्रवणबाट गर्भस्रावको दोषबाट मुक्त भई गर्भरक्षा गर्न समर्थ हुन्छिन् ।।४९।। हे मुनिहरू! श्रीगणेशपुराणको श्रवणबाट लाटो मानिस पनि बृहस्पतिसमान वाणीको अधिपति हुन्छ । श्रीगणेशपुराणको श्रवण गर्ने ब्राह्मण उत्तम ब्राह्मण बन्दछ, मान्य हुन्छ र वेदाध्ययन सम्पन्न पनि हुन्छ । श्रीगणेशपुराणको श्रवण गर्ने शूद्र वैश्यजातिमा परिणत हुन्छ। यसैगरी वैश्यले श्रीगणेशपुराण श्रवण गरेमा त्यो क्षत्रिय जातिका रूपमा परिणत हुन्छ । श्रीगणेशपुराणको एउटा अध्यायमात्र श्रवण गर्नाले अविवाहित कन्याले गुणवान्, कुलीन, सज्जन र धनी पति प्राप्त गर्न सक्दछिन् )।५०-५२।। (श्रीगणेशपुराणको श्रवण गर्नाले जन्मान्धहरूले पनि दृष्टिशक्ति प्राप्त गर्दछन् । जसले भक्तिपूर्वक श्रीगणेशपुराणको श्रवण गर्दछ, त्यसले सबै तीर्थमा स्नान र दान गरेको पुण्य प्राप्त गर्दछ । ग्रीष्म (जेठ, असार)मा पञ्चाग्नि साधना, हेमन्त (मंसिर, पुष)मा पानीमा बसी जलसाधना, वर्षा (श्रावण, भदौ)मा खुला जमिनमा बसी वर्षासाधना जसले गर्दछ त्यसले गरेका ती सम्पूर्ण तपस्याको फल श्रीगणेशपुराणका पाँच अध्यायमात्र भक्तिपूर्वक पाठ र श्रवण गर्ने भक्तले प्राप्त गर्दछ ।।५३-५५।। जुन भक्तिमान् मानिसले दिनदिनै अग्निहोत्र गर्दछ त्यसले प्राप्त गर्ने पुण्य भक्ति-पूर्वक श्रीगणेशपुराण श्रवण गर्ने मानिसले पनि प्राप्त गर्दछ ।।५६।। कुनै मानिसले खुट्टाको बूढी औँलाले टेकेर उभिई दश हजार वर्षसम्म तपस्या गरी जुन फल प्राप्त गर्दछ त्यो फल श्रीगणेश-पुराणको श्रद्धापूर्वक दश अध्यायमात्र श्रवण गर्ने मानिसले प्राप्त गर्न सक्दछ । यस कुरामा कुनै सन्देह छैन।।५७।। मानिसले जन्मदेखि मृत्युसम्म नित्य श्रीगणेशपुराणको

लभते मानवो भक्त्या निश्चितं नात्र संशयः ।
आजन्ममरणान्नित्यं शृणुयान्मानवो भुवि ।।५८।।
पुराणन्तु गणेशस्य चक्रवर्ती भवेत् तु सः ।
आजन्ममरणाद् यस्तु काशीवासं करोति च ।।५९।।
तत्पुण्यं लभते मर्त्यो गणेशस्य पुराणतः ।
सहस्रं माघमासान् यः प्रयागे स्नाति मानवः ।।६०।।
तत्फलं लभते मर्त्यः पुराणस्यास्य संश्रवात् ।
गोमतीसङ्गमे तद्वत् स्नानं भक्त्या करोति यः ।।६१।।
तत्फलं कोटिगुणितं लभते चास्य संश्रवात् ।
गणेशस्य पुराणं यः शृणुयाद् भक्तिमान् नरः ।।६२।।
न भयं तस्य शूलात् तु वज्राच्च चक्रिचक्रतः ।
इदं वः कथितं सर्वं पुराणञ्च सविस्तरम् ।।६३।।
सम्पूर्णो महिमा वक्तुं न शक्यो वर्षकोटिभिः ।
ब्रह्मणा षण्मुखेनापि शेषेणापि मुनीश्वराः ।।६४।।
युष्माभिः परिपृष्टं यत् सर्वपापप्रणाशनम् ।
सर्वकामप्रदं भुक्तिमुक्तिदं पुण्यवर्धनम् ।।६५।।
गणेशस्य परेशस्य नानालीलाधरस्य च ।
वक्तृश्रोत्रोरघहरं किमन्यच्छ्रोतुमिच्छथ ।।६६।।

श्रवण गर्नुपर्दछ। जसले त्यसो गर्दछ त्यो मानिस चक्रवर्ती राजा हुन्छ। जन्मदेखि मरणसम्म जुन मानिसले काशीवास गरी पुण्य आर्जन गर्दछ त्यसले प्राप्त गर्ने पुण्य श्रीगणेशपुराणको श्रवण गर्ने मानिसले पनि प्राप्त गर्दछ । कुनै मानिसले प्रयाग तीर्थमा रहेर एक हजार माघ महिनामा नुहाउँदा जुन फल प्राप्त गर्छ त्यो फल श्रीगणेशपुराण श्रवण गर्ने मानिसले पनि प्राप्त गर्छ। गङ्गा र गोमती नदीको सङ्गममा नुहाएर जुन फल प्राप्त हुन्छ त्यो फलभन्दा करोडौं गुना धेरै फल श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुन्छ । जुन भक्तिमान् मानिसले श्रीगणेशपुराणको श्रवण गर्दछ त्यसलाई शिवजीको त्रिशूल, इन्द्रको वज्र र नारायणको चक्रबाट पनि भय हुँदैन । हे ऋषिवृन्द ! मैले तपाईंहरूलाई विस्तारपूर्वक यस्तो अपूर्व महिमा भएको भगवान् श्रीगणेशको प्यारो श्रीगणेशपुराण सुनाएँ ।।५८-६३।। हे मुनिहरू! श्रीगणेशपुराणको श्रवणको सम्पूर्ण महिमा ब्रह्मा, स्कन्द र शेषनागले करोडौं वर्ष लगाएर पनि बताउन सक्दैनन् ! हे मुनिहरू ! तपाईंहरूले सबै पापलाई नाश गर्ने, सम्पूर्ण कामना परिपूर्ण गराउने, भुक्ति र मुक्ति दिने र पुण्यको वृद्धि गराउने परमात्मा अनेक लीलाधारी भगवान् श्रीगणेशको विषयमा सोध्नुभएअनुसार मैले तपाईंहरूलाई वक्ता र श्रोता दुबैका पापहरूको विनाश गर्ने श्रीगणेशपुराण सुनाएँ। अब के सुन्न चाहनुहुन्छ भन्नुहोस् ?।।६४-६६।। जय श्रीगणेश!

ॐ

卐 इति श्रीगणेशपुराणे क्रीडाखण्डे फलश्रुतिनिरूपणं नाम पञ्चपञ्चाशदुत्तरशततमोऽध्यायः 卐

卐 श्रीगजाननार्पणमस्तु 卐 शुभं भवतु 卐 इति श्रीगणेशपुराणं पूर्णतामगमत् 卐

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोखरनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण क्रीडाखण्डको 'फलश्रुतिनिरूपण' शीर्षकान्वित एक सय पचपन्नौं अध्याय पूर्ण भयो ।।१५५।।

ॐ

卐 श्रीगजाननार्पणमस्तु 卐 शुभं भवतु 卐
卐 इति श्रीगणेशपुराणं समाप्तिमगमत् 卐
卐 ॐ 卐

# परिशिष्ट खण्डका सन्दर्भ

१. **गणेशमन्दिर, मूर्ति एवं तीर्थपरिचय सन्दर्भ**

श्रीगणेशको संसारमा विलक्षण आराध्य देवताका रूपमा प्रसिद्धि रहेको कुरा हृदयङ्गम गरी प्राप्त सूचनाको आधारमा गणेशमन्दिर, मूर्ति एवं तीर्थहरूको सङ्क्षिप्त परिचय प्रस्तुत गरिएको छ ।

२. **उपनिषत्सन्दर्भ**

उपनिषत्सन्दर्भमा गणेशका भक्तहरूमा साह्रै लोकप्रिय गणपत्यथर्वशीर्षोपनिषद्को नेपाली अनुवाद गरी प्रस्तुत गरिएको छ ।

३. **पूजाविधिसन्दर्भ**

पूजाविधिसन्दर्भमा गणेशपुराणअन्तर्गतका गणेशपार्थिवपूजनविधि र सङ्कष्टचतुर्थीव्रतपूजनविधिका साथै पुराणहरूमा प्रसिद्ध सिद्धिविनायकपूजाविधिसमेत प्रस्तुत गरिएको छ ।

४. **यन्त्रादिसहस्रनामान्तसन्दर्भ**

यन्त्रादिसहस्रनामान्त सन्दर्भमा गणेशका भक्तहरूलाई अत्यन्त आवश्यक गणेशयन्त्र, गणेशमन्त्र, गणेशध्यान, गणेशन्यास, गणेशगायत्री, गणेशकवच, गणेशशतनामस्तोत्र र गणेशसहस्रनामस्तोत्र प्रस्तुत गरिएको छ

५. **गणेशगीतासन्दर्भ**

गणेशगीता सन्दर्भमा गणेशपुराणअन्तर्गत क्रीडाखण्डको उत्तरार्द्धमा रहेको अमृतमय गणेशगीता प्रस्तुत गरिएको छ ।

६. **स्तोत्रसन्दर्भ**

स्तोत्रसन्दर्भमा गणेशपुराणअन्तर्गतका महत्त्वपूर्ण स्तोत्र र पुराणान्तरहरूबाट संग्रह गरिएका श्रीगणेशका प्रसिद्ध स्तोत्रहरू प्रस्तुत गरिएको छ ।

७. **श्लोकानुक्रमणिकासन्दर्भ**

श्रीगणेशपुराणका अध्येता एवं अनुसन्धाताहरूलाई अध्ययन एवं अनुसन्धानमा सघाउ पुऱ्याउने उद्देश्यले निकै मेहनत गरी श्लोकानुक्रमणिका तयार गरी प्रस्तुत गरिएको छ ।

८. **सन्दर्भ-ग्रन्थसूची**

## परिच्छेद - एक

# गणेशमन्दिर, मूर्ति एवं तीर्थपरिचय सन्दर्भ*

## १.१ नेपालका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्ति

भूमिकाखण्डको परिच्छेद सातमा नेपाल एवं भारतका प्रमुख गणेशमन्दिर तथा मूर्तिहरूको परिचय दिइएको छ, भारतका २१ गणेशक्षेत्रको मात्र सामान्य परिचय प्रस्तुत गरिएको छ र नेपाल – भारत बाहिरका गणेशमन्दिर एवं मूर्तिहरूको सम्बन्धमा सामान्य सूचनामात्र दिइएको छ । यस परिशिष्ट खण्डमा नेपाल, भारत एवं नेपाल–भारत बाहिरका उपलब्ध गणेशमन्दिर एवं मूर्तिहरूको वर्णन प्रस्तुत गरिँदैछ । यसबाट गणेशभक्त र गणेशसम्बन्धी अनुसन्धानमा अभिरुचि राख्ने सबै किसिमका पाठकहरू लाभान्वित हुने छन् । यो प्रयास अवश्य पूर्ण छैन । तर यसले अनुसन्धाताहरूलाई पूर्णतातर्फ अग्रसर गराउन दिग्दर्शन गर्नेछ ।

### क ) ताप्लेजुङ

१. **पाथीभराका गणेशमूर्ति – ताप्लेजुङ** जिल्लाको तापेथोक गा.वि.स.मा **पाथीभरा भगवतीको** अथवा **अन्नपूर्णा भगवतीको** प्राकृतिक मन्दिर रहेको छ । पश्चिमाभिमुख यस मन्दिरको बीचको खोपामा श्रीगणेशको मूर्ति रहेको छ ।

२. **पुरुम्बा शिवमन्दिरका गणेश – ताप्लेजुङ** जिल्लाको **पुरुम्बा** गा.वि.स. वडा नं. ९ को मितलुङ गाउँमा रहेको शिवमन्दिरभित्र श्रीगणेशको प्रतिमा पनि रहेको छ ।

### का ) पाँचथर

१. **सिद्धकाली मन्दिरको गणेशमूर्ति** – पाँचथरको सदरमुकाम फिदिमबाट घानको थुप्राको आकारमा देखिने गढी डाँडामा पाल्पाली सेनवंशका राजाद्वारा स्थापित सिद्धकालीको मन्दिर रहेको छ । सिद्धकाली मूर्तिको दायाँ भागमा गणेशमूर्ति पनि रहेको छ ।

२. **थाक्लेको सिद्धिविनायक मन्दिर** – थाक्ले–चुलीढुङ्गाको उत्तर मोहडामा रहेको विश्वेश्वर महादेवको मन्दिरको पूर्वतर्फ सिद्धिविनायक गणेशको मन्दिर रहेको छ ।

---

* डा. जगदीशचन्द्र रेग्मीको शोधपूर्ण निबन्ध 'श्रीगणेश नेपालको धार्मिक परम्परामा', डा. गोविन्द टण्डनको 'काठमाडौं अधित्यकाका गणेशमूर्तिहरू' शीर्षकान्वित शोधप्रबन्ध, पुरुषोत्तम ढकालको 'मन्दिरै मन्दिरको देश', गीताप्रेस गोरखपुरबाट प्रकाशित हुने कल्याण पत्रिकाको 'गणेशविशेषाङ्क' र सम्बद्ध क्षेत्रका स्रोत व्यक्तिहरूको सहयोगमा यस प्रथम परिशिष्ट खण्डका मन्दिरहरूको वर्णन प्रस्तुत गरिएको छ । प्रस्तुतिको क्रममा काठमाडौं उपत्यकाका प्रसिद्ध विनायक मन्दिर एवं अन्य मन्दिरहरूका साथै नेपाल राष्ट्रका विभिन्न भागमा रहेका प्रसिद्ध गणेशमन्दिर एवं मूर्तिहरूको सङ्क्षिप्त परिचय सातौं परिच्छेदमा प्रस्तुत गरिएको हुँदा यहाँ सङ्क्षेपमा सामान्य परिचयमात्र प्रस्तुत गरिएको छ ।